धन्येयं धरणी तात! वीरुद्वृक्षफलानि च ।
धन्य एकाक्षरो मन्त्रो येन दृष्टोऽखिलेश्वरः ।।१३।।

गजाननः प्रसन्नात्मा परमात्मा परात्परः ।
यत्र कुण्ठाश्चतुर्वेदा वेदान्ता मूकतां गताः ।।१४।।

अगोचरो मनस्तर्कैः सोऽयं देवो मयेक्षितः ।
यस्मादाविर्भवन्तीमे हरीशाग्निमुखाः सुराः ।।१५।।

पातालानि च सप्तैव भुवनानि चतुर्दश ।
यत्रैतानि लयं यान्ति सोऽयं देवो मयेक्षितः ।।१६।।

यो निर्गुणो निराधीशो गुरुगम्यो निराकृतिः ।
ब्रह्मेति यं विदुः केचित् सोऽयं देवो मयेक्षितः ।।१७।।

क उवाच

एवं वाक्यामृतरसैः परितुष्टो गजाननः ।
उवाच कश्यपं नम्रं स्तुवन्तं विविधैः स्तवैः ।।१८।।

गणेश उवाच

भक्तेः स्तवादनुष्ठानात् प्रीतस्तेऽहं मुनेऽधुना ।
वरं वरय मत्तस्त्वं यं यं स्वमनसेच्छसि ।।१९।।

कश्यप उवाच

सृष्टिं नानाविधां कर्तुं सामर्थ्यं देहि मे प्रभो ! ।
त्वदङ्घ्रिकमले भक्तिमविस्मरणमेव च ।।२०।।

यायाः प्रत्यक्षतां तत्र स्मरे त्वां यत्र चाऽप्यहम् ।
त्वादृशं देहि मे पुत्रं नाम्ना कश्यपनन्दनम् ।।२१।।

गणेश उवाच

सर्वं ते वाञ्छितं मत्तो भविताऽऽशु महामुने ! ।
भक्तिर्मेऽविस्मृतिः स्यात् ते सङ्कटे चान्तिकं व्रजे।।२२।।

करिष्यसि विचित्रां त्वं सृष्टिं मम प्रसादतः ।

क उवाच

एवमुक्त्वा मुनिं देवस्तत्रैवान्तरधीयत ।
कश्यपोऽपि मुदा युक्तो निजस्थानं तदा ययौ ।।२३।।

जप गरेर संसारका स्वामीको दर्शन प्राप्त गरें, त्यो एकाक्षरी मन्त्र पनि धन्य भएको छ । प्रसन्नात्मा, परमात्मा र परात्पर भगवान् श्रीगणेशका सामु संसारका सबै तेज र तेजस्वीहरू कुण्ठित हुन्छन् । चार वेद र वेदान्तका वाणीहरू पनि मूकसमान हुन्छन् । जसलाई मन, वचन र तर्कले देख्न सकिंदैन त्यस्ता संसारका प्रभुको मैले दर्शन पाएँ । जुन श्रीगणेशबाट नारायण, शङ्कर, अग्नि आदि देवता र पाताल आदि सात लोक एवं माथिका सात भुवन प्रकट हुन्छन् र जसमा यी सबै विलीन पनि हुन्छन् त्यस्ता श्रीगणेश प्रभुको आज दर्शन पाएँ। जुन श्रीगणेश भगवान् निर्गुण, निरामय, गुरुगम्य र निराकार हुनुहुन्छ, जसलाई कसैले ब्रह्म, कसैले श्रीगणेश र कसैले विष्णु भन्दछन् त्यस्ता प्रभुको मैले दर्शन पाएँ ।।१२-१७।। \

**ब्रह्माजीले भन्नुभयो-** कश्यप ऋषिका यस्ता अमृतमय वाक्यले प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले विनम्र भई स्तुतिवचनद्वारा प्रार्थना गर्ने कश्यप ऋषिलाई भन्नुभयो ।।१८।।

**श्रीगणेशले भन्नुभयो -** हे कश्यप ऋषि ! आज म तिम्रो स्तुति, मन्त्रजप र भक्तिबाट प्रसन्न भएको छु, वर माग। म तिमीलाई जे जे चाहन्छौ, त्यो त्यो दिन चाहन्छु ।।१९।।

**कश्यपले भन्नुभयो -** हे प्रभो ! मलाई अनेक थरि सृष्टि गर्ने शक्ति प्रदान गर्नुहोस् । हजुरको चरणकमलको भक्ति प्रदान गर्नुहोस् । कहिले पनि नबिर्सने बुद्धि प्रदान गर्नुहोस् । जहाँ जहाँ गएर मैले हजुरको स्मरण गरूँ, त्यहाँ त्यहाँ हजुर प्रत्यक्ष हुने वरदान दिनुहोस् । मलाई हजुरजस्तै कश्यपनन्दन नाम गरेको एउटा छोरा प्रदान गर्नुहोस् ।।२०-२१।।

**श्रीगणेशले भन्नुभयो -** हे कश्यप मुनि ! तिम्रा सबै कामनाहरू मेरो कृपाबाट पूरा हुनेछन् । तिम्रो ममा दृढ भक्ति हुनेछ । तिमीले मलाई कुनै अवस्थामा पनि बिर्सने छैनौ । तिमीमाथि सङ्कट आइलाग्दा म तिम्रा सामु प्रत्यक्ष हुनेछु । तिमीले मेरो कृपाबाट विचित्र सृष्टि गर्नेछौ ।

**ब्रह्माजीले भन्नुभयो-** भगवान् श्रीगणेश यसरी कश्यप ऋषिलाई वरदान दिएर त्यहीं नै अन्तर्धान हुनुभयो। वरदान पाएर खुसी भएका कश्यप ऋषि पनि आफ्नो आश्रमतिर लागे।।२२-२३।। कुनै दिन कश्यप ऋषि अकस्मात् मानसिक

कदाचित् कश्यपोऽकस्मादशरीरप्रपीडितः ।
न चालभत् क्वापि शर्म गृहमध्यं ततोऽगमत् ।।२४।।

नित्यं नैमित्तिकं काम्यं कर्म ध्यानञ्च नास्मरत् ।
तं तथा विह्वलं दृष्ट्वा योषितोऽस्य चतुर्दश ।।२५।।

दित्यदितिदनुकद्रुविनताद्याः पुरः स्थिताः ।
वुभुजे क्रमशस्तास्तु नानागारेषु कश्यपः ।।२६।।

काले यथोक्ते सुषुवे दितिर्दैत्याननेकशः ।
अदितिर्देवगन्धर्वान् दनुश्च दानवानथ ।।२७।।

क्रमेण किन्नरा यक्षाः सिद्धचारणगुह्यकाः ।
पशवश्च तथारण्या ग्राम्याश्चासन्ननेकशः ।।२८।।

पृथिवी पर्वता वृक्षाः समुद्राः सरितो लताः ।
धान्यानि धातवो रत्नमुक्ताकृमिपिपीलिकाः ।।२९।।

सर्पाः पक्षिगणास्ताभ्यः सर्वमासीच्चराचरम् ।
एवं दृष्ट्वा स सन्तानं जातं नानाविधं तदा ।।३०।।

जहर्ष कश्यपो धीमान् नानामन्त्रान् समादिशत् ।
शोधयित्वा ऋणधनं सिद्धारिचक्रमीक्ष्य च ।।३१।।

षोडशार्णञ्च कस्मैचित् तथाऽष्टादशवर्णकम् ।
एकाक्षरञ्च कस्मैचिदन्यस्मै च षडक्षरम् ।।३२।।

पञ्चार्णमष्टाक्षरञ्च द्वादशाक्षरमेव च ।
कस्मैचिच्च महामन्त्रं ददौ स मुनिपुङ्गवः ।।३३।।

कुर्वन्त्वनुष्ठितं तावद् यावद् देवो निरीक्ष्यते ।
गजाननोऽखिलाधारः सर्वसिद्धिप्रदायकः ।।३४।।

एवमाज्ञापयत् तांश्च ते च जग्मुस्तदैव हि ।
तपसे बहुशो देशान् जेपुः स्वं स्वं मनुं तदा ।।३५।।

आसने भोजने देवं निद्रायां जागरेऽपि च ।
अनन्यभक्त्या देवेशं संस्मरुस्ते गजाननम् ।।३६।।

दिव्यवर्षसहस्रान्ते परितुष्टो गजाननः ।
आविरासीदनेकात्मा तत्पुरः करुणानिधिः ।।३७।।

पीडाले त्रस्त भए। कहीं गएर पनि सुख प्राप्त गर्न सकेनन् । त्यसपछि आफ्नै घरभित्र प्रवेश गरे । त्यस बेला तिनलाई नित्यकर्म, नैमित्तिक कर्म, काम्यकर्म र ध्यान गर्ने संझना पनि रहेन । ऋषिलाई व्याकुल देखेर ऋषिका चौधवटी पत्नीहरू – दिति, अदिति, दनु, कद्रु र विनता आदि त्यहाँ उपस्थित भए । कश्यप ऋषिले विभिन्न घरहरूमा रहेर ती पत्नीहरूसँग ऋतुधर्म निर्वाह गरे ।।२४-२६।। उचित समय आएपछि दितिले अनेक दैत्य पैदा गरिन् । अदितिले देवता र गन्धर्वलाई जन्माइन् । दनुले दानवहरू पैदा गरिन् । क्रमैले विभिन्न पत्नीहरूबाट किन्नर, यक्ष, सिद्ध, चारण, गुह्यक, पशु, जङ्गली पशु, ग्रामीण पशु आदि पैदा भए । त्यसैगरी पृथिवी, पर्वत, वृक्ष, लता, समुद्र, नदी, धान्य, धातु, रत्न, मोती, कीरा, फट्याङ्ग्रा, कमिला, सर्प र चराचुरुङ्गीहरू पनि कश्यप ऋषिका अनेक पत्नीहरूबाट पैदा भए ।।२७-२९।। यसरी कश्यप र कश्यपका पत्नीहरूबाट सम्पूर्ण चराचरको सृष्टि भयो । कश्यप ऋषिले अनेक थरि आफ्ना सन्तान देखेर हर्षित भई आफ्ना सन्तानलाई विभिन्न किसिमका मन्त्रहरूको उपदेश गरे । मन्त्रहरूको उपदेश गर्दा ऋण-धन शोधन गरी सिद्धारिचक्रसमेत जुराएर, कसैलाई सोह्र अक्षरको मन्त्र, कसैलाई अठार अक्षरको मन्त्र, कसैलाई एक अक्षरको मन्त्र, कसैलाई छ अक्षरको मन्त्र, कसैलाई पाँच अक्षरको मन्त्र, कसैलाई सात अक्षरको मन्त्र, कसैलाई आठ अक्षरको मन्त्र, कसैलाई बाह्र अक्षरको मन्त्र र अरू महामन्त्र पनि कश्यप ऋषिले उपदेश गरे ।।३०-३३।। त्यसपछि तिनले सबैलाई भने- तिमीहरूले आ-आफ्ना मन्त्रको श्रद्धापूर्वक तबसम्म अनुष्ठान गर जबसम्म सबैका आधार सर्वसिद्धिप्रदायक भगवान् श्रीगणेशको दर्शन पाउँदैनौ । यसरी कश्यपले आज्ञा दिएपछि तिनका छोराहरू तपस्या गर्न अनेक ठाउँमा गए । तिनले त्यहाँ गएर आफूले पाएका मन्त्रहरूको जपानुष्ठान गर्न लागे । खाँदा, बस्दा, निदाउँदा र जाग्दा सबै समयमा तिनले अनन्यभक्ति-पूर्वक भगवान् गजाननको ध्यान र स्मरण गरे ।।३४-३६।। तिनीहरूको अनुष्ठानको दिव्य एक हजार वर्षपछि एक र अनेकरूप धारण गर्नुहुने करुणासागर भगवान् श्रीगणेश प्रसन्न हुनुभई प्रकट हुनुभयो । जुन साधकले जुन रूपका भगवान्को

यो यथा ध्यातवान् देवं तादृशस्तत्परोऽभवत् ।
कस्यचित् पुरतश्चासीन् मेघाभोऽष्टमहाभुजः ।।३८।।

कस्यचित् पुरतस्त्वासीच्छशिवर्णश्चतुर्भुजः ।
अग्रे कस्यचिदारक्तः षड्भुजोऽसौ गणेश्वरः ।।३९।।

सहस्रनयनस्तावद्भुजोऽसावपि कस्यचित् ।
भाति बालस्वरूपोऽपि युवा वृद्धोऽपि भासते ।।४०।।

दशद्वादशदोर्दण्डो धूम्रवर्णो महन्महः ।
अष्टादशभुजोऽप्यासीत् कोटिसूर्यसमप्रभः ।।४१।।

तेजोरूपो महाकाय आखुवाहनपृष्ठगः ।
सिंहगो बर्हिगो वापि गजास्योऽनेकवक्त्रवान् ।।४२।।

दृष्ट्वा देवं तु ते सर्वेऽनेकधा तुष्टुवुर्मुदा ।
बद्धाञ्जलिपुटा नम्रा भक्त्या देवं गजाननम् ।।४३।।

सर्वे ऊचुः

यतोऽनन्तशक्तेरनन्ताश्च जीवा
यतो निर्गुणादप्रमेयाद् गुणास्ते ।
यतो भाति सर्वं त्रिधा भेदभिन्नं
सदा तं गणेशं नमामो भजामः ।।४४।।

यतश्चाविरासीज्जगत् सर्ववेत्त-
स्तथाऽब्जासनो विश्वगो विश्वगोप्ता ।
तथेन्द्रादयो दैत्यसङ्घा मनुष्याः
सदा तं गणेशं नमामो भजामः ।।४५।।

यतो वह्निभानू भवो भूर्जलञ्च
यतः सागराश्चन्द्रमा व्योम वायुः ।
यतः स्थावरा जङ्गमा वृक्षसङ्घाः
सदा तं गणेशं नमामो भजामः ।।४६।।

ध्यान गरेका थिए, ती साधकका सामु भगवान् त्यसै रूपमा प्रकट हुनुभयो । कुनै साधकका सामु भगवान् श्रीगणेश बादलजस्तै रङ्गरूपले सम्पन्न अष्टबाहु बनेर प्रत्यक्ष हुनुभएको थियो । कुनै साधकलाई चतुर्भुज र चन्द्रमाजस्तो उज्ज्वल वर्ण लिएर दर्शन दिनुभएको थियो । कुनै साधकका अगाडि रातो वर्ण र षड्भुज बनेर शोभायमान भई देखिनुभएको थियो ।।३७-३९।। कसैका अगाडि हजार आँखा र हजार बाहुद्वारा देदीप्यमान भएर देखिनुभएको थियो। कहीं बालकरूपमा, कहीं युवाको रूपमा र कहीं वृद्धको रूपमा देखिनुभएको थियो । कहीं दश भुजाका साथ, कहीं बाह्र भुजाका साथ भगवान् श्रीगणेश अत्यन्त, दिव्य तेजपुञ्जको रूपमा प्रकट हुनुभयो । कहीं अठारभुजाका साथ सुहाएर करोडौं सूर्यको कान्तिद्वारा जाज्वल्यमान हुनुहुन्थ्यो ।।४०-४१।। कसैले तेजोमय, विशालस्वरूप धारण गरी को पिठ्यूँमा सवार हुनुभएका भगवान् श्रीगणेशलाई साक्षात्कार गरे । कसैले सिंहमा सवार हुनुभएका भगवान् श्रीगणेशको दर्शन पाए र कसैले मयूरमा सवार हुनुभएका मयूरेश प्रभुको दर्शन गरे । कसैले हात्तीको अनुहारका भगवान्को दर्शन पाए भने कसैले अनेक मुख भएका भगवान्को दर्शन गरे ।।४२।। भगवान्लाई आफ्ना-आफ्ना किसिमबाट आफ्ना सामु पाउँदा हात जोडिरहेका ती सबै विनम्र साधकहरूले भक्तिपूर्वक भगवान् गजाननको सहर्ष स्तुति गरे ।।४३।।

**कश्यपसन्तानले भने** - अनन्तशक्तिसम्पन्न जुन भगवान् श्रीगणेशबाट अनेक जीवहरूको उत्पत्ति हुन्छ, अप्रमेय र निर्गुण जुन परमात्मा श्रीगणेशबाट सम्पूर्ण गुणहरूको सृष्टि हुन्छ, जुन सौन्दर्य र शोभाका सागर श्रीगणेशबाट सत्त्व, रज र तमोगुणद्वारा निर्मित संसारले शोभा र सौन्दर्य प्राप्त गर्दछ, त्यस्ता श्रीगणेश भगवान्को हामी वन्दना र भजन गर्दछौं ।।४४।। जुन सर्वज्ञ श्रीगणेश प्रभुबाट सम्पूर्ण जगत् पैदा भयो त्यसैगरी जसबाट विश्वव्यापक भगवान् नारायण, कमलासन ब्रह्माजी र विश्वम्भर शिवजीको पनि सृष्टि भयो त्यसैगरी जुन श्रीगणेशबाट इन्द्र आदि देवता, दैत्य र मानवहरू पैदा भए ती श्रीगणेश प्रभुको वन्दना र भजन गर्दछौं ।।४५।। जुन श्रीगणेश प्रभुबाट सूर्य, अग्नि, संसार, पृथिवी, जल, सागर, चन्द्रमा, आकाश र वायु उत्पन्न भए जसबाट स्थावर, जङ्गम, वृक्ष, वनस्पति पैदा

यतो दानवा: किन्नरा यक्षसङ्घा
　　यतश्चारणा वारणा: श्वापदाश्च ।
यत: पक्षिकीटा यतो वीरुधश्च
　　सदा तं गणेशं नमामो भजाम: ।।४७।।
यतो बुद्धिरज्ञाननाशो मुमुक्षो-
　　र्यत: सम्पदो भक्तसन्तोषिका: स्यु: ।
यतो विघ्ननाशो यत: कार्यसिद्धि:
　　सदा तं गणेशं नमामो भजाम: ।।४८।।
यत: पुत्रसम्पद् यतो वाञ्छितार्थो
　　यतो भक्तिविघ्नास्तथाऽनेकरूपा: ।
यत: शोकमोहौ यत: काम एव
　　सदा तं गणेशं नमामो भजाम: ।।४९।।
यतोऽनन्तशक्ति: स शेषो बभूव
　　धराधारणेऽनेकरूपे च शक्त: ।
यतोऽनेकधा स्वर्गलोका हि नाना
　　सदा तं गणेशं नमामो भजाम: ।।५०।।
यतो वेदवाचो विकुण्ठा मनोभि:
　　सदा नेति नेतीति ता यं गृह्णन्ति ।
परब्रह्मरूपं चिदानन्दभूतं
　　सदा तं गणेशं नमामो भजाम: ।।५१।।

भए, ती श्रीगणेश प्रभुको वन्दना र भजन गर्दछौं ।।४६।। जुन श्रीगणेश प्रभुबाट दानव, किन्नर, यक्ष, चारण, हात्ती आदि जङ्गली जनावर, चरा, कीरा, लता, वृक्ष-वनस्पति पैदा भए, ती श्रीगणेश प्रभुको वन्दना र भजन गर्दछौं ।।४७।। जुन श्रीगणेशबाट बुद्धिको उदय हुन्छ, मुक्ति चाहने मुमुक्षुको अज्ञान नाश हुन्छ, भक्तलाई सन्तुष्टि प्रदान गर्ने सम्पत्तिको उदय हुन्छ, विघ्नको नाश हुन्छ र सम्पूर्ण कार्यहरूको सिद्धि हुन्छ ती श्रीगणेशको वन्दना र भजन गर्दछौं ।।४८।। जसबाट पुत्र र सम्पत्तिको प्राप्ति हुन्छ, वाञ्छित कर्मको पूर्ति हुन्छ, भक्ति र अनेक थरि विद्याको प्राप्ति हुन्छ, शोक-मोहको नाश हुन्छ र काम-क्रोधको विनाश हुन्छ ती श्रीगणेश प्रभुको वन्दना र भजन गर्दछौं ।।४९।। जसको कृपाबाट शेषनाग अनन्तशक्ति सम्पन्न भई पृथिवीधारण गर्न समर्थ भए र अनेक रूपका विशिष्ट पद र ऐश्वर्यप्राप्त गर्न सफल भए, जसबाट अनेकप्रकारका स्वर्ग आदि लोकको प्राप्ति हुन्छ ती श्रीगणेश प्रभुको वन्दना र भजन गर्दछौं ।।५०।। जुन श्रीगणेश प्रभुबाट उत्पन्न भएका वेदका वाणीहरू मनैदेखि कुण्ठित भई सधैं नेति-नेति भन्ने भावलाई आत्मसात् गर्दछन्, त्यस्ता परब्रह्मरूप चिदानन्दघन भगवान् श्रीगणेशको नित्य वन्दना र भजन गर्दछौं ।।५१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे कश्यपसृष्टिवर्णनं नाम एकनवतितमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कश्यपसृष्टिवर्णन र कश्यपसन्ततिद्वारा गरिएको श्रीगणेशाराधनाको निरूपण' शीर्षकान्वित एकानब्बेऔं अध्याय पूर्ण भयो ।।९१।।

ॐ

## अथ द्विनवतितमोऽध्यायः { ९२ अध्याय }

क उवाच

एवं नत्वा च स्तुत्वा च सर्वे ते तु गजाननम् ।
पुनरूचुर्गणाध्यक्षमद्य धन्यतमा वयम् ।।१।।

धन्यं तपो नो दानञ्च ज्ञानं यज्ञश्च पूर्वजाः ।
अद्य नो दृष्टयो धन्या याभिर्दृष्टो गजाननः ।।२।।

एवं वाक्यामृतैस्तेषां स्तुतिभिः परितोषितः ।
उवाच शृण्वतां तेषां गाम्भीर्याद् द्विरदाननः ।।३।।

नैतादृशं मयाऽदर्शि ब्रह्मविष्णुशिवादिषु ।
यत् साक्षाद् दृश्यते सर्वै रूपं मे निर्गुणस्य यत् ।।४।।

अतितुष्टोऽनया स्तुत्या वरान् दातुमिहागतः ।
यद् यद् वो वाञ्छितं तत् तद् वृणुध्वमखिलं तु यत्।।५।।

एवमुक्तास्तदा तेन विकटेन मुनीश्वर ।
यस्य यद् वाञ्छितं तत् तद् वव्रुस्तस्माद् गजाननात् ।।६।।

असङ्ख्यत्वात् तद्वराणां नास्ति शक्तिश्चतुर्मुखैः ।
गदितुं सर्वथा तस्मादुक्तं सङ्क्षेपतो मया ।।७।।

ताँस्तान् ददौ वरान् यान् यान् सर्वे वव्रुर्गजाननात् ।
पुनरप्यवदत् सर्वानिदं स्तोत्रं मम प्रियम् ।
त्रिसन्ध्यं यः पठेदेतद् विद्यावान् पुत्रवान् भवेत् ।
आयुरारोग्यमैश्वर्यं यशोवृद्धिञ्जयोदयम् ।
प्राप्नुयाद् वाञ्छितानर्थानन्ते च परमं पदम् ।
पुनरूचे गणाधीशः स्तोत्रमेतज्जपेन्नरः ।
त्रिसन्ध्यं त्रिदिनं तस्य सर्वं कार्यं भविष्यति ।।८।।

यो जपेदष्टदिवसं श्लोकाष्टकमिदं शुभम् ।
अष्टवारं चतुर्थ्यां तु सोऽष्टसिद्धिमवाप्नुयात् ।।९।।

**ब्रह्माजीले भन्नुभयो -** यसरी कश्यप ऋषिका सबै सन्तानहरूले भगवान् गजाननको नमन र स्तवन गरेपछि फेरि श्रीगणेशसँग भने – 'हे प्रभो ! हामी आज धन्य भएका छौं, हाम्रा तप, ज्ञान, दान, यज्ञ र पूर्वज पनि धन्य भएका छन्, आज हाम्रो दर्शनशक्ति धन्य भएको छ, किनभने त्यस दर्शनशक्तिबाट नै भगवान् गजाननको साक्षात्कार गर्न पायौं'।।१-२।। कश्यपका सन्तानहरूको उक्त वचनामृतबाट सन्तुष्ट र स्तुतिहरूबाट प्रसन्न गजानन भगवान्ले तिनीहरूलाई सुनाउँदै गम्भीरमुद्रामा भन्नुभयो- 'हे कश्यपसन्ततिहरू ! तिमीहरूले जुन मेरो निर्गुण रूपको साक्षात्कार गरिरहेका छौ त्यसलाई ब्रह्मा, विष्णु र शिव आदि देवताहरूले पनि साक्षात्कार गर्न पाएका छैनन्। तिमीहरूको यो स्तुतिबाट ज्यादै सन्तुष्ट भएर म वरदान दिन आएको छु। तिमीहरूले जुन जुन कामना गरिरहेका छौ ती सबैको फल प्राप्त हुनेछ, वरदान माग ।।३-५।। यसरी विकटरूप परब्रह्म श्रीगणेशबाट आज्ञा प्राप्त गरेका ती कश्यपका सन्ततिहरूले भगवान्का समक्ष आ-आफ्ना कामनाहरू बताए। भगवान् श्रीगणेशले पनि ती सबैका कामनाअनुसारका वर प्रदान गर्नुभयो। ती वरदान असङ्ख्य थिए । तिनको विवरण बताउन चार मुखबाट पनि सकिंदैन। त्यस कारण मैले सङ्क्षेपमा बताएको छु ।।६-७।। संक्षेपमा भन्नुपर्दा भगवान् श्रीगणेशले ती-ती वर दिनुभयो जुन जुन तिनले मागेका थिए । फेरि पनि भगवान् श्रीगणेशले ऋषिहरूलाई लक्षित गर्दै भन्नुभयो- 'हे कश्यपपुत्रहरू! तिमीहरूले स्तुतिरूपमा प्रस्तुत गरेको यस स्तोत्रलाई जसले बिहान, दिउँसो र सायँ सन्ध्यामा श्रद्धाभक्तिपूर्वक पाठ गर्दछ त्यो साधक विद्वान् र पुत्रवान् पनि हुनेछ; त्यसले आयु, आरोग्य, ऐश्वर्य, कीर्तिको विस्तार, विजय र उदय पनि प्राप्त गर्नेछ । त्यसले चाहना गरेका सबै पदार्थहरू प्राप्त हुनेछन् र अन्तमा त्यो परमधाममा प्राप्त हुनेछ ।' त्यसपछि फेरि श्रीगणेश भगवान्ले भन्नुभयो- 'हे कश्यपपुत्रहरू! जुन मानिसले यो स्तोत्र तीन दिनसम्म निरन्तर तीनवटै सन्ध्याकालमा पाठ गर्दछ, त्यसका सबै कार्य सिद्ध हुनेछन् ।।८।। जसले आठ दिनसम्म लगातार मङ्गलमय यो श्लोकाष्टक पाठ गर्नेछ र चतुर्थी तिथिका दिन आठ पटकसम्म पाठ गर्नेछ, त्यसले अष्टसिद्धि प्राप्त गर्नेछ।।९।।

य: पठेन्मासमात्रं तु दशवारं दिने दिने ।
स मोचयेद् बन्धनात् तं राजबद्धं न संशय: ।।१०।।
विद्याकामो लभेत् विद्यां पुत्रार्थी पुत्रमाप्नुयात् ।
वाञ्छितं लभते सर्वमेकविंशतिवारत: ।।११।।
यो जपेत् परया भक्त्या गजाननपरो नर: ।
एवमुक्त्वा ततो देव: सर्वेषामेव पश्यताम् ।।१२।।
अन्तर्दधेऽखिलाधार: सुमुखोऽसौ गजानन: ।
ते च चक्रुस्तदा मूर्तिं गणेशस्य शुभाननाम् ।।१३।।
प्रतिष्ठाप्य च तां स्थूले प्रासादे रत्ननिर्मिते ।
सुमुखेति च तस्यास्ते नाम चक्रु: सुविश्रुतम् ।।१४।।
सम्पूज्य च नमस्कृत्वा स्वं स्वं स्थानं ययु: सुरा: ।
सर्वे ते मुनयो लोका: सर्वकार्यरतास्तदा ।।१५।।
केचित्तस्या नाम चक्रुरेकदन्त इति स्फुटम् ।
गन्धर्वै: किन्नरैरन्या स्थापिता मूर्तिरुत्तमा ।।१६।।
प्रासादे काञ्चने श्रेष्ठेऽनेकधा परिपूज्य च ।
कपिलेति च नामास्या: स्थापयामासुरुत्तमम् ।।१७।।
गुह्यकाश्चारणा: सिद्धा मूर्तिमन्यां प्रचक्रिरे ।
महालये प्रतिष्ठाप्य नेमुश्च पुपूजुश्च ताम् ।।१८।।
गजकर्णेति नामास्याश्चक्रुस्ते तु स्फुटार्थकम् ।
तत्प्रभावाद्विमानस्था: सर्वे ते दिवमाक्रमन् ।।१९।।
लम्बोदरेति नाम्ना च स्थापिता सर्वमानवै: ।
श्वापदैरखिलैरन्या स्थापिता मूर्तिरुत्तमा ।।२०।।
विकटेति च नाम्ना तां पुपूजुस्ते ययुर्वनम् ।
गिरयश्च द्रुमाश्चान्यां मूर्तिं स्थाप्य प्रपूज्य च ।।२१।।
विघ्ननाशन इत्येवं नाम कृत्वा स्थितास्तु कौ ।
तत्प्रसादाच्च ते ख्याता: पर्वताश्च द्रुमास्तथा ।।२२।।
सर्वै: पक्षिगणैर्मूर्ति: स्थापिता रत्नकाञ्चनी
गणाधिपेति नाम्ना तै: पूजिता च नमस्कृता ।।२३।।
सर्वैर्विषधरैरेका स्थापिता गाणनायकी ।
यस्या हूति: कृता तैस्तु धूमकेतुरिति स्फुटा ।।२४।।

जसले एक महिनासम्म दिनदिनै दश पटकसम्म यो स्तोत्र पाठन गर्नेछ त्यसले राजाद्वारा कारागारमा बन्दी बनाइएका कैदीलाई बन्धनमुक्त बनाउन सक्नेछ ।।१०।। यस स्तोत्रको पाठबाट विद्यार्थीले विद्या र पुत्रार्थीले पुत्र प्राप्त गर्नेछन् । जसले श्रीगणेश भगवान्मा परमभक्ति लगाउँदै एक्काइस पटकसम्म यस स्तोत्रको पाठ गर्नेछ, त्यसले आफूले कामना गरेका सम्पूर्ण पदार्थहरू प्राप्त गर्नेछ ।' यसरी स्तोत्रको महत्त्व बताएर सबैका आधार, सुमुख, भगवान् गजानन सबैले हेर्दाहेर्दै अन्तर्धान हुनुभयो । ती कश्यपका सन्ततिहरूले पनि भक्तिभावले परिपूर्ण भई भगवान् श्रीगणेशको सुन्दर मूर्ति तयार गरे ।।११-१३।। तिनले रत्ननिर्मित मन्दिरमा त्यस मूर्तिको स्थापना र प्राणप्रतिष्ठा गरी **सुमुख** भनी नामकरण गरे । त्यहाँ आएका ऋषिमुनि र देवताहरू पनि सुमुख श्रीगणेशको पूजा, वन्दना गरेर आ-आफ्ना घरतर्फ गए । कश्यप मुनिका ती सबै छोराहरू आ-आफ्नो कर्तव्य गर्न उन्मुख भए ।।१४-१५।। कसैले त्यस मूर्तिको नाम **एकदन्त** राखे । त्यहीं गन्धर्व एवं किन्नरहरूले सुवर्ण मन्दिर बनाई श्रीगणेशको अर्को मूर्तिको प्रतिष्ठा गरे र त्यस मूर्तिको **कपिल** भनी नामकरण गरे । गुह्यक, चारण र सिद्धहरूले मिलेर अर्को मूर्ति बनाए, ठूलो मन्दिर बनाई त्यसमा त्यस मूर्तिको प्रतिष्ठा गरेर प्रणाम गरी पूजन गरे ।।१६-१८।। तिनीहरूले त्यो मूर्तिको स्पष्ट अर्थ प्रकाशित गर्ने **गजकर्ण** भनी नामकरण गरे । मूर्तिप्रतिष्ठाको प्रभावबाट विमान आरोहण गरी ती सबै दिव्य धामतर्फ गए ।।१९।। त्यहाँ रहेका मानिसहरूले **लम्बोदर** श्रीगणेशको नामबाट अर्को मूर्ति प्रतिष्ठा गरे । वन्यजन्तुहरूले पनि भगवान् श्रीगणेशको अर्को उत्तम मूर्ति तयार गरी त्यसको प्रतिष्ठा गराए । ती सबैले स्थापित श्रीगणेशको **विकट** भनी नामकरण गरी पूजा गरेर जङ्गलतर्फ लागे । पर्वत र वृक्षहरूले आई भगवान् श्रीगणेशको अर्को मूर्ति बनाई प्रतिष्ठा र पूजन गरे । तिनले **विघ्ननाश** नामकरण गरी आफू पृथिवीमा स्थिर भएर रहे । श्रीगणेशका कृपाबाट ती संसारमा पर्वत र द्रुमका नामले विख्यात भए।।२०-२२।। सबै पक्षीहरूले मिलेर आई रत्न-सुवर्ण निर्मित एउटा मङ्गलमय श्रीगणेशप्रतिमा तयार गरे । तिनले त्यसको **गणाधिप** नामकरण गरी वन्दना र अर्चना गरे।।२३।। सबै सर्पहरू मिलेर आई गणनायक भगवान्को सुन्दर मूर्ति तयार गरी प्राणप्रतिष्ठा गरे। तिनीहरूले धूमकेतु भन्ने स्पष्ट अर्थ दिने नाम राखे ।।२४।।

सर्वैर्जलाशयैरेका प्रतिमा स्थापिता शुभा ।
गणाध्यक्षेति नाम्ना सा पूजिता परमोत्सवैः ।।२५।।
कृमिकीटादिनिचयैर्वनस्पत्योषधीगणैः ।
स्थापिता परमा मूर्तिर्भालचन्द्रेति विश्रुता ।।२६।।
अन्यैः सचेतनैरन्या रत्नप्रासादमध्यगा ।
वैनायकी महामूर्तिः पूजिता भक्तिभावतः ।।२७।।
गजाननाख्यया ख्याता सर्वेषां सर्वकामदा ।
ते ते जगत्त्रये ख्यातास्तत्तज्जात्या बभूविरे ।।२८।।
सुखिनः स्वस्वकार्येषु दक्षा देवप्रसादतः ।
प्रत्येकनामकथने न शक्तिर्मम वर्तते ।।२९।।
सारं सारं प्रगृह्यैव कृतं नाम्नां सहस्रकम् ।
ततोऽपि सारभूतानि प्रोक्तानि द्वादशैव तु ।।३०।।
समुद्रमथनाद् यद्वद् रत्नानि च चतुर्दश ।
एवं सङ्क्षेपतो ब्रह्मन् ! महिमा तेऽभिवर्णितः ।।३१।।
विस्तराद् गदितुं शेषो नेशो नेशोऽप्यहं हरिः ।
इन्द्रादिमशकानाञ्च जीवानां यक्षरक्षसाम् ।।३२।।
तत्र का गणना कार्या मया सत्यवतीसुत ! ।
तस्मात् सर्वेषु कार्येषु पूजनीयो गजाननः ।।३३।।
यो न पूजयते देवदेवं विघ्नविनाशनम् ।
स दुरात्मा परित्याज्यश्चाण्डाल इव दूरतः ।।३४।।

मुनिरुवाच

अनुक्रमेण कथय नामानि द्वादशैव मे ।
श्रवणात् पठनादेषां सर्वं निर्विघ्नतामियात् ।।३५।।

ब्रह्मोवाच

सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः ।
लम्बोदरश्च विकटो विघ्ननाशो गणाधिपः ।।३६।।
धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः ।
द्वादशैतानि नामानि यः पठेच्छृणुयादपि ।।३७।।
विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा ।
सङ्ग्रामे सङ्कटे चैव विघ्नस्तस्य न जायते ।।३८।।

सबै जलाशयहरूले मिलेर आई एउटा शुभप्रतिमा बनाई प्रतिष्ठा गरे। त्यसको **गणाध्यक्ष** नाम राखी ठूलो उत्सवका साथ पूजा सम्पन्न गरे ।।२५।। कृमि, कीरा, वनस्पति र औषधिहरूले **भालचन्द्र**को नामबाट उत्तम मूर्तिको प्रतिष्ठा गरे ।।२६।। त्यसपछि अरू चेतनशील प्राणीहरूले रत्नमय मन्दिरमा भगवान् विनायकको मूर्ति तयार गरी भक्तिपूर्वक पूजा गरे । त्यो मूर्ति सबैका निमित्त कामपूरक **गजानन**मूर्तिका रूपमा प्रसिद्ध भयो । ज-जसले मूर्ति बनाई प्रतिष्ठा गरे ती-ती प्रतिष्ठाताहरू तीनै लोकमा आफ्नो जाति र वर्गका श्रेष्ठ प्रतिनिधि मानिए ।।२७-२८।। ती सबै श्रीगणेश भगवान्‌का कृपाले सुखी र स्वकार्यमा दक्ष भए । प्रत्येक प्रतिष्ठाको नाम बताउन हाम्रो शक्ति-सामर्थ्य छैन । सार-सार लिएर नै श्रीगणेश सहस्रनाम तयार भएको छ । सहस्र नामहरूमा पनि सारभूत बाह्र वटा नाम मानिएका छन् । ती नामहरू समुद्र मन्थनबाट प्राप्त भएका चौध रत्नसमान छन् ।।२९-३०।। हे व्यास ! मैले यसरी तपाईंका समक्ष संक्षेपमा भगवान् श्रीगणेशको महिमा बताएँ । विस्तारपूर्वक महिमा बताउन शेषनाग, म, हरि र हर पनि समर्थ छैनौं भने इन्द्र आदि देवता, जीव, यक्ष र राक्षस आदि भुसुनाहरूको त गणना नै हुँदैन ।।३१-३२।। हे सत्यवतीनन्दन! सबैले भगवान् श्रीगणेशको यो महिमा जानेर सबै मङ्गलकार्यको आरम्भमा भगवान् श्रीगणेशको स्मरण, पूजा र वन्दना गर्नुपर्दछ। जुन मानिसले विघ्नविनाशक भगवान् श्रीगणेशको पूजा गर्दैन, त्यो दुरात्मा मानिस हो र त्यसलाई चाण्डालसमान त्याग्नु पर्दछ ।।३३-३४।।

**वेदव्यासले भन्नुभयो** - हे ब्रह्माजी ! ती रत्नमय बाह्र नाम कस्ता छन् ? क्रमैले मलाई बताउनुहोस् ! जुन नामको श्रवण र पाठ गर्नाले सबै कार्य निर्विघ्न सम्पन्न हुन्छन्, ती नाम र तिनको महिमा सुन्न म उत्कण्ठित छु ।।३५।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! ती बाह्र नाम यस प्रकार रहेका छन्- **सुमुख, एकदन्त, कपिल, गजकर्णक, लम्बोदर, विकट, विघ्ननाश, गणाधिप, धूम्रकेतु, गणाध्यक्ष, भालचन्द्र र गजानन** । यी बाह्र रत्नमय नामहरू हुन् । जसले विद्याको आरम्भ, विवाह, गृहप्रवेश, गृहनिर्गमन, संग्राम र सङ्कटकालमा यी नामहरूको स्मरण गर्दछ, त्यसले कुनै किसिमका विघ्न बेहोर्नु पर्दैन ।।३६-३८।। सबै प्रकारका

शुक्लाम्बरधरं देवं शशिवर्णं चतुर्भुजम् ।
प्रसन्नवदनं ध्यायेत् सर्वविघ्नोपशान्तये ।।३९।।

कोटिकन्याप्रदानानि कोटियज्ञं व्रतानि च ।
तपांसि यानि सर्वाणि तीर्थान्यायतनानि च ।।४०।।

स्वर्णभारसहस्राणि कोटिदानानि यान्यपि ।
कृच्छ्राणि तप्तकृच्छ्राणि पराकेन्दुव्रतानि च ।।४१।।

शतांशमेषां पुण्यस्य तानि नाम्नां न यान्ति च ।
इमानि प्रातरुत्थाय शुचिर्भूत्वा समाहितः ।।४२।।

यः पठेन्मानवो भक्त्या विघ्ना नो यान्ति तं नरम् ।
सिद्ध्यन्ति सर्वकार्याणि मोक्षमन्ते व्रजत्यसौ ।।४३।।

तस्य दर्शनतो लोका देवाः पूता भवन्ति च ।
अत एव मुने ! सर्वाः शाक्ताः शैवाश्च वैष्णवाः ।।४४।।

उक्त्वा द्वादश नामानि सर्वकार्याणि कुर्वते ।
गाणेशा अपि कुर्वन्ति किमत्रापि च कौतुकम् ।।४५।।

न सिद्ध्यन्ति हि कार्याणि द्वादशान्यतमस्य ह ।
उच्चारणं विना ब्रह्मँस्तस्मादेकं समुच्चरेत् ।।४६।।

दुष्टानां नास्तिकानाञ्च कार्यं यद् यद्धि सिद्ध्यति ।
तेऽपि बीजं समुच्चार्यमज्ञानादपि कुर्वते ।।४७।।

एवं ते महिमा सर्वः कथितो लेशतो मुने ।
उपासनाफलं नाना यथामति निरूपितम् ।।४८।।

विष्णुना कथितं यावत् तावत् तव निरूपितम् ।
सोऽपि नान्तं जगामास्य गणेशोपासनस्य ह ।।४९।।

गणेशनाममहिमा पूर्णो ज्ञातो न तेन च ।

विघ्नहरूको शान्तिका लागि शुक्लवस्त्र धारण गर्नुहुने, चन्द्रसमान कान्तिले सुहाउनुभएका, चतुर्भुज, प्रसन्नमुख भगवान् श्रीगणेशको ध्यान गर्नुपर्दछ ।।३९।। कोटि कन्यादान गर्दा हुने पुण्य, कोटि यज्ञ र व्रत गर्दा प्राप्त हुने पुण्य, अनेक प्रकारका तपस्या गर्दा प्राप्त हुने पुण्य, अनेक तीर्थहरूको भ्रमणबाट प्राप्त हुने पुण्य, अनेक धाममा जाँदा प्राप्त हुने पुण्य, एक हजार भारी स्वर्णदान गर्दा प्राप्त हुने पुण्य, कोटिदान गर्दा प्राप्त हुने पुण्य, कृच्छचान्द्रायण, तप्तकृच्छचान्द्रायण, पराकचान्द्रायण र चन्द्रमाका अन्य व्रत गर्दा प्राप्त हुने पुण्य, उक्त बाह्र नामहरूको पाठबाट प्राप्त हुने पुण्यको शतांशमा पनि गणना गरिँदैन । प्रातःकालमा पवित्र र सावधान भएर जुन भक्तले भक्तिपूर्वक यी नामहरूको पाठ गर्दछ त्यसलाई कुनै कार्यमा विघ्न हुँदैन । त्यसका सबै कार्य सिद्ध हुन्छन् र त्यो अन्तमा मोक्षमा प्राप्त हुन्छ ।।४०-४३।। त्यस्ता मानिसको दर्शनबाट मानिसहरू र देवताहरू पनि पवित्र हुन्छन् । त्यसैले सूर्यका उपासक सौरहरू, शक्तिका उपासक शाक्तहरू, शिवजीका उपासक शैवहरू र विष्णुका उपासक वैष्णवहरूले सर्वप्रथम यी बाह्र नामहरूको उच्चारण गरेर आफ्नो कार्य आरम्भ गर्दछन्। गणपतिका आराधक गाणपतहरूले पनि त्यसै गर्दछन् । यो कुनै आश्चर्यको विषय होइन ।।४४-४५।। यी १२ नाममध्ये कुनै एउटा नामको पनि उच्चारण गरिँदैन भने कुनै पनि कार्य सिद्ध हुँदैन । त्यस कारण बुद्धिमान् साधकले प्रत्येक कार्यका आरम्भमा ती नामहरूमध्ये एउटा नामको उच्चारण अवश्य गर्नुपर्दछ ।।४६।। दुष्ट, अज्ञानी र नास्तिकहरूका कार्य श्रीगणेशको नामस्मरण विना सम्पन्न भएको देखिन्छ त्यस कारण नामस्मरणको महत्त्व छैन भन्ने शङ्का र तर्क गर्न हुँदैन । त्यस्ता कार्य सिद्ध गर्ने नास्तिकहरूले पनि अज्ञानबाट भए पनि कुनै रूपले श्रीगणेशका बीज मन्त्रको उच्चारण गरिरहेका हुन्छन् ।।४७।। हे व्यास ! मैले तिमीलाई श्रीगणेशको लेशमात्र भए पनि महिमा बताएको छु । बुद्धिअनुसार उपासनाको फलको विषयमा पनि वर्णन गरेको छु ।।४८।। जति विष्णु भगवान्ले मलाई बताउनुभएको थियो त्यति तिमीलाई पनि बताएको छु । भगवान् विष्णु पनि श्रीगणेश उपासनाको चरमबिन्दुमा पुग्न सक्नुभएको थिएन ।।४९।। उहाँले पनि श्रीगणेशको नाममहिमा पूर्णरूपमा अवगत गर्नुभएको थिएन।

भृगुरुवाच

एवं ते कथितो राजन्नद्भुतो महिमा मया ।।५०।।

ब्रह्मणा सुप्रसन्नेन यो व्यासाय निरूपितः ।
उपासनाखण्डमिदं वर्णितं नृपते मया ।।५१।।

यदि ते श्रवणे श्रद्धा तदान्यदपि वर्णये ।
चरितं गणनाथस्य सोमकान्ताघनाशनम् ।।५२।।

सूत उवाच

इति वः कथितं नानाकथान्तरसमन्वितम् ।
उपासनं गणेशस्य शौनकाद्या महर्षयः ।।५३।।

वेदव्यासाय मुनये ब्रह्मणा यत् समीरितम् ।
भृगुणा सोमकान्ताय वर्णितं पापनाशनम् ।।५४।।

शृणुयाद् यो गणेशस्य पुराणमिदमुत्तमम् ।
स सर्वामापदं हित्वा भुक्त्वा भोगाननेकशः ।।५५।।

पुत्रपौत्रसमायुक्तो ज्ञानविज्ञानसंयुतः ।
लभते परमां मुक्तिं गणेशस्य प्रसादतः ।।५६।।

न तस्य पुनरावृत्तिः कल्पकोटिशतैरपि ।
यः श्रावयेन्महाभक्त्या यथोक्तफलभाग् भवेत् ।।५७।।

यथाप्तं सोमकान्तेन शृण्वता परमादरात् ।।५८।।

**भृगुले भन्नुभयो** - हे राजा सोमकान्त ! तपाइँलाई मैले श्रीगणेश भगवान्‌को अद्‌भुत महिमा बताएँ ।।५०।। प्रसन्न हुनुभएका ब्रह्माजीले जुन श्रीगणेशको महिमा व्यासलाई बताउनुभएको थियो सौभाग्यले आज त्यस महिमाको विषयमा तपाइँसँग चर्चा गर्ने अवसर प्राप्त भयो । यो उपासनाखण्ड मैले सम्पूर्णरूपमा तपाइँलाई सुनाएको छु ।।५१।। तपाइँको अरू श्रद्धा छ भने बाँकी खण्ड पनि बताउनेछु । हे सोमकान्त! भगवान् श्रीगणेशको चरित्र पापनाशक छ ।।५२।।

**सूतजीले भन्नुभयो**- हे शौनक आदि मुनिगण! नाना कथाहरूद्वारा गुम्फित श्रीगणेशपुराणको उपासनाखण्ड मैले तपाइँहरूलाई सुनाएँ। जुन खण्डलाई कुनै समयमा ब्रह्माजीले वेदव्यासलाई बताउनुभएको थियो र भृगुले सोमकान्तलाई सुनाउनुभएको थियो।।५३-५४।। यो उपासनाखण्ड परमपवित्र छ र पापनाशक छ। जसले यो अत्यन्त उत्तम वाङ्मय श्रीगणेशपुराण सुन्दछ, त्यो मानिस सबै पाप र आपत्तिबाट मुक्त भएर अनेक भोगहरूको भोग गरी पुत्र-पौत्र सम्पन्न र ज्ञान-विज्ञान परिपूर्ण भई श्रीगणेशको कृपाबाट परम मुक्ति प्राप्त गर्दछ।।५५-५६।। कोटि-कोटि कल्पहरूका सयौं पुनरावृत्ति हुँदा पनि त्यसको पुनरागमन हुँदैन। जसले यो श्रीगणेशपुराण भक्तिपूर्वक सुनाउँछ त्यसले ती सम्पूर्ण फल प्राप्त गर्दछ, जुन फल श्रद्धापूर्वक श्रीगणेशपुराणको श्रवण गर्ने राजा सोमकान्तले प्राप्त गरेका थिए ।।५७-५८।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे ब्रह्मव्यासभृगुसोमकान्तसंवादे गजानननामनिरूपणं नाम द्विनवतितमोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'गजानन-नामनिरूपण' शीर्षकान्वित बयानब्बेऔं अध्याय पूर्ण भयो ।।९२।।

ॐ

卐 श्रीमद्‌गजाननार्पणमस्तु 卐

ॐ

परिपूर्णोऽयमुपासनाखण्डः

ॐ

ॐ

# क्रीडाखण्डसार:

क्रीडाकाण्डमथो वदे कृतयुगे श्वेतच्छविः काश्यपः
सिंहाङ्कः स विनायको दशभुजो भूत्वाथ काशीं ययौ ।
हत्वा तत्र नरान्तकं तदनुजं देवान्तकं दानवम्
त्रेतायां शिवनन्दनो रसभुजो जातो मयूरध्वजः ।।३।।

हत्वा तं कमलासुरं च सगणं सिन्धुं महादैत्यपम्
पश्चात् सिद्धिमती सुते कमलजस्तस्मै च ज्ञानं ददौ ।
द्वापरे तु गजाननो युगभुजो गौरीसुतः सिन्दुरम्
सम्मर्द्य स्वकरेण तं निजमुखे चाखुध्वजो लिप्तवान् ।।४।।

गीताया उपदेश एव हि कृतो राज्ञे वरेण्याय वै
तुष्टायाथ च धूम्रकेतुरभिधो विप्रः सधर्मर्धिकः ।
अश्वाङ्को द्विभुजो सितो गणपतिर्म्लेच्छान्तकः स्वर्णदः
क्रीडाकाण्डमिदं गणस्य हरिणा प्रोक्तं विधात्रे पुरा ।।५।।

**अर्थ** - अहिले श्रीगणेशपुराणको क्रीडाखण्डको सार बताइँदैछ । सत्ययुगमा सेतो झल्झलाकार कान्तिले सुहाउनुभएका कश्यपनन्दन सिंहवाहन श्रीमहोत्कट गणेश दश भुजाद्वारा शोभायमान भई काशी पुग्नुभयो । उहाँले त्यहाँ गएर नरान्तक र देवान्तक नामक अजेय दानवहरूको वध गर्नुभयो । त्रेतायुगमा श्रीगणेश मयूरवाहनका रूपमा ६ भुजाहरूले सुहाउनु हुँदै शिवपुत्रका रूपमा मयूरेश्वरका नामबाट प्रकट हुनुभयो । उहाँले त्यस अवतारमा गणसहित कमलासुरनामक दैत्य र महादैत्य सिन्धुको पनि वध गर्नुभयो । दुवै दैत्यको वधपछि ब्रह्माले उहाँलाई सिद्धि र बुद्धिनामक दुई कन्या प्रदान गरी ज्ञानोपदेश गर्नुभयो । द्वापरयुगमा गौरीपुत्रका रूपमा गजाननका नामबाट श्रीगणेश अवतीर्ण हुनुभयो । यस अवतारमा मूषकवाहन श्रीगजाननले आफ्ना हातबाट सिन्दूरासुरको वध गरी त्यसका शरीरको सुगन्धित पदार्थ आफ्नो शरीरमा लेपन गरी सिन्दूरवदनका रूपमा प्रसिद्ध हुनुभयो । यस अवतारमा उहाँले राजा वरेण्यलाई गणेशगीताको उपदेश गर्नुभयो । कलियुगमा श्रीगणेश धूम्रकेतुको नामबट ब्राह्मणका रूपमा अवतीर्ण भई प्रसिद्ध हुनुहुनेछ। यस अवतारमा उहाँ अश्ववाहन, द्विबाहु, श्वेतकान्ति, दुर्जनसंहारक र सुवर्णदाताका रूपमा विख्यात हुनुहुनेछ। यी सबै कुराहरू विष्णुले ब्रह्मालाई बताउनुभएको थियो ।

ॐ

ॐ

# श्रीगणेशपुराणम्

ॐ

## क्रीडाखण्डः

ॐ

### प्रथमोऽध्यायः { १ अध्याय }

श्रीगणेशाय नमः, श्रीमहासिद्धिमहाबुद्धिलक्षलाभनग्नभैरवराजचरणाभ्यां नमः ।
सकलगाणेशगुरुभ्यो नमः ।

मुनय ऊचुः

सम्यगाख्यानमाख्यातं त्वया सूत! महामते ! ।
सादरं श्रुतमस्माभिर्न च तृप्तिं गता वयम् ।।१।।

यथा न तृप्यते जन्तुरन्नमश्नन् दिने दिने ।
अन्यत् कथान्तरं ब्रूहि येन तृप्यामहे वयम् ।।२।।

सूत उवाच

उक्तं चोपासनाखण्डं क्रीडाखण्डं वदामि वः ।
यथा कृतं गणेशेन नानादैत्यविहिंसनम् ।।३।।

साधुद्विजगवाञ्चैव पालनं परमादरात् ।
तदहं सम्प्रवक्ष्यामि श्रूयतां स्थिरचेतसा ।।४।।

मुनय ऊचुः

यावद् यावत् कथ्यते तत् पुराणं
तावत् तावद् वर्धते श्रोतुमिच्छा ।
तस्मात् सम्यक् कथ्यतां सर्वलोकः
संसाराब्धेर्येन सद्यः प्रमुच्येत् ।।५।।

सूत उवाच

यदुक्तं ब्रह्मणा पूर्वं व्यासायामिततेजसे ।
भृगुणा सोमकान्ताय तदेतद् वो ब्रवीम्यहम् ।।६।।

**मुनिहरूले भने-** हे बुद्धिमान् सूतज्यू! तपाईंले हामीलाई राम्रो कथा सुनाउनुभयो। हामीले पनि श्रद्धापूर्वक सुन्यौं । यी कथाहरू सुन्दा हामी कत्ति पनि तृप्त भएका छैनौं।।१।। जसरी दिनदिनै भोजन गर्दा पनि प्राणी कहिल्यै तृप्त हुँदैन, त्यसैगरी हामी पनि श्रीगणेशसम्बन्धी अनेक कथाहरूको श्रवण गर्दा पनि तृप्त भएका छैनौं। अब हामीलाई अरू ती महत्त्वपूर्ण कथाहरू सुनाउनुहोस्, जसबाट हामी तृप्त हुन सकौं ।।२।।

**सूतजीले भन्नुभयो-** मैले तपाईंहरूलाई श्रीगणेश-पुराणको उपासना खण्ड सुनाएँ। अब तपाईंहरूलाई म क्रीडाखण्ड सुनाउँछु । भगवान् श्रीगणेशले बालक्रीडा गर्दा अनेक प्रकारका दैत्यहरूको नाश गरी सज्जन, ब्राह्मण र गाईको पनि पालन गर्नुभयो। श्रीगणेशका ती सबै लीलाहरू म बताउँछु, तपाईंहरूले स्थिरचित्त भएर सुन्नुहोस् ।।३-४।।

**मुनिहरूले भने -** जब-जब तपाईंका मुखबाट यो श्रीगणेशपुराण हामी सुन्न पाउँछौं, तब-तब हाम्रो सुन्ने इच्छा पनि अत्यन्त बढ्दै जान्छ। त्यस कारण हे सूतज्यू ! तपाईंले राम्ररी हामीलाई श्रीगणेश भगवान्का लीलाहरूको विषयमा सुनाउनुहोस् । जुन कथा सुन्नाले श्रोताजन छिटै संसार सागरबाट मुक्त भएर परमानन्दमा प्राप्त हुन सकोस् ।।५।।

**सूतजीले भन्नुभयो-** पहिले ब्रह्माजीले अत्यन्त तेजस्वी ऋषि वेदव्यासलाई र भृगु ऋषिले सोमकान्तलाई जुन कथा सुनाउनुभएको थियो, त्यो कथा म तपाईंहरूलाई सुनाउँछु।।६।।

व्यास उवाच

पद्मयोने ! वद विभो ! गणेशचरितं शुभम् ।
यद् यद् रूपं समास्थाय यद् यच्च कृतवान् विभुः ।।७।।

कृपावता त्वया ब्रह्मन् ! ममवाक्यादुदीर्यताम् ।
उपासनाखण्डमिदं श्रुत्वा तृप्तिं न यामि च ।।८।।

येन येनावतारेण यं यं दैत्यं महाबलम् ।
अहनद् विकटस्तत्तत् कर्मास्य वक्तुमर्हसि ।।९।।

तदीयं बालचरितं लीला नानाविधा अपि ।
श्रुत्वा त्वद्वदनाम्भोजान् मनो निर्वृतिमेष्यति ।।१०।।

सूत उवाच

श्रुत्वा नानाविधान् प्रश्नानुवाच कमलासनः ।
कथां नानाविधां दिव्यां व्यासाय परिपृच्छते ।।११।।

ब्रह्मोवाच

साधु पृष्टं त्वया व्यास ! हृदयानन्दकारिणा ।
वक्तुर्विवर्धते प्रीतिः सादरे श्रोतरि प्रभो ।।१२।।

अवाच्यमपि वक्तुं मे पुण्यश्लोके भवेत् त्वयि ।
शक्तिर्गरीयसी यद्वद् वक्तुः श्रोतरि कथ्यताम् ।।१३।।

इदानीं सर्वमाख्यास्ये गणेशचरितं तव ।
नानावतारान् कृत्वा स भूभारं हतवान् विभुः ।।१४।।

हत्वा नानाविधान् दैत्यान् स्वस्थानेऽस्थापयत् सुरान्।
साधूनां पालनरतो दुष्टनिर्मूलनक्षमः ।।१५।।

इतिहासं शृणु मुने ! गणेशाख्यानसंश्रयम् ।
विष्टरश्रवसा प्रोक्तं श्रवणात् सर्वकामदम् ।।१६।।

विष्णुरुवाच

युगे युगे भिन्ननामा गणेशो भिन्नवाहनः ।
भिन्नकर्मा भिन्नगुणो भिन्नदैत्यापहारकः ।।१७।।

**व्यासले भन्नुभयो** - हे पितामह ! मलाई श्रीगणेश भगवान्को पवित्र चरित्र सुनाउनुहोस्। सर्वव्यापक भगवान् श्रीगणेशले जुन-जुन रूप लिएर जस्ता-जस्ता लीला गर्नुभयो, ती विषयमा तपाईंले मेरो अनुरोधलाई स्वीकार गरेर मलाई जानकारी गराउनुहोस्। मैले उपासना खण्ड सुनें। म तृप्त भएको छैन ।।७-८।। विकट नामले सम्बोधित हुनुहुने भगवान् श्रीगणेशले जुन-जुन अवतार लिएर जस्ता-जस्ता बलवान् दैत्यहरूलाई मार्नुभयो, उहाँका ती-ती कर्महरूबारे पनि मलाई बताउनुहोस्।।९।। भगवान् श्रीगणेशका बालचरित्र, र अनेक थरि लीलाहरूको विषयमा तपाइँको मुखकमलबाट सुन्न पाउँदा मेरो मनले परम आनन्द प्राप्त गर्नेछ।।१०।।

**सूतजीले भन्नुभयो** - वेदव्यासका प्रश्न सुनेर ब्रह्माजीले जिज्ञासु व्यासलाई गणेशलीलामा आधारित अनेक थरि दिव्य कथा सुनाउनुभयो।।११।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! मेरो हृदयलाई आनन्द प्रदान गर्ने तिमीले राम्रो कुरा सोध्यौ । गुरुमा आदरपूर्वक श्रद्धा राखेर प्रश्न गर्ने शिष्यमा वक्ता गुरुको अत्यन्त स्नेह रहेको हुन्छ। मैले लुकाएर राख्ने कुरा पनि अर्थात् बताउनै नहुने शास्त्रका कुरा पनि पुण्यका कारण प्रसिद्ध, असल श्रोता तिम्रा निमित्त बताउनेछु । वक्ताको श्रोतामा ठूलो स्नेहको शक्ति रहेको हुन्छ। यस कारणले तिमीलाई केही बाँकी नराखेर सबै कुरा बताउनेछु।।१२-१३।। हे वेदव्यास ! अहिले म तिमीलाई श्रीगणेशको सम्पूर्ण चरित्र बयान गर्नेछु। सर्वव्यापक, साधुहरूका रक्षक र दुष्टहरूका नाशक श्रीगणेश प्रभुले अनेक थरि अवतार लिनु भएर पृथिवीको भार हरण गर्नुभएको थियो। अनेक दुष्ट दैत्यहरूलाई मारेर देवताहरूलाई आ-आफ्नो धाममा प्रतिष्ठित गराउनुभएको थियो।।१४-१५।। हे मुनि वेदव्यास ! श्रीगणेशको कथामा आधारित एउटा इतिहास रहेको छ त्यो सुन। यो इतिहास मलाई भगवान् नारायणले बताउनुभएको हो। यस इतिहासको श्रवणबाट सबै कामनाहरूको सिद्धि हुन्छ ।

**नारायणले भन्नुभयो**- हे ब्रह्माजी! युगयुगमा श्रीगणेशका भिन्दाभिन्दै नाम छन्। भिन्दाभिन्दै वाहन पनि छन्। त्यतिमात्र होइन, युगयुगका कर्म पनि भिन्दाभिन्दै छन् र गुण पनि। उहाँले युगयुगमा भिन्दाभिन्दै दैत्यहरूको संहार गर्नुहुन्छ।।१६-१७।।

सिंहारूढो दशभुज: कृते नाम्ना विनायक: ।
तेजोरूपी महाकाय: सर्वेषां वरदो वशी ।।१८।।

त्रेतायुगे वर्हिरूढ: षड्भूजोऽप्यर्जुनच्छवि: ।
मयूरेश्वरनाम्ना च विख्यातो भुवनत्रये ।।१९।।

द्वापरे रक्तवर्णोऽसावाखुरूढश्चतुर्भुज: ।
गजानन इति ख्यात: पूजित: सुरमानवै: ।।२०।।

कलौ तु धूम्रवर्णोऽसावश्वारूढो द्विहस्तवान् ।
धूम्रकेतुरिति ख्यातो म्लेच्छानीकविनाशकृत् ।।२१।।

यं यं स दैत्यं हन्ति स्म तदेदानीं ब्रुवे मुने ।
अङ्गदेशीयनगरे रौद्रकेतुरभूद् द्विज: ।।२२।।

सर्वशास्त्रार्थतत्त्वज्ञो वेदवेदाङ्गपारग: ।
समो जीवेष्वग्निहोत्री सुरगोद्विजपूजक: ।।२३।।

ईश्वरोपासको नित्यं सर्वागमविशारद: ।
यस्य पत्नी शारदाख्या रूपलावण्यशोभिता ।।२४।।

ईदृशी नाप्सरोमध्ये नाष्टासु नायिकास्वपि ।
यद्वक्त्रनिर्जितश्चन्द्रश्चिन्तया क्षयमीयिवान् ।।२५।।

अनेकदिव्याभरणैर्भासयन्ती धरातलम् ।
यथा नक्षत्रमालाभिर्भासते व्योममण्डलम् ।।२६।।

सत्ययुगमा भगवान् श्रीगणेश सिंहमा सवार हुनुहुन्छ। उहाँका दश हात हुन्छन् र उहाँको नाम विनायकका रूपमा संसारमा प्रसिद्ध हुने गर्छ। उहाँको स्वरूप तेजोमय हुन्छ। शरीर पर्वताकार विशाल हुन्छ। उहाँले सत्ययुगमा इन्द्रियलाई जितेर मुनिको व्रत धारण गर्नुहुन्छ र सबैलाई वर प्रदान गर्नुहुन्छ।।१८।। हे ब्रह्माजी ! त्रेता युगमा श्रीगणेश मयूरेश्वर नामबाट विख्यात हुनुहुन्छ। उहाँको शरीरमा सेतो आभा छाएको हुन्छ । उहाँका शरीरमा छवटा हात हुन्छन्। त्रेतायुगमा उहाँ मयूरमा आरोहण गर्नुहुन्छ, त्यस कारण मयूरेश्वरको नामबाट प्रख्यात हुनुहुन्छ। द्वापरयुगमा उहाँ गजानन नामबाट प्रख्यात हुनुहुन्छ। त्यस बेला देवता र मानिसहरूले उहाँको आराधना गर्छन्। द्वापर युगका श्रीगणेशका शरीरमा चार हात हुन्छन् । उहाँ मूसामा सवार हुनुहुन्छ र उहाँको अङ्गको कान्ति रातो वर्णको रहेको हुन्छ।।१९-२०।। कलियुगमा भगवान् श्रीगणेश धुम्रकेतुका नामबाट प्रख्यात हुनुहुन्छ। कलियुगमा उहाँले म्लेच्छ जातिका सेनाहरूलाई नाश गर्नुहुन्छ। त्यस बेला श्रीगणेशका शरीरमा दुइटा हात हुन्छन् । उहाँ घोडामा सवार हुनुहुन्छ र उहाँ ध्वाँसे वर्णको कान्तिले शोभायमान हुनुहुन्छ ।।२१।। सत्य, त्रेता, द्वापर र कलियुगमा श्रीगणेशले अनेक अवतारहरू लिएर जस्ता-जस्ता दैत्यहरूको विनाश गर्नुहुन्छ ती लीलाहरूको विषयमा म यो क्रीडाखण्डमा तपाईँलाई राम्ररी बताउनेछु। अङ्गदेशको कुनै एउटा नगरमा रौद्रकेतु नामक एकजना ब्राह्मण थिए। ती सबै शास्त्रहरूको मर्म जान्दथे। वेद र वेदाङ्गमा पारङ्गत थिए। प्राणीमात्रमा समान दृष्टि राख्दथे। दिनदिनै अग्निहोत्र यज्ञ सम्पन्न गर्दथे र देवता, गाई एवं ब्राह्मणको आराधना पनि गर्दथे। सबै तन्त्रशास्त्रमा पारङ्गत ती ब्राह्मणले नित्य ईश्वरको उपासना गर्दथे। रूप र सौन्दर्यले जगमगाएकी उनकी पत्नीको नाम शारदा थियो।।२२-२४।। शारदासमान राम्रा नारी अप्सराहरूमध्ये पनि कुनै थिएनन् र आठवटा महानायिकाहरूले पनि शारदाको समानता प्राप्त गर्दैनथे । शारदाको मुखचन्द्रको सौन्दर्यद्वारा पराजित आकाशका चन्द्रमा चिन्ताका कारण दुर्बल बनेका थिए । वस्तुत: चन्द्रमालाई क्षयरोग नै लागेको थियो। नक्षत्रको पङ्क्तिले रातको समयमा आकाशमण्डल जगमगाएझैँ शोभाले जगमगाएकी ती मुनिपत्नी शारदाले आफ्ना

कदाचित् सा गर्भवती शारदोत्पललोचना ।
शारदा शारदे मासि शरच्चन्द्रसुशोभिते ।।२७।।

शरीरतेजसा यस्या न प्राज्ञायत किञ्चन ।
दोहदान् पूरयत्येष यं यं साऽकामयत् सती ।।२८।।

एवं सा नवमे मासि यमलौ सुषुवे सुतौ ।
अतिकान्ततरौ स्वान्तनन्दनावुभयोरुभौ ।।२९।।

आजानुबाहू दीर्घाक्षौ दृष्ट्वा प्रोवाच तत्पिता ।
अद्याहमनृणो जातो धन्यमद्य तपो मम ।।३०।।

वंशो धन्यो जनुर्धन्यं यत्पुत्रौ वीक्षितौ मया ।
अर्घ्याद्यैर्द्विजवर्यान् स सम्पूज्य च गणाधिपम् ।।३१।।

स्वस्तिवाच्यं चकाराशु मातृपूजनपूर्वकम् ।
भक्त्याऽऽभ्युदयिकं श्राद्धं जातकर्माऽकरोद् द्विजैः ।।३२।।

सम्पूज्य ब्राह्मणान् भक्त्या ददौ दानान्यनेकशः ।
सुहृदो मानयामास वासोरत्नधनादिभिः ।।३३।।

नानावादित्रनिर्घोषैः शर्कराञ्च गृहे गृहे ।
दापयामास ताम्बूलं पुत्रजन्मसु निर्वृतः ।।३४।।

यथा ध्यानपरो योगी प्राप्य सद्वस्त्वनुत्तमम् ।
ततो दशाहेऽतीतेऽसावाकार्य द्विजपुङ्गवान् ।।३५।।

समर्च्य परया भक्त्या ज्योतिःशास्त्रविशारदान् ।
पप्रच्छ चैतयोर्नाम किं कार्यं द्विजसत्तमाः ।।३६।।

अत्यन्त उज्ज्वल अलङ्कारको कान्तिले पृथिवीतललाई नै ज्योतिर्मय तुल्याएकी थिइन्। कमलका जस्ता आँखा भएकी ती शारदाले शरदकालको चन्द्रमाद्वारा शोभायमान कार्तिक महिनामा गर्भधारण गरेकी थिइन् ।।२५-२७।। तिनका शरीरको तेजका कारण गर्भधारणबाट उत्पन्न हुने मलिनता आदि दोष लुकेका थिए। शारदाले गर्भावस्थामा जस्ता-जस्ता कामना व्यक्त गर्दथिन् ती ब्राह्मण रौद्रकेतुले सम्पूर्ण ती कामनाहरू पूर्ण तुल्याउँथे ।।२८।। यसरी गर्भवती शारदाले नौ महिना बितेपछि जुम्ल्याहा छोरा जन्माइन्। ती दुवै छोराहरू माता-पिताका निमित्त अत्यन्त प्यारा थिए र तिनलाई हेर्दा ती माता-पिता अत्यन्त प्रसन्न हुन्थे। ती दुवै बालक आजानुबाहु (जसका हात घुँडासम्म पुग्छन्) थिए र तिनका आँखा लाम्चिला थिए। ती बालकहरूलाई देखेर तिनका पिता रौद्रकेतुले भने – 'आज म पितृऋणबाट मुक्त भएँ, मेरो तपस्या धन्य भयो, वंश धन्य भयो, मेरो जन्म धन्य भयो किनकि मैले दुई सुन्दर पुत्रको अनुहार देख्न पाएँ ।' पुत्रजन्मको खुसियालीमा ती रौद्रकेतुले श्रीगणेशको पूजा गरे र ब्राह्मणहरूको पनि पूजा गरे।।२९-३१।। स्वस्तिवाचन र मातृकापूजा पनि सम्पन्न गरे । त्यसपछि भक्तिपूर्वक आभ्युदयिक श्राद्ध र जातकर्म संस्कार पनि ब्राह्मणहरूद्वारा सम्पन्न गराए ।।३२।। रौद्रकेतुले भक्तिपूर्वक ब्राह्मणहरूको पूजा गरी तिनीहरूलाई अनेक थरि दान प्रदान गरे। मित्रबन्धुहरूलाई पनि वस्त्र, रत्न र धन दिएर सम्मानित गरे। तिनले घरमा अनेक माङ्गलिक बाजा बजाउँदै गाउँछिमेकका घर-घरमा चिनी बाँडे। पुत्रजन्मको परम आनन्दमा डुबेका रौद्रकेतुले सम्मान गर्नुपर्ने मानिसहरूलाई पानको बीडा दिएर सम्मानित गरे।।३३-३४।। एउटा योगीले ध्यानकालमा भगवान्‌को दर्शन प्राप्त गरेर परम आनन्दको अनुभूति गरेझैं रौद्रकेतुले पनि छोराको दर्शन पाएर परम आनन्दको अनुभूति गरे। दश दिन बितेपछि तिनले ज्योतिषशास्त्र जान्ने उत्तम-उत्तम ब्राह्मण बोलाएर भक्तिपूर्वक सम्मान गर्दै भने – हे पूज्य ब्राह्मणवर्ग! हाम्रा यी दुई बालकहरूको कस्ता-कस्ता नाम जुराउनुपर्छ ? हजुरहरूले अतीत र भविष्यका सबै कुरा जान्नुहुन्छ, त्यस कारण मलाई उत्तम नाम विचार गरेर बताउनुहोस्। ती कुरा सुनेर ब्राह्मणहरूले केहीबेर ध्यान

अतीतानागतज्ञानाद् विचार्य कथयन्तु मे ।
ते चोचुः प्रणिधानेन देवान्तकनरान्तकौ ।।३७।।

नामनी ह्यनयोर्ब्रह्मन्नन्वर्थे कुरु नो मते ।
इति तद्वचनं श्रुत्वा द्विजभक्तिरतो द्विजः ।।३८।।

स्वशाखोक्तेन विधिना नामनी विदधे तथा ।
ब्राह्मणान् भोजयामास सर्वांश्च नागराँस्तथा ।।३९।।

ववृधाते ततस्तौ तु मेरुमन्दरसन्निभौ ।
यथा कच्छाश्रितौ तालौ यथा वंशाङ्कुरौ बलात् ।।४०।।

यत्र यत्र पदन्यासं कुर्वाते तौ यदृच्छया ।
रसातलगतस्यात्र शेषस्य नमते शिरः ।।४१।।

दृश्यते मण्डलं भानोस्तिष्ठतोः शिरसि स्थितम् ।
पित्रोः प्रदर्शयन्तौ तौ कौतुकानि भृशं तयोः ।।४२।।

कदाचिन्नारदोऽकस्माद् रौद्रकेतुगृहं ययौ ।
श्रुत्वा कीर्तिं बालकयोः कौतुकादग्रहीत्तु तौ ।।४३।।

मूर्ध्न्याघ्रायाऽङ्कमारोप्य पितराववदत् तयोः ।

नारद उवाच

श्रुत्वा कीर्तिं समायातः पुत्रयोरद्भुतां शुभाम् ।।४४।।

अग्रेऽद्भुततरा चापि भविष्यत्यनयोर्मुने ।
महद् भाग्यं तव मुने ! यल्लब्धावीदृशौ सुतौ ।।४५।।

दृष्ट्वाऽन्यो हर्षमायाति का वार्ता स्वजनस्य ह ।
इत्याकर्ण्य शुभं वाक्यं नारदेन समीरितम् ।।४६।।

तावाहतुर्मुनिं नत्वा पितरौ नारदं तदा ।
तव प्रसादाद् बह्वायुः पुत्रयोरस्तु साम्प्रतम् ।।४७।।

गरेर भने- हे ब्राह्मण देवता! तपाईंका छोराहरूका नाम देवान्तक र नरान्तक रहनेछन् र तपाईंले आफ्ना छोराहरूलाई उनीहरूको नामअनुसारको चरित्र र व्यक्तित्व बनोस् भन्ने हिसाबले शिक्षा-दीक्षा र संस्कार दिनुपर्छ । ज्योतिषीहरूका यी कुरा सुनेर ब्राह्मणहरूमा भक्ति राख्ने रौद्रकेतु ब्राह्मणले आफ्नो शाखामा बताएको विधिअनुसार ती दुवै बालकको नामकरण संस्कार सम्पन्न गरे । त्यस बेला ब्राह्मणहरूलाई भोजन गराए, आफ्ना नगरवासी इष्टमित्र, बन्धुबान्धव र सामान्य नर-नारीहरूलाई भोजन गराए ।।३५-३९।। मेरु पर्वत र मन्दार पर्वतझैं कान्तिमान् ती दुवै बालक देवान्तक र नरान्तक बढ्न थाले । जसरी उत्तम जमिनमा रोपेको ताडीवृक्ष छिटो हुर्कन्छ जसरी नदीको मलिलो तटभूमिमा रोपेको बाँस चाँडै अङ्कुरित हुन्छ त्यसरी नै ती बालक पनि अत्यन्त तीव्र गतिमा वृद्धि प्राप्त गरिरहेका थिए ।।४०।। ती दुई बालकले आफ्नो इच्छाअनुसार जहाँ-जहाँ पैतालाले टेक्ने गर्दथे, त्यहाँ-त्यहाँ पृथिवीधारण गर्ने पातालवासी शेषनागका शिर निहुरिन्थे । ती बालकहरू उभिँदा तिनका शिरमाथि आएर भगवान् सूर्यको मण्डल स्थिर भएझैं लाग्थ्यो । ती दुवै बालकले आफ्ना माता-पिताका सामु कौतूहलजनक र अत्यन्त मोहक बाललीला गरिरहेका थिए ।।४१-४२।। कुनै दिन रौद्रकेतुका बालकहरूको विचित्र बाललीलाको ख्याति सुनेर त्यहाँ आएका नारद ऋषिले उत्कण्ठा-पूर्वक ती दुवै बालकलाई काखमा लिए ।।४३।। ती बालकहरूका टाउकामा सुँघेर तिनका बाबुआमालाई सम्बोधन गर्दै भने ।

नारदजीले भन्नुभयो- हे रौद्रकेतु ब्राह्मण! म तपाईंका पुत्रहरूको अद्भुत र मङ्गलमय कीर्ति सुनेर यिनको दर्शन गर्न आएको छु।।४३-४४।। भविष्यमा यी बालकहरू यशस्वी हुने छन् । हे ब्राह्मण ! तपाईंको ठूलो भाग्य रहेछ किनकि तपाईंले यस्ता दुर्लभ पुत्रहरूलाई जन्म दिनुभएको छ।।४५।। पराई मानिस पनि यी सुन्दर बालकहरूलाई देखेर अत्यन्त हर्षित हुन्छन् भने आफ्ना मानिसहरूको त कुरै नगरौं। नारदमुनिले भनेका यी मीठा कुरा सुनेर ती बालकहरूका बाबु-आमाले नारदमुनिलाई नमस्कार गर्दै भने - हे मुनिवर! तपाईंको

अनुग्रहं कुरु तथा यथैतौ वीर्यवत्तरौ ।
भवेतां लोकविख्यातौ सर्वज्ञौ रिपुदण्डिनौ ।।४८।।

कृपाबाट यी हाम्रा पुत्रहरू दीर्घायु बनून् । तपाईंले त्यस्तो कृपा गर्नुहोस्, जसबाट यी दुबै बालक पराक्रमी, संसारमा विख्यात, सर्वज्ञ र शत्रुसंहारक हुन सकून्।।४६-४८।।

क उवाच
रुद्रकेतोः शारदायाः पुत्रयोर्भक्तिमीक्ष्य सः ।
पञ्चाक्षरीं महाविद्यामुभयोरुपदिष्टवान् ।।४९।।

उवाच पुत्रौ ! कामारिरनया सम्प्रसाद्यताम् ।
मस्तकेऽभयहस्तञ्च स्थाप्यानुष्ठानमादिशत् ।।५०।।

एवमुक्त्वा तमामन्त्र्य रौद्रकेतुं महामुनिः ।
ततस्त्वन्तर्दधे ब्रह्मन् नारदो दिव्यदर्शनः ।।५१।।

अन्तर्हिते मुनौ तौ चावदतां पितरौ मुदा ।
अनुष्ठानाय नावाज्ञां भवद्भ्यां सम्प्रदीयताम् ।।५२।।

**ब्रह्माजीले भन्नुभयो -** रौद्रकेतु र शारदाका पुत्र देवान्तक र नरान्तकको आफूमा भक्ति देखेर नारदजीले तिनीहरूलाई पञ्चाक्षरी महामन्त्र उपदेश गरे। पछिबाट शिक्षा दिंदै भने - यस मन्त्रको अनुष्ठानबाट तिमीहरूले भगवान् शङ्करलाई प्रसन्न तुल्याऊ । त्यसपछि मस्तकमा वरद हात राख्दै ती दुबैलाई तिनले अनुष्ठानको विधि पनि सिकाए। यसरी शिक्षा दिएर रौद्रकेतुसँग बिदावारी भई दिव्यदर्शन नारदऋषि त्यहीं अन्तर्धान भए। नारदमुनि अन्तर्धान भएपछि ती दुबै बालकले आफ्ना माता-पितालाई हर्षपूर्वक भने - हे माता-पिता ! हामी पञ्चाक्षरी विद्याको अनुष्ठान गर्न चाहन्छौं, हजुरहरूले आज्ञा दिनुहोस्।।४९-५२।।

ॐ

इति श्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे नारदोपदेशो नाम प्रथमोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आर्शीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'नारदोपदेश' शीर्षकान्वित पहिलो अध्याय पूर्ण भयो ।।१।।

ॐ

# द्वितीयोऽध्याय: { २ अध्याय }

व्यास उवाच

अनुष्ठानं कथं ब्रह्मन् कुत्र वा तौ प्रचक्रतु: ।
तत्सर्वं विस्तराद् ब्रूहि सादरं मम पृच्छत: ।।१।।

ब्रह्मोवाच

साधु पृष्टं त्वया व्यास ! सर्वं ते कथयेऽधुना ।
चक्रतुस्तावनुष्ठानं देवान्तकनरान्तकौ ।।२।।

पित्रोराज्ञां गृहीत्वैव जग्मतुर्गहनं वनम् ।
न सञ्चारो यत्र वायोर्नानाद्रुमलताकुलम् ।।३।।

वापीकासारसहितं पुष्पपल्लवशोभितम् ।
विशालगह्वरगिरिनानाप्रस्तरशालि च ।।४।।

तत्र स्थितावुभावेतौ प्रारभतां महत्तप: ।
एकाङ्गुष्ठे स्थितौ चोभौ तत्र तौ स्थिरचेतसा ।।५।।

जपन्तौ नारदप्रोक्तां विद्यां पञ्चाक्षरीं शुभाम् ।
ध्यायन्तौ शङ्करं देवं सहस्रपरिवत्सरान् ।।६।।

निराहारौ वायुभक्षौ शरदां द्विसहस्रकम् ।
सहस्रवर्षं पत्राणि पक्वानि जक्षतुश्च तौ ।।७।।

एवं दशसहस्राणि वर्षाणि जपतोर्ययु: ।
विवृद्धे भूरितपसि ततश्च तेजसा तयो: ।।८।।

सूर्योऽभून्मन्दकिरणो भस्मोद्धूलितदेहयो: ।
व्याघ्राजिने चाक्षमाले बिभ्रतोर्गजचर्मणी ।।९।।

पुपूजतुरुष:काले शम्भुं कुसुमपल्लवै: ।
तस्मिँस्तपोवने तात ! तयोरद्भुततेजसा ।।१०।।

जातिवैरा: सुनिर्वैरा आसन् सिंहगजादय: ।
एवं तत्तपसा तुष्ट: पञ्चवक्त्रस्त्रिलोचन: ।।११।।

**व्यासले भन्नुभयो** - हे कमलासन ! ती दुई बालक देवान्तक र नरान्तकले कहाँ गएर कसरी पञ्चाक्षरी विद्याको अनुष्ठान गरे ? यस विषयमा म आदरपूर्वक जिज्ञासा प्रकट गर्दैछु। हजुरले विस्तारपूर्वक बताउनुहोस्।।१।।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! तिमीले उत्तम विषयमा प्रश्न गरेका छौ । म तिमीलाई तिनीहरूको अनुष्ठानको विषयमा सबै कुरा बताउँछु। देवान्तक र नरान्तकले कसरी अनुष्ठान गरे र कहाँ गरे ? भन्ने विषयमा पनि म राम्ररी खुलस्त पार्दछु। ती दुई भाइ आफ्ना मातापिताको आज्ञा लिएर नै गहन वनमा गएका थिए। त्यो वनमा वायुको सञ्चार थिएन किनकि त्यहाँ अनेक लहरा र रूखहरू आपसमा झाङ्गिएर रहेका थिए ।।२-३।। त्यो वन कुवा र तलाउले युक्त थियो। नयाँ-नयाँ पालुवा र विभिन्न थरिका फूलहरूले सुहाएको थियो। त्यहाँ ठूला-ठूला गुफाहरू थिए, ठूला पर्वत थिए र ठूला-ठूला चट्टानहरू पनि थिए ।।४।। त्यस वनमा रहेर ती दुई भाइले ठूलो तपस्या आरम्भ गरे। खुट्टाको बूढी औंलाले टेकेर उभिएका ती दुई भाइले चित्त स्थिर गराएर नारदजीले बताएको पञ्चाक्षरी मन्त्र जप गरी भगवान् शङ्करको ध्यान गर्दै हजार वर्षसम्म तपस्या गरे ।।५-६।। तपस्याको क्रममा निराहार रही वायुपान गर्दै तिनीहरूले फेरि दुई हजार वर्ष तपस्या गरे । त्यसपछि तिनीहरूले एक हजार वर्षसम्म सुकेका अथवा पाकेका पहेंला पात खाएर तपस्या गरे । यसरी तपस्या गर्दै मन्त्रजप गर्दा ती दुई भाइका दश हजार वर्ष बितेछन् । तिनीहरूको तपस्याबाट उत्पन्न तेज बढेपछि तेजस्वी सूर्य पनि मन्द भए । ती दुई भाइले आफ्नो शरीरमा भस्मलेपन गरेका थिए, बाघको छालामा आसन कसेका थिए, रुद्राक्ष माला धारण गरेका थिए र हात्तीको छाला ओढेका थिए ।।७-९।। एक दिन बिहान त्यस तपोवनमा ती दुई भाइले फूल र पातहरू जम्मा गरेर भगवान् सदाशिवको श्रद्धापूर्वक पूजा गरे। तिनीहरूको अद्भुत तेजले त्यो वनमा रहेका जातिबैरी सिंह एवं हात्तीहरू पनि आफ्नो बैर बिर्सी रमाएर खेलिरहेका थिए। ती बालकहरूको तपस्याबाट प्रसन्न हुनुभएका पञ्चमुख, त्रिनयन, दशबाहु,

दशबाहुरपर्णाङ्गो व्याघ्रेभचर्मशूलवान् ।
बिभ्रच्छिरसि गङ्गाञ्च डमरुं दक्षिणे करे ।।१२।।

फणिहारसमायुक्तो रुण्डमालालसद्गलः ।
वृषारूढो नीलकण्ठः प्रभया भासिताम्बरः ।।१३।।

नानालङ्कारसंयुक्तः श्वेताङ्गश्चन्द्रशेखरः ।
दृष्ट्वा तौ तादृशं देवं हर्षमापतुरुत्तमम् ।।१४।।

ननर्ततुरुभौ पश्चात् साष्टाङ्गं प्रणिपेततुः ।
बद्धाञ्जलिपुटौ तौ तं देवदेवं समूचतुः ।।१५।।

धन्यौ नौ पितरौ देवजनुर्षी नयने तपः ।
धन्यं कुलञ्च देहौ च यतो दृष्टो महेश्वरः ।।१६।।

वेदान्ताऽगोचरोऽगम्यो वाचो यस्मादुपावृताः ।
आगमः कुण्ठितो यत्र षट्शास्त्राण्यथ मानसम् ।।१७।।

सहस्रवदनः स्तोतुं न क्षमः सनकादयः ।
न शक्ताः सर्वजगतः कर्ता पाताऽपहारकः ।।१८।।

रङ्कं करोति राजानं राजानं रङ्कमेव च ।
सर्पं करोति वलयं वलयं सर्पमेव च ।।१९।।

अधनं यो धनाढ्यञ्च धनाढ्यमधनं तथा ।
श्रुत्वैवं च तयोर्वाणीं प्रोवाच स उमापतिः ।।२०।।

साधु साधु श्रुतं वाक्यामृतं वां समुदा मया ।
तपसा परितुष्टो वां वृषारूढः सहोमया ।।२१।।

आगतो ध्याननिष्ठाभ्यां याचेतां वाञ्छितान् वरान् ।

पार्वतीसहित सुहाउनुभएका, बाघ र हात्तीको छाला धारण गर्नुहुने, त्रिशूलले सुहाउनु भएका, शिरमा गङ्गा धारण गर्नुहुने, दायाँ हातमा डमरु धारण गर्नुहुने, घाँटीमा सर्पको मालाका साथ मुण्डमाला लगाउनुभएका, साँढेमा सवार हुनुभएका, आफ्नो प्रभाले आकाशलाई ज्योतिर्मय तुल्याउनुहुने, अनेक थरि अलङ्कारले अलङ्कृत र गोरो वर्णले चम्किनुभएका नीलकण्ठ चन्द्रशेखर भगवान्‌ले दर्शन दिनुभयो । यस्तो स्वरूप लिनुभएका भगवान्‌लाई देखेर ती दुई बालकले अत्यन्त हर्ष प्राप्त गरे ।।१०-१४।। ती दुबै भगवान्‌लाई देखेर नाच्न थाले। केहीबेर नृत्य देखाएपछि तिनीहरूले भगवान्‌का पाउमा प्रणाम गरे। त्यसपछि दुबै हात जोडेर भगवान् शङ्करको प्रार्थना गर्दै भने - आज हाम्रा माता-पिता धन्य हुनुभएको छ, हाम्रो जन्म दिव्य जन्मको रूपमा परिणत भएको छ, हामीले गरेको तपस्या धन्य भएको छ, हाम्रा आँखा धन्य भएका छन्, हाम्रा कुल र इष्टमित्रहरू धन्य भएका छन् । हामी दुई भाइका यी बालशरीर पनि धन्य भएका छन् किनकि हामीले आज देवाधिदेव महादेवको दर्शन पाएका छौं ।।१५-१६।। वेदान्तशास्त्रले जसलाई राम्ररी बताउन सक्दैनन्, वाणी पनि जहाँसम्म पुग्न सक्दिनन्, आगमशास्त्र जसको दर्शन नपाएर कुण्ठित हुन्छ, छवटै शास्त्रहरू पनि जसको दर्शन न पाउँदा मलिन बन्दछन्, जसको स्तुति गर्न शेषनाग र सनक आदि ऋषिहरू समर्थ हुँदैनन् त्यस्ता सबै जगत्‌का कर्ता, सबै जगत्‌का पालक, सबै जगत्‌का संहारक भगवान् शङ्कर हुनुहुन्छ ।।१७-१८।। उहाँले राजालाई रङ्क बनाउनुहुन्छ र रङ्कलाई राजा पनि बनाउन सक्नुहुन्छ। सर्पलाई हातको बाला बनाउनु हुन्छ र हातको बालालाई सर्पको रूपमा पनि परिणत गर्न सक्नुहुन्छ ।।१९।। भगवान् चन्द्रशेखरले मरेकालाई जिवाउनु हुन्छ, जिएकालाई मृत तुल्याउनुहुन्छ। निर्धनलाई धनी बनाउनुहुन्छ र धनीलाई निर्धन बनाउनुहुन्छ। भगवान् शङ्करले ती बालकहरूको यो मीठो वाणी सुनेर भन्नुभयो ।।२०।। हे बालकहरू! धन्य छौ! धन्य छौ ! तिमीहरूको वचनामृत मैले हर्षपूर्वक कानले पिएँ। अत्यन्त श्रद्धापूर्वक ध्यानमा लागेका तिमीहरूको तपस्याबाट प्रसन्न भएर म साँढेमा सवार भई पार्वतीका साथमा तिमीहरूलाई दर्शन दिन आएको छु। अब तिमीहरूले के चाहन्छौ ? ती चाहेका कुरा मलाई भन, म त्यो दिन तयार छु ।

क उवाच

अन्धकारेरिदं वाक्यं श्रुत्वा तौ प्रोचतुस्तदा ।।२२।।

हर्षगद्गदया वाचा देवान्तकनरान्तकौ ।
यदि तुष्टोऽसि देवेश ! सर्वेश ! जगदीश्वर ।।२३।।

यदि त्वया वरा देया यद्यनुग्राह्यता च नौ ।
तदा देवमनुष्येन्द्रयक्षरक्ष:पिशाचत: ।।२४।।

मानवोरगगन्धर्वाप्सर:किन्नरतोऽपि च ।
सर्वशस्त्रास्त्रयोर्वन्यग्राम्यपश्वादितोऽपि च ।।२५।।

ग्रहनक्षत्रभूतेभ्यो दानवासुरतोऽपि च ।
न दिवा न च रात्रौ वा कृमिकीटादितोऽपि वा ।।२६।।

मृत्यु: कदापि नौ स्यात्ते प्रसादाज्जगदीश्वर ! ।
त्रैलोक्यराज्यं नौ यच्छ भक्तिं ते चरणेऽपि च ।।२७।।

क उवाच

तौ जगाद तत: शूली प्रसन्नस्तपसा तयो: ।
समाकर्ण्य वरान् सर्वान् भक्तयोर्वृषभध्वज: ।।२८।।

शिव उवाच

यदिष्टं वाञ्छितं सर्वं तत्तथा न तदन्यथा ।
अभयं सर्वतोऽमृत्युस्त्रैलोक्ये राज्यमेव च ।।२९।।

लप्स्यथो लप्स्यते चापि भवद्भ्यामन्तको भयम् ।
तयो: शीर्ष्णोरधाच्छम्भुरभयं करपङ्कजम् ।।३०।।

एवं दत्त्वेप्सितान् कामानन्तर्धानं ययौ शिव: ।
तावनुज्ञां ततो गृह्य तस्मिन्नन्तर्हिते गृहम् ।।३१।।

ईयतुस्तं परिक्रम्य प्रणम्य च प्रपूज्य च ।
हर्षेण पितरौ दृष्ट्वा नेमतुर्भृशहर्षितौ ।।३२।।

आलिङ्ग्य पितरौ तौ तु निजवृत्तान्तमूचतु: ।
आघ्राय मस्तकं प्राह पिता तौ तनयौ मुदा ।।३३।।

**ब्रह्माजीले भन्नुभयो** - सदाशिव भगवान्का यो कुरा सुनेर ती देवान्तक र नरान्तकले हर्षले गद्गद वाणीबाट भने- हे देवाधिदेव महादेव ! हे सर्वेश्वर ! हे जगदीश्वर ! हजुर यदि प्रसन्न हुनुहुन्छ भने र हजुर यदि वरदान दिन चाहनुहुन्छ भने, यदि हजुरको हामीप्रति ठूलो अनुकम्पा छ भने देवता, मनुष्य, इन्द्र, यक्ष, राक्षस, पिशाच, मानव, सर्प, गन्धर्व, अप्सरा, किन्नर, सबै प्रकारका शस्त्र, सबै प्रकारका अस्त्र, वन्य पशु, ग्राम्य पशु, ग्रह, नक्षत्र, भूत, दानव र असुर कुनैबाट पनि हाम्रो मृत्यु नहोस्। हाम्रो दिनमा मृत्यु नहोस् र रातमा मृत्यु नहोस् । साना-साना कृमि र कीराहरूबाट पनि कहिल्यै मृत्यु नहोस्। हे जगदीश्वर ! हजुरको कृपाबाट हामी त्रैलोक्यका स्वामी हुन पाऔँ, अब हजुरले हामीलाई स्वर्ग, मर्त्य, पातालको साम्राज्य दिएर हामीलाई कृतार्थ गर्नुहोस् । हामीले जुनसुकै अवस्थामा पनि हजुरको चरणमा भक्ति गर्न पाऔँ।।२१-२७।।

**ब्रह्माजीले भन्नुभयो**- ती भक्त बालकहरूको तपस्याबाट प्रसन्न भएका, देवताहरूद्वारा पूजित, त्रिशूलधारी महादेवले तिनले मागेका वरदानहरूको विषयमा जानकारी पाएर भन्नुभयो।।२८।।

**शिवजीले भन्नुभयो** - 'हे बालकहरू ! तिमीहरूले जुन जुन कुरा चाहेका छौ ती सबै कुरा परिपूर्ण हुनेछन् अन्यथा हुनेछैन। ती सबै विषयबाट तिमीलाई मृत्युको डर हुनेछैन। स्वर्ग-मर्त्य-पातालको राज्य पनि पाउनेछौ र यमराजले पनि तिमीहरूबाट डर मान्नुपर्नेछ।' यसो भनेर भगवान् शिवजीले ती दुबै बालकहरूको शिरमा करकमल राखी अभयदान दिनुभयो।।२९-३०।। यसरी आफ्ना भक्तहरूले चाहेका वरदान प्रदान गरेर भगवान् शिवजी अन्तर्धान हुनुभयो। सदाशिवबाट आज्ञा प्राप्त गरी ती बालकहरू पनि उहाँको अन्तर्धानपछि घरतर्फ आए ।।३१।। भगवान् शङ्करको दर्शन पाएर अमोघ वरदानसमेत प्राप्त गरी अत्यन्त हर्षित भएका ती दुबै नरान्तक र देवान्तकले बाबुआमाको परिक्रमा गरेपछि शिर झुकाएर प्रणाम गरे ।।३२।। आफ्ना बुबाआमालाई आलिङ्गन गरेर ती दुबै भाइले आफ्नो तपस्याको सम्पूर्ण वृतान्त सुनाए। पिता रौद्रकेतुले छोराहरूको मस्तक सुँघेर हर्षपूर्वक भने - तिमी

युवयोः सुवरप्राप्त्या दर्शनाच्छङ्करस्य च ।
पावितं जन्म च कुलमर्जितं सुमहद् यशः ।।३४।।

श्रुत्वोदन्तं शीतलानि जातान्यङ्गानि मे सुतौ ।
जाता चामृतपानस्य परा तृप्तिर्न संशयः ।।३५।।

मात्राभ्यक्तौ बुभुजतुस्ततोऽन्नं विविधं शुभम् ।
पित्रा समं ब्राह्मणैश्च वेदशास्त्रविशारदैः ।।३६।।

ततः सा पूजयामास नानालङ्कारभूषणैः ।
तौ पुत्रौ ब्राह्मणाँश्चैव तेभ्यो गृह्याशिषो वहु ।
विससर्ज प्रणम्यैतान् व्यतीयतुरुभौ निशाम् ।।३७।।

दुई भाइले भगवान् शङ्करको दर्शन गरी वरदान प्राप्त गरेका कारण तिमीहरूको जन्म धन्य भएको छ, कुल पवित्र भएको छ र ठूलो यश प्राप्त गरेका छौ ।।३३-३४।। हे छोरा हो ! तिमीहरूका मीठा कुरा सुनेर मेरा अङ्गप्रत्यङ्ग र आत्मा सबै शीतल भएका छन् । मैले आफै अमृतपान गरेसरह सम्पूर्ण तृप्तिको अनुभव गरेको छु ।।३५।। त्यसपछि ती दुई भाइले आफ्नी माताद्वारा अभिषेक प्राप्त गरेर आफ्ना पिता र वेदशास्त्रमा निपुण ब्राह्मणहरूका साथ बसी माताद्वारा प्रेमपूर्वक दिएका मीठा-मीठा भोज्य पदार्थहरूको भोजन गरे ।।३६।। भोजनपछि आमाले आफ्ना प्यारा छोराहरू र ब्राह्मणहरूलाई अनेक थरि अलङ्कार र वस्त्र प्रदान गरिन्। दुवै दम्पतीले पुत्रहरूको आगमनको खुसियालीमा ब्राह्मणहरूको सम्मान गरे र उनीहरूबाट धेरै आशीर्वाद पनि प्राप्त गरे। ब्राह्मणहरूलाई प्रणाम गर्दै बिदा गरी ती दम्पतीले आनन्दपूर्वक त्यो रात बिताए ।।३७।।

ॐ

इति श्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे देवान्तकनरान्तकवरप्राप्तिवर्णनं नाम द्वितीयोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवान्तक-नरान्तक वरप्राप्तिवर्णन' शीर्षकान्वित दोस्रो अध्याय पूर्ण भयो ।।२।।

ॐ

# तृतीयोऽध्याय: { ३ अध्याय }

### क उवाच

ततः प्रातः समुत्थाय गुरून् ध्यात्वा सभाज्य च ।
स्मृत्वा नत्वाऽखिलान् देवान् जग्मतुर्नैऋर्तीं दिशम् ।।१।।

कृत्वा मूत्रपुरीषे तु दन्तजिह्वे विशोध्य च ।
स्नात्वा सन्ध्यामुपास्यैताविष्टान् देवान् पुपूजतुः ।।२।।

सम्पूज्य ब्राह्मणान् भक्त्या ददतुर्धनवाससी ।
आज्यमालोक्य कांस्यस्थं ददतुर्ब्राह्मणाय तत् ।।३।।

सदक्षिणं समालोक्य दर्पणं निर्मलं तथा ।
परिधाय च वासांसि विचारं चक्रतुस्तु तौ ।।४।।

### ज्येष्ठ उवाच

अहं विजेष्ये स्वर्लोकान् वरदानान्महेशितुः ।
मृत्युलोकञ्च पातालं जय त्वं तत्प्रसादतः ।।५।।

### क उवाच

एवं तौ निश्चयं कृत्वा विलोक्य शुभवासरम् ।
एको ययौ स्वर्गलोकं वायुवेगसमो जवे ।।६।।

गतोऽमरावतीं तत्र बभञ्जाराममण्डलम् ।
बद्ध्वा परिकरं तस्थौ शक्रस्य पुरतो बली ।।७।।

कोलाहलो महानासीद् देवानां धावतां भृशम् ।
कोऽयं कोऽयं कथं यातोऽकस्मादिन्द्रसमीपतः ।।८।।

घ्नन्तु बध्नन्तु सुदृढं दूरीकुर्वन्त्वमुं नरम् ।
इति ते धावमानास्ते सर्वे तेन निराकृताः ।।९।।

उड्डीयोड्डीय सहसा निपत्य च पुनः पुनः ।
उद्यानान् निपतिताः स्त्रीगर्भाश्च महाद्रुमाः ।।१०।।

कम्पिता पृथिवी सर्वा सपर्वतवनाकरा ।
तदङ्गदीप्त्या श्यामास्ते जाता विबुधसत्तमाः ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि अर्को दिन बिहान उठेर गुरुको ध्यान गरी पूजा समेत समाप्त गरेर सम्पूर्ण देवताहरूको संझना गर्दै ती दुई भाइ मलमूत्र त्यागका लागि नैऋत्य दिशातर्फ गए। मलमूत्र त्याग गरेपछि दाँत र जिब्रो सफा गरेर स्नान गरे। सन्ध्या उपासन गरेर ती दुई भाइले इष्टदेवको पूजा गरे। इष्टदेवको पूजापछि भक्तिपूर्वक ब्राह्मणहरूको पूजा गरेर तिनीहरूलाई धन र वस्त्र प्रदान गरे। काँसको कचौरामा घ्यू राखेर निर्मल दर्पणमा अनुहार हेरेझैं कचौराको घ्यूमा आफ्नो अनुहार हेरी त्यो भाँडो, घ्यू र दक्षिणासमेत ब्राह्मणलाई दान गरे। त्यसपछि वस्त्र धारण गरी देवान्तक र नरान्तकले परस्पर विचारविमर्श गरे।।१-४।।

**देवान्तकले भन्यो** - हे भाइ नरान्तक! म भगवान् शङ्करबाट प्राप्त वरदानअनुसार स्वर्गमाथि विजय गर्न प्रस्थान गर्दछु। तिमी पनि उहाँकै कृपाबाट प्राप्त वरदानअनुसार मृत्युलोक र पातालमा आफ्नो शासन कायम गर्न प्रस्थान गर।।५।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी परस्पर विचारविमर्श गरेर राम्रो दिन हेरी देवान्तक वायुवेगले स्वर्गतर्फ गयो। त्यो बलवान् देवान्तक अमरावतीमा पुगेर त्यहाँका बाग-बगैंचाहरूलाई ध्वस्त बनाउँदै कम्मर कसेर इन्द्रसामु उभियो। देवान्तकको पराक्रम देखेर देवताहरू डराई यताउति भाग्न थाले। त्यहाँ ठूलो कोलाहल मच्चियो । यो को हो, कहाँबाट आइपुग्यो र कसरी इन्द्रका समीपमा गएर उभियो? यस्ता तर्क-वितर्कहरू भए। यसलाई मार्नुपर्छ, बाँध्नुपर्छ, नभए टाढै भगाउनुपर्छ भन्दै दौडिरहेका देवताहरूलाई देवान्तकले टाढासम्म धपायो ।।६-९।। देवान्तकको तेज र पराक्रमबाट डराएर थरथर काँपिरहेका देवताहरूमध्ये केही आकाशमा उड्ने र भुइँमा लड्ने गरिरहेका थिए। वीर र पराक्रमी देवान्तकको पराक्रम र डरलाग्दो हाउभाउ देखेर देवाङ्गनाहरूका गर्भका साथै ठूला-ठूला वृक्षहरू पनि भुइँमा लडेका थिए। स्वर्गमा भएको घटनाको प्रभावले वन, पर्वतसहित पृथिवी पनि कम्पायमान भइन्। देवान्तकका शरीरको श्यामल कान्ति स्वर्गमण्डलमा छाउँदा देवताहरू पनि कान्तिहीन र मलिन

यथाऽऽमयजितो मर्त्यो याति सद्यो विवर्णताम् ।
तद्वत् तद्दर्शनात् सर्वे विवर्णत्वं गताः सुराः ।।१२।।

इन्द्रोऽपि विह्वलो जातो विवर्णश्च तदा मुने ।
केचिद् दश दिशो याताः सन्नद्धाः केऽपि चाभवन्।।१३।।

केचित् तं शरणं याता अत्यधीराः सुराधमाः ।
तत इन्द्रश्चतुर्दन्तं वज्रहस्तः समारुहत् ।।१४।।

जगर्ज सुमहाभीमं चकम्पे भुवनत्रयम् ।
किं पश्यतेत्युवाचैनान् सन्नद्धान् सुरसत्तमान् ।।१५।।

पौरुषं क्व गतं तावद् यावदत्रागतोऽसुरः ।
ततस्ते पुरतो जग्मुः सङ्ग्रामाय कृतोद्यमाः ।।१६।।

सद्योत्सुकान् सुरान् प्रेक्ष्य प्रोचे देवान्तको हरिम् ।
किमर्थं श्रमसे शक्र ! विचारय वरान् मम ।।१७।।

अन्तको भयसन्त्रस्तः पलायनपरो गतः ।
तृणप्रायन्तु ते वज्रं मन्येऽहं शङ्कराज्ञया ।।१८।।

मच्छ्वासात् सर्वतो यान्ति देवास्त्वद्दृष्टिवर्तिनः ।
श्रूयतां मद्वचः शक्र ! साम्नैव दीयतां मम ।।१९।।

पदानि स्वानि सर्वाणि स्थीयतां यत्र कुत्रचित् ।
अन्यथा सकलं हित्वा वृथा मृत्युं प्रयास्यसि ।।२०।।

देवान्तकेति मन्नाम न जानासि कथं सुर ! ।

क उवाच

इति तद्वचनं श्रुत्वा बिभिदे हृदयं हरेः ।।२१।।

शक्रस्य च मुखादग्निः प्रबलो निर्गतो बहिः ।
अतितप्ते यथा तैले जलपाताद् यथा भवेत् ।।२२।।

तत ऊचे महेन्द्रस्तं क्रोधावेशसमन्वितः ।
त्वादृशाः कति कति न निहता दानवा मया ।।२३।।

देखिए ।।१०-११।। जसरी रोगले जितेको मानिस तत्काल मलिन अथवा विवर्ण बन्दछ, त्यसरी नै देवान्तकको दर्शन गरेपछि सम्पूर्ण देवताहरू विवर्ण भए ।।१२।। हे मुनि ! स्वर्गका राजा इन्द्र पनि व्याकुल र विवर्ण बनेका थिए। केही देवताहरू डराएर दसै दिशामा भागे भने केही देवताहरू लड्नका लागि तयार पनि देखिए ।।१३।। केही देवता अत्यन्त अधीर भएर आफूलाई अधम देवता साबित गर्दै देवान्तकको शरणमा पुगे। त्यसपछि देवराज इन्द्र हातमा वज्र लिएर चारवटा दाँत भएको ऐरावत हात्तीमा सवार भए ।।१४।। त्यस बेला इन्द्रले युद्धको मैदानमा आई गर्जन गरे। तिनको गर्जनबाट स्वर्ग, मर्त्य, पाताल यी तीनै लोक कम्पायमान भए । युद्धका लागि तयार रहेका केही देववीरहरूलाई इन्द्रले भने- तिमीहरू के हेरिरहेका छौ ? तिमीहरूको पुरुषार्थ कहाँ गयो ? यहाँ तिमीहरूजस्ता वीर हुँदाहुँदै यो दानव कसरी आइपुग्यो ? इन्द्रका यी वचन सुनेर ती देवताहरू युद्ध गर्न तयार भई देवान्तकका सामु गए ।।१५-१६।। युद्ध गर्न तम्सिएका देवताहरूलाई देखेर देवान्तकले इन्द्रलाई भन्यो - हे इन्द्र ! तिमी किन युद्धको व्यर्थ परिश्रम गरिरहेका छौ ? मैले पाएका वरदान कस्ता छन् ? विचार गर। मसँग डराई यमराज पनि भागेर कतै लुक्न गएका छन्। शङ्करबाट पाएको वरदानका कारण मैले त तिम्रो वज्रलाई घाँसको त्यान्द्राबराबर पनि मान्दिनँ।।१७-१८।। तिम्रा अगाडि रहेका यी देववीरहरू मैले श्वासप्रश्वास लिंदा चारैतिर चक्कर काटिरहेका छन्। हे इन्द्र ! मेरा कुरा सुन, युद्ध गर्ने जमर्को नगर। म अहिले मधुर वचनले भनिरहेको छु, तिमीले मलाई स्वर्गको राज्य सुम्प ।।१९।। तिमीहरू जहाँसुकै गएर बस्न सक्छौ तर मलाई भने तिमीहरूले आ-आफ्ना स्थान र धाम दिनुपर्दछ। त्यसो गर्दैनौ भने सम्पूर्ण संसार छोडेर व्यर्थमा कालका गास बन्नेछौ ।।२०।। हे इन्द्र ! तिमीले देवान्तक भन्ने मेरो नामको अर्थ बुझेका छौ ?

ब्रह्माजीले भन्नुभयो - देवान्तकका यी कुरा सुनेर इन्द्रको छाती विदीर्ण भयो। इन्द्रका मुखबाट आगो निस्कन थाल्यो। तताएको तेलमा पानी खन्याउँदा जस्तो स्वर आउँछ त्यस्तै स्वरबाट क्रोधी इन्द्रले देवान्तकलाई भने - हे देवान्तक! तँजस्ता करोडौं दानव मैले मारिसकेको छु ।।२१-२३।।

त्वमिदानीं वराद् गर्वादागतोऽस्यसुराधम ! ।
वज्रपाताद्धतो नूनं धरण्यां निपतिष्यसि ।।२४।।

अन्यपदप्रधानो हि समासो नाम्नि ते बली ।
ततः शक्रोऽहनत् तं तु वज्रेण दृढमुष्टिना ।।२५।।

वज्रं तच्छतधा भिन्नमामभाण्डं च्युतं यथा ।
देवान्तकोऽच्छिन्नरोमाऽतिष्ठदाजौ निराकुलः ।।२६।।

ततोऽसौ मुष्टिना पृष्ठे जघान सुरसत्तमम् ।
तेनासौ पतितो भूमौ वाताहत इव द्रुमः ।।२७।।

पौरुषं तस्य बुद्ध्वैव पपाल बलसूदनः ।
अधावद् वेगतः पृष्ठे सिंहो मृगगणानिव ।।२८।।

व्यादाय भीषणं वक्त्रं पलयन्तमुवाच सः ।
पलायसे किमधुना वल्गना क्व गता तव ।।२९।।

सन्मुखो भव शक्र ! त्वं सर्वदेवगणैः सह ।
असम्मुखं पलायन्तं न हन्ति वीरसत्तमः ।।३०।।

स्वयं तत्पुरतो भूत्वा मारयामास तान् सुरान् ।
मुखे चपेटिकां दत्त्वा गतासूँस्तानपातयत् ।।३१।।

भ्रामयित्वा ततश्चैकं पोथयामास भूतले ।
तनया मुष्टिना कांश्चित् कूर्पराघाततोऽपरान् ।।३२।।

कण्ठेऽग्रहीत् प्राणघातं चकर्ष चापरान् सुरान् ।
केषाञ्चिज्जानुनी भित्वा केषाञ्चिच्च भुजावपि ।
ऊरुयुग्मञ्च केषाञ्चिच्चिक्षेप दूरतोऽपि तान् ।।३३।।

हे असुराधम ! तँ अहिले शङ्करबाट पाएको वरदानले गर्वित भएर फूर्ति देखाइरहेको छस्। मैले वज्रले प्रहार गर्दा आहत भएर तँ भुइँमा पछारिनेछस् ।।२४।। तेरो देवान्तक भन्ने नाममा बहुब्रीहि समास रहेको छ। बहुब्रीहि समास गर्दा देवता नै जसका यमराज हुन् अर्थात् देवताबाट जसको मृत्यु हुन्छ त्यो देवान्तक हो भन्ने अर्थ आउँछ। यसरी अर्थ खुलस्त गरेर इन्द्रले बलियो मुठीले समातेको वज्रद्वारा देवान्तकमाथि प्रहार गरे ।।२५।। त्यो वज्र सय टुक्रा भएर भुइँमा खस्यो र काँचको भाँडो टुक्रिएझैं टुक्रियो। त्यस प्रहारबाट देवान्तकको एउटा रौं पनि काँपेन । त्यो देवान्तक युद्धको मैदानमा आनन्दपूर्वक उभिइरह्यो।।२६।। इन्द्रको वज्रलाई निस्तेज गराएपछि त्यसले आफ्नो मुड्कीले इन्द्रको पिठ्यूमा प्रहार गर्‍यो। त्यस प्रहारबाट इन्द्र हावाले लडेको रूखझैं भुइँमा पछारिए।।२७।। यसरी देवान्तकको पराक्रमलाई राम्ररी बुझेर निराश भएका इन्द्र युद्धको मैदानबाट भागे। तिनलाई भागेको देखेर देवान्तक पछिपछि दौडिन थाल्यो। जसरी एउटा बाघले मृगहरूलाई धपाउने गर्दछ त्यसरी नै देवान्तकबाट देवताहरूलाई धपाउने काम भयो ।।२८।। आफ्नो मुख फैलाएर देवान्तकले भागिरहेका इन्द्रलाई भन्यो- हे इन्द्र ! आज तिमी किन भागिरहेका छौ ? तिम्रो गर्जन कता गयो ? तिमी आफ्ना सम्पूर्ण देववीरहरूलाई साथ लिएर युद्धका लागि मेरासामु आऊ । मजस्ता वीरपुरुषले पिठ्यूँ फर्काएर भागिरहेका नामर्दमाथि प्रहार गर्दैनन्।।२९-३०।। देवान्तकले यसरी इन्द्रलाई चुनौति दिएपछि डरले भागिरहेका देववीरहरूलाई उछिनेर आफ्नो सामुन्नेमा पारी युद्ध गरेर तिनीहरूलाई मार्‍यो । कसैलाई गालामा थप्पड हानेर तत्काल निष्प्राण तुल्यायो। कसैलाई समातेर रिगाउँदै भुइँमा पछार्‍यो। कसैलाई लात्ती प्रहार गरेर घाइते तुल्यायो, कुनैलाई मुड्की हानेर भुइँमा ढाल्यो र अरूलाई कुहिनाले हानी घाइते तुल्यायो ।।३१-३२।। अरू बाँकी रहेका देवताहरूलाई पनि घाँटी निमठेर मार्‍यो । त्यस युद्धमा मृत्युबाट जोगिएका कुनै देवताहरूका घुँडा भाँचिएका थिए, कसैका हात टुक्रिएका थिए, कसैको जाँघमा घाउ लागेको थियो, कसैलाई देवान्तकले समातेर टाढै हुर्‍याएको थियो। कुनै देवता उल्टो सुतिरहेका थिए, कुनै उत्तानो परेर पल्टिरहेका

उत्ताना: पतिता: केचित् केचिन् न्युब्जास्तथा सुरा:।
केचिन्मुखप्रहारञ्च चक्रुर्गन्तुमनीश्वरा: ।।३४।।

केचित्तु तर्कयामासुर्मनसा दु:खितेन च ।
अकस्मात् प्रलयं किं नु प्रारभज्जगदीश्वर: ।।३५।।

सुविशीर्णा: सुरा: सर्वे गजा:सिंहार्दिता यथा ।
तत: स्वयं जगर्जाशु जयशाली सुरान्तक: ।।३६।।

यथा मेघेषु गर्जत्सु गर्जते बर्हिमण्डली ।
भास्करीं भास्करस्त्यक्त्वा यातो दूरतरं तत: ।।३७।।

सर्वेऽपि पपलुर्देवास्त्यक्त्वा स्वस्वपदानि च ।
तत: स्वयं शक्रपदे तस्थौ निर्भयचेतसा ।।३८।।

सर्वे सुरा गता हैमगिरिगह्वरमत्तमम् ।
कन्दमूलफलान्यादन्निन्युर्दु:खेन वासरान् ।।३९।।

ततोऽगुर्भूतलाद् दिग्भ्योऽसङ्ख्येया दैत्यदानवा: ।
चक्रुर्नानाविधैर्द्रव्यैर्नानातीर्थाहृतैर्जलै: ।।४०।।

नानर्षिमन्त्रनिचयैरभिषेकं सुरान्तके ।
शङ्खभेरिमृदङ्गादिदुन्दुभीनाञ्च निस्वनै: ।।४१।।

ऊचुस्तं स्वामिनं दैत्यास्त्वादृग् दैत्यकुले न च ।
जातो वा भविता वापि भवानाज्ञां करोतु न: ।।४२।।

क उवाच

एवमेकाकिना तेन जिता: शक्रपुरोगमा: ।
राज्यञ्चकार देवानामरक्षच्चामरावतीम् ।।४३।।

ततोऽयात् सत्यलोकं स दैत्यकोटिसमन्वित: ।
ब्रह्माऽपि प्रययौ तत्र यत्र देवा: पुरा गता: ।।४४।।

तत्रैकं नायकं स्थाप्य वैकुण्ठमगमच्च स: ।
ब्रह्मणो यानमारुह्य कदाचिच्छाक्रमेव च ।।४५।।

थिए। त्यस अवस्थामा सम्पूर्ण अङ्ग छिन्नभिन्न भएका देवताहरूले केही उपाय नभएर देवान्तकलाई मुखले टोक्न थालेका थिए ।।३३-३४।। केही देवताहरूले त दु:खी मन भएर विचार गरे- भगवान् नारायणले अकस्मात् प्रलय गर्न थाल्नुभयो कि ?।।३५।। यसरी छिन्नभिन्न भएका देवताहरू सिंहको आक्रमणबाट छिन्नभिन्न भएका हात्तीजस्तै देखिन्थे।जसरी मेघ गर्जन हुँदा मयूरमण्डली खुसीले नृत्य गर्दछ, त्यसैगरी देवताहरूलाई पराजित गरेपछि आफूलाई विजयी ठान्ने देवान्तकले पनि सहर्ष नृत्य गर्न थाल्यो। त्यस बेला सूर्य पनि आफ्नो प्रभा त्याग गरी पर्वतको चुचुरोबाट अस्ताए ।।३६-३७।। देवताहरू आ-आफ्ना पद छाडेर कतै भागे। देवान्तक रित्तो इन्द्र पदमा गएर निर्भयतापूर्वक बस्यो। त्यस बेला पराजित भई भागेका देवताहरू हिमालय पर्वतको गुफामा शरण लिएर कन्दमूल खाएर दु:खपूर्वक दिनयापन गर्न लागे।।३८-३९।। देवान्तकले स्वर्गमा विजय गरेको थाहा पाएर पृथिवीतलका असंख्य भागहरूबाट धेरै दैत्य र दानव स्वर्गमा पुगे। तिनीहरूले अनेक तीर्थबाट ल्याएका जल र सामग्रीद्वारा अनेक मन्त्रहरूको उच्चारण गर्दै स्वर्गराज्यमा देवान्तकको राज्याभिषेक गरे। शङ्ख, भेरी, नगाडा आदि स्वरले स्वर्ग गुञ्जायमान भयो। त्यस बेला दैत्यहरूले देवान्तकलाई भने - दैत्यकुलमा तपाईंजस्तो वीर न भएको थियो र न हुनेछ। हामी तपाईंका लागि जे पनि गर्न तयार छौं, तपाईंले आज्ञा गर्नुहोस् ।।४०-४२।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी एक्लै देवान्तकले इन्द्र आदि देवताहरूमाथि विजय, देवलोकमा शासन र अमरावतीको रक्षा गर्‍यो ।।४३।। अमरावतीलाई आफ्नो कब्जामा लिएपछि देवान्तक करोडौं दैत्यहरूका साथ ब्रह्माजीको धाम सत्यलोकमा पुग्यो। देवताहरूको दुर्गति बुझेका ब्रह्माजीले पनि सजिलै सत्यलोक छाडिदिनु भयो र उहाँ देवताहरू गएका थिए त्यतै हिमालयको गुफातर्फ जानुभयो ।।४४।। त्यसपछि देवान्तक ब्रह्माजीको आसनमा आफ्नो कुनै वीरलाई अभिषिक्त गरेर ब्रह्माजीको यानमा आरोहण गरी वैकुण्ठ गयो। देवान्तक आउने सम्भावना देखेर भगवान् नारायण त्यो आउनुभन्दा

लक्ष्म्या सह ततः पूर्वं क्षीराब्धिमगमद्धरिः ।
अत्याप्तं परमं दैत्यं तत्र स्थाप्य व्यचारयत् ।।४६।।

किं मया न जितं दैत्या ब्रुवन्तु यामि तत्र वै ।
तेऽब्रुवन्नैव शेषोऽस्ति देवानां विषयः क्वचित् ।।४७।।

लोकपालपदे स्थाप्य नानादैत्यान् जनस्य च ।
निगतङ्को निरुद्योगः संरक्षस्वामरावतीम् ।।४८।।

इत्यमात्यवचः श्रुत्वा मुदा परमया युतः ।
देवान्तकश्चकाराऽसौ तद्वाक्यं सम्यगीरितम् ।।४९।।

पहिले नै लक्ष्मीका साथ क्षीरसागरतर्फ गइसक्नुभएको थियो। त्यसपछि रित्तो वैकुण्ठमा देवान्तकले विश्वस्त दैत्यलाई नियुक्त गरी विचरण गर्न थाल्यो ।।४५-४६।। अरू दैत्यहरूलाई जम्मा गरी त्यसले घोषणा गर्‍यो - हे दैत्य हो! मैले कहाँ जितेको छैन ? त्यो ठाउँ बताओ, म त्यहाँ-त्यहाँ जान्छु। त्यो सुनेर ती सबै दैत्यले भने - देवताहरूका विभिन्न लोकमध्ये कुनै लोक पनि चोखा रहेका छैनन् जहाँसुकै हजुरले विजय प्राप्त गर्नुभएको छ ।।४७।। अमात्य पदमा नियुक्त दैत्यले देवान्तकसँग बिन्ती गर्‍यो - हे राजन् ! हजुर लोकपालका पदमा विभिन्न दैत्यहरूको नियुक्ति गरी निरातङ्क भएर युद्धको अभ्यास छाडी अमरावतीमा पुगेर देवलोकको रक्षा गर्दै एकछत्र सम्राट्का रूपमा विराजमान हुनुहोस्। अमात्यका यी कुरा सुनेर अत्यन्त हर्षित देवान्तकले अमात्यको भनाइअनुसार व्यवस्था मिलाई देवलोकमा शासन सञ्चालन गर्‍यो ।।४८-४९।।

ॐ

इति श्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे देवलोकविजयो नाम तृतीयोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको
'देवलोकविजय' शीर्षकान्वित तेस्रो अध्याय पूर्ण भयो ।।३।।

ॐ

## चतुर्थोऽध्यायः　　{ ४ अध्याय }

व्यास उवाच

देवान्तकस्य चरितं श्रुतं भक्त्या तवाननात् ।
इदानीं वद मे ब्रह्मन् ! नरान्तकविचेष्टितम् ।।१।।

क उवाच

शृणुष्वावहितो ब्रह्मन् ! सम्यक् सत्यवतीसुत ।
कथयिष्येऽधुना तत् तु दृष्ट्वा ते परमादरम् ।।२।।

नरान्तको महीं गत्वा नानादैत्यगणान्वितः ।
चकार कदनं राज्ञां मारयामास कांश्चन ।।३।।

सर्वे तं शरणं याता दृष्ट्वा राज्ञो हतान् बहून् ।
यद् यत् सैन्यं पश्यति स्म तत् तद् याति दिशो दश।।४।।

यथा ज्ञानेन चाज्ञानं यथा सूर्योदये तमः ।
एवं भूमण्डलं सर्वं वशे चक्रे नरान्तकः ।।५।।

ये तु तं शरणं यातास्तदीयत्वात् पदे स्थिताः ।
ये हतास्तत्सुतास्तेन स्थापिताः करदाः कृताः ।।६।।

ये तु युद्धोद्यता भूपास्तेऽपि सेवाकृतोऽभवन् ।
तेषां पदेषु दैत्यान् सोऽस्थापयत् स्वस्य सम्मतान् ।।७।।

पालयामास पृथिवीं समुद्रवलयाङ्किताम् ।
आतङ्कभारसन्तप्ता देवदानवकिन्नराः ।।८।।

मुनयोऽयुर्गिरिगुहां यज्ञस्वाध्यायवर्जिताः ।
वेदत्यागस्य दोषेण मनसा चाभ्यसन् श्रुतीः ।।९।।

**व्यासले भन्नुभयो** - हे कमलासन ! मैले भक्तिपूर्वक तपाईँका मुखबाट देवान्तकको चरित्र सुनेँ। अहिले मलाई नरान्तकका क्रियाकलापको विषयमा बताउनुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - हे सत्यवतीनन्दन व्यास ! तपाईँ सावधान भएर सुन्नुहोस् । तपाईँको श्रीगणेशका कथाहरूमा परम श्रद्धा देखेर म अहिले तपाईँले जान्न खोजेको विषयमा बताउनेछु । देवान्तकको भाइ नरान्तकले अनेक थरि दैत्यहरूका साथ पृथिवीमा गएर त्यहाँका धेरै राजाहरूको हत्या गर्‍यो र अनेक राजाहरूलाई घाइते बनायो ।।२-३।। नरान्तकले अनेक राजाहरूको वध गरेको देखेर नरान्तकद्वारा आक्रान्त अनेक वीरहरू त्यसका शरणमा आए । नरान्तक जहाँ–जहाँ राजाहरूका सैन्य देख्दथ्यो, त्यहाँ –त्यहाँ आक्रमण गर्न पुग्थ्यो । यसरी त्यो आक्रमण गर्ने निहुँमा पृथिवीका दसै दिशामा घुम्यो।।४।। ज्ञान प्राप्त भएपछि अज्ञानको नाश भएझैँ र सूर्योदयपछि अन्धकारको नाश भएझैँ नरान्तकको उदयपछि त्यसका शत्रुहरूको नाश भयो । त्यसले आफ्नो पराक्रमबाट सम्पूर्ण भूमण्डललाई आफ्नो वशवर्ती बनायो ।।५।। जुन राजाहरू नरान्तकको शरणमा गएका थिए, तिनीहरूलाई नरान्तकले उनकै पदमा प्रतिष्ठित गराएर राख्यो । जुन राजाहरू मारिएका थिए, तिनका छोराहरूलाई करद राजा बनाएर त्यसले उनकै बाबुहरूको सिंहासनमा स्थापित गर्‍यो।।६।। पहिले जुन राजाहरू नरान्तकसँग युद्ध गर्न तम्सिएका थिए, ती राजा पनि पछि आएर नरान्तकका सेवक बने । तिनका रिक्त पदहरूमा आफ्ना विश्वस्त दैत्यहरूलाई स्थापित गर्‍यो ।।७।। यसरी त्यसले समुद्रवलयद्वारा घेरिएको पृथिवीमा शासन सञ्चालन गर्‍यो । नरान्तकको आतङ्कका कारण सन्तप्त बनेका देवता, दानव, किन्नर र मुनिहरू यज्ञ र स्वाध्यायबाट वर्जित भएर आत्तिँदै गुफाहरूमा शरण लिन गए। नरान्तकको आक्रमणका कारण हामीले सधैँ अध्ययन गर्दै आएको वेदलाई त्याग गर्न विवश हुनुपर्‍यो भनेर चिन्ताग्रस्त ती मुनिहरूले मनबाट वेदको अभ्यास गर्न थाले ।।८-९।। आतङ्कले भयभीत

आतङ्काक्रान्तमनसो न तपस्याञ्च चक्रिरे ।
ततो नरान्तको दैत्यान् नागलोकजिगीषया ।।१०।।

प्रस्थापयत् सुबलिनो नानामायाविशारदान् ।
ते तार्क्ष्यरूपाः संयाता बभक्षुरुरगोत्तमान् ।।११।।

असङ्ख्याता भक्षितास्तैस्ततः शेषो ययौ पुरः ।
मुक्ताफलानि रत्नानि सहनागाङ्गनायुतः ।।१२।।

अनेकदिव्यवस्त्राणि प्रगृह्य रुचिराणि सः ।
तानि सर्वाणि दत्त्वैव साम चक्रेऽसुरैः सह ।।१३।।

शासनं परिजग्राह नरान्तकसमीरितम् ।
करभारं वार्षिकं स स्वीचक्रेऽनन्तशीर्षकः ।।१४।।

तथापि दैत्यस्तत्राप्यस्थापयद् दैत्यपुङ्गवम् ।
अनेकदैत्यसहितं सर्वाध्यक्षं रसातले ।।१५।।

आज्ञापयामास च तं तत्रस्थं स नरान्तकः ।
यदैव विकृतिं पश्येरुरगाणां तदैव नः ।।१६।।

वृत्तान् सूचयस्व हनिष्यामोऽखिलानहीन् ।
इति विज्ञाप्य तं ते तु दैत्याः सर्वे नरान्तकम् ।।१७।।

मृत्युलोके स्थितं याता वृत्तान्तं सर्वमब्रुवन् ।
नरान्तकः सदाऽप्रैषीन्मृत्युपातालालोकजम् ।।१८।।

देवान्तकाय वृत्तान्तं सर्वस्य यमनुष्ठितम् ।
उपायनानि सर्वाणि स्वर्लोके दुर्लभानि च ।।१९।।

देवान्तकोऽथाऽप्रैषीत् तं दुर्लभं यच्च भूतले ।
एवं त्रैलोक्यराज्यं तौ चक्राते परया मुदा ।।२०।।

सोमकान्त उवाच

कथमेतौ हतौ केन रूपेण तद् वदस्व मे ।
केनास्त्रेण च शस्त्रेण ह्यवतारेण केन च ।।२१।।

ती ऋषिहरूले तपस्या गर्न पाएनन् । यसरी भूमण्डललाई आफ्नो वशमा तुल्याएर नरान्तकले नागलोकमा पनि विजय हासिल गर्न राजनीति र कूटनीति जात्रे आफ्ना बलवान् दैत्यहरूलाई पठायो। ती दैत्यहरूले गरुडको रूप लिएर पातालमा आक्रमण गरे र अनेक सर्पहरूलाई खाए ।।१०-११।। दैत्यहरूले असंख्य सर्पहरूको भोजन गरेपछि भयभीत भएका शेषनाग ती दैत्यहरूका सामु आए। नागसुन्दरीहरूसँग आएका ती शेषनागले आफूसँग भएका रत्न, दिव्य वस्त्र र नागकन्यासमेत उपहारका रूपमा प्रदान गरेर मधुर सम्बन्ध बनाउने उपाय गरे ।।१२-१३।। नरान्तकलाई सजिलै राज्य टक्र्याएका शेषनागले नरान्तकद्वारा समर्पित पातालको शासन स्वीकार गरे र वार्षिक करभार नरान्तकलाई दिन मञ्जूर पनि गरे ।।१२-१४।। शेषनाग विनम्र भएर प्रस्तुत भएतापनि नरान्तकले तीमाथि पूरा विश्वास नगरी अनेक दैत्यवीरहरूका साथ रहेको कुनै मुख्य दैत्यलाई रसातलको सर्वाध्यक्ष पदमा नियुक्त गऱ्यो । त्यसलाई नरान्तकले आदेश दियो । 'तिमीले जब-जब पातालमा सर्पहरूले आतङ्क मच्चाउँछन्, त्यस बेला दूतको माध्यमबाट हामीलाई सूचना प्रदान गर । हामी तुरुन्त आएर पातालका सबै सर्पहरूलाई समाप्त पार्नेछौं ।' ती दैत्यहरूले शेषनागलाई नरान्तकको हुकुम सुनाए । त्यसपछि ती सबै मृत्युलोकमा वर्तमान नरान्तकका समीपमा पुगेर त्यहाँको घटना जानकारी गराए । नरान्तकले निरन्तर मृत्युलोक र पातालका घटनाहरू स्वर्गमा अधिकार जमाएर बसेका आफ्ना दाजु देवान्तकलाई जानकारी गराउने गर्दथ्यो र मर्त्यलोकमा एवं पाताल लोकमा प्राप्त हुने तर स्वर्गमा नपाइने वस्तुहरूलाई उपहारका रूपमा पठाउने गर्दथ्यो। देवान्तकले पनि पृथिवीतलमा दुर्लभ वस्तु त्यहाँ पठाउने गर्दथ्यो । यसरी दुई भाइ नरान्तक र देवान्तकले मिलेर सहर्ष स्वर्ग, मर्त्य र पातालको राज्य सञ्चालन गरिरहेका थिए ।।१५-२०।।

**सोमकान्तले भने** - हे भृगु महर्षि ! देवान्तक र नरान्तक पछि कसरी मारिए ? र कुन रूपमा मारिए ? कुन अस्त्रले र कुन शस्त्रले मारिए ? र भगवान्को कुन अवतारद्वारा मारिए ? ती सबै कुराको उत्तर मलाई दिनुहोस् ।।२१।।

भृगुरुवाच

एवमेव कृतप्रश्नो व्यासमूचे चतुर्मुखः ।
यां कथां परया प्रीत्या तामेव त्वां ब्रवीम्यहम् ।।२२।।

भृगुले भन्नुभयो - यस किसिमबाट सोधिएका ब्रह्माजीले व्यासलाई जसरी बताउनुभएको थियो त्यसरी नै प्रीतिपूर्वक म तपाईँलाई बताउँछु ।।२२।।

क उवाच

दुर्जयौ वरगर्वौ तौ येन रूपेण घातितौ ।
येनावतारेण मुने ! येन शस्त्रेण चास्त्रतः ।।२३।।

सम्प्राप्ता ब्रह्मणा लोका देवाश्च स्वपदे स्थिताः ।
तत् सर्वं कथयिष्यामि सादरं श्रूयतां मुने ।।२४।।

ब्रह्माजीले भन्नुभयो - हे व्यासजी ! अत्यन्त अजेय, वरदानद्वारा गर्वित ती दुई भाइ नरान्तक र देवान्तक जुन रूपमा मारिए, जुन अवतारद्वारा मारिए, जुन शस्त्र एवं अस्त्रद्वारा मारिए, जसरी ब्रह्माजीले सम्पूर्ण लोक प्राप्त गर्नुभयो र जसरी देवताहरूले आ-आफ्नो धाममा बस्ने मौका पाए ती सबै कुरा म बताउनेछु । हे मुनिवर ! तपाईँले श्रद्धापूर्वक सुन्नुहोस् ।।२३-२४।।

ॐ

इति श्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे भूतलरसातलविजयो नाम चतुर्थोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'पृथिवीतल र रसातलमाथि विजय' शीर्षकान्वित चौथो अध्याय पूर्ण भयो ।।४।।

ॐ

## पञ्चमोऽध्याय:

### ब्रह्मोवाच

ममैव मानस: पुत्र: कश्यपो बुद्धिमत्तर:।
पुण्यवान् धर्मशीलश्च तपस्वी विजितेन्द्रिय:।।१।।

अतिकारुणिको लोके दु:खशोकावमर्दन:।
वर्तमानं भूतभावि जानाति मीलितेक्षण:।।२।।

मनसा सृष्टिसंहारकर्ता वेदान्तपारग:।
सर्वशास्त्रार्थतत्त्वज्ञ: समलोष्ठाश्मकाञ्चन:।।३।।

अदितिर्यस्य ज्येष्ठासीत् पत्नी नाम्नाऽतिवल्लभा।
सर्वलक्षणसम्पूर्णाऽनुपमा सा त्रिविष्टपे।।४।।

त्रिलोकीं भस्मसात् कर्तुं पातिव्रत्येन तेजसा।
शेषो यस्य गुणान् वक्तुं नेशो वक्त्रसहस्रकै:।।५।।

सेवन्ते यां सदा चाष्टनायिका गुणलब्धये।
शक्रादिसुरवृन्दानि जनयामास याऽनघा।।६।।

मूलप्रकृतिरूपा सा तादृग् रूपं समाश्रिता।
सा कदाचित् स्वकं कान्तं मुदितं मुदिताऽब्रवीत्।।७।।

स्वामिन्! विज्ञातुमिच्छामि कृपां कृत्वा वदस्व तत्।।८।।

पतिं विना न चान्याऽस्ति गति: सद्योषितां प्रभो।

### कश्यप उवाच

सम्यगुक्तं त्वया भद्रे ! मम प्रीतिकरेऽनघे।।९।।
तद् ब्रवीमि समापृच्छ यत् ते मनसि वर्तते।

### अदितिरुवाच

इन्द्रादयो देवगणा: स्वस्य पुत्रत्वमागता:।।१०।।

## { ५ अध्याय }

**ब्रह्माजीले भन्नुभयो-** मेरा मानसपुत्र बुद्धिमान् कश्यप ऋषि पुण्यवान्, धर्मात्मा, तपस्वी, इन्द्रियजयी, अत्यन्त दयालु, समाज र मानिसहरूका दु:ख र शोकलाई नाश गर्ने महापुरुष थिए। तिनले आँखा चिम्लेर ध्यान गर्दा भूत, वर्तमान र भविष्यत्का घटनाहरूलाई यथार्थ रूपमा जान्दथे ।।१-२।। ती कश्यप ऋषि आफ्नो मनबाट जगत्को सृष्टि गर्न सक्थे र संहार पनि गर्न सक्थे। वेदान्तदर्शनमा पारङ्गत थिए। सबै शास्त्रको अर्थ र रहस्यलाई जान्दथे । उनका निमित्त माटाको ढेला र सुनमा कुनै अन्तर थिएन।।३।। तिनकी जेठी पत्नीको नाम अदिति थियो। ती अत्यन्त प्यारी पत्नी थिइन्। सम्पूर्ण लक्षणले परिपूर्ण ती अदितिको बराबरी गर्ने त्रिलोकीमा कुनै पनि नारीहरू थिएनन्। अदितिले आफ्नो पतिव्रता धर्मको तेजबाट स्वर्ग, मर्त्य र पाताललाई पनि भस्म गर्न सक्थिन्। शेषनागले आफ्ना हजार मुखद्वारा पनि तिनका गुणहरूको बयान गर्न सक्दैनथे ।।४-५।। तिनका वरिपरि रहेका अष्टनायिकाले तिनको कृपा प्राप्त गर्न सेवा गरिरहेका थिए । निष्पाप चरित्र भएकी अदिति इन्द्र, सूर्य आदि देवताहरूलाई जन्माएका कारण देवमाताका रूपमा विख्यात थिइन् । वास्तवमा अदिति मूल प्रकृतिकै रूप थिइन् र संसारमा लीला गर्न कश्यपकी पत्नी बनेर जन्मेकी थिइन् । एक दिन प्रसन्नमुद्रामा रहेकी अदितिले एकान्तमा प्रसन्न मुद्रामा रहनुभएका आफ्ना प्यारा पति कश्यप ऋषिसँग भनिन् - हे स्वामी ! हे मेरा प्राणनाथ ! म हजुरसँग केही कुरा जान्न चाहन्छु, कृपा गरेर हजुरले मलाई बताउनुहोस् ।।६-८।। उत्तम नारीहरूका लागि पतिबाहेक अरू कुनै गति हुँदैन ।

**कश्यपले भन्नुभयो -** हे कल्याणी ! हे निष्पाप चरित्र भएकी र अत्यन्त प्यारी हे सुन्दरी ! तिमीले राम्रो कुरा गर्‍यौ। तिम्रो मनमा जे कुरा छ, सङ्कोच नमानीकन मसँग भन। म त्यसको उत्तर दिनेछु ।

**अदितिले भनिन् -** हे प्राणनाथ ! इन्द्र आदि देवताहरू हजुरका र मेरा छोरा बनेर आएका छन् ।।९-१०।। जब परात्पर,

परमात्मा चिदानन्द ईश्वरो यः परात्परः।
यदा स्वपुत्रतामेष्येत् तदा मे स्यात् स्थिरं मनः।।११।।

तस्य सेवां कर्तुमीहे उपायं तत्र मे वद।
येन स पुत्रतामेष्येत् कृतकृत्यं मनो भवेत्।।१२।।

सच्चिदानन्द परमेश्वर परमात्मा मेरा गर्भमा पुत्र बनेर प्रवेश गर्नुहुनेछ, त्यस बेला मेरो मन स्थिर हुनेछ । म अहिले परमात्माको सेवा गर्न चाहन्छु । हजुरले त्यो उपाय बताउनुहोस्, जुन उपायबाट परमात्मा मेरा पुत्र बनेर अवतरित हुनुहुनेछ र मेरो मन कृतकृत्य हुनेछ ।।११-१२।।

मुनिरुवाच

साधु प्रोक्तं महाभागे ! वचनं परितोषकम्।
यथा जलं तृषार्तस्य क्षुधितस्य च भोजनम्।।१३।।

तथा मे वचनं जातं तव देवि सुतोषकृत्।
विना पुण्यं कथं यायात् परमात्मा स्वपुत्रताम्।।१४।।

**कश्यपले भन्नुभयो** - हे भाग्यवती धर्मपत्नी ! मलाई सन्तोष लाग्ने राम्रो वचन भन्यौ । तिम्रो वचन मेरा निमित्त तिर्खाएका प्राणीका लागि पानीझैँ र भोकाएका प्राणीका लागि भोजनझैँ सन्तोषदायक छ । बिना पुण्य कसरी परमात्मा हाम्रा पुत्रका रूपमा आउन सक्नुहुन्छ ।।१३-१४।।

तत्रोपायं वदे तञ्च हृदि कुरु स्थिरं प्रिये।
योऽगोचरः श्रुतीनाञ्च ब्रह्मादीनामगोचरः।।१५।।

निर्गुणो निरहङ्कारो निरीहो निर्विकल्पकः।
योऽमायाविषयो मायानर्तको मायिमोहनः।।१६।।

म त्यसका लागि तिमीलाई उपाय बताउँछु । हे प्रिय ! तिमीले त्यसलाई हृदयमा स्थिररूपमा धारण गर । भगवान् वेदद्वारा पनि अगोचर हुनुहुन्छ र ब्रह्म आदि देवताको दृष्टिमा पनि पर्नुहुन्न । उहाँ निर्गुण, निरहङ्कार, निरीह र निर्विकल्प पनि हुनुहुन्छ । उहाँ मायाको विषय हुनुहुन्न तापनि उहाँले मायालाई नचाउनुहुन्छ र मायालाई साधन बनाएर संसारमा अनेक घटना घटाउने मायिकहरूलाई पनि मोहित गर्नुहुन्छ ।।१५-१६।।

मायातीतोऽपि मायाया आधारः कारणातिगः।
मायाविस्तारकारी च कार्यकारणकारणम्।।१७।।

कथं साकारतां गच्छेदनुष्ठानं विना प्रिये! ।

मायादेखि साह्रै पर रहनुहुन्छ तापनि मायाका आधार हुनुहुन्छ । उहाँ कारणतत्त्वभन्दा पर रहनुहुन्छ र मायालाई विस्तार गर्ने कर्ता पनि हुनुहुन्छ; कार्य र कारणका पनि मूल कारण परमेश्वर नै हुनुहुन्छ ।।१७।। हे देवी ! बिना अनुष्ठान त्यस्ता भगवान् कसरी छोराको रूपमा साकार हुनुसक्नु हुन्छ ?

अदितिरुवाच

कस्य ध्यानं कथं कार्यमनुष्ठानं मयाऽधुना।।१८।।
केन मन्त्रेण वा कुर्वे तद् वदस्व महामुने।।

**अदितिले भनिन्** - हे प्राणनाथ ! मैले अहिले कुन महापुरुषको अथवा कुन देवताको ध्यान र अनुष्ठान कुन विधिले गर्नुपर्दछ ? ।।१८।। कुन मन्त्रले गर्नुपर्दछ ? ती सबै विषयमा हे महामुनि ! मलाई बताउनुहोस् ?

क उवाच

एवं पृष्टो मुनिस्तस्यै नाममन्त्रं समादिशत्।।१९।।

पञ्चाक्षरं चतुर्थ्यन्तमोङ्कारपल्लवान्वितम्।
नमोऽन्तं ध्यानसहितं न्यासदैवतसंयुतम्।।२०।।

पुरश्चरणमार्गञ्च सर्वं तस्यै न्यवेदयत्।
ततः सा मुदिता ब्रह्मन् ! प्रणिपातपुरःसरम्।।२१।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी अदितिद्वारा सोधिएका ऋषि कश्यपले अदितिलाई भगवान्का नाममन्त्रको उपदेश गरे ।।१९।। कश्यपले पाँच अक्षर भएको चतुर्थी विभक्तिसहितको शुरुमा ॐकार लाग्ने मन्त्रलाई नमःसँग जोडेर उपदेश गरे । ध्यान, न्यास र देवता पनि बताए । पुरश्चरण कसरी गर्ने भन्ने बारेमा पनि उपदेश दिए । त्यसपछि अत्यन्त प्रसन्न भएकी ती अदितिले आफ्ना प्राणनाथ कश्यप

कश्यपं निजभर्तारं पूजयामास सादरम्।
तदनुज्ञां समादाय जगाम तपसे वनम्।।२२।।

स्नाता पवित्रवसना ध्यायन्ती स्थिरचेतसा।
विनायकं देवदेवं न्यासं कृत्वा यथाविधि।।२३।।

स्थाने द्रुमलताकीर्णे निर्वाते निरुपद्रवे।
अदिती रुद्धकरणा शुभासनपरिग्रहा।।२४।।

जजाप परमं मन्त्रं स्मरन्ती सा विनायकम्।
अनन्यवृत्तिमनसा साक्षात्कारमभीप्सती।।२५।।

निराहारा वायुभक्ष्या जपध्यानपरायणा।
तस्यास्तपःप्रभावेण निर्वैराःप्राणिनोऽभवन्।।२६।।

धर्षिता देवताःसर्वाःकिमियं साधयिष्यति।
एवं वर्षशतं तेपेऽदितिःसा परमं तपः।।२७।।

क्लेशान् बहुविधाँस्तस्या दृष्ट्वा देवो विनायकः।
स्त्रीभावे च तथा धैर्यमाविरासीद् विनायकः।।२८।।

तेजोराशिःपुरस्तस्याः सूर्यकोटिसमप्रभः।
गजाननो दशभुजो कुण्डलाभ्यां विराजितः।।२९।।

कामातिसुन्दरतनुः सिद्धिबुद्धिसमायुतः।
मुक्तामालाञ्च परशुं बिभ्रद् यो मेघपुष्पजम्।।३०।।

काञ्चनं कटिसूत्रञ्च तिलकं मृगनाभिजम्।
उरगं नाभिदेशे तु दिव्याम्बरविराजितम्।।३१।।

महोराशिं पुरो दृष्ट्वा चकम्पे त्वदितिर्भृशम्।
निमील्य नयने मूर्च्छामियाय न्यपतद् भुवि।।३२।।

जपं ध्यानं विसस्मार चिन्तयामास चेतसा।
किमागतं मम पुरो भाव्यं किमिदमद्भुतम्।।३३।।

ऋषिलाई साष्टाङ्ग दण्डवत् प्रणाम गरिन् र आदरपूर्वक तिनको पूजा पनि गरिन्। त्यसपछि उनको आज्ञा लिएर तपस्या गर्न वनतर्फ गइन् ।।२०-२२।। वनमा गएर स्नान गरेपछि पवित्र वस्त्र धारण गरी विधिपूर्वक न्यास गरेर स्थिर चित्तले भगवान् श्रीगणेशको ध्यान गरिन् । रूख र लहराहरूले घेरिएको एकान्त र वायुको प्रवेश नहुने शान्त ठाउँमा अदितिले आफ्ना इन्द्रिय बाँधेर उत्तम आसनमा विराजमान भई भगवान् श्रीगणेशको परम मन्त्र जप्न थालिन् । त्यस बेला उनको मनको वृत्ति एकाग्र थियो। उनी भगवान् श्रीगणेशको साक्षात्कारको कामना गरिरहेकी थिइन् ।।२३-२५।। निराहार रहेर हावाको पान गर्दै भगवान् श्रीगणेशको जप र ध्यानमा अविचल भावले समर्पित थिइन्। अदितिको तपस्याको प्रभावले त्यस वनका प्राणीहरूमा रहेको वैरभाव समाप्त भयो। देवताहरू अदितिको तपस्या देखेर हतप्रभ भए र भन्न थाले - यिनले के कुरा सिद्ध गर्न यसरी तपस्या गरिरहेकी छन् ? यसरी अदितिले सय वर्षसम्म परम कठिन तपस्या गरिन्।।२६-२७।। अदितिले तपस्यामा प्राप्त गरेका क्लेश र वेदनाका साथै नारी शरीरमा पनि यतिविधि धैर्य हुँदो रहेछ भन्ने विचार गरी दयालु भगवान् श्रीगणेश प्रकट हुनुभयो ।।२८।। अदितिका सामु करोडौं सूर्यको समान कान्ति भएको एउटा तेजको पुञ्ज थियो। त्यस तेजपुञ्जको मुख हात्तीको जस्तो थियो, दशवटा हातहरू थिए, कानमा दुईवटा सुन्दर कुण्डल थिए, त्यसको शरीर कामदेवको भन्दा पनि आकर्षक थियो, त्यसका वरिपरि सिद्धि र बुद्धिनामक दुइटी नारीहरू थिए । त्यस तत्त्वले मोतीको माला र चट्याङ पर्दा आकाशबाट झर्ने ढुङ्गाबाट बनेको बञ्चरो धारण गरेको थियो। स्वर्णमय, कन्धनी र कस्तूरीको तिलक धारण गर्ने, नाभिमा सर्पलाई बेर्ने, दिव्य वस्त्रद्वारा सुहाएको तेजोराशि सामु देखेर ती बारबार काप्न थालिन्। आँखा चिम्लेर भुइँमा लडिन् र मूर्च्छा परिन्।।२९-३२।। उनी मूर्च्छाबाट होशमा आउँदा जप, ध्यान आदि सबै कुरा बिर्सेकी थिइन् । तिनले एउटा कुरा मात्र चिन्तन गर्न थालिन्। यो तेजोमय तत्त्व के हो? यो अद्‌भुत तत्त्व कसरी मेरा सामु आयो ? मैले जप र ध्यान पनि बिर्सिएँ। के यो परमेश्वरकै रूप हो त ? हुनसक्छ,

विस्मृत्याऽहं जपं ध्यानं किं वाऽयं परमेश्वरः।
वरं दातुं समायातो महसा भासयन् दिशः।।३४।।

एवं सा विह्वला यावत् तावद् देवो जगाद ताम्।

विनायक उवाच

सोऽहं देवि ! दिवारात्रौ यं ध्यायसि च चेतसा।।३५।।

दृष्ट्वा निष्ठां तपो घोरं वरं दातुमुपस्थितः।
वरयस्व वरान् मत्तो यान् यान् कामयसे हृदा।।३६।।

ताँस्तान् दास्यामि सन्तुष्टस्तपसाऽनेन सुव्रते।

क उवाच

तदीयं वाक्यमाकर्ण्य स्वस्था जाताऽदितिस्तदा।।३७।।

बद्धाञ्जलिपुटा दीना प्रणनाम विनायकम्।
अवदच्च तदा देवमतर्क्यं मनसा सदा।।३८।।

अदितिरुवाच

त्वमेव सृजसे विश्वं पासि हंस्यखिलेश्वरः।
नित्यो निरञ्जनो देवो निर्गुणो निरहंकृतिः।।३९।।

नानारूपधरो नित्यो योगगम्योऽखिलार्थकृत्।
इदानीं सौम्यरूपेण वरं देहि विनायक।।४०।।

यदि तुष्टोऽसि देवेश ! यदि देयो वरो मम।
तदा मे पुत्रतां याहि ततो मे कृतकृत्यता।।४१।।

ततस्ते सेवनं यास्ये साधूनां पालनं भवेत्।
दुष्टानां निधनं देव ! लोकानां कृतकृत्यता।।४२।।

विनायक उवाच

अहन्ते पुत्रतां यास्ये पास्ये साधूँश्च कण्टकान्।
हनिष्ये सकलां वाञ्छां पूरयिष्ये तवाऽपि च।।४३।।

मलाई वरदान दिन आफ्नो तेजबाट चारै दिशालाई ज्योतिर्मय तुल्याउँदै भगवान् स्वयं आउनुभएको हो कि ? यसरी तर्कले विह्वल भएकी अदितिलाई देखेर भगवान् श्रीगणेशले भन्नुभयो।

**श्रीगणेशले भन्नुभयो** - हे देवी ! तिमीले अहोरात्र मनबाट जसको ध्यान गर्दछ्यौ, त्यो म हुँ। तिम्रो श्रद्धा र कठोर तपस्या देखेर तिमीलाई वर दिन उपस्थित भएको छु। हे अदिति! तिमीले हृदयबाट जुन-जुन वरदानको कामना गर्दछ्यौ, ती म दिन्छु, तिमीले स्वीकार गर। हे सुव्रते ! म तिम्रो तपस्याबाट ज्यादै प्रसन्न भएको छु।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेश भगवान्‌का कुरा सुनेर अदिति स्वस्थ र शान्त भइन्। हात जोडेर तिनले भगवान् श्रीगणेशलाई प्रणाम गरिन् । मनले कहिल्यै पनि देख्न पाउँछु भनेर नचिताएका भगवान् श्रीगणेशको अनुमानदेखि पर रहेको दिव्य मूर्ति देखेर निवेदन गरिन् ।।३३-३८।।

**अदितिले भनिन्** - हे भगवन् ! हजुरले नै संसारको सृष्टि, पालन र संहार पनि गर्नुहुन्छ । हजुर संसारका स्वामी हुनुहुन्छ। नित्य, निरञ्जन, निर्गुण, निरहङ्कार देवता पनि तपाईं नै हुनुहुन्छ। हजुरले आफ्नो इच्छाअनुसार अनेक रूप धारण गर्नुहुन्छ। हजुरलाई योगमार्गबाट मात्र प्राप्त गर्न सकिन्छ। हजुरले सम्पूर्ण मानिसहरूका कामनालाई परिपूर्ण तुल्याउनुहुन्छ। हजुरको यो तेजोमय जाज्वल्यमान मूर्ति देखेर म डराएकी छु। सौम्य रूपमा आएर मलाई वरदान दिनुहोस्। हे देवताहरूका स्वामी ! हजुर यदि प्रसन्न हुनुहुन्छ र मलाई वरदान दिन पनि चाहनुहुन्छ भने हजुर मेरो गर्भमा पुत्र बनेर प्रवेश गर्नुहोस्। त्यस बेला मात्र म कृतकृत्य हुनेछु। त्यसपछि मैले हजुरको सेवा गर्ने मौका पाउनेछु, हजुरले पनि मेरो कोखीबाट जन्म लिएर लीला विहार गर्दै सज्जनहरूको रक्षा गर्ने अवसर पाउनुहुनेछ। हजुरले यसरी अवतार लिएपछि दुष्टहरूको संहार हुनेछ र विभिन्न लोकका निवासी प्राणीहरू पनि कृतकृत्य हुनेछन् ।।३९-४२।।

**श्रीगणेशले भन्नुभयो** - हे देवी ! म तपाईंको छोरा भएर जन्मनेछु, साधुहरूको रक्षा गर्नेछु, समाजका काँडाहरूलाई निर्मूल गर्नेछु र तपाईंका सम्पूर्ण इच्छा परिपूर्ण तुल्याउनेछु।।४३।।

क उवाच

एवमुक्त्वाऽन्तर्दधेऽसौ देवदेवो विनायकः।
साऽदितिः कश्यपं गत्वा सर्ववृत्तान्तमब्रवीत्।।४४।।

अदितिरुवाच

तवाज्ञया गतारण्यं तपस्तप्तं महत्तरम्।
वरं दातुं महोरूप आगतोऽसौ गजाननः।।४५।।

दृष्ट्वा स्वरूपं भीताऽस्मि ततोऽप्रार्थि विनायकः।
तेन नानाविधा दत्ता वरा मे मुनिसत्तम।।४६।।

यास्ये पुत्रत्वमित्युक्त्वाऽन्तर्दधेऽसौ विनायकः।
सिद्धकार्या तव बलादागता स्वाश्रमं मुने।।४७।।

क उवाच

इति तस्या वचः श्रुत्वा वरदानं सुधोपमम्।
जहर्ष मुनिमुख्योऽसौ तया सह मुनीश्वर।।४८।।

रेमाते परमप्रीत्या ह्यमृतादिव निर्वृतौ।।४९।।

**ब्रह्माजीले भन्नुभयो** - अदिति मातालाई वरदान दिएर देवदेव श्रीगणेश अन्तर्धान हुनुभयो। ती अदितिले पनि कश्यप ऋषिका नजिकमा गएर सम्पूर्ण वृत्तान्त बयान गरिन्।।४४।।

**अदितिले भनिन्**- हे प्राणनाथ! हजुरको आज्ञा पाएर म वनमा गएँ। त्यहाँ गएर कठिन तपस्या गरेँ। त्यसपछि भगवान् गजानन तेजोरूप लिएर वरदान दिन आउनुभयो। उहाँको तेजोमय रूप देखेर म डराएँ। त्यसपछि मैले उहाँसँग प्रार्थना गरेँ। उहाँले मलाई अनेक थरि वरदान दिनुभएको छ। अन्तमा म तपाईंको छोरा भएर जन्मिनेछु भन्ने कुरा गरी उहाँ अन्तर्धान हुनुभयो। हजुरको कृपाबाट म आफ्नो कार्य सिद्ध गरेर हजुरको सेवाका लागि आश्रममा आइपुगेकी छु।।४५-४७।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्नो पत्नी अदितिका वचन सुनेपछि तिनले अमृतमय वरदान पाएको कुरा थाहा पाएर मुनिश्रेष्ठ कश्यप अदितिप्रति अत्यन्त प्रसन्न भए। त्यसपछि दुबै दम्पती अमृतको प्राप्तिपछि परम आनन्दमा पुगेसमान अत्यन्त प्रीतिका साथ रमाएर रहे।।४८-४९।।

ॐ

**इतिश्रीगणेशपुराणे क्रीडाखण्डे अदितिवरप्राप्तिवर्णनं नाम पञ्चमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'अदितिलाई वरप्राप्ति' शीर्षकान्वित पाँचौं अध्याय पूर्ण भयो।।५।।

ॐ

## षष्ठोऽध्यायः

भृगुरुवाच

अथ सा मेदिनी दुष्टदैत्यभारप्रपीडिता।
वेषान्तरं समास्थाय जगाम कमलासनम्।।१।।

दीना हस्ताञ्जलिं बद्ध्वा जगाद पद्मसम्भवम्।

भूमिरुवाच

जाताऽहं मलिना दीना हीना यज्ञव्रतादिभिः।।२।।

स्थानभ्रष्टास्तथा देवाः सेन्द्राःसर्षिगणा विधे।
अतिभाराऽतिसन्तप्ता कं त्वाऽहं शरणं गता।।३।।

येनोपायेन दुष्टानां नाशः स्यात् तद् विधीयताम्।
नो चेद् रसातलं यास्ये सपर्वतजनाकुला।।४।।

भृगुरुवाच

इति वाक्यं धरित्र्याः स श्रुत्वा कस्तामथाऽब्रवीत्।
अहं सर्वे लोकपाला इन्द्राद्या देवतागणाः।।५।।

ऋषयोऽपि स्वधास्वाहारहिता दुःखिता भृशम्।
भ्रष्टस्थाना भ्रष्टमन्त्रा भ्रष्टाचारा यथा लये।।६।।

सर्वे वयं प्रार्थयामो देवदेवं विनायकम्।
ब्रह्मरूपं निराकारं जगत्कारणकारणम्।।७।।

यदा साकारतां यायाल्लोकानां दैवयोगतः।
तदा शं सर्वलोकानां स्यात् तवाऽपि वसुन्धरे।।८।।

भृगुरुवाच

इत्युक्त्वा तुष्टुवुर्देवं ब्रह्माद्यर्षिगणा मुदा।
निराकारञ्च साकारं बद्धाञ्जलिपुटास्तदा।।९।।

नमो नमस्तेऽखिललोकनाथ !
नमो नमस्तेऽखिललोकधामन्।
नमो नमस्तेऽखिललोककारिन् !
नमो नमस्तेऽखिललोकहारिन्।।१०।।

## { ६ अध्याय }

**भृगुले भन्नुभयो** – दैत्यहरूको अत्याचारबाट अत्यन्त खिन्न भएकी पृथिवी एक दिन अर्कै रूप लिएर ब्रह्माजीका समीपमा गइन् ।।१।। दीनस्वरूपमा रहेकी पृथिवीले अञ्जलि बाँधेर ब्रह्माजीलाई भनिन् ।

**पृथिवीले भनिन्** – हे विधाता ! यज्ञ, व्रत आदि नहुनाले म मलिन भएकी छु र दीन अवस्थामा पुगेकी छु।।२।। स्थानभ्रष्ट इन्द्र आदि देवता र ऋषिगणसमेतको भार बढ्नाले म अत्यन्त सन्तप्त छु र हजुरको शरणमा आएकी छु ।।३।। हे भगवन् ! जुन उपायबाट दुष्टहरूको नाश हुन सक्छ, त्यो उपाय गर्नुहोस् । अन्यथा म पर्वत र मानिसहरूको भारले व्याकुल भएर आफूलाई थाम्न नसकी पातालमा पुग्नेछु ।।४।।

**भृगुले भन्नुभयो** – पृथिवीका यी कुरा सुनेर ब्रह्माजीले भन्नुभयो- हे पृथिवी ! वर्तमान समयमा तिमीमात्र दुःखी छैनौ, म दुःखी छु, इन्द्र आदि सबै लोकपाल र देवतागण पनि दुःखी छन्। ऋषिहरू पनि दुःखी छन्। किनकि सबैलाई स्वाहा, स्वधा केही नहुनाले दुःखी तुल्याएको छ । हामीहरू प्रलयकालमा झैं अहिले स्थानभ्रष्ट, मन्त्रभ्रष्ट र आचारभ्रष्ट पनि भएका छौं । त्यस कारण हामी सबैले मिलेर देवताका पनि देवता श्रीगणेशको प्रार्थना गर्नुपर्दछ । श्रीगणेश निराकार, ब्रह्मरूप र जगत्को कारणका पनि मूल कारण हुनुहुन्छ । जब श्रीगणेश दैवयोगले मानिसहरूको कल्याणका लागि साकार स्वरूपमा प्रकट हुनुहुन्छ । त्यस बेला सबै लोकहरूका साथै तिम्रो पनि कल्याण हुनेछ ।।५-८।।

**भृगुले भन्नुभयो** – यसो भनेपछि ब्रह्मा आदि सबै देवता र ऋषिहरूले निराकार र साकार स्वरूपमा रहनुहुने श्रीगणेशको हात जोडेर प्रार्थना गरे – "सम्पूर्ण लोक-लोकान्तरका स्वामी हे श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं । सम्पूर्ण प्राणीहरूका अन्तिम गन्तव्यधाम हे भगवन्! हजुरलाई बारबार प्रणाम गर्दछौं । सम्पूर्ण संसारको सृष्टि गर्ने हजुरलाई बारबार नमस्कार गर्दछौं । सम्पूर्ण संसारको संहार गर्नुहुने हजुरलाई बारबार नमस्कार गर्दछौं ।।९-१०।। देवताका

नमो नमस्ते सुरशत्रुनाश!
नमो नमस्ते हृतभक्तपाश !
नमो नमस्ते निजभक्तपोष !
नमो नमस्ते लघुभक्तितोष ! ।।११।।

निराकृते ! नित्यनिरस्तमाय!
परात्परब्रह्ममयस्वरूप !
क्षराक्षरातीतगुणैर्विहीन !
दीनानुकम्पिन् ! भगवन् ! नमस्ते।।१२।।

निरामयायाखिलकामपूर !
निरञ्जनायाखिलदैत्यदारिन् !
नित्याय सत्याय परोपकारिन् !
समाय सर्वत्र नमो नमस्ते।।१३।।

एवं स्तुत्वा पुन:प्रोचुर्देवदेवं विनायकम्।
ते सर्वे मुनयो देवा विह्वला भृशदु:खिता:।।१४।।

हाहाभूतं जगत् सर्वं स्वधास्वाहाविवर्जितम्।
वयं मेरुगुहां याता आरण्या: पशवो यथा।।१५।।

अतोऽमुं त्वं महादैत्यं जहि विश्वम्भराऽधुना।
एवं स्तुवत्सु सर्वेषु प्राह वाणी नभोगता।।१६।।

कश्यपस्य गृहे देवोऽवतरिष्यति साम्प्रतम्।
करिष्यत्यद्भुतं कर्म पदानि व: प्रदास्यति।।१७।।

दुष्टानां निधनं चैव साधूनां पालनं तथा।

भृगुरुवाच

एवमाकर्ण्य तां वाचं ब्रह्मा प्रोवाच मेदिनीम्।।

क उवाच

स्वस्था भव धरे! देवि! नभोवाणीविनिश्चयात् ।।१८।।

देवा: सर्वे मृत्युलोकेऽवतरिष्यन्ति त्वत्कृते।
हरिष्यति महाभारमवतीर्णो विनायक: ।।१९।।

शत्रुहरूलाई नाश गर्नुहुने हे भगवन् श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं । भक्तहरूका बन्धन काटिदिनुहुने हे दयालु श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं । आफ्ना भक्तहरूको पोषण गर्नुहुने हे श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं । थोरै भक्तिले पनि प्रसन्न हुनुहुने हे भगवन् श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं ।।११।। निराकारस्वरूपमा रहनुहुने, मायादेखि पर रहनुभएका, परात्पर, परम तत्त्व र परब्रह्मस्वरूप हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं। क्षर र अक्षरस्वरूप, सत्त्व, रज र तमनामक गुणहरूबाट रहित, दीन-दु:खीहरूमा दया गर्नुहुने हे ऐश्वर्यशाली भगवन् श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं ।।१२।। चिन्ता र व्याधिले रहित, निर्मलस्वरूपका स्वामी, भक्तहरूका कामनापूरक, निरञ्जनस्वरूप र दैत्यसंहारक हे श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं । नित्य, सत्य र समस्वरूप: सर्वत्र विराजमान र परोपकारशील हे श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं ।।१३।।" देवताहरूले यसरी स्तुति गरेर देवाधिदेव श्रीगणेशलाई हात जोडी फेरि दु:खित स्वरले भन्न लागे- "हे भगवन् श्रीगणेश! जगत्मा हाहाकार फैलिएको छ, पितृका निमित्त स्वधाकार र देवताहरूका निमित्त स्वाहाकार कहीं पनि गरिँदैन। हामी देवताहरू पनि जंगली जनावरझैं आ-आफ्ना आश्रय छोडेर भागी मेरुपर्वतको गुफामा बस्न आएका छौं ।।१४-१५।। तसर्थ हे विश्वम्भर ! हजुरले अहिले त्यस महादैत्यको हत्या गर्नुहोस्।" यस प्रकार देवताहरूले स्तुति गरेपछि आकाशवाणी भयो - 'तुरुन्तै कश्यप महर्षिका घरमा भगवान् श्रीगणेशले अवतार लिनुहुनेछ । उहाँले कश्यपपुत्रका रूपमा अद्भुत लीला गर्नुहुनेछ र तपाइँहरूलाई आ-आफ्नो धाममा फिर्ता गराउनु हुनेछ ।।१६-१७।। भगवान् श्रीगणेशले दुष्टहरूको वध र साधुहरूको सुरक्षाका लागि कार्य गर्नुहुनेछ ।'

**भृगुले भन्नुभयो** - यस किसिमको आकाशवाणी सुनेपछि ब्रह्माजीले पृथिवीलाई भन्नुभयो ।

**ब्रह्माजीले भन्नुभयो**- हे वसुन्धरा देवी! आकाशवाणीको अर्थअनुसार भगवान्को अवतार लिने निश्चयलाई आत्मसात् गरी तिमी स्वस्थ र शान्त बन । तिम्रो सहायताका निमित्त देवताहरूले मर्त्यलोकमा अवतार लिनेछन्। कश्यपका घरमा अवतार लिनुहुने भगवान् श्रीगणेशले तिम्रो भार हर्नुहुनेछ ।।१८-१९।।

भृगुरुवाच

इत्युक्त्वा सा तदा तेन ब्रह्मणा हृष्टमानसा ।
स्वस्थानमगमत् साऽथ स्वस्थचित्ता धरा तदा ।।२०।।

ततो बहुतिथे कालेऽदितिः सा गर्भमादधे।
तेजोऽतिववृधे तस्या दिने दिने यथा शशी।।२१।।

सम्पूर्णे नवमे मासे सुषुवे पुत्रमुत्तमम्।
ब्रह्मवाक्यादभूत् ख्यातो नाम्ना कश्यपनन्दनः।।२२।।

दशभुजो बहुबलःकर्णकुण्डलमण्डितः।
कस्तूरीविलसद्भालो मुकुटभ्राजिमस्तकः।।२३।।

सिद्धिबुद्धियुतःकण्ठे रत्नमालाविभूषितः।
चिन्तामणिलसद्वक्षा जपापुष्पारुणाधरः।।२४।।

उन्नसो भृकुटीचारुललाटो दन्तदीप्तिमान्।
देहकान्त्या हततमा दिव्याम्बरयुतः शुभः।।२५।।

एतादृशं निरीक्ष्यैनं बालं तत्पितरौ तदा।
तत्तेजसा हतदृशौ किञ्चिद् द्रष्टुं न शेकतुः।।२६।।

बलादुन्मील्य नयने दृष्ट्वा तद्रूपमुत्तमम्।
ननन्दतुरुभौ पश्चाद् बालस्ताविदमब्रवीत्।।२७।।

बाल उवाच

मातस्त्वया यतः पूर्वं सहस्रपरिवत्सरम् ।
येन रूपेण सन्ध्यातस्तनयत्वेन याचितः।।२८।।

तदा नानावरान् दत्त्वा पुत्रत्वं ते गतोऽधुना।
सोऽहं भूभारहरणं विधास्ये सेवनं द्वयोः।।२९।।

ब्रह्मादीनां पदप्राप्तिर्दुष्टदैत्यविनाशनम् ।

**भृगुले भन्नुभयो** - ब्रह्माजीद्वारा सम्बोधित गरिएकी पृथिवी ती कुरा सुनेर मनमनै हर्षित भइन् र चित्त स्थिर एवं स्वस्थ बनाएर आफ्नो स्थानमा फर्किइन् ।।२०।। केही कालपछि अदितिले उत्तम गर्भ धारण गरिन्। गर्भको तेज बढ्दै गयो। जसरी शुक्लपक्षको चन्द्रमाको वृद्धि हुन्छ त्यसरी नै गर्भस्थ बालकको पनि विकास भइरहेको थियो। नौ महिना पूरा भएपछि अदितिले उत्तम पुत्र पैदा गरिन्। ब्रह्माजीका वचनबाट ती बालक कश्यपनन्दनका रूपमा प्रसिद्ध भए ।।२१-२२।। सद्योजात बालकका दश हात थिए, कानमा कुण्डल शोभायमान थिए, निधारमा कस्तूरीको टीका चम्किरहेको थियो र शिरमा सुन्दर मुकुट शोभायमान थियो। बालकका वरिपरि सिद्धि र बुद्धि नामक दुइटी युवतिहरू थिए। तिनको घाँटीमा रत्नको माला सुहाएको थियो र छातीमा चिन्तामणि टल्किएको थियो । बालकका ओंठहरू बाह्रमासे फूलझैं राता थिए । नाक लामो थियो, ललाट सुन्दर आँखीभौंले सुहाएको थियो र दाँत असाध्यै चम्किला थिए । शरीरको दिव्य कान्तिले अत्यन्त शोभायमान र कान्तिद्वारा अन्धकारलाई नाश गर्ने ती बालकले दिव्य वस्त्र धारण गरेका थिए।।२३-२५।। यस्ता सुन्दर र अलङ्कार एवं वस्त्रले सुहाएका बालकलाई देखेर प्रसन्न भएका अदिति र कश्यपले बालकको चहकिलो तेजका सामु संसारका अरू पदार्थ देख्न सकेनन्।।२६।। बलपूर्वक आँखा खोल्दा त्यो बालकको रूपले तिनीहरूका आँखा तिर्मिराउँथे, अद्भुत बालकको विचित्र सौन्दर्य देखेर अदिति र कश्यप दुबै अत्यन्तै आनन्दित भए। केही बेरपछि बालकले अदिति र कश्यपलाई सम्बोधन गर्दै भने ।।२७।।

**बालकले भने** - आमा ! तपाईंले धेरै पहिले एक हजार वर्षसम्म जुन उद्देश्य लिएर ध्यान गर्नुभएको थियो र मेरा कोखमा तपाई पैदा हुनुहोस् भनेर प्रार्थना गर्नुभएको थियो, त्यस बेला मैले तपाईंलाई धेरै थरिका वरदान दिएको थिएँ। ती वरदानहरूकै पूर्णताको क्रममा आज म तपाईंको छोरा भएर जन्मेको छु। अब मैले पृथिवीको भार हरण गर्नेछु र दुबै बाबुआमाको श्रद्धापूर्वक सेवा गर्नेछु। ब्रह्मा आदि देवताहरूलाई तिनीहरूको धाम र पदमा स्थापित गराउन पहल गर्नेछु र दुष्ट दैत्यहरूको नाश पनि गर्नेछु ।

भृगुरुवाच

इत्थमाकर्ण्य तद्वाक्यं सानन्दाश्रू बभूवतुः।।३०।।

चक्रवाकौ यथा वीक्ष्य नभसीव दिवाकरम्।
ऊचतुस्तं तदा पुण्यमद्भुतं नौ समुद्यतम्।।३१।।

येन नौ पुत्रतां यातः परमात्मा विनायकः।
धन्यं कुलं नौ पितरौ जनुषी ज्ञानमेव च।।३२।।

यतश्चराचरगुरुः सर्वसाक्षी निराकृतिः।
नित्यानन्दमयः सत्यः पुत्रत्वमगमच्छुभम्।।३३।।

यस्मिंश्चराचरं प्रोतं सूत्रे मणिगणा इव।
यः सर्वगः सर्ववेत्ता स एव त्वं न संशयः।।३४।।

इदं रूपं परं दिव्यमुपसंहर साम्प्रतम्।
प्राकृतं रूपमास्थाय क्रीडस्व कुहको यथा।।३५।।

यदा यद्रूपकृत्यन्ते तदा तत्त्वं विधास्यसि।
इत्थमाकर्ण्य तद्वाक्यं पिदधे रूपमात्मनः।।३६।।

द्विभुजः प्राकृतो बालो रुरोद धरणीतले।
रसातलञ्च गगनं नादयन् विदिशो दिशः।।३७।।

तच्छब्दश्रवणाद् बन्ध्या जाता गर्भवती द्रुमाः।
नीरसाः सरसाः शक्रो जहर्षे देवतागणैः।।३८।।

भयं बभूव दैत्यानां ववृधे धरणी तदा।
चकार जातकर्माऽस्य कश्यपो ब्राह्मणैःसह।।३९।।

**भृगुले भन्नुभयो** - बालकका यी कुरा सुनेर ती दुबै दम्पती अत्यन्त आनन्दित भए ।।२८-३०।। जसरी चखेवा-चखेवीले बिहानीपख आकाशमा सूर्यनारायणको दर्शन पाएर आनन्दको अनुभूति गर्दछन् त्यसै गरी ती दम्पतीले पुत्र जन्मका कारण आनन्दको अनुभूति गरिरहेका थिए । त्यसपछि ती दुबैले बालकलाई सम्बोधन गर्दै भने - वत्स ! आज हामी दुबैको अद्भुत पुण्यको उदय भएको छ ।।३१।। किनकि श्रीगणेश परमात्मा हाम्रा पुत्र भएर जन्मिनुभएको छ। हाम्रो कुल धन्य भएको छ, हामीलाई जन्म दिने माता-पिता धन्य हुनुभएको छ, हामी दम्पतीको जन्म सफल भएको छ र हामीले प्राप्त गरेको ज्ञान पनि सफल भएको छ।।३२।। आज सकल चराचरका स्वामी, सम्पूर्ण संसारका साक्षी, निराकार, नित्य, आनन्दमय र सत्यस्वरूप श्रीगणेश परमात्माले हाम्रो घरमा उत्तम पुत्रको रूप लिएर हामीलाई कृतार्थ बनाउनुभएको छ।।३३।। धागोमा मणि उनिएझैं तपाईंमा सम्पूर्ण स्थावर-जङ्गम स्वरूपमा रहेको संसार उनिएको छ । तपाईं सर्वव्यापक र सर्ववेत्ता हुनुहुन्छ। अहिले तपाईंले आफ्नो तेजोमय स्वरूपलाई साधारण बनाउनुहोस्। तपाईंले लोकमा जन्मिने सामान्य बालकहरूसरह भई बालक्रीडा गर्नुहोस् । जब तपाईंले कुनै लीला गर्नुपर्ने हुन्छ, त्यस बेलामात्र यस्तो अद्भुत स्वरूप धारण गर्नुपर्दछ । बाबु-आमाका यी कुरा सुनेर परमात्मा श्रीगणेशले आफ्नो दिव्य रूपलाई साधारण रूपमा परिणत गराउनुभयो ।।३३-३६।। त्यसपछि भगवान् श्रीगणेश दुई हात भएका सामान्य बालक बनी भुईंमा लडेर रुन थाल्नुभयो । बालकरूप श्रीगणेशका मुखारविन्दबाट उच्चारण गरिएको रोदनध्वनि सुनेर दिशा, विदिशा, पाताल र आकाश पनि प्रसन्नताले निनादित भए ।।३७।। त्यस बालकको नादमय र गम्भीर ध्वनि श्रवणका कारण बन्ध्याहरू गर्भवती भए र नीरस वृक्षहरू सहसा सरस भए । बालरूप भगवान् श्रीगणेशको गम्भीर स्वर सुनेर देवतागणका साथमा रहेका इन्द्र पनि प्रसन्न भए ।।३८।। दैत्यहरू भयभीत भए र पृथिवी अत्यन्त हर्षित भइन् । त्यसपछि कश्यप ऋषिले ब्राह्मणहरूका साथ रहेर सद्योजात बालकको जातकर्म संस्कार सम्पन्न गरे ।।३९।।

प्राशयित्वा मधु घृतं पस्पर्श मन्त्रतश्च तम्।
अपाययत् स्तनौ बालं मन्त्रपाठपुरःसरम्।।४०।।

छित्त्वा नालं तु संक्षाल्य बालं प्रास्वापयच्च सा।
ददौ दानान्यनेकानि ब्राह्मणेभ्यो मुनिस्तदा।।४१।।

अदापयत् प्रतिगृहं सप्तमे दिवसेऽदितिः।
इक्षुसारं पञ्चमे तु वायनानि महामुदा।।४२।।

महोत्कटेति नामास्य चक्र एकादशे पिता।
बालोऽपि ववृधे शीघ्रं शुक्लपक्षे यथा शशी।।४३।।

सर्वेभ्य उत्कटो यस्मान् महोत्कट इति स्मृतः।।४४।।

कश्यपले बालकलाई मन्त्र उच्चारणपूर्वक मह र घिउ चटाएर शिरमा स्पर्श गरे । आमा अदितिले पनि ब्राह्मणहरूको वेदमन्त्रघोषका साथ ती बालकलाई दूध चुसाइन्। नाल काटेर बालकलाई पखालेपछि अदिति माताले ती बालकलाई बिस्तरामा सुताइन् । त्यस बेला कश्यप ऋषिले ब्राह्मणहरूलाई अनेक थरि दान दिएका थिए ।।४०-४१।। बालकले जन्म लिएको सातौं दिनका दिन अदितिले छरछिमेकमा चिनी र गुड वितरण गर्न पठाइन् । बालक जन्मेको पाँचौं दिनका दिन पनि यसै गरी हर्षपूर्वक आफ्ना इष्टमित्र र बन्धुबान्धवलाई उपहार पठाएकी थिइन् ।।४२।। एघारौं दिनका दिन पिता कश्यपले नामकरण गर्दा बालकको नाम महोत्कट राखे । त्यसपछि ती बालक पनि शुक्लपक्षका चन्द्रमासमान तीव्र गतिमा बढ्न थाले। वास्तवमा ती बालक सबैभन्दा श्रेष्ठ भएका कारण नै तिनलाई महोत्कट भनिएको हो ।।४३-४४।।

ॐ

इतिश्रीगणेशपुराणे क्रीडाखण्डे विनायकाविर्भावो नाम षष्ठोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'विनायकको आविर्भाव' शीर्षकान्वित छैठौं अध्याय पूर्ण भयो ।।६।।

ॐ

## सप्तमोऽध्यायः

**ब्रह्मोवाच**

वसिष्ठवामदेवाद्या मुनयस्तनयं तदा।
जातं महोत्कटं श्रुत्वा दर्शनाय प्रतस्थिरे।।१।।

याता गृहं कश्यपस्य तेनाऽथ परिपूजिताः।
विष्टरं पाद्यमर्घ्यञ्च दत्त्वा गाञ्चापि दक्षिणाम्।।२।।

बद्धाञ्जलिपुटोऽवोचद् धन्योऽहं पितरौ तपः।
यदिन्द्रहरिपूज्यं वः पादपद्मं मयेक्षितम्।।३।।

कञ्चिदागमने हेतुं ज्ञातुमीहे तपोधनाः।
तेषां मध्ये श्रेष्ठतमो वसिष्ठः प्राह तं मुनिम्।।४।।

**वसिष्ठ उवाच**

श्रुतस्ते तनयो ब्रह्मन् ! नारदात् सुमहोत्कटः।
तं द्रष्टुं त्वाञ्च सम्प्राप्ता नान्यत् किञ्चित् प्रयोजनम्।।५।।

**क उवाच**

तत्कालं साऽदितिर्बालं द्रष्टुं तेषामथानयत्।
उत्कटान्येष कर्माणि करिष्यति महोत्कटः।।६।।

द्वात्रिंशल्लक्षणयुतो वसिष्ठः प्राह तं मुनिम्।
अवतीर्णो महातेजाः परमात्मा विनायकः।।७।।

अनेकान्यस्य विघ्नानि भविष्यन्ति महामुने !
तानि सर्वाणि नश्यन्ति रक्षणीयः क्षणे क्षणे।।८।।

यतोऽस्य रक्तौ चरणौ ध्वजाङ्कुशविराजितौ।
ततः सम्पूजामास मुनिः कश्यपनन्दनम्।।९।।

## { ७ अध्याय }

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! कश्यप ऋषिको घरमा छोराको रूपमा भगवान् श्रीगणेशको महोत्कट नामबाट अवतार भएको कुरा सुनेर वशिष्ठ, वामदेव आदि मुनिहरूले उहाँको दर्शन गर्न आ-आफ्ना आश्रमबाट प्रस्थान गरे ।।१।। ती ऋषिहरू कश्यपको आश्रममा पुग्दा कश्यप ऋषिले सबैको सत्कार र अर्चना गरे । आसन, पाद्य र अर्घ्य समर्पण गरी गाई एवं दक्षिणासमेत प्रदान गरे ।।२।। त्यसपछि कश्यप ऋषिले अञ्जलि बाँधी भन्नुभयो - हे महर्षिगण ! तपाईंहरूको दर्शन पाएर आज म धन्य भएँ, मेरा पिता-माता धन्य हुनुभयो र मेरो दीर्घकालिक तपस्या पनि धन्य भयो । किनकि मैले इन्द्र, नारायण आदि विशिष्ट देवताहरूद्वारा पनि पूजनीय हजुरहरूका चरणकमलको दर्शन पाएँ ।।३ हे तपोधन ! हजुरहरूको यहाँ आगमनको कारण के होला ? म जान्न चाहन्छु । कश्यपको यो प्रार्थनामय वाणी सुनेपछि ऋषिहरूमा उत्तम ऋषि वशिष्ठले कश्यपलाई सम्बोधन गर्दै भन्नुभयो ।।४।।

**वशिष्ठले भन्नुभयो** - हे ऋषिवर ! नारद ऋषिबाट तपाईंका पुत्रका रूपमा महोत्कट भगवान्ले अवतार लिएको थाहा पाएर उहाँको र तपाईंको पनि दर्शन गर्न हामी आएका छौं, अरू हाम्रो कुनै प्रयोजन छैन ।।५।।

**ब्रह्माजीले भन्नुभयो** - ऋषिहरू बालकको दर्शन गर्न आएको थाहा पाएर आमा अदितिले तिनलाई बालकको दर्शन गर्न बोलाउनु भयो । दर्शन गरेपछि वशिष्ठले भन्नुभयो- यी बालकले ज्यादै ठूला काम गर्नेछन् । त्यस कारण यिनको नाम महोत्कट रहेको छ । यिनका शरीरमा बत्तीसै लक्षण छन्। त्यस कारण ठूलो तेज भएका परमात्मा श्रीगणेशले तपाईंको घरमा महोत्कटको रूपमा अवतार लिनुभएको छ ।।६-७।। हे महामुनि! यी बालकको जीवनमा धेरैथरि विघ्न आउनेछन् । ती सबै विघ्न नष्ट भएर पनि जानेछन् । छिनछिनमा तपाईंहरूले ध्यान दिएर यी बालकको रक्षा गर्नुपर्नेछ ।।८।। यी बालकका दुवै पाउ राता छन् र पाउमा ध्वजा र अङ्कुशका चिह्न देख्न सकिन्छ। यति भनेर वशिष्ठ ऋषिले कश्यपका पुत्र भगवान्

प्रार्थयामास सर्वैस्तं भूभारहरणं कुरु।
साधूनां पालनं देव ! दुष्टदानवघातनम्।।१०।।

ते सर्वे मुनयो जग्मुस्तं प्रणम्य यथागतम्।
ततः स ख्यातिमगमन्नाम्ना कश्यपनन्दनः।।११।।

एकस्मिन् दिवसे प्रातः स्नातुं याते मुनौ बहिः।
अस्वापयत् स्वतनयमदितिर्गृहमाययौ।।१२।।

चकार यज्ञसम्भाराँस्तावदेका निशाचरी।
विरजेत्यभिविख्याता विकरालेक्षणानना।।१३।।

हलदन्ती दरीनासा पादचूर्णितभूधरा।
दीर्घस्तनी ललज्जिह्वा गोपुरस्पर्द्धिसद्धगा।।१४।।

जग्राह बालकं सा तु सर्वभक्ष्या निशाचरी।
क्षुधिताऽभक्षयच्छीघ्रं पक्वं रम्भाफलं यथा।।१५।।

शनैर्जगाम गगनं जलं पातुं भुवं ययौ।
पपौ जलं बहुतरं पपात पृथुलोदरा।।१६।।

मूर्च्छामवाप महतीं सर्पदष्टो नरो यथा।
लुलोल धरणी पृष्ठे महाशूलवती यथा।।१७।।

मुञ्च मुञ्चेति जल्पन्ती पदं गन्तुमथाऽक्षमा।
हाहाकारं प्रकुर्वती घ्नती वक्षःशिरोमुखम्।।१८।।

तावद् देहान्तरे तस्या ववृधे मुनिनन्दनः।
विदार्य जठरं तस्या वक्षस्येव स्थितोऽभवत्।।१९।।

महोत्कटको पूजा गरे ।।९।। पूजा गरेपछि प्रार्थना गर्दै भन्नुभयो– हे भगवन् ! हजुरले पृथिवीको भार हरण गर्नुहोस् । साधुहरूको रक्षा र दुष्ट दानवहरूको संहार गर्नुहोस् ।।१०।। यसरी वशिष्ठले बालकरूप भगवान्को प्रार्थना गरे भने तिनका साथ आएका ऋषि–मुनिहरूले पनि महोत्कट भगवान्को दर्शन र प्रार्थना गरे ।। ती सबै मुनिहरू भगवान् महोत्कटलाई प्रणाम गरेपछि जहाँबाट आएका थिए त्यहीं गए । त्यसपछि ती बालक संसारमा कश्यपनन्दनका नामबाट प्रख्यात भए ।।११।। एक दिन बिहानको समय थियो, कश्यप मुनि नुहाउन बाहिर गएका थिए। त्यस बेला अदितिले आफ्ना छोरालाई ओछ्यानमा सुताइन् र यज्ञका सामग्री तयार गरिन् । त्यसै बेला विरजा भनेर संसारमा कुख्यात भयङ्कर आँखा र अनुहार भएकी एउटी राक्षसी कश्यपका घरमा आइपुगी ।।१२-१३।। त्यसका दाँत हलाको आकारका थिए र नाक गुफासमान थियो । त्यस राक्षसीले हिंड्नका निम्ति पाइला चाल्दा त्यसको वेगबाट पर्वतहरू टुक्रा–टुक्रा हुन्थे । त्यसका स्तनहरू विशाल आकारका थिए। त्यसको जिब्रो लप्लपाइरहेको थियो । त्यसको यौनाङ्ग ढोकाकै आकारको थियो । त्यो सर्वभक्षी राक्षसी विरजाले आएर बिछ्यौनामा सुतेका अदितिका बालक पुत्रलाई अकस्मात् समाती। क्षुधातुर भएकी हुनाले द्रुत गतिमा आएर त्यसले पाकेको केरा निलेझैं बालकलाई निल्ने काम गरी ।।१४-१५।। त्यसपछि त्यो तुरुन्तै आकाशतर्फ उडेर गई र केहीबेरपछि पानी खान भनी धर्तीमा आई । धेरै पानी खाएपछि पेट फुलेर त्यो भुइँमा लडी ।।१६।। सर्पले टोकेको मानिस मूर्च्छित भएझैं त्यो पनि मूर्च्छित भई । तीव्र शूलको वेदना भएझैं आत्तिएर भुइँमा पछारिंदै हात–पाउ चलाउन थाली।।१७।। मलाई छोड, मलाई छोड भनेर चिच्याइरहेकी त्यो राक्षसी एक पाइला हिंड्न पनि असमर्थ भई। त्यस अवस्थामा त्यो हाहाकार गर्न थाली र आफ्ना हातले छाती, शिर र मुखमा प्रहार गर्न थाली ।।१८।। त्यसै बेला त्यसको पेटभित्र रहनुभएका भगवान् महोत्कट क्रमशः बढ्न थाल्नुभयो । उहाँ त्यसको पेट च्यातेर बाहिर निस्कनुभयो र छातीमा टेकेर उभिनुभयो ।।१९।। जसरी ठूलो

यथा जालं विदार्यैव बहिर्याति महाझष:।
सा तु तदैवमारावं कृत्वा प्राणान् जहौ खला।।२०।।

चूर्णयामास देहेन पञ्चयोजनगान् द्रुमान्।
विरजा विरजास्तेन प्रापिता निजधाम सा।।२१।।

दृष्टे स्पृष्टे कृपासिन्धौ जगदीशे कथं भवेत्।
ज्ञानदे मोक्षदे नृणामावृत्तिर्भवसागरे।।२२।।

अदितिर्गृहकार्याणि सम्पाद्य बहिरागता।
न ददर्श तदा बालं रुरोद भृशदु:खिता।।२३।।

गृहे गृहे निरीक्ष्यैव नालभत् क्वापि बालकम्।
ततोऽपतद्धरापृष्ठे हाहाकारं प्रकुर्वती।।२४।।

अन्याश्च रुरुदुस्तस्या: श्रुत्वा रोदनमुच्चकै:।
आश्चर्यं परमं चक्रु: सर्वलोका भयातुरा:।।२५।।

सा शुष्कवदना दीना विललाप मुहुर्मुहु:।
मुखञ्च साञ्जने नेत्रे मृजन्त्यश्रुजलाकुले।।२६।।

कल्पद्रुम इव प्राप्त: केन नीतो ममार्भक:।
वरदानं कथं तस्य वृथा स्याज्जगदीशितु:।।२७।।

इत्न निधानं देवेन केन नीतं दुरात्मना।
कथं मूढतरा जाता लब्धविज्ञानसागरा।।२८।।

कथं दरिद्रा जाताऽहं लब्ध्वा काञ्चनपर्वतम्।
एवं विलपती वक्षो घ्नती साप्याननं शिर:।।२९।।

माछो जाललाई च्यातेर बाहिर आउँछ, त्यसैगरी भगवान् श्रीगणेश पनि राक्षसीको पेटबाट बाहिर आउनुभएको थियो। भगवान्‌ले छातीमा टेकिरहेको बेला भगवान्‌का पाउको दबाब सहन नसकी त्यस दुष्ट राक्षसीले ठूलो स्वर गर्दै प्राणत्याग गरी ।।२०।। त्यो छट्पटिएर उफ्रिँदै र तड्पिँदै भुइँमा पछारिँदा त्यसको शरीरको वेगबाट पाँच योजन टाढासम्मका रूखहरू ढलेका थिए ।, त्यो विरजा राक्षसी भगवान् श्रीगणेशको स्पर्श पाएर विरजा अर्थात् पापमुक्त भई र भगवान्‌को कृपाबाट भगवान्‌कै धाममा प्राप्त भई ।।२१।। भगवान् श्रीगणेश जगदीश र कृपाका सागर पनि हुनुहुन्छ । उहाँको दर्शन र स्पर्शन प्राप्त भएमा ठूला-ठूला पापीहरू पनि मुक्त हुन्छन्। उहाँ ज्ञान र मोक्षका पनि दाता हुनुहुन्छ। उहाँको आराधना गर्ने भक्तहरूको भवसागरमा पुनरागमन हुँदैन । त्यस कारण भगवान्‌को कृपा पाएर विरजाले पनि मोक्ष प्राप्त गरी ।।२२।। त्यसै बेला अदिति माता आफ्ना घरका काम सकेर बाहिर आइन् । तिनले सुताएको ठाउँमा आफ्नो छोरालाई देखिनन् र अत्यन्त दु:खित भई रुन थालिन्।।२३।। घर-घरमा हेर्दै डुल्न थालिन् तर कहीं पनि आफ्नो बालकलाई तिनले देख्न पाइननन् त्यसपछि हाहाकार गर्दै भुइँमा लडिन् ।।२४।। अदिति माता रोएको स्वर सुनेर छरछिमेकका नारीहरू पनि रुन थाले । त्यो सानो बच्चा कहाँ पुग्यो होला ? कसले लगे होला ? भनी प्रश्न गर्दै डराएका ती सबै मानिसहरूले ठूलो आश्चर्य माने ।।२५।। अदिति माताको मुख सुक्यो । ती अत्यन्त मलिन भइन् र बारबार विलाप गर्न थालिन् । आँसुले भरिएका र गाजलले सिंगारिएका आँखा पुछ्दै र मुखमा छरिएका आँसुका दाना सफा गर्दै तिनले धेरै बेरसम्म विलाप गरिन् ।।२६।। ती भन्दै थिइन् - 'मेरो घरमा ती बालक कल्पवृक्ष बनेर जन्मिएका थिए। आज मेरा बालकलाई कसले कहाँ पुर्‍यायो ? भगवान्‌को वरदान के खेर जाला त ? ।।२७।। भगवान्‌ले हामीलाई खजाना दिनुभएको थियो, आज कसले त्यसलाई लुटेर लग्यो? मैले ऋषिपत्नीका रूपमा कति ज्ञान र कति विद्या हासिल गरेकी थिएँ, तर आज मेरा बालक हराउनाले म केही नजान्ने मूर्खजस्ती भएकी छु।।२८।। मसँग सुवर्णको ठूलो पर्वत थियो, त्यसलाई कसले लग्यो ? धिक्कार छ, आज म दरिद्र भएकी छु ।' यसरी विलाप गर्दै हातले छाती, मुख र शिरमा पिट्दै

आश्रमाद् बहिरागत्य क्रोशमात्रं निशाचरीम्।
ददर्श पतितं तस्या वक्षस्येव च तं शिशुम्।।३०।।

क्रीडन्तं हास्यवदनं प्रवुद्धमिव कामिनम्।
धावमाना तमादायाऽऽलिलिङ्ग च चुचुम्ब च।।३१।।

उवाचाऽऽनन्दपूर्णा सा महद् भाग्यं ममाऽधुना।
यद् राक्षसीशयान्मुक्तो बालको दैवयोगतः।।३२।।

ययौ सबाला स्नात्वा सा निजमाश्रममण्डलम्।
वृत्तान्तं सर्वमाचष्टे श्रुत्वा सोऽप्याह कश्यपः।।३३।।

भूतभाविविशेषज्ञैरुक्तं यन्मुनिभिः प्रिये।
तदेतत् सत्यमभवत् तदाशीर्वचनादयम्।।३४।।

जीवितोऽखिलभक्ष्याया बालकः पुण्ययोगतः।
ततो रक्षां चकाराऽसौ ददौ दानान्यनेकशः।।३५।।

शान्तिकं कारयामास स्वस्तिवाचनपूर्वकम्।
क्षणमात्रं न हातव्योऽदितिमेवं समादिशत्।।३६।।

अदिति माता आश्रमबाट एक कोस बाहिर गइन्। त्यहाँ तिनले एक कोश भूभागमा फैलिएकी राक्षसीलाई देखिन् र त्यसको छातीमा नाचिरहेका, खेलिरहेका, अत्यन्त फूर्तिला र आनन्दले हाँसिरहेका आफ्ना बालकको दर्शन गरिन् । बालकको दर्शन पाएपछि अदितिलाई अपूर्व आनन्द भयो । दौडिदै दौडिदै गएर तिनले आफ्नो बच्चा समाती आलिङ्गन र धेरै पटक चुम्बन पनि गरिन् ।।२९-३१।। आनन्दमा निमग्न भएकी अदिति आमाले भनिन् - अहो ! मेरो कति ठूलो सौभाग्य हो। आज दैवको प्रतापबाट मेरो बालक भयङ्कर राक्षसीको हातबाट मुक्त भएको छ ।।३२।। त्यसपछि अदिति आफ्नो बालकलाई साथमा लिएर जलाशयमा गइन् र स्नान गरिन् । स्नानपछि ती आफ्नो आश्रमतर्फ फर्किन् । आश्रममा गएर तिनले आफ्ना पति कश्यपलाई सम्पूर्ण वृत्तान्त बताइन् । त्यो वृत्तान्त सुनेपछि कश्यपले भन्नुभयो - हे प्रिया अदिति ! भूत र भविष्य कालका विशेषज्ञहरूले यो बालकको विषयमा जस्तो भविष्यवाणी गरेका थिए, त्यो साँचो भयो । ती ऋषिहरूका आशीर्वादले आज यो बालक सर्वभक्षी राक्षसीका हातमा परेर पनि जीवितै फेला पर्‍यो । त्यसपछि कश्यप ऋषिले बालकको रक्षाका निमित्त गर्नुपर्ने आवश्यक विधि-विधान गरेर अनेक थरि दान पनि दिए ।।३३-३५।। स्वस्तिवाचनपूर्वक शान्तिकर्म सम्पन्न गरेपछि कश्यपले अदितिलाई भन्नुभयो - हे अदिति ! तिमीले एकछिन पनि यो बालकलाई एक्लै छाड्नु हुँदैन।।३६।।

ॐ

इतिश्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते विरजाराक्षसीमोक्षणं नाम सप्तमोध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'विरजा राक्षसीलाई मोक्षप्राप्ति' शीर्षकान्वित सातौं अध्याय पूर्ण भयो ।।७।।

ॐ

# अष्टमोऽध्याय:

क उवाच

विरजां निहतां श्रुत्वा राक्षसीं बलवत्तराम्।
उद्धतो धुन्धुरश्चापि राक्षसौ बलवत्तरौ।।१।।

आगतावाश्रमपदं कश्यपस्य महात्मन:।
शुकरूपधरौ बालो दृष्ट्वा प्रोचेऽदितिं तदा।।२।।

त्यक्त्वा स्तनं दीयतां मे उभौ रन्तुं शुकाविमौ।
सोचे तं खगमौ शक्यौ भूगया न स्त्रिया क्वचित्।।३।।

अथापि धर्तुं याता चेदुड्डीयैतौ गमिष्यत:।
कटेरुत्तीर्य जग्राह बालस्तौ श्येनवत्तदा।।४।।

पक्षाघातेन चञ्च्वा च जघ्नतुस्तौ भृशं च तम्।
तावदास्फालयत् सोऽपि तौ बलेन धरातले।।५।।

जहतुस्तौ तदा प्राणान् निजरूपधरावुभौ।
तद्देहभारभीत्या भूर्भृशं विह्वलिताऽभवत्।।६।।

भग्नवृक्षौ सनिनदौ देहौ निपतितौ तयो:।
गव्यूतिमात्रं तौ दृष्ट्वाऽदितिस्तं पुनरग्रहीत्।।७।।

शरीरे ददृशे तेन मुनिना विस्तृते तयो:।
छित्त्वा ददाह तौ लोक: काष्ठसञ्चययोगत:।।८।।

चकाराद्भुतशान्तिं स बालकाभ्युदयेच्छया।
आश्चर्यं परमं चक्रे शिशोर्दृष्ट्वा पराक्रमम्।।९।।

उवाच परमप्रीतोऽदितिं पुत्रयुतां तदा।
यौ न देवेन शक्रेण न हतौ राक्षसेश्वरौ।।१०।।

# { ८ अध्याय }

**ब्रह्माजीले भन्नुभयो** - अत्यन्त शक्तिमती राक्षसी विरजा मरेको सुनेर उद्धत र धुन्धुर नामक बलवान् दुई राक्षस कश्यप ऋषिको आश्रममा आए । ती राक्षसहरूले सुगाको रूप धारण गरेका थिए । कश्यपका पुत्र महोत्कटले आफ्नो आँगनमा दुइटा राम्रा सुगा खेलेको देखेर दूध खुवाइरहेकी आमा अदितिलाई भन्नुभयो - आमा ! दूध खुवाउन छाडिदिनुहोस्, मलाई यी दुइटा सुगासँग खेल्न मन लागेको छ। त्यहाँ जान दिनुहोस्। आमाले भनिन् - बाबु ! यी चरा त खेल्दाखेल्दै आकाशमा उड्न सक्छन् र तिमीलाई पनि आकाशमा उडाउन सक्छन्, पृथिवीमा मात्र हिंडडुल गर्न सक्ने म तिम्री आमाले त्यहाँ गएर तिमीलाई समाउन सक्दिनँ।।१-३।। यदि भुइँमा यताउति लगे भने पनि म दौड्दै यिनको नजिकमा जाँदा यी उडेर जानेछन्। त्यस कारण तिमी यी सुगासँग नखेल । आमाले यति भन्दा पनि नमानेर महोत्कटले आमाको कम्मरबाट भुइँमा झरेर टाउको ठाडो गराई ती सुगालाई बाजले झैं समाते । ती समातिएका चराहरूले पखेटाले हिर्काउँदै ठोंडको चुच्चोले ठुंगेर बालकको शरीरमा घाउ बनाए । बालकले पनि ती सुगाहरूलाई बलपूर्वक समातेर भुइँमा फ्याँकि ।।४-५।। बालकद्वारा भुइँमा पछारिएका ती सुगाहरूले प्राण त्याग गरे। त्यस अवस्थामा तिनीहरू आफ्नो स्वाभाविक राक्षसस्वरूपमा देखिएका थिए । तिनीहरूका शरीरको भारले गर्दा पृथिवी डगमगाएकी थिइन् ।।६।। ती दुबै राक्षस हावाले पछारिएको रूखझैं ठूलो शब्द गर्दै भुइँमा लडेका थिए। दुई कोससम्म तिनको शरीर फैलिएको थियो । अदितिले आफ्ना पुत्रको यो लीला देखिन् र बालकलाई फेरि समातिन् ।।७।। कश्यप ऋषिले ती दुबै राक्षसका विशाल शरीरको अन्तिम संस्कार गर्ने व्यवस्था मिलाए । एकत्रित मानिसहरूद्वारा तिनका शरीर टुक्रा-टुक्रा पारेर दाउरा जम्मा गरी दाहसंस्कार सम्पन्न गरियो। कश्यप ऋषिले बालकको कल्याणकामना गरी अद्भुत शान्ति गरे। ती बालकको विचित्र पराक्रम देखेर निकै आश्चर्य पनि माने ।।८-९।। त्यसपछि कश्यपले अत्यन्त प्रसन्न भई छोरालाई काखमा लिइरहेकी अदितिलाई भन्नुभयो - जुन राक्षसलाई इन्द्रले पनि मार्न सकेनन्, ती राक्षसले छलपूर्वक सुगाको रूप लिएका थिए, तिनलाई हाम्रा छोराले मारिदिए र

शुकरूपधरावेतौ लीलया शिशुना हतौ।
अदितिश्च चुकोपाऽसौ किमर्थं मोचितस्त्वया।।११।।

रक्षितो जगदीशेन क्वायुष्यं नास्य विद्महे।
अविस्मरो रक्षणीयो बालोऽयं यत्नतः सति।।१२।।

कथञ्च निहतावेतौ गिरिसारौ निशाचरौ।
निशाचरस्थलमिदं कथं जीवेच्छिशुर्मम।।१३।।

क उवाच

उक्त्वा परस्परं तौ तु स्नाप्य बालं तथाविधम्।
स्नात्वा सुषुपतुस्तत्र दम्पती विस्मयान्वितौ।।१४।।

ततश्चतुर्थे वर्षे स स्वाश्रमात् परतो ययौ।
कासारं जलजैर्युक्तं नक्रमत्स्यगणैर्युतम्।।१५।।

तमालवृक्षसरलजम्ब्वाम्रपनसान्वितम्।
नानावृक्षलताकीर्णं फलपुष्पसुशोभितम्।।१६।।

नानापक्षिगणाकीर्णं नानामुनिगणान्वितम्।
अतिस्वच्छजलं रम्यं सुजनस्येव मानसम्।।१७।।

व्यतीपाते सोमवत्यां स्नातुं तत्रादितिर्ययौ।
उपवेश्य स्वकं बालमाकण्ठं जलगाऽभवत्।।१८।।

बाल उड्डीय तां गन्तुं जलमध्ये पपात ह।
चिक्रीड स जले यावत् तावन्नक्रो दधार तम्।।१९।।

धाव धावेति जननी चुक्रोश जलमध्यगा।
आगत्य जननी बालं ग्रहीतुं नैव चाशकत्।।२०।।

आकृष्यते जले तेन जनन्या बहिरेव सः।
स नक्रो बालसहितां दूरे दूरे चकर्ष ह।।२१।।

अदितिलाई कश्यप ऋषिले फेरि भन्नुभयो– तिमीले किन यसरी बालकलाई बाहिर छाडेकी ? एक्लै छाड्न हुँदैन ।।१०-११।। अहिले त भगवान्‌ले आफै रक्षा गर्नुभयो । यसरी हामीले छाडिदिने हो भने यिनको आयु कति होला ? केही भन्न सकिदैन। त्यस कारण हे पतिव्रता अदिति ! तिमीले नबिर्सीकन प्रयत्नपूर्वक यो बालकको रक्षा गर्नुपर्दछ ।।१२।। अहिले यो बाबुले पर्वतसमान आकारका दुष्ट राक्षसलाई कसरी मार्‍यो ? केही भन्न सकिंदैन, आश्चर्यको कुरा छ । तर सधैं यस्तो हुँदैन। यो ठाउँमा राक्षसहरूको ठूलो संख्या रहेको छ। यसरी स्वतन्त्ररूपमा चलखेल गर्न दियौं भने मेरो बालक कसरी बाँच्न सक्दछ ? ।।१३।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी कश्यप र अदितिले परम्परमा कुराकानी गरे । साँझ परेपछि बालकलाई स्नान गराई आश्चर्यचकित हुँदै ती दुबै दम्पतीले शयन गरे ।।१४।। बालक तीन वर्ष पूरा भएर चार वर्ष लागेपछि एकदिन खेल्दै आफ्नो आश्रमबाट टाढा पुगे । त्यहाँ एउटा सरोवर थियो । त्यसमा साना साना जलजन्तुहरूका साथै ठूला–ठूला गोही र ठूला ठूला माछाहरू पनि थिए। त्यस सरोवरका वरिपरि तमाल, साल, सल्लो, जामुनो, आँप र कटहरका रूखहरू थिए। त्यो सरोवर अनेक थरि वृक्ष र लहराले ढाकिएको थियो। त्यसका चारैतिर फल र फूलका वृक्ष शोभायमान थिए ।।१४-१६।। अनेक चराचुरुङ्गीहरूले घेरिएको त्यस सरोवरका वरिपरि अनेक ऋषिमुनिहरू साधना गरिरहेका थिए । सरोवरको पानी सज्जनको मनझैं निर्मल, पवित्र र मीठो थियो । एक दिन सोमवती अमावास्याका दिन व्यतीपात योग परेका बेला अदिति त्यहाँ नुहाउन गइन् । बालकलाई छेउमा राखी तिनले घाँटीसम्म डुबेर स्नान गरिन् ।।१७-१८।। आमा भएको ठाउँमा जान हाम फाल्दा ती बालक पानीमा खसेर धेरैबेरसम्म त्यहाँ खेलिरहे। त्यसै बेला एउटा गोही आएर बालकलाई समात्यो।।१९।। पानीको माझमा रहेकी आमा अदिति दौड–दौड भनेर कराउन थालिन्। आफू पनि दौडेर गइन्, तर गोहीबाट बालकलाई खोसेर ल्याउन सकिनन् ।।२०।। बालकलाई एकातिर गोहीले तानिरहेको थियो भने अर्कोतिरबाट आमाले तानिरहेकी थिइन्। केहीबेरपछि त्यस गोहीले बालकलाई तानिरहेकी आमालाई समेत तानी पानीभित्रै टाढासम्म पुर्‍यायो ।।२१।। त्यस बेला

बालोऽवदत् ततस्तां स न मोच्योऽहं सुतस्त्वया।
सह त्वया सहैवाऽहं मरिष्ये न बलं मम।।२२।।

दृष्ट्वा सबालामाकण्ठमग्नां तां विह्वलां भृशम्।
निष्कासितुं बलाच्छिष्या उड्डीय पतिता वने।।२३।।

तस्माद् बलवतो नक्रात् तेऽपि शक्ता न चाभवन्।
ततोऽत्यन्तं बलं तस्य दर्शयामास बालकः।।२४।।

लीलयैव तदा नक्रं पृथिव्यां जलतोऽक्षिपत्।
वायुर्यथा फलं पक्वं ग्रावाणं बालको यथा।।२५।।

शरीरं दृश्यते तस्य विशीर्णं पतितं भुवि।
गतचेष्टं गतप्राणं योजनायतमद्भुतम्।।२६।।

सबाला सह शिष्यैः सा मुदं प्राप्ताऽदितिस्तदा।
ततो दिव्यवपुश्चित्रगन्धर्वस्तमुवाच ह।।२७।।

अहमासं पुरा राजा गन्धर्वाणां गजानन! ।
विवाहे सर्वगन्धर्वा मम गेहमुपागताः।।२८।।

पूजिताः परया भक्त्या न भृगुः पूजितो मया।
वैवाहिकानि कार्याणि कुर्वता कुपितो मुनिः।।२९।।

शशाप मां नक्रवरो भविष्यसि सरोगतः।
समाकर्ण्य मुनेः शापमुपशापं तमर्थयम्।।३०।।

ततो भृगुरुवाचेत्थं यदा कश्यपनन्दनः।
गजाननः स्पृशेत् त्वान्तु तदा स्वं वपुराप्स्यसि।।३१।।

इदानीमसि विज्ञातो बालरूपी गजाननः।
त्वमेव जगतां नाथः कर्ता पाताऽपहारकः।।३२।।

बालकले भने – आमा! तपाईंले तानेर मलाई छुटाउन सक्नुहुन्न। अब म तपाईंका साथ नै मर्ने भएँ, किनकि यस गोहीको बल अपरिमित छ र मैले यसलाई बलले जित्न सक्दिनँ ।।२२।। आफ्नो बालकसहित घाँटीसम्म पानीमा डुबेकी र साह्रै व्याकुल भएकी अदितिलाई गोहीबाट छुटाई पानी बाहिर ल्याउन कश्यपका शिष्यहरू आत्तिँदै पानीभित्र पसे । तर तिनले पनि बलवान् गोहीको पञ्जाबाट अदिति र तिनका छोरालाई छुटाउन सकेनन् ।।२३।। बालक महोत्कटले अचानक त्यस गोहीमाथि आफ्नो अपूर्व पराक्रम देखाउँदै जसरी पाकेको फललाई हावाले रुखबाट झारिदिन्छ र जसरी खेलिरहेको कुनै बालकले ढुङ्गा समातेर टाढा-टाढा हुत्याइदिन्छ त्यसैगरी त्यस गोहीलाई पानीबाट बाहिर फ्याँकिदिए ।।२४-२५।। भुइँमा लडेको गोहीको शरीर छिन्नभिन्न भयो । त्यसमा कुनै चेष्टा बाँकी थिएन र त्यसको प्राणपखेरु उडिसकेको थियो। गोहीको शरीर अद्भुत विशाल र एक योजनसम्म फैलिएको थियो ।।२६।। बालकले यस्तो अद्भुत कर्म गरेको देखेर शिष्यहरूका साथमा रहेकी ती अदिति माता अत्यन्त प्रसन्न भइन्। त्यसै बेला मरेका गोहीको शरीरबाट निस्केको गन्धर्वले श्रीगणेश र अदितिका सामु आएर भन्यो - मेरो नाम चित्रगन्धर्व हो र म पहिले गन्धर्वहरूको राजा थिएँ। मेरो विवाहमा सबै गन्धर्वहरू मेरा घरमा आएका थिए ।।२७-२८।। त्यस बेला मैले वैवाहिक कर्म गर्दा ती आएका सबै पाहुनाहरूको सत्कार गरें तर भृगु ऋषिको गरिनँ । विवाहकार्य गर्दा मबाट भएको पक्षपातपूर्ण व्यवहारले रिसाएका भृगु ऋषिले मलाई सराप दिनुभयो- 'तिमी सरोवरमा ठूला गोही भएर रहनेछौ ।' मुनिको सराप सुनेर चिन्ता गर्दै त्यसबाट मुक्त हुन मैले प्रार्थना गरें।।२९-३०।। प्रार्थना सुनेपछि भृगु ऋषिले भन्नुभयो - 'जुन बेला कश्यप ऋषिका छोरा भगवान् श्रीगणेशले आएर तिमीलाई स्पर्श गर्नुहुनेछ त्यस बेला तिमीले आफ्नो गन्धर्वरूप प्राप्त गर्नेछौ')।३१ (।[१२] अहिले त्यस्तै भयो भन्दै त्यसले प्रार्थना गर्‍यो- हे श्रीगणेश! आज मैले हजुरलाई बालकरूपमा देखें । हजुर संसारका स्वामी, रचयिता, पालक र संहारक पनि हुनुहुन्छ । निर्गुण, निरहंकार, सदसद्भन्दा पनि पर र कारणातीत पनि

निर्गुणो निरहङ्कारः सदसत्कारणं परम्।
नानावतारैर्भक्तानां पालको दुष्टनाशनः।।३३।।

सर्वव्यापी पूर्णकामोऽनेकब्रह्माण्डनायकः।
मुनीनामप्यगम्यस्त्वं मनोवागनिरूपितः।।३४।।

इति स्तुत्वा च नत्वा च सम्पूज्य बालरूपिणम्।
गजाननं प्रयातोऽसौ कृत्वा प्रदक्षिणां मुहुः।।३५।।

अदितिर्बालकं गृह्य लालयित्वा स्तनं ददौ।
आश्चर्यमानसा याता प्रसन्ना निजमन्दिरम्।।३६।।

प्रणम्य कश्यपं सर्वं वृत्तान्तं समभाषत।
स विस्मितोऽब्रवीत्चैनामयन्तु परमेश्वरः।।३७।।

लीलाविग्रहवान् मन्ये मानुषं देहमाश्रितः।
अत्यद्भुतानि चान्यानि कर्माण्येष करिष्यति।।३८।।

देवासुरैरशक्यानि द्रष्टव्यानि प्रसादतः।
अस्मिन् भक्तिर्दृढा कार्या जनैरात्महितेप्सुभिः।।३९।।

हुनुहुन्छ। हजुरले अनेक अवतार लिएर भक्तहरूको रक्षा गर्दै तिनका दुःखको पनि नाश गर्नुहुन्छ। हजुर सर्वव्यापक हुनुहुन्छ। हजुरमा कुनै कामना छैन, त्यस कारण पूर्णकाम हुनुहुन्छ। हजुर अनेक ब्रह्माण्डहरूका स्वामी हुनुहुन्छ। मुनिहरूले पनि हजुरलाई चिन्न सक्दैनन्। हजुर मन र वाणीभन्दा पनि पर हुनुहुन्छ ।।३२-३४।। त्यस गन्धर्वले यसरी प्रणाम र स्तुति गर्दै बालकरूप श्रीगणेशको पूजा र प्रदक्षिणा गरी श्रीगणेशधाम प्राप्त गर्‍यो ।।३५।। अदितिले आफ्ना बालकलाई समातेर माया गर्दै दूध चुसाइन्। बालकलाई आफ्नो काखमा पाउँदा खुसी भएकी अदिति आश्चर्य मान्दै आफ्नो घरतर्फ फर्किन्।।३६।। अदितिले घरमा आई आफ्ना स्वामी कश्यपलाई प्रणाम गरेर भर्खरै घटेका घटनाको विषयमा जानकारी गराइन्। कश्यप ऋषिले पनि आश्चर्य मान्दै भन्नुभयो- यी बालक हाम्रा छोरा कहाँ हुन् र? यी त परमेश्वर हुन् ।।३७।। कश्यपले फेरि भन्नुभयो - यिनले आफ्नो लीला गर्न मानिसको स्वरूप लिएका छन् र अझै पनि अद्भुत कर्म गर्नेछन्। यिनका जस्ता लीला र कर्म देवता र असुरमध्ये कसैले पनि गर्न सक्दैनन्। यिनकै कृपाबाट यिनका लीलाहरूको दर्शन सुलभ हुन्छ। हे अदिति! यी बालकमा दृढ भक्ति लगाऊ। आफ्नो कल्याण चाहने अरू सबैले पनि यी बालकमा दृढ भक्तिभावना राख्नुपर्दछ ।।३८-३९।।

ॐ

इतिश्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते नक्रमोक्षणं नामाष्टमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'गोहीरूप गन्धर्वलाई मोक्षप्राप्ति' शीर्षकान्वित आठौं अध्याय पूर्ण भयो ।।८।।

ॐ

## नवमोऽध्याय: { ९ अध्याय }

क उवाच

अन्यत् ते कथयिष्यामि चरितं बालरूपिण:।
गजाननस्याघहरं श्रृणुष्वैकमना मुने।।१।।

एकस्मिन् समये हाहा हूहूस्तुम्बरुरेव च।
वीणागानरता वीणाहस्ता हरिपरायणा:।।२।।

शङ्खचक्रगदापद्मतुलसीदामभूषणा:।
गोपीचन्दनलिप्ताङ्गा: पीताम्बरधरा:शुभा:।।३।।

कैलासं गन्तुकामास्ते कश्यपस्याश्रमं ययु:।
अतिसम्मानितास्तेन पूजिताश्च यथाविधि।।४।।

उवाच प्रणतस्तान् सोऽनायासेन सतां दृशि:।
केन पुण्येन सञ्जाता धर्मार्थकाममोक्षदा।।५।।

धन्यं तपो जनिर्मातापितरौ ज्ञानमाश्रम:।
प्रयोजनं न जानेऽहं चलने तद् वदन्तु मे।।६।।

इति तद्वचनं श्रुत्वा सम्पृष्टास्ते तमब्रुवन्।
कैलासं गन्तुकामानां जातं त्वद्दर्शनं हि न:।।७।।

दुरितं विलयं यातं जातञ्च सफलं जनु:।
अदूरे परमा सिद्धिर्विश्रान्ति: परमा च न:।।८।।

अनुजानीहि गच्छामो गिरिशं द्रष्टुमुत्सुका:।
श्रुत्वा वाक्यानि तेषां तु पुनरूचे तपोनिधि:।।९।।

भुक्त्वा व्रजन्तु विश्रम्याप्यभुक्त्वेतो न को गत:।
मज्जनाय जलं तेभ्यो दत्त्वा पाकमकारयत्।।१०।।

देवार्चनरता: स्नात्वा बभूवुर्मुनिसत्तमा:।
तेऽपि सम्पूज्य शर्वाणीं शर्वं विष्णुं विनायकम्।।११।।

**ब्रह्माजीले भन्नुभयो** - हे नारद ! म शिशुरूपधारी श्रीगणेशको अर्को पापनाशक चरित्र बताउँछु । तिमीले एकमना भएर सुन ।।१।। कुनै समयमा वीणा हातमा लिई वीणागानमा तल्लीन, नारायणमा अत्यन्त भक्ति गर्ने, शङ्ख, चक्र, गदा पद्म र तुलसीलाई अलङ्काररूपमा धारण गर्ने, गोपी चन्दन लेपन गरेका र पीताम्बरधारी, हाहा, हूहू एवं तुम्बरु नामक गन्धर्वहरू कैलास जाने क्रममा कश्यपको आश्रममा पुगेका थिए । कश्यप ऋषिले तिनीहरूको राम्ररी सम्मान गरी विधिपूर्वक पूजा पनि गरे ।।२-४।। त्यस बेला कश्यपले भन्नुभयो - 'तपाईँहरू अनायास मलाई दर्शन दिन पाल्नुभएको छ । सज्जनहरूको दर्शन धर्म, अर्थ, काम र मोक्षलाई प्रदान गर्न सक्षम हुन्छ। आज मैले कुन पुण्यले तपाईँहरूजस्ता सज्जनको दर्शन पाएँ। मेरा तप, जप र जन्म धन्य भए साथै मलाई जन्माउने माता-पिता पनि धन्य हुनुभयो । तपाईँहरूको दर्शन पाएर मैले प्राप्त गरेको ज्ञान र यो आश्रम पनि धन्य भएको छ । तपाईँहरू के कारणले आउनुभएको हो ? मलाई थाहा छैन । कृपया मलाई आफ्नो आगमनको प्रयोजन बताउनुहोस्' ।।५-६।। कश्यप ऋषिको कुरा सुनेर तिनीहरूले भने - 'हामी कैलास जाँदै थियौँ, बीच बाटामा संयोगले तपाईँको दर्शन पायौँ ।।७।। तपाईँको दर्शनबाट हाम्रो पनि पापनाश भएको छ र जन्म सफल भएको छ । तपाईँलाई देखेर हामीले छिटै परम सिद्धि प्राप्त गर्नेछौँ भन्ने विश्वास लागेको छ र तपाईँको दर्शनबाट हामीले ठूलो शान्ति र विश्रान्ति पाएका छौँ ।।८।। हामी भगवान् शङ्करको दर्शन गर्न उत्सुक छौँ तसर्थ अहिले बिदा लिन चाहन्छौँ। आज्ञा दिनुहोस् ।' ती गन्धर्वहरूका कुरा सुनेर तपस्वी कश्यपले फेरि भन्नुभयो- यहाँ आएपछि कोही पनि भोकै फर्केको छैन । तसर्थ तपाईँहरू पनि भोजन गरेर केहीबेर विश्राम गरी जानुहोला । यसो भनेपछि कश्यप ऋषिले तिनीहरूलाई स्नानका लागि जल टक्र्याएर भोजनको व्यवस्था मिलाए ।।१०।। ती गन्धर्वहरूले पनि स्नान गरेर देवताको पूजा गरे। पूजा गर्ने क्रममा पार्वती, शिव, विष्णु, श्रीगणेश र सूर्यनारायणको पनि पूजा गरे । त्यसपछि केही बेर ध्यान गरे । गन्धर्वहरूले ध्यान

रविं विष्णुमयं ध्याननिष्ठा आसन् मुहूर्ततः।
तदा विनायको बालो रमित्वा बालकैर्बहिः।।१२।।

आगतोऽन्तर्गृहं तावत् पञ्चमूर्तिं ददर्श सः।
गृहीत्वा बहिरेवाशु चिक्षेपाग्निगृहं ययौ।।१३।।

भस्माङ्गरागं सर्वत्र कृत्वा लीनोऽभवच्च सः।
विसृज्य ध्यानं नापश्यन्मूर्तीस्ते पुरतः स्थिताः।।१४।।

ततस्ते विस्मिताः सर्वे परस्परमथाऽब्रुवन्।
केन दैत्येन नीता नो मूर्तयः कर्महेतवः।।१५।।

गन्धर्वा राक्षसा यक्षा नेतुं मूर्तीः किमागताः।
किं वा सत्त्वपरीक्षार्थमन्तर्धानं गता इमाः।।१६।।

ततः क्रोधेन महता कश्यपं प्रष्टुमागताः।
भवद्गृहे कथं ध्याननिष्ठानां मूर्तयो गताः।।१७।।

क्रीडन्ति जातिवैरास्त आश्रमे इतरेतरम्।
देवा बिभ्यति तत् कस्मादाश्रमे दस्यवः स्थिताः।।१८।।

इति श्रुत्वा वचस्तेषां कश्यपोऽतिरुषान्वितः।
अभोजिनो विनिश्चित्य मूर्तिप्राप्तिं विना च तान्।।१९।।

ततः शिष्यान् समाकार्य कश्यपो मुनिसत्तमः।
तानुवाच न मे जन्मावध्यत्र तस्करोऽभवत्।।२०।।

दैवादिदानीं को जातो दस्युस्तत्र वदन्तु मे।
क्रोधवाक्यं निशम्येत्थमूचुः शिष्या गुरुं प्रति।।२१।।

न वयं तस्कराः स्वामिन् ! पुत्रस्ते विदितस्तव।
दोषानुवर्णने दोषा अस्माकं तत्र चक्ष्महे।।२२।।

तेषां ब्राह्मीं समाकर्ण्य यष्टिहस्तो मुनिस्तदा।
पुत्रमन्वेषयन् यातो वह्न्यागारे ददर्श तम्।।२३।।

तेषां पुरः समानीतो दृष्टस्तैः शिवसन्निभः।
उवाच तत्समक्षं तं कश्यपः क्रोधसन्निभः।।२४।।

मूर्तीरानय शीघ्रं त्वं नो चेत् पुत्र ! मरिष्यसि।
मया न नीतास्तास्तात ! प्रत्युवाच स निर्भयः।।२५।।

गरिरहेको समयमा बाहिर साना - साना बालकहरूसँग खेलेर भित्र आउनुभएका श्रीगणेशले पार्वती, शङ्कर, विष्णु, श्रीगणेश र सूर्यका मूर्ति देख्नुभयो । ती पाँचवटै मूर्तिलाई समातेर घरबाहिर लगी कतै राखिदिनुभयो । त्यसपछि उहाँ अँगेनातर्फ लाग्नु-भयो ।।११-१३।। त्यहाँ गई खरानी झिकेर सारा शरीरमा भस्मलेपन गरी उहाँ एकान्तमा लुक्नुभयो । उता ध्यान गरिरहेका ती हाहा, हूहू र तुम्बरु नामक गन्धर्वहरूले आँखा खोल्दा ती पाँचवटा देवमूर्ति देखेनन् ।।१४।। तिनीहरूले चकित भएर आपसमा भने - 'यहाँका मूर्तिहरू कसले लग्यो ? यी मूर्ति त हाम्रा कर्मका कारण हुन् । गन्धर्व, राक्षस, यक्ष आदिले आएर चोरे कि? अथवा ती मूर्तिहरू आफै सत्त्वपरीक्षाका लागि अन्तर्धान भए कि ? यसरी तर्क गरिरहेका ती गन्धर्वहरूलाई धेरै रीस उठ्यो र कश्यप ऋषिलाई सोधे -हामी तपाईंको घरमा भगवान्को ध्यान गरिरहेका थियौं, त्यसै बेला यहाँ रहेका मूर्तिहरू कसरी हराए ? तपाईंको आश्रममा जातिगत रूपमा द्वेष गर्ने जन्तुहरू पनि परस्पर मिलेर खेलिरहेका छन्। परन्तु देवताका ती मूर्तिहरू कोसँग डराएर भागे ? के यहाँ घोर डाँका बस्छन् ?' गन्धर्वहरूका यी कुरा सुनेर कश्यप रिसाए । ती गन्धर्वहरूले मूर्ति नभेट्टाएसम्म भोजन नगर्ने कुरा बुझेर कश्यपले आफ्ना शिष्यहरूलाई बोलाएर भन्नुभयो - आश्रममा म जन्मेदेखि अहिलेसम्म कुनै चोर मानिस थिएन। आज कुन चोर निस्क्यो? त्यसको खोजी गरी तिमीहरूले मलाई बताउनु पर्दछ । शिष्यहरूले आफ्ना गुरुको रोषपूर्ण वाणी सुनेर भने - हामी चोर होइनौं । हजुरका छोराको बानी-व्यहोरा हजुरलाई थाह नै छ । अरूका दोषको चर्चा गर्दा त्यो दोष आफूमाथि पनि आइलाग्छ । तसर्थ हामी हजुरका छोराको विषयमा केही भन्न चाहँदैनौं ।।१८-२२।। शिष्यहरूका यी कुरा सुनेर रिसाएका मुनि कश्यपले हातमा लौरो लिएर त्यो कहाँ छ भन्दै खोज्न जाँदा अँगेनामा आफ्नो छोरालाई देखे ।।२३।। तिनले छोरालाई समातेर शिष्यहरू भएको ठाउँमा ल्याए । त्यस बेला शिष्यहरूले ती बालक छोरालाई शिवजीकै रूपमा देखे । कश्यपले रिसाएर छोरालाई भन्नुभयो - तैले छिटो ती मूर्ति लिएर आउनुपर्छ अन्यथा तैं मर्नेछस् । ती बालकले उत्तर दिंदै निर्भयतापूर्वक

ब्रवीषि शपथं यं यं तं तमेव करोम्यहम्।
एवं वदन् पितुर्भीत्या रुरोद भृशमर्भकः।।२६।।

प्रसार्य वदनं भूमौ पतितो भृशविह्वलः।
जननी च तदा याता तामुवाच ततोऽर्भकः।।२७।।

यदि मे भक्षिता देवास्तर्ह्यास्ये दृश्यतां मम।
प्रसारिते तदास्ये सा ददर्श विश्वमन्तरा।।२८।।

विस्मिता मूर्च्छिता भूमौ पतिता भयविह्वला।
ततस्ते ददृशुस्तत्र गन्धर्वाः कश्यपोऽपि च।।२९।।

कैलासं शङ्करं साङ्गं वैकुण्ठं विष्णुमेव च।
ब्रह्माणं सत्यलोकं च शक्रं चैवामरावतीम्।।३०।।

सपर्वतवनाकीर्णां धरणीं लोकसंयुताम्।
सरितः सागरान् यक्षान् रक्षांसि पन्नगानपि।।३१।।

वृक्षान् पक्षिगणाँश्चैव भुवनानि चतुर्दश।
इन्द्रादिसर्वलोकाँश्च पातालानि दिशो दश।।३२।।

ततो माता प्रबुद्धा सा स्तनपानं ददौ मुदा।
ननाम कश्यपस्तन्तु दृष्ट्वेत्थं विश्वरूपिणम्।।३३।।

तर्कयामास मनसि साक्षादीश्वर एव यः।
अवतीर्णो मम गृहे तमहं ताडितुं गतः।।३४।।

ततः स कश्यपः प्राह भुज्यतामिति तान् प्रति।
नायं बालस्ताडयितुं मया शक्यो महाबलः।।३५।।

भीषयन्नुग्ररूपेण समष्टिव्यष्टिरूपवान्।
भवतां यदि शक्तिश्चेत् ताड्यतां मूर्तिहेतवे।।३६।।

त ऊचुर्न वयं किञ्चिद् भक्षयामस्तवालये।
अन्नं वा कन्दमूलादि पञ्चायतनमन्तरा।।३७।।

भने- पिता! मैले ती मूर्ति चोरेको छैन। यसका लागि जे किरिया पनि खान सक्छु । त्यसपछि ती बालक पिताको रिसाएको अनुहार देखेर डरले रोइराखे ।।२४-२६।। ती व्याकुल भएर भुइँमा लडे । त्यसै बेला तिनकी आमा अदिति पनि त्यहाँ आइपुगिन् । तिनले आमासँग भने - 'आमा ! मैले देवताको मूर्ति चोरेको छैन । यदि मैले मूर्ति खाएको छु भने मेरो मुखमा हेर्नुहोस् । म मुख खोलेर देखाउँछु ।' यसो भनेर ती बालकले मुख बाए । त्यस बेला आमा अदितिले बालकको मुखभित्र सम्पूर्ण ब्रह्माण्ड देखिन् ।।२७-२८।। ब्रह्माण्डदर्शनपछि डराएर अदिति मूर्च्छित भई भुइँमा पछारिइन्। होश आएपछि आश्चर्यचकित पनि भइन् । ती गन्धर्वहरूले र कश्यप ऋषिले पनि बालकको मुखभित्र ब्रह्माण्ड दर्शन गरे। तिनले त्यहाँ कैलास पर्वत, भगवान् शङ्कर, वैकुण्ठ, भगवान् विष्णु, सत्यलोक, भगवान् ब्रह्मा, अमरावती, देवराज इन्द्र, पर्वत र वनले परिपूर्ण पृथिवी, लोक-लोकान्तर, नदी, सागर, यक्ष, राक्षस, सर्प, वृक्ष, पशुपक्षी, चौध भुवन, लोकपाल, पाताल र दसै दिशाको दर्शन गरे ।।२९-३०।। मूर्च्छित भएकी आमा अदिति जागिन् र आफ्ना छोराको अपूर्व महत्त्व बुझेर तिनलाई नजिकै बोलाई हर्षपूर्वक दूध चुसाइन् । कश्यपले पनि विश्वरूप बालकलाई देखेर प्रणाम गरे।।३१-३३।। कश्यप ऋषिले मनमा विचार गरे- मेरो घरमा साक्षात् ईश्वरले अवतार लिनुभएको रहेछ । म पिट्न भनेर जाइलागें, मेरो भूल भयो । त्यसपछि उनले चिन्तित अवस्थामा रहेका गन्धर्वहरूलाई भन्नुभयो - तपाईँहरूले भोजन गर्नुहोस् । म यो बालकलाई पिट्न सक्दिनँ। यो बलशाली छ र विचित्र पनि। यसको विशेष र सामान्य दुवै रूप देखें । मसँग यो डराउँदैन। तपाईंहरू सक्नुहुन्छ भने डराउन दिनुहोस् । तपाईँहरूलाई मूर्तिको चिन्ता लागेको छ। तसर्थ तपाईँहरूमा शक्ति छ भने यसलाई पिट्नुहोस् ।।३४-३६।। कश्यपका कुरा सुनेर गन्धर्वहरूले भने- हामीहरू तपाईंको घरमा केही खाँदैनौं । अन्न अथवा कन्दमूल कुनै चीज खाने हाम्रो इच्छा छैन किनकि हाम्रा पञ्चायन देवता हराएका छन्। ती नभेटिएसम्म हामीले खानुको कुनै अर्थ छैन। यसो भनिरहेका

इत्युक्तवन्तो ददृशुर्बालकं पञ्चधाऽपि ते।
शिवाशिवेनवीशेभाननरूपं तमेव हि।।३८।।

प्रणेमुः स्थिरचित्तास्ते पुपूजुस्तुष्टुवुर्जगुः।
क्षणं ते ददृशुर्बालं क्षणं पञ्चस्वरूपिणम्।।३९।।

क्षणं महाभीतिकरं क्षणं तं विश्वरूपिणम्।
ततस्तस्मै निवेद्यान्नं षड्रसं बुभुजुश्च ते।।४०।।

ततस्ते नुनुवुर्भक्त्या बालं तं विश्वरूपिणम्।।४१।।

त्रय ऊचुः

अज्ञानेन विमोहितं जगदिदं संसारचक्रभ्रम-
न्नानाभेदधिया स्वरूपविमुखं नानाविधिभ्रामितम्।
नानापाशनियन्त्रितं निजकृतैः कर्माङ्कुरैर्भ्रंशितं
नानारूपमरूपमेकमगुणं हित्वा भवन्तं विभो।।४२।।

अन्ये ते चरणारविन्दनिरता हित्वा फलं याजका
आत्मानं स्वपरेषु वर्ष्मसु सदा सञ्चिन्तयन्तोऽमलाः।
ते ज्ञानेन विधूय सर्वकलुषं दग्ध्वाङ्कुरान् कर्मजान्
त्वामेवाशु विशन्ति सर्वसरितो वार्द्धिं यथा मेघजाः।।४३।।

ये केचिद्भजनानुरक्तमनसः सिद्धिं गता भूयसीं
ते तत्रैव निमग्नमानसतया विस्मृत्य पादाम्बुजम्।
ते कृच्छ्रादुपरुह्य चोत्तमपदं तस्मात् पतन्तो निजा-
दज्ञानान्न विदुर्विषं हि पिबतो हित्वाऽमृतं दुर्लभम्।।४४।।

ती गन्धर्वहरूले अकस्मात् कश्यपका बालक छोरालाई **शिवा-** देवी, **शिव**-शङ्कर, **इन**- सूर्य, **वीश**- विष्णु, **इभानन**- श्रीगणेश रूपमा उभिएको देखे । एउटै बालक पाँचवटा स्वरूप लिएर उभिएका थिए। बालकमा पञ्चायतन देवताको स्वरूप दर्शन गरेपछि ती गन्धर्वहरूले स्थिरचित्त भएर बालकलाई प्रणाम गरे, पूजा गरे, स्तुति गरे र गुणगान गरे । केही बेर तिनीहरूले बालकरूपमा र केही बेर पञ्चायतन देवताका रूपमा रहेका कश्यपपुत्रको दर्शन गरे ।।३७-३९।। कतिबेला ती बालक डरलाग्दा देखिन्थे भने कतिबेला सारा ब्रह्माण्डलाई आफूमा समेट्ने विराट् रूपमा देखिन्थे । ती बालकलाई नैवेद्य टक्र्याएर गन्धर्वहरूले कश्यप ऋषिका भान्छामा पाकेको भोजन आनन्दपूर्वक खाए । त्यसपछि विश्वरूप बालकलाई भक्तिपूर्वक प्रणाम गरे ।।४०-४१।।

**गन्धर्वहरूले भने** - यो संसार अज्ञानले मोहित भएको छ। नाना किसिमका भेद दृष्टि राखेर संसारका प्राणी मायामुग्ध भई जन्म र मृत्युको चक्कर काटिरहेका छन् र यिनले आफ्नो स्वरूप बिर्सेका छन् । अनेक थरि उपलब्धिविहीन कर्महरूमा चक्कर काटिरहेका छन् र अनेक बन्धनबाट नियन्त्रित पनि छन् । आफूले गरेका कर्मका आँकुराहरूबाट आफै भ्रष्ट पनि भएका छन् । हे अन्तर्यामी प्रभु ! यसको वास्तविक कारण भने संसारका मानिसले अनेक रूपमा रहनुहुने र एक रूपमा रहनुहुने निराकार र साकार हजुरलाई बिर्सनु नै हो ।।४२।। हजुरका अरू ती भक्तहरू छन्, जसले निरन्तर हजुरको चरणकमलको आश्रय लिएर जीवनयापन गरिरहेका छन्। कुनै पनि फलको कामना नगरेर हजुरको प्रसन्नताका लागि यज्ञ गरिरहेका छन्। आत्मालाई आफू र पराइमा समानरूपमा देख्ने गर्दछन् । सदा सर्वदा ईश्वरकै चिन्तनमा लागिरहेका छन् । ती निर्मल चरित्रका र निर्मल आचार-विचारका पनि छन् । त्यस्ता भगवान्का भक्तहरू आफ्नो ज्ञानद्वारा सम्पूर्ण पाप नष्ट गरेर कर्मका आँकुराहरूलाई पोली वर्षाकालिक नदीहरू समुद्रमा विलीन भएझैं हजुरकै स्वरूपमा विलीन हुन्छन् ।।४३।। केही मानिसहरू भगवान्को भजन गर्न रुचाउँछन् र भजनका प्रतापबाट अनेक थरि सिद्धि प्राप्त गर्दछन्। सिद्धि प्राप्त गरेपछि भोगविलासमा भुलेर भगवान्का चरणकमलको बेवास्ता गर्दछन्। ती भक्तहरू कष्टपूर्वक उत्तम स्थितिमा प्राप्त

तस्मान्नो जननं भवेद् यदि शुभं यद् वाऽशुभं त्वत्स्मृति-

रास्तां तत्र निरन्तरं शुभकरी भक्तिश्च दुःखाशिनी।

एवं चेद् भ्रमतां कदापि हि भवेत् संसारपाथोनिधे-

र्निस्तारो भवतः कृपेक्षणवशात् सर्वात्मने ते नमः।।४५।।

तवावतारान् न हि कोऽपि शक्तो

वेत्तुं कथं वा कतिचित् कदेति।

योगीश ! मायेश ! गुणेश ! भूमन् !

नमो नमस्ते भगवन् ! नमस्ते।।४६।।

क उवाच

एवं स्तुत्वा गतास्ते तु कैलासं गिरिशालयम्।

पञ्चायतनमर्चन्तो विस्मिता बालचेष्टितम्।।४७।।

भएर पनि उत्तम स्थितिको लाभ लिन नसकी अज्ञानमोहित भएर फेरि भोगविलासमा आसक्त हुन्छन्, तसर्थ उत्तम स्थितिबाट तल्लो स्थितिमा झर्छन्। अज्ञानकै कारण तिनले आफूलाई बिर्सन्छन् । तिनले दुर्लभ अमृतलाई छाडेर विषपान गर्छन् र संसारका घोर कष्ट भोग्दछन् ।।४४।। त्यस कारण हे भगवन् ! हाम्रो फेरि जन्म नहोस्, हामीले दुःख अथवा सुख जे-जस्तो भोग्न परे तापनि हृदयमा हजुरको संझना गरिराखौं। हाम्रा हृदयमा निरन्तर कल्याण प्रदान गर्ने र दुःखनाश गरिदिने हजुरको भक्ति सदा-सर्वदा जागा रहोस् । यस्तो हुनसक्यो भने संसारमा चलखेल गर्दा सांसारिक पदार्थहरूसँग जति सम्पर्क भएता पनि संसारसागरबाट निस्तार पाइन्छ । भक्ति र स्मृतिका कारण हजुरले कृपादृष्टि राख्नुहुन्छ र आफ्ना भक्तहरूको उद्धार गर्नुहुन्छ । यस्ता सर्वव्यापक, विश्वात्मा हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४५।। हे भगवन् ! हजुरका अवतारहरूको विषयमा कति भए, कहाँ भए ? र कहिले भए? भन्ने कुरा कसैले पनि बताउन सक्दैन। हे योगीश्वर ! हे मायेश्वर ! हे गुणेश्वर ! हे सर्वव्यापक ऐश्वर्यशाली भगवन् ! हामी हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४६।।

**ब्रह्माजीले भन्नुभयो** - कश्यपपुत्रका रूपमा रहनु हुने बालस्वरूप भगवान्को चेष्टा देखेर अत्यन्त चकित भएका पञ्चायन देवताको आराधना गर्ने ती गन्धर्वहरू यसरी स्तुति गरेर शङ्करको निवासभूमि कैलासतर्फ गए ।।४७।।

ॐ

**इतिश्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते हाहादिस्तुतिर्नाम नवमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'हाहा आदि गन्धर्वहरूद्वारा श्रीगणेशको स्तुति' शीर्षकान्वित नवौं अध्याय पूर्ण भयो ।।९।।

ॐ

## दशमोऽध्यायः { १० अध्याय }

क उवाच
ततस्तु पञ्चमे वर्षे सचौलं व्रतबन्धनम्।
चकार कश्यपो धीमान् सूत्रोक्तविधिना शुभम्।।१।।

शुभे मुहूर्ते लग्ने च ब्राह्मणैर्वेदपारगैः।
आकारिताः शिष्यगणैर्देवदानवराक्षसाः।।२।।

मुनयो यक्षनागाश्च तथा राजर्षयोऽपि च।
वैश्याः शूद्रास्तथा याता नानोपायनपाणयः।।३।।

ववदुर्वहुवाद्यानि नृदेवैराहतानि च।
गणेशपूजनं चक्रे स्वस्तिवाचनमेव च।।४।।

मण्डपस्थापनं चक्रे मातृकापूजनं तथा।
चकाराभ्युदयश्राद्धं ब्राह्मणानां तथाऽर्चनम्।।५।।

सुहृदां वस्त्रदानञ्च चकार स यथार्हतः।
अन्येषाञ्च तथा तेऽपि वस्त्राणि निदधुः पुरः।।६।।

होमान्ते पुनरानर्च ब्राह्मणान् कश्यपस्ततः।
अन्तःपटं वेदिकायां धारयित्वा स सत्वरम्।।७।।

कृत्वाऽग्निस्थापनं पूर्वमुपनिन्युश्च बालकम्।
सुवासिन्यो ब्राह्मणास्तमक्षताभिरवाकिरन्।।८।।

तन्मध्ये राक्षसाः पञ्च सुदुष्टा ब्रह्मलिङ्गिनः।
अस्त्रैस्तमाकिरन् दुष्टास्तत्प्राणहरणेच्छया।।९।।

विघातश्चैव पिङ्गाक्षो विशालः पिङ्गलस्तथा।
चपलश्च महापुण्ड्रा अक्षमालाविभूषिताः।।१०।।

जलपात्रभृतोऽनर्घ्यवस्त्राम्बरधराः शुभाः।
विशीर्णोऽजायत देहः कुमारस्य तदस्त्रतः।।११।।

ज्ञात्वा कुमारस्तान् दुष्टान् मन्त्रयामास तण्डुलान्।
महोत्कटः प्रचिक्षेप तण्डुलान् पञ्च पञ्चसु।।१२।।

**ब्रह्माजीले भन्नुभयो -** कश्यप ऋषिले बालक पाँच वर्षका हुँदा गृह्यसूत्रअनुसार उत्तम मुहूर्त र उत्तम लग्नमा वेदमा पारङ्गत ब्राह्मणहरूद्वारा बालकको चौलकर्मसहित व्रतबन्ध गरे। बालकको व्रतबन्ध कर्ममा ऋषि कश्यपले आफ्ना शिष्यहरूको माध्यमबाट देवता, दानव, राक्षस, मुनि, यक्ष, नाग, राजर्षि, वैश्य र शूद्रहरूलाई पनि बोलाएका थिए । सबै निमन्त्रित जनहरू आ-आफ्ना हातमा उपहार लिएर व्रतबन्धमा शामेल भएका थिए ।।१-३।। व्रतबन्धको दिन कश्यपको आश्रममा मानिस र देवताहरूले अनेक थरि बाजा बजाए । ऋषि कश्यपले छोराको व्रतबन्धको उपलक्ष्यमा श्रीगणेशको पूजा गरे । त्यसपछि तिनले स्वस्तिवाचन, मण्डपप्रतिष्ठा, मातृकापूजन, आभ्युदयिक श्राद्ध र ब्राह्मणपूजनजस्ता कर्महरू गरे । तिनले योग्यताअनुसार आफ्ना मित्र एवं बन्धुहरूलाई वस्त्र प्रदान गरे । अरू आगन्तुकहरूलाई पनि आफ्नो शक्तिअनुसार वस्त्र र अलङ्कार टक्र्याए । जस-जसलाई वस्त्र प्रदान गरिएको थियो, तिनले पनि कश्यपले दिएका वस्त्र श्रद्धापूर्वक त्यहीँ नै धारण गरे ।।४-६।। हवन सकिएपछि कश्यपले ब्राह्मणहरूको फेरि पूजा गरे । ऋषिहरूले अग्निस्थापना गरेर मण्डपमा रहेका बालकले गर्नुपर्ने स्नान र वस्त्रधारण सबै गराई उपनयन गराए । सौभाग्यवती महिला र ब्राह्मणहरूले बालकका शरीरमा अक्षता चढाएर सम्मान गरे ।।७-८।। यसरी व्रतबन्धको उल्लासमय उत्सव चलिरहेकै बेला दर्शनार्थीहरूको बीचमा विघात, पिङ्गाक्ष, विशाल, पिङ्गल र चपल नाम गरेका पाँच जना दुष्ट राक्षसहरू ब्राह्मणको रूप धारण गरेर प्रवेश गरे। ती दुष्टहरूले त्यहाँ रहेका मानिसहरूको प्राण लिने दुराशयले अस्त्रप्रहार गर्न थाले ।।९।। मानिसहरूमा भ्रान्ति पैदा गर्न तिनले निधारमा ठूलो तिलक लगाएका थिए र घाँटीमा रुद्राक्षमाला धारण गरेका थिए ।।१०।। तिनले हातमा जलपात्र लिएका थिए र शरीरमा बहुमूल्य वस्त्र धारण गरेका थिए। ती राक्षसले अस्त्रप्रहार गरेपछि व्रतबन्ध गरिरहेका बालकको शरीरमा चोट लाग्यो ।।११।। अस्त्रप्रहारबाट आफ्नो शरीरमा घाउ लागेपछि ती बालकले हाम्रो यज्ञमा दुष्टहरू घुसेका छन् र ती दुष्ट राक्षस नै हुन् भन्ने जानेर अक्षता मन्त्रने

तदैव निर्गतप्राणा निजरूपं समाश्रिताः।
करालाः पतिता भूमौ विशीर्णा दशयोजनम्।।१३।।
वज्राघाताद् यथा पेतुर्गिरयस्तु विडौजसः।
कोलाहलो महानासीद् रजसाऽऽच्छादिता दिशः।।१४।।
कथं व्यापादिताः पञ्च राक्षसाः कूटरूपिणः।
क्षणेनानेन बालेन न जानीमोऽखिला अमुम्।।१५।।
अवतीर्णो भुवो भारं हर्तुं किं परमेश्वरः।
एवं ततो गरिष्ठे ते ब्रह्माद्या देवता गणाः।।१६।।
ववृषुः पुष्पवर्षाणि विमानवरमाश्रिताः।
नीतेषु तेषु प्रेतेषु ब्राह्मणाः कश्यपोऽपि च।।१७।।
उपनीते तत्र शिशौ वासश्च मेखलामपि।
उपवीताजिने दण्डं ददुस्तस्मै स्वमन्त्रतः।।१८।।
ततोऽञ्जलिं पूरयित्वा प्रोद्वीक्ष्य मण्डलं रवेः।
होमं सर्वं समाप्यैनं सावित्रीं कश्यपोऽब्रवीत्।।१९।।
पादमर्धं ततः सर्वां भिक्षां माता पुरा ददौ।
असङ्ख्यातास्ततो भिक्षा ददुस्ते सर्व आगताः।।२०।।
उपदिश्य ततश्चैनं शौचाचारानेकशः।
पुनश्च ब्राह्मणान् पूज्य वासांसि काञ्चनं च गाः।।२१।।
महत्यरिष्टेऽतीतेऽस्मिँस्तेभ्यो भक्त्या ददौ मुनिः।
वशिष्ठस्तं सभामध्ये निनाय ब्रह्मणोऽन्तिकम्।।२२।।
सोऽपि कमण्डलुजलैरस्य तीर्थं गृहीतवान्।
सर्वदा विकसत्पद्मं ददावस्मै करस्थितम्।।२३।।
ब्रह्मणस्पतिरित्येवं नाम चक्रे तदास्य सः।
सम्पूज्य नाम चक्रेऽस्य भारभूतिर्बृहस्पतिः।।२४।।
रत्नमालां ददौ चास्मै कुबेरोऽपि गलस्थिताम्।
सुरानन्देति नामास्य सम्पूज्य च चकार ह।।२५।।
सर्वप्रियेति नामाऽस्य दत्त्वा पाशमपाम्पतिः।
शृण्वत्सु सुरसङ्घेषु चकार शङ्करोऽपि च।।२६।।

काम गरी ती पाँच जनामाथि पाँचवटा अक्षता प्रहार गरे। अक्षताको प्रहारबाट ब्राह्मणका रूप लिएर आएका ती दानवहरू निष्प्राण भएर राक्षसरूपमा देखिए। जसरी अघि इन्द्रको वज्रप्रहारबाट पर्वतहरू ढलेका थिए, त्यसैगरी ती डरलाग्दा दानवहरूका शरीर भुइँमा दशयोजनसम्म फैलिए। राक्षसहरूको शरीर फैलिएका कारण चारैतिर धूलो उड्नाले दसै दिशामा अन्धकार छायो र ठूलो कोलाहल भयो ।।१२-१४।। यी साना बालकले एकछिनमा नै कूटरूपी पाँचवटा राक्षसलाई कसरी मारे ? के परमेश्वरले नै पृथिवीको भारहरण गर्न अवतार लिनुभएको हो ? घटना देखेपछि यसरी मानिसहरू तर्क-वितर्क गर्न थाले। त्यसपछि ब्रह्मा आदि देवताहरूले विमानमा रहेर गौरवशाली ती बालकमाथि फूल वर्षाए। प्रेतहरूको लाश उठाएपछि ब्राह्मणवर्ग र कश्यप ऋषिले भर्खर व्रतबन्ध गरिएका बालकलाई मन्त्र उच्चारण गर्दै जनै, मेखला, वस्त्र, मृगचर्म र पलाशको दण्ड प्रदान गरे ।।१५-१८।। त्यसपछि सूर्यमण्डलको दर्शन गराएर बालकको अञ्जुलीमा भिक्षा दिई होम समाप्त गरेपछि कश्यप ऋषिले बालकको कानमा गायत्री मन्त्र सुनाए।।१९।। एक चौथाई भिक्षा कश्यपले दिए भने सम्पूर्ण भिक्षा अदिति माताले प्रदान गरिन्। त्यसपछि यज्ञमा आमन्त्रित सबै नर-नारीहरूले बालकलाई भिक्षा प्रदान गरे ।।२०।। भिक्षादानपछि कश्यपले बालकलाई शौच र सदाचारको उपदेश दिएर ब्राह्मणपूजन गरी ती ब्राह्मणहरूलाई सुवर्णमुद्रा, गाई र वस्त्र प्रदान गरे ।।२१।। कश्यप ऋषिले ब्राह्मणहरूलाई भन्नुभयो- तपाइँहरूले ठूलो अरिष्टबाट हामीलाई जोगाउनुभयो। प्रार्थनापछि कश्यपले ती सबै ब्राह्मणहरूलाई भक्तिपूर्वक दान र दक्षिणा प्रदान गरे। वशिष्ठ ऋषिले बालकलाई सभाको बीचमा ब्रह्माजीको समीपमा ल्याए। ब्रह्माजीले बालकमाथि कलशको जलले अभिषेक गर्नुभयो र बालकले पनि ब्रह्माजीले गर्नुभएको अभिषेकलाई श्रद्धापूर्वक ग्रहण गरे। त्यसपछि ब्रह्माजीले आफ्नो हातमा रहेको नित्य विकसित भइरहने कमल बालकलाई प्रदान गरी ब्रह्मणस्पति नाम राखे। बृहस्पतिले बालकको पूजा गरी भारभूति भन्ने नाम राखे ।।२२-२४।। कुबेरले आफ्नो कण्ठमा रहेको रत्नमाला प्रदान गरी बालकको पूजा गरेर सुरानन्द नाम राखे ।।२५।। वरुणले आफ्नो हातको पाश टक्र्याएर ती बालकको नाम सर्वप्रिय राखे। सबै देवताहरूले सुनिरहेकै बेला भगवान् शङ्करले बालकलाई त्रिशूल र डमरु प्रदान गरी विरूपाक्ष नाम

त्रिशूलं डमरुं दत्त्वा विरूपाक्षेति चाभ्यधात्।
दत्त्वा चन्द्रकलां नाम भालचन्द्रेति चाकरोत्।।२७।।
रामस्य जननी चास्मै सखीं बालाय चार्पयत्।
परशुं पर्शुहस्तेति नाम चक्रे स्फुटं मुदा।।२८।।
पुनः सम्पूज्य सिंहं सा ददौ वाहनमुत्तमम्।
सिंहवाहन इत्येवं चक्रे नामाऽतिसुन्दरम्।।२९।।
उपादिशद् दुष्टनाशं कुरु शीघ्रं विनायक !
सागरो द्विजरूपेण मुक्तामालां ददावथ।।३०।।
मालाधरेति नामाऽस्य कृतवान् परिपूज्य च।
आसनार्थं ततस्तस्मै शेषः स्वात्मानमार्पयत्।।३१।।
फणिराजासनेत्येवं नाम चक्रे स्वयं मुदा।
दाहशक्तिं ददौ वह्निर्धनञ्जयेति नाम च।।३२।।
प्रभञ्जनेति नामाऽस्मै वायुश्च बलमुच्चकैः।
एवं सर्वे यथाशक्त्या दत्त्वा नामानि चक्रिरे।।३३।।
तेषां निर्वचने शक्तिर्न कस्याऽपि भवेन्मुने।
अपूपूजन्न चैनं स शक्रो मदविमोहितः।।३४।।
न वा किञ्चिद् ददौ चैनमुपायनवरं शुभम्।।३५।।
कथं त्रिलोकीनमितः सुरेशो
वृद्धोऽमृताशी लघुमर्भकन्तम्।
गजेन्द्रगामी हरिशूलपाणि-
प्रपूजितः कश्यपजं नमस्ये ? ।।३६।।
सिंहो यथा नात्ति तृणं समुद्रः पल्वलोदकम्।
न याचति तथाऽन्यं वा कल्पवृक्षोऽखिलं ददत्।।३७।।
एवं तस्याशयं बुद्ध्वा कश्यपः प्रणिधानवान्।
उवाच धर्मसंयुक्तं वचस्तद्धितकाम्यया।।३८।।
यत्राऽद्भुतानि कर्माणि यत्र स्युश्च गुणाकराः।
स नमस्यश्च पूज्यश्च ब्राह्मणोऽपि च निर्गुणः।।३९।।

राख्नुभयो। फेरि उहाँले ती बालकलाई चन्द्रमाको कला प्रदान गर्नुभयो र भालचन्द्र भन्ने नाम पनि राख्नुभयो ।।२६-२७।। परशुरामकी माता रेणुकाले आई बालकलाई एउटी कन्या र बञ्चरो समेत अर्पण गरिन् र तिनको नाम परशुधारी राखिन् । नामकरणपछि रेणुकाले बालकको पूजा गरी वाहनका रूपमा सिंह टक्र्याइन् र सिंहवाहन नाम पनि राखिन्।।२८-२९।। अन्तमा तिनले उपदेश गर्दै भनिन् - 'हे बाबु ! तिमीले शीघ्र दुष्टहरूको नाश गर।' त्यसपछि ब्राह्मणका रूपमा आएका समुद्रले बालकलाई मोतीको माला टक्र्याई पूजा गरे र मालाधर भन्ने नाम पनि राखे । त्यसै उपलक्ष्यमा आएका शेषनागले बालकको आसनका निमित्त आफैलाई समर्पण गरे र बालकको नाम फणिराजासन राखे। यसै क्रममा त्यहाँ आएका अग्निले बालकलाई दाहक शक्ति प्रदान गरी धनञ्जय नाम राखे ।।३०-३२।। यसैक्रममा त्यहाँ आएका वायुले बालकलाई बल प्रदान गर्दै तिनको नाम प्रभञ्जन राखे । यसरी सबै देवताहरूले आ-आफ्ना शक्तिअनुसार उपहार टक्र्याई ती बालकका अनेक थरि नाम राखे।।३३।। हे मुनि ! ती नामहरूको व्याख्या गर्ने शक्ति कसैसँग पनि थिएन । म देवताको राजा हुँ भन्ने अहङ्कारले अन्धा भएका इन्द्रले भने ती बालकको पूजा गरेनन् र कुनै उपहार पनि टक्र्याएनन् ।।३४-३५।। मलाई स्वर्ग, मर्त्य र पातालका प्राणीहरूले नमस्कार गर्छन्, म देवताको अधिपति हुँ, म वयोवृद्ध र ज्ञानवृद्ध छु, म ऐरावत हात्तीमा सवार गर्छु, विष्णु र शङ्करले पनि मलाई सम्मान प्रदान गर्नुहुन्छ भने मैले कश्यपको सानो छोरालाई कसरी नमस्कार गरूँ भन्ने भावना इन्द्रले लिए ।।३६।। यस्तो अहङ्कारको वशमा परेका इन्द्रले यो पनि भने - 'बाघले घाँस खाँदैन, समुद्रले कुवाको पानी खाँदैन र कल्पवृक्षले अरू कसैसँग केही माग्दैन । यी सबैले त अरूलाई दिन्छन् । मलाई यी बालकबाट केही लिनु-दिनु छैन !' इन्द्रको यो आशय भगवान्को ध्यान गरिरहेका कश्यप ऋषिले थाहा पाए र इन्द्रको हित चिताई धर्मभावनाले इन्द्रलाई भने ।।३७-३८।। 'हे इन्द्र ! यी बालक निर्गुण ब्राह्मण भएता पनि यिनमा अद्भुत कर्म र गुणका खजाना हुन्, तसर्थ यिनको पूजा र वन्दना गर्नुपर्दछ ।।३९।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते नानानामनिरूपणं नाम दशमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशका अनेक नामहरूको निरूपण' शीर्षकान्वित दसौं अध्याय पूर्ण भयो ।।१०।।

ॐ

## एकादशोऽध्याय:

### कश्यप उवाच

अवन्तु मद्गृहे कोऽपि ह्यवतीर्णः परःपुमान्।
अनिर्वाच्यगुणो हीनो गुणैस्त्रिभिरनावृतः।।१।।

एतद्विरोधं यः कुर्यात् स पदभ्रंशतामियात्।
एतस्याद्भुतकर्माणि श्रृणु मे गदतः सुर।।२।।

विरजा राक्षसी घोरा हन्तुमेनं समागता।
सा हता तेन बालेन पतिता हि द्वियोजना।।३।।

उद्धतश्चैव धुन्धुश्च दैत्यौ परमदुर्मदौ।
शुकरूपधरावेनं निहन्तुं समुपागतौ।।४।।

पक्षे धृत्वा पोथितौ तौ शिलायां गतजीवितौ।
निपेततुर्धरापृष्ठे विशालौ सर्वदृग्गतौ।।५।।

तथैव चित्रगन्धर्वो जले नक्रत्वमागतः।
एतस्य स्पर्शमात्रेण गतो दिव्यशरीरताम्।।६।।

हाहाहूहूतुम्बरूणां सत्त्वसंशोधनाय सः।
जहार पञ्चायतनं पञ्चधा स्वयमप्यभूत्।।७।।

सर्वेषां च समक्षं वो निहताः पञ्च राक्षसाः।
एवं मुनिवचः श्रुत्वा बभाण बलवृत्रहा।।८।।

### इन्द्र उवाच

न दृष्टोऽस्य गुणोत्कर्षस्तावन्मान्यो भवेत् कथम्।

### क उवाच

ततो दिदेश वायुं स नयैनं व्योममण्डलम्।।९।।

तस्यानुज्ञापदं वायुर्युगान्तसदृशो ववौ।
आन्दोलयन् सर्वलोकं भ्रामयन् भूधरान् भृशम्।।१०।।

## { ११ अध्याय }

**कश्यपले भन्नुभयो** - 'यी बालक मेरो घरमा सामान्य बालकका रूपमा जन्मेका प्राणी होइनन्। यी त परमपुरुष भगवान्कै अवतार हुन्। यिनका गुणको महिमा बताउन सकिँदैन। सत्त्व, रज, तम गुणदेखि बाहिर रहेका यी आत्मस्वरूप हुन्।।१।। जसले यिनको विरोध गर्दछ त्यो आफ्नो पदबाट च्युत हुन्छ। यिनका अद्भुत कर्महरूको विषयमा म बताउँछु, तपाईँ सुन्नुहोस्।।२।। एकपटकको कुरा हो, विरजानामक डरलाग्दी राक्षसी यिनको हत्या गर्न आई, तर यिनले त्यसकै हत्या गरे र त्यो दुई योजनसम्म फैलिएर भुइँमा लडी।।३।। त्यसपछि उद्धत र धुन्धुरनामक अत्यन्त घमण्डी दैत्यहरू सुगाको रूप लिएर यिनलाई मार्न भनेर आए तर यिनले तिनका पखेटा समातेर ढुङ्गामा लगी पछारिदिंदा तिनीहरू मरे। भुइँमा लडेका ती दैत्यहरू सुगाको रूप छाडेर विशाल दैत्यको आकारमा परिणत भएका थिए र तिनलाई सबैले राम्ररी देखे।।४-५।। त्यसपछि चित्रगन्धर्व नामक राक्षस पानीमा गोहीको रूप लिएर आयो। पानीमा खेलिरहेका बालकको स्पर्शमात्र पाएर त्यसले दिव्य शरीर धारण गऱ्यो।।६।। हाहा, हूहू र तुम्बरूनामक गन्धर्वहरूको अहङ्कार नाश गर्न यिनले पञ्चायतन देवताका पाँचवटै मूर्ति अपहरण गरे। पछि मूर्तिको खोजी हुँदा यिनले आफूलाई पाँचै मूर्तिका रूपमा देखाए।।७।। यिनले आफ्नो घरमा आएका सबै मानिसहरूका सामु व्रतबन्धको समयमा पाँचवटै राक्षसलाई मारिदिए ।' यसरी कश्यप ऋषिले बताउनु भएको कुरा सुनेर देवराज इन्द्रले भन्नुभयो।।८।।

**इन्द्रले भन्नुभयो** - मैले यी बालकका चमत्कारपूर्ण गुण आफ्नै आँखाले देख्न पाएको छैन। अरूले सुनाएका भरमा मैले यिनलाई कसरी सम्मान गर्ने ? यसकारण आफूले देखेपछि मात्र विश्वासपूर्वक यिनको मान्यता गर्न सकिन्छ ।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि इन्द्रले वायुलाई आदेश दिए- यी बालकलाई तिमीले आकाशमण्डलमा पुऱ्याऊ। वायुले पनि इन्द्रको आज्ञा पाएर प्रलय कालको प्रचण्ड वायुझैं डरलाग्दो रूप लिए। सम्पूर्ण संसारलाई भयभीत

अकालः प्रलयः किन्नु प्रारब्धो लोकनाशनः।
इत्येवं भृशसंविग्ना ऋषयश्च चकम्पिरे।।११।।

बटुं नेतुं समायातो महाशक्त्या प्रभञ्जनः।
न चासनं त्वस्य चलं रोम वा समपद्यत।।१२।।

भग्ने वायौ तु सम्प्राह शुष्माणं पाकशासनः।
दहैनं त्वं बटुं शीघ्रं द्रष्टव्या शक्तिरद्य ते।।१३।।

तदाज्ञां शिरसा गृह्य जगाम तमुषर्बुधः।
निर्दहन्निव त्रीन् लोकान् प्रलयानलसन्निभः।।१४।।

भस्मीकर्तुं द्रुमान् सर्वान् शोषयन् सर्वसागरान्।
तं दहन्तं जनान् सर्वान् दृष्ट्वा कश्यपनन्दनः।।१५।।

तत्क्षणादगिलद् रोगी भेषजं गुटिकामिव।
गिलिते तादृशे वह्नौ क्रोधसंरक्तलोचनः।।१६।।

सहस्रलोचनो लोकाँल्लोचनैः सर्वलोचनैः।
तावद् ददर्श तं तत्र सहस्राधिकलोचनम्।।१७।।

असङ्ख्यशीर्षमुकुटमनन्तश्रोत्रसंयुतम्।
अनन्तहस्तचरणमनन्तोदारविक्रमम्।।१८।।

शशिसूर्याग्निनयनं शिखाव्याप्तनभस्तलम्।
सप्तपातालचरणं सप्तलोकैकमस्तकम्।।१९।।

असङ्ख्यसूर्यसङ्काशमसङ्ख्येन्द्रसुसेवितम्।
असङ्ख्यकेशसंयुक्तं नानाब्रह्माण्डरोमकम्।।२०।।

आमूलाग्राद् यथा वृक्षे भवन्त्यौदुम्बराणि वै।
औदुम्बरे वा मशकाः सङ्ख्यातीता भवन्ति हि।।२१।।

तथैवैकैकरोमाङ्गं सङ्ख्यातीताण्डसंयुतम्।
पश्यँस्तत्रैवैकतरं भ्रान्तः शक्रो विवेश ह।।२२।।

पश्यति स्म स तन्मध्ये त्रैलोक्यं सचराचरम्।
अरण्यकदलीकोशपत्रे पत्रे यथा फलम्।।२३।।

र पर्वतहरूलाई कम्पायमान बनाउँदै हावा-हुरी चल्न थाल्यो। ऋषिहरूले सबैको संहार गर्ने अकालप्रलय हुन थाल्यो कि तर्क गरिरहेका ऋषिहरू डरले काँपिरहेका थिए र अत्यन्त दुःखी थिए । त्यसपछि ठूलो शक्तिका साथ आएको आँधिबेहरीले बालकलाई उडाउने प्रयास गर्‍यो । त्यतिविधि डरलाग्दो प्रचण्ड वायुको वेग चल्दा पनि बालक बसेको आसन कत्ति कम्पित भएन र बालकको सानो रौँमा पनि कुनै कम्प भएन।।९-१२।। यसरी बालकको तेजबाट वायु परास्त भए। वायु परास्त भएपछि इन्द्रले अग्निलाई आदेश दिए - 'हे अग्नि ! तिमीले यी बालकलाई डढाऊ, आज मैले यिनको शक्ति हेर्नु परेको छ।' इन्द्रको आज्ञालाई शिरमा धारण गरेर अग्नि बालकका सामु आए । स्वर्ग, मर्त्य, पाताल र अरू लोकलाई डढाउँदै आएका ती प्रलयकालका अग्निसमान देखिए।।१३-१४।। सम्पूर्ण रूखहरूलाई खरानी तुल्याउँदै, सबै सागरलाई सुकाउँदै र सबै मानिसहरूलाई डढाउँदै आएका अग्निलाई देखेर कश्यपका बालक छोराले तत्काल नै रोगीले औषधिको गोली निलेझैँ अग्निलाई निलिदिए। अग्निलाई बालकले निलेपछि क्रोधले आँखा राता गराएका इन्द्रले ती बालकलाई एक हजारभन्दा बढी आँखा भएका र ती आँखाहरूबाट सारा संसारको दृश्य साक्षात्कार गरिरहेका, असंख्य शिर भएका, अनन्त कानले सुहाएका, असंख्य हात र पाउ भएका, आँक्नै नसकिने पुरुषार्थ भएका, सूर्य र चन्द्रमालाई आँखा बनाएर संसारको दृश्य हेरिरहेका, आफ्नो शिरद्वारा आकाशको स्पर्श गरिरहेका, तलका सातवटा पाताललाई चरण बनाएर उभिएका, माथिका सातलोकलाई शिर बनाएर चम्किरहेका, अनन्त सूर्यको प्रकाश धारण गर्ने, अनन्त इन्द्रहरूद्वारा सेवित, अनन्त ब्रह्मा र शिवजीले सुहाएका र आफ्ना रौँमा अनन्त ब्रह्माण्ड धारण गरिरहेको अवस्थामा देखे ।।१५-२०।। जसरी डुम्रीका वृक्षमा फेँददेखि टुप्पासम्म असङ्ख्य फल लटरम्म रहेका हुन्छन् र डुम्रीका फलभित्र असङ्ख्य लामखुट्टे कीरा रहेका हुन्छन् त्यसैगरी एक-एक रोमाञ्चमा असंख्य ब्रह्माण्ड धारण गर्ने ती बालकलाई हेर्दा भ्रान्तिमा परेका इन्द्र श्रीगणेशले धारण गर्नुभएका अनन्त ब्रह्माण्डमध्ये एउटा ब्रह्माण्डभित्र पसे । त्यहाँ तिनले स्वर्ग,

असङ्ख्यातं जगत् तत्र पश्यति स्म शचीपति:।
बभ्राम भ्रान्तचित्तोऽसौ नालभन् निर्गमं तत:।।२४।।

ततो ननाम मूर्ध्नाऽसावेवं भग्नमनोरथ:।
प्रार्थयामास देवेशं तदा शक्रो गजाननम्।।२५।।

शक्र उवाच

भूभारहरणार्थं यो जात: कश्यपनन्दन:।
अचिन्त्यो महिमा यस्य किमु वर्ण्यो भवेन्मम।।२६।।

निर्गमं देहि देवेश ! कुक्षेरत्यन्तविस्तरात्।
अदृष्टपाराद् वर्षाणि द्वादश भ्रमता मया।।२७।।

तव कुक्षौ मयाऽदर्शि भुवनानि चर्तुदश।
स्थाने स्थाने विभक्तानि प्रतिरोमाङ्कमेकराट्।।२८।।

समष्टिव्यष्टिरूपाणि महाविस्तारवन्ति च।
दृष्टानि तव रूपाणि सुसौम्यानीतराणि च।।२९।।

अद्भुतान्यप्यसङ्ख्यानि वक्त्राणि नयनानि च।
दृष्ट्वा दुर्दर्शरूपाणि जगत्क्षोभकराणि ते।।३०।।

दैत्यदानवपूर्णानि सुरमानववन्ति च।
यक्षरक्ष:पिशाचादिचतुराकरवन्ति च।।३१।।

विकरालमहोरूपमुपसंहर विश्वकृत् !।
गतो मोहं स्मृतिर्लब्धा प्रसादान्निखिलेश्वर।।३२।।

कायेन मनसा बुद्ध्या वाचा त्वां शरणं गत:।
प्राकृतं दर्शय विभो ! रूपं ते भक्तवत्सल।।३३।।

क उवाच

एवं यावत् प्रार्थयते स्वात्मानं तावदेव स:।
सभामध्यगतं तञ्च ददर्श ब्रह्मचारिणम्।।३४।।

मर्त्य, पाताल, धर्ती, पर्वत, स्थावर, जङ्गम देखिरहेका थिए। जसरी वनकेराको कोशाभित्र असङ्ख्य दानाहरू लागेका हुन्छन् त्यसैगरी रहेका असङ्ख्य संसारलाई इन्द्रले त्यहाँ देखे। चित्त भ्रान्त भएका इन्द्र चारैतिर घुम्न थाले तर कहींबाट पनि निकासको बाटो देखेनन्। त्यसपछि भग्न मनोरथ एवं निराश इन्द्रले टाउको झुकाएर गजाननरूप बालकसँग प्रार्थना गरे।।२१-२५।।

**इन्द्रले भन्नुभयो -** पृथिवीको भार हरण गर्न कश्यपपुत्रका रूपमा पैदा हुनुभएका भगवान्को महिमा मेरो सानो विचारद्वारा व्यक्त हुन सक्दैन।।२६।। म कसरी त्यस्ता भगवान्को गुणगान गरूँ ? हे देवताका पनि देवता ! हजुरको फैलिएको छातीभित्र म अल्मलिएको छु । मलाई यहाँबाट निकासि दिनुहोस्। मैले १२ वर्षसम्म घुम्दा पनि पार पाउन सकिनँ। हजुरको छातीमा मैले चौधै भुवनको दर्शन गरें । ती भुवनहरू ठाउँ-ठाउँमा संयुक्त भएर रहेका थिए भने ठाउँ-ठाउँमा वियुक्त भएर पनि रहेका थिए । हजुरको प्रत्येक रोमाङ्कमा मैले एउटा ब्रह्माण्डको दर्शन गरेको छु। हजुरको विस्तृत समष्टि स्वरूप र अल्पविस्तृत व्यष्टि स्वरूपको पनि मैले दर्शन गरेको छु । हजुरको सौम्य रूप र भयङ्कर रूपको पनि दर्शन गरेको छु। हजुरको अद्भुत र असंख्य मुख र आँखाहरूको पनि दर्शन गरेको छु। संसारका आँखालाई क्षुब्ध बनाउने, आँखाबाट तेजोमय, दैत्य एवं दानवले भरिएका, मानव तथा देवताले परिपूर्ण, यक्ष; राक्षस; पिशाच आदिले सहित र चारवटा विशाल महासागरलाई पनि आफूमा समाहित गर्ने विचित्रको स्वरूप पनि मैले देखेको छु। हे विश्वका निर्माता भगवन् ! हजुरले आफ्नो डरलाग्दो तेजोमय रूपलाई शान्त तुल्याउनुहोस्। मेरो मोह र गर्व सबै गएको छ। हे संसारका स्वामी ! हजुरको कृपाबाट मैले हजुरको नित्य संज्ञना गर्ने बुद्धि पाएको छु। म मन, वचन, बुद्धि र वाणीले हजुरको शरणमा परेको छु। हे भक्तका प्यारा भगवन्! हजुरले कश्यपका छोराका रूपमा जस्तो लीला गर्दै हुनुहुन्थ्यो त्यही रूप मलाई देखाउनुहोस्।।२७-३३।।

**ब्रह्माजीले भन्नुभयो -** इन्द्रले यसरी प्रार्थना गरेपछि ती बालकले आफूलाई व्रतबन्ध-यज्ञको सभाका बीचमा

पश्यतां सर्वलोकानां साष्टाङ्गं प्रणनाम तम्।
अतिविस्मितचित्तोऽसौ लज्जाहर्षसमन्वितः।।३५।।

शृण्वत्सु सर्वदेवेषु नुनाव ब्रह्मचारिणम्।
जातं मुनिगृहे शान्तं क्रीडामानुषरूपिणम्।।३६।।

शक्र उवाच

जाने न त्वाऽनन्तशक्तिं परेशं
विश्वात्मानं विश्वबीजं गुणेशम्।
विश्वाभासं विश्ववन्द्यं त्रिसत्यं
त्रेधाभूतं जन्मरक्षार्तिहेतुम्।।३७।।

एकं नित्यं सच्चिदानन्दरूपं
सर्वाध्यक्षं कारणातीतमीशम्।
चेष्टाहेतुं स्थावरे जङ्गमे च
वाञ्छापूरं सर्वगं त्वाऽभिवन्दे।।३८।।

सर्वेशानं सर्वविद्यानिधानं
सर्वात्मानं सर्वबोधावभासम्।
सर्वातीताऽवाङ्मनोगोचरं त्वां
सर्वावासं सर्वविज्ञानमीडे।।३९।।

क उवाच

एवं स्तुत्वा च नत्वा च सम्पूज्य स्वाङ्कुशं ददौ।
कल्पवृक्षञ्च दास्यौ द्वे विनायक इति स्फुटम्।।४०।।

चकार नाम शक्रोऽथ स्मरणात् सर्वसिद्धिदम्।
जयशब्दैर्नमःशब्दैर्वाद्यशब्दैरनेकधा।।४१।।

गन्धर्वगीतनिनदैरप्सरोनृत्यनिस्वनैः।
व्याप्तमासीत् पुष्पवर्षैस्तदा व्योम धरातलम्।।४२।।

प्रतिकूलवहा नद्य आसन् पूर्ववहाः शुभाः।
प्रसन्नमासीद् दिक्चक्रं ववुर्वाताः सुखावहाः।।४३।।

रहेका ब्रह्मचारीका रूपमा परिणत गर्नुभयो र इन्द्रले पनि ब्रह्मचारीका रूपमा रहेका उहाँलाई देखे । त्यसपछि इन्द्रले सबै मानिसका सामु भुइँमा पल्टिएर साष्टाङ्ग दण्डवत् प्रणाम गरे। चकित इन्द्रले लाज र हर्षको अनुभूति गरिरहेका थिए । मुनिका आँगनमा शान्त रूपमा देखिनुहुने र लीला गर्न भनी मानिसको रूप लिनुभएका विचित्र ब्रह्मचारीको इन्द्रले देवता र मानिसका सामु स्तुति गरे ।।३४-३६।।

**इन्द्रले भन्नुभयो -** हे परमेश्वर ! अनन्त शक्तिले सुहाउनु भएका, सबभन्दा ठूला देवता, विश्वमा व्याप्त भई विश्वात्माका रूपमा रहनु भएका, विश्वलाई जन्माउने बीजका रूपमा रहनु भएका, गुणहरूका स्वामी, विश्वलाई प्रकाशित गर्ने, विश्वद्वारा वन्दनीय, भूत, भविष्यत् र वर्तमान तीनै समयमा रहनुहुने, संसारको सृष्टि, पालन र संहारका लागि ब्रह्मा, विष्णु र महेश्वरका रूपमा प्रकट हुनुहुने हजुरलाई म जान्न सक्दिनँ। हे प्रभु ! एकरूप, नित्यरूप, सत्, चित् आनन्दरूप, सबैका स्वामी, कारणका पनि कारण, ईश्वर, सबैका चेष्टाका कारण, स्थावर र जङ्गममा पनि वर्तमान, सबैका इच्छापूरक, सर्वव्यापी हजुरलाई श्रद्धापूर्वक नमस्कार गर्दछु। हे ईश्वर ! सबैका अधिपति, सबै विद्याका स्रोत, सबै आत्माका परमात्मा, सबै ज्ञानका कारण, सबैभन्दा पर रहनुभएका, वाणी र मनबाट पनि दृष्टिमा नआउनुहुने, सबैमा म भनेर रहनुहुने र सम्पूर्ण विज्ञानस्वरूप हजुरको म वन्दना गर्दछु।।३७-३९।।

**ब्रह्माजीले भन्नुभयो -** यसरी स्तुति र प्रणाम गरेर पूजा गरेपछि इन्द्रले ती बालकरूप परमेश्वरलाई आफ्नो आयुध अङ्कुश दिए र दुई सेविकाहरूका साथमा कल्पवृक्ष पनि प्रदान गरे। त्यसपछि स्मरण गर्नासाथ सम्पूर्ण सिद्धि प्रदान गर्ने विनायक नाम राखे । त्यस बेला त्यहाँको वातावरणमा जयजयकार, नमस्कार, वाद्यध्वनि, गन्धर्वहरूको गीतगुञ्जन र अप्सराहरूका नृत्यध्वनि व्याप्त भएका थिए। आकाशबाट गरिएको पुष्पवर्षाले आकाश र धर्ती एकाकार भएका थिए।।४०-४२।। पहिले बालकले आफ्नो विचित्र रूप देखाउँदा प्रतिकूल रूपमा बग्न थालेका नदीहरू अहिले पूर्ववत् शान्त भएका थिए । दिशाहरूको मण्डल निर्मल थियो र सुखदायक

प्रदक्षिणार्चिष: शान्ता आसन् सर्वत्र वह्नय:।
तत: प्रसन्न: शक्राय ददावभयमेकराट्।।४४।।

भविता न भयं क्वापि तव शक्र ! रणाजिरे।
पठस्व स्तोत्रमेतत् त्वं त्रिसन्ध्यं भक्तितत्पर:।।४५।।

अन्योऽपि य: पठेद् भक्त्या श्लोकत्रयमिदं नर:।
स सर्वानाप्नुयात् कामान् सर्वत्र विजयी भवेत्।।४६।।

तत: शक्रो नमस्कृत्य वरं प्राप्य शुभावहम् ।
तत: सर्वे नमस्कृत्य स्वं स्वं स्थानं ययुर्मुदा।।४७।।

वायुमण्डल प्रवाहित हुन थालेको थियो ।।४३।। अग्निहरू पनि शान्त थिए। प्रसन्न भएका विश्वका अधिपति ती बालकले इन्द्रलाई अभयदान दिँदै भन्नुभयो - हे इन्द्र ! तपाईँलाई युद्धको मैदानमा कुनै भय हुनेछैन। तपाईँले भक्तितत्पर भएर अहिले पढेको स्तोत्र बिहान, दिउँसो र सायंकालमा भक्तिपूर्वक पाठ गर्नुहोस् ।।४४-४५।। अरू कुनै मानिसले पनि भक्तिपूर्वक यी तीनवटा श्लोक भएको स्तोत्र पढ्दछ भने त्यसले सबै प्रकारका कामनाहरूको फल प्राप्त गर्नेछ र सर्वत्र विजय प्राप्त गर्नेछ । बालकबाट यसरी वरदान प्राप्त गरेका इन्द्र उहाँलाई नमस्कार गरी आफ्नो धामतर्फ लागे। त्यहाँ आएका नरनारीहरू पनि बालकलाई नमस्कार गरेर हर्षपूर्वक आ-आफ्ना धामतर्फ गए ।।४६-४७।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते इन्द्रगर्वहरणं नामैकादशोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'इन्द्रको गर्वहरण' शीर्षकान्वित एघारौं अध्याय पूर्ण भयो ।।११।।

ॐ

## द्वादशोऽध्यायः

## { १२ अध्याय }

क उवाच

ततस्तु सप्तमे वर्षे प्रवृत्तेऽसौ विनायकः।
स्नात्वा नित्यविधिं कृत्वा मुकुटभ्राजिमस्तकः।।१।।

आयुधानि च चत्वारि सिंहारूढो दधार सः।
अङ्कुशं परशुं पद्मं पाशं सर्वभयापहम्।।२।।

दण्डाजिने कुण्डले च काञ्चने रत्नसंयुते।
बिभ्रत् कमण्डलुं दर्भान् कौशेयं पीतमुत्तमम्।।३।।

कस्तूरीतिलकं चन्द्रं ललाटे क्षीणतेजसम्।
मुक्ताफलमयीं मालां कण्ठे नाभौ फणीश्वरम्।।४।।

रोदसी कम्पयन्नुच्चैर्जगर्जाऽसौ स्वलीलया।
मेघस्वन इति भ्रान्त्या चातका व्याददुर्मुखम्।।५।।

उच्छलन्त्यो महानद्यः सिषिचुर्व्योममण्डलम्।
तदा ननन्दतुरुभावदितिः कश्यपोऽपि च।।६।।

धन्या वयं पूर्वजा न इत्यात्मानं प्रशंसतुः।
एतस्मिन् समये काशिराजोऽप्याश्रममभ्यगात्।।७।।

परस्परालिङ्गनेन मुमुदुस्तेऽखिलास्तदा।
न्यविशन्ताऽऽसने सर्वे नमस्कृत्य परस्परम्।।८।।

स्वाद्वन्नं भोजयामास मुनिस्तं षड्रसैर्नृपम्।
विश्रान्तं परिप्रपच्छ किमागमनकारणम्।।९।।

श्रीमतां दर्शनं नोऽद्य जातं पुण्यवशान्नृप !
पुरोहितस्य मे न त्वं वृत्तान्तं किं गृहीतवान्।।१०।।

क उवाच

एवं मुनिवचः श्रुत्वा जगाद नृपसत्तमः।
क्षमापराधं मे ब्रह्मन् ! राज्याकुलितचेतसः।।११।।

पुत्रस्य मे विवाहोऽस्ति त्वामाकारयितुं प्रभो !
आगतोऽहं मुने जातः कृतार्थस्तव दर्शनात्।।१२।।

**ब्रह्माजीले भन्नुभयो -** देवराज इन्द्र स्वर्गतर्फ फर्केपछि सात वर्षको उमेरमा श्रीगणेशले स्नान गर्नुभयो। नित्यविधि सकेर सिंहमा सवार भई मस्तकमा मुकुट धारण गरेर चार हातमा अङ्कुश, परशु, कमल र पाश पनि धारण गर्नुभयो। उहाँले हातमा दण्ड र शरीरमा मृगचर्म धारण गर्नुभएको थियो। उहाँका कानमा रत्न र सुवर्णले बनेका दुई कुण्डल शोभायमान थिए। उहाँले रेशमी पीताम्बर, कमण्डलु र कुश पनि धारण गर्नुभयो।।१-३।। श्रीगणेशले निधारमा कस्तूरीको तिलक र र चन्द्रमालाई धारण गर्नुभयो। घाँटीमा मोतीको हार र नाभिमा शेषनागलाई कन्धनी बनाएर धारण गर्नु भएका श्रीगणेशले लीलापूर्वक ठूलो गर्जन गर्नुभयो। श्रीगणेशको गर्जन सुनेर बादल गर्जेको हो कि भन्ने भ्रान्तिमा परेका काकाकुलहरूले मुख बाएका थिए।।४-५।। गणेशको गर्जनबाट तर्सेका महानदीहरूले आफ्नो जललाई तरङ्गित बनाएर आकाशमण्डलमा सिञ्चन गरे। श्रीगणेशको यो स्वरूप देखेर माता अदिति र पिता कश्यप पनि ज्यादै प्रसन्न भए।।६।। तिनीहरूले भने - हामी धन्य छौं र हाम्रा पूर्वज पनि। त्यसै बेला काशिराज कश्यप ऋषिको आश्रममा आइपुगे। परस्पर आलिङ्गन गरेर काशिराज र महर्षि कश्यप प्रसन्न भए। एक-आपसमा नमस्कार गरेर आ-आफ्ना आसनमा विराजमान भए।।७-८।। कश्यप मुनिले ६ प्रकारका रसहरूबाट तयार गरिएको स्वादिष्ट भोजनद्वारा काशिराजको स्वागत गरे र तृप्त बनाए। भोजनपछि विश्राम गरिसकेका काशिराजसँग महर्षि कश्यपले तपाईं के कति कारणले यहाँ आउनुभयो ? पुण्यका प्रभावले तपाईंको दर्शन पाएर हामी कृतार्थ भयौं भन्दै तपाईंले अहिलेसम्म मसँग किन भेटघाट गर्नुभएन भन्ने दुखेसो पनि पोखे।।९-१०।।

**ब्रह्माजीले भन्नुभयो-** कश्यपमुनिका कुरा सुनेर काशिराजले म राज्यव्यवस्थामा लागेको हुँदा हजुरसँग भेटघाट र संवादको योजना बनाउन पाइनँ, मेरो अपराध क्षमा गर्नुहोस्। हे ऋषिवर! मैले छोराको विवाह आँटेको छु। त्यसै उपलक्ष्यमा हजुरलाई निमन्त्रणा गर्न यहाँ आएको हुँ। हजुरको दर्शन

चल शीघ्रं विवाहं त्वं सम्पाद्य पुनरेव हि।
न श्लाघ्यो लोकवर्येषु विना चैवागमं तव।।१३।।
अहमेव समायातोऽतस्त्वां नेतुं महामुने।

मुनिरुवाच

नाहमेष्ये नृपश्रेष्ठ! चातुर्मास्यरतोऽधुना।।१४।।
पुत्रं नय समर्थं मे यदीच्छसि जनाधिप !।

राजोवाच

पुत्रमाज्ञापय मुने ! गमिष्यावो जवान्वितौ।।१५।।
एवं नृपवचः श्रुत्वा मुनिः पुत्रमथाऽब्रवीत्।
वचोऽनुरोधाद् राज्ञोऽस्य प्रेषये त्वां विनायक।।१६।।
विद्यमाने तु महति दुःखे विरहजे तव।
धृत्वाज्ञां शिरसाऽऽवन्द्य चरणावुभयोरपि।।१७।।
मातापित्रोर्बहिरगाद् राज्ञा चारोपितो रथे।
सोऽपि नत्वा तयोः पादौ स्वयमारुरुहे रथम्।।१८।।
आजगामादितिस्तत्र प्रावदन् नृपसत्तमम्।
अयं मे बालको राजन् ! रक्षणीयो निरन्तरम्।।१९।।
उत्पातो जायते तत्र यत्र मे बालको भवेत्।
अतोऽयं यत्नतो रक्ष्यः पक्ष्मणीव कनीनिकाम्।।२०।।
यथा नयसि पुत्रं मे तथाऽत्र त्वं समानय।
ओमित्युक्त्वाऽदितिं राजा प्रणिपत्य विसृज्य ताम्।।२१।।
सह तेन ययौ शीघ्रं रथेनाऽनिलरंहसा।
गच्छता रथमार्गेण राज्ञा प्राप्ता महाटवी।।२२।।
नरान्तकपितृव्यस्य स्थानं तच्चातिसुन्दरम्।
रौद्रकेतोर्बली भ्राता धूम्राक्षो नाम नामतः।।२३।।
दशवर्षसहस्रं स तपस्तेपे सुदारुणम्।
सहस्रकिरणं नित्यं नित्यमाराधयन् मुदा।।२४।।
प्रार्थयन् सर्वसंहारकरमायुधमुत्तमम्।
त्रयाणां भुवनानां स इच्छन् वश्यत्वमात्मनः।।२५।।

पाएर कृतार्थ भएँ ।।११-१२।। हजुर मसँग काशी जानुपर्छ र मेरो छोराको विवाह सम्पन्न गरिदिनुपर्छ। हजुर नहुँदा मेरो छोराको विवाह प्रशंसनीय र परिपूर्ण हुनेछैन। मेरो त्यो उत्सव हजुरको उपस्थितिबाट गौरवपूर्ण हुनेछ। हजुरको यो महत्त्व बुझेर नै म आफै हजुरलाई लिन आएको छु।

**कश्यपले भन्नुभयो** - 'हे राजन् ! म अहिले चतुर्मास व्रत गरिरहेको छु र जान असमर्थ छु । तपाईँलाई चाहना हुन्छ भने मेरो सट्टा मेरो छोरालाई लिएर जान सक्नुहुन्छ ।

**राजाले भने** - 'ऋषिवर ! हजुरले छोरालाई मसँग पठाउनुहोस्। अब हामी द्रुत गतिमा काशी जानेछौँ ।।११-१५।। राजाका कुरा सुनेर कश्यप ऋषिले छोरालाई भन्नुभयो- 'हे विनायक! राजाको अनुरोधलाई विचार गरेर म तिमीलाई उहाँसँग पठाउँदैछु। हुन त तिमी यहाँबाट काशीतर्फ लाग्दा तिम्रा विरहले हामी दम्पती दुःखी हुनेछौँ ।' श्रीगणेश आफ्ना बुबा कश्यपको आज्ञा शिरमा धारण गरी माता-पितालाई प्रणाम गरेर राजाका पछि लागे । राजाले पनि उहाँलाई आफ्नो रथमा सवार गराए। त्यसपछि कश्यप र अदितिलाई प्रणाम गरेर राजा पनि रथमा सवार भए ।।१६-१८।। प्रस्थानको बेला अदितिले राजालाई भनिन् - 'हे काशिराज ! मेरो बालक सानै छ, तपाईँले निरन्तर रक्षा गर्नुहोला। अर्को कुरा के छ भने जहाँ-जहाँ मेरो बालक जाने गर्छ, त्यहाँ-त्यहाँ उत्पात हुने गर्छन्। आँखाका परेलीहरूले आँखाको नानीको रक्षा गरेजस्तै तपाईँले मेरा पुत्रको रक्षा गर्नुपर्नेछ ।।१९-२०।। जसरी आज तपाईँ मेरो छोरालाई लाँदै हुनुहुन्छ, त्यसैगरी तपाईँले यहाँ ल्याइदिनुपर्छ ।' अदितिका यी कुरा सुनेपछि राजाले हुन्छ भनी प्रणाम गरेर अदितिसँग बिदा लिए । श्रीगणेशका साथ काशिराज तीव्र वेग भएको रथमा सवार भई लामो बाटो काटेपछि ठूलो जङ्गलका बीचमा आइपुगे।।१९-२२।। त्यस जङ्गलमा नरान्तकनामक दानवको कान्छो बाबु धूम्राक्षको अत्यन्त राम्रो घर थियो । त्यो धूम्राक्ष बलवान् राक्षस रौद्रकेतुको भाइ थियो ।।२३।। त्यसले दश हजार वर्षको कठिन तपस्याद्वारा सूर्यको आराधना गरेको थियो। तीन लोकलाई नै संहार गर्ने आयुधको प्राप्ति र आफूले चाहेको

वृक्षस्कन्धालम्बिपादोऽधोमुखो धूममापिबन्।
एवं बहुगते कालेऽमोघं शस्त्रमुपस्थितम्।।२६।।
प्रेषितं भानुना तस्मै राक्षसाय तपस्यते।
व्योमव्यापि यस्य तेजो ददर्श स विनायकः।।२७।।
शीघ्रमुड्डीय जग्राह गरुत्मानिव पन्नगम्।
तदा विस्मयमापेदे काशिराजो महामनाः।।२८।।
तर्कयामास मनसि लाभे हानौ च जीवने।
नास्ति दैवातिरेकेण निमित्तं भुवनत्रये।।२९।।
मम नैवाऽभवत् प्राप्तिः सहसा तस्य तस्य या।
ज्ञातुं तदस्त्रसामर्थ्यं तोलयित्वाऽक्षिपच्च सः।।३०।।
ऊर्ध्वङ्गतं तदैवाशु रवं कृत्वा भयानकम्।
धूम्राक्षे पतितं तत्तु स तदैव द्विधाऽभवत्।।३१।।
गण्डशैला द्रुमास्ताभ्यां खण्डाभ्यां चूर्णिता भृशम्।
धनुः पञ्चशतं पृथ्वी पतद्भ्यां व्यापिता तदा।।३२।।
ततस्तस्य सुतौ ख्यातौ जघनो मनुरेव च।
शुश्रूषायां रतौ तस्य पितरं वीक्ष्य तादृशम्।।३३।।
क्रोधाविष्टौ ददृशतुस्तं विनायकमन्तिके।
दुद्रुवतुः प्रसार्यैवं वक्त्रं कालान्तकोपमम्।।३४।।
बटुमानीय पितरं कथं घातितवानसि।
इत्यूचतुः काशिराजं रोषाविष्टौ निशाचरौ।।३५।।
रक्षितोऽसि पुरा पित्रा मम पूर्वं नरान्तकात्।
तं मारयित्वा यत्नेन कथं जीवसि रे नृप।।३६।।

क उवाच

इत्याकर्ण्य नृपो वाक्यं चकम्पे भृशविह्वलः।
तर्कयामास मनसि कथमानीतवानहम्।।३७।।
नन्दनं कश्यपस्यैनमपस्मारमिव स्थितम्।
क्रुद्धो नरान्तकश्चेन्मे बलाद् राज्यं ग्रहीष्यति।।३८।।
तदा मे रक्षिता कः स्यात् ततः शपथमारभत्।

ठाउँमा जानसक्ने क्षमताको प्राप्तिजस्ता मनका कामनालाई फलीभूत गराउन धूम्राक्षले कठोर तपस्या गरेको थियो। उँधोमुन्टो लगाएर तपस्या गर्ने त्यस राक्षसका खुट्टाहरूले विशाल वृक्षका हाँगाहरू छोइरहेका थिए र त्यो धूँवामात्र पिएर तपस्या गरिरहेको थियो। धेरै दिन बितेपछि सूर्यले पठाएको अमोघ अस्त्र त्यसले प्राप्त गर्‍यो । त्यस अस्त्रबाट आकाशमा चारैतिर ठूलो तेज फैलिएको थियो। अस्त्रको तेजलाई श्रीगणेशले देख्नुभयो। उहाँले तुरुन्त रथबाट ओर्लेर गरुडले सर्प समातेझैं त्यो अस्त्र समात्नुभयो। त्यो देखेर काशिराज ठूलो आश्चर्यमा परे। तिनले मनमनै भने- 'जीवनमा लाभ र हानि दुवै कुरा हुन्छन् । यी सबै गर्ने गराउने दैव नै हो।।२४-२९।। मैले कति पटक यो बाटो ओहोरदोहोर गरें तर धूम्राक्षलाई भेटिनँ ।' त्यस बेला बालक श्रीगणेशले त्यसको सामर्थ्य पहिचान गर्न सूर्यनारायणबाट प्राप्त त्यो अस्त्रलाई आकाशतर्फ फ्याँकिदिनुभयो। त्यो अस्त्र धूम्राक्षमाथि खस्दा त्यसको शरीर दुई टुक्रा भयो । धूम्राक्षका शरीरका टुक्राहरू पाँच सय धनुको लम्बाइसम्म फैलिएका थिए । पिताको सेवामा नित्य लागिरहने धूम्राक्षका छोरा जघन र मनु पिताको त्यो हालत देखेर अत्यन्त रिसाए । त्यस बेला तिनले आफ्ना साम्नु श्रीगणेशलाई देखे। उहाँलाई देखेपछि प्रलयकालका यमराजले झैं मुख फैलाई खान गर्दै दौडिए । तिनले काशिराजलाई समातेर भने – किन तिमीले यो बच्चा ल्याएर यसबाट हाम्रो पितालाई मरायौ ? पुरानो समयमा नरान्तकले तिमीमाथि अत्याचार गर्दा मेरा पिता धूम्राक्षले तिम्रो रक्षा गर्नुभएको थियो । आज बडो प्रयत्नले तिमीले उहाँलाई मराएका छौ तिमी कृतघ्न रहेछौ ।।३०-३६।।

**ब्रह्माजीले भन्नुभयो** – 'ती दानवहरूका कुरा सुनेर काशिराज अत्यन्त व्याकुल भएर काँप्न थाले । तिनले मनमनै भने- मैले बच्चालाई किन लिएर आएँ। यो मेरा लागि मृगी रोगजस्तै भयो। नरान्तकले रिसाएर मेरो राज्यलाई अपहरण गर्ने परिस्थितिमा कसले मेरो रक्षा गर्थ्यो ?'

### नृप उवाच

एतदर्थं मयाऽऽनीतो नैवायमर्भक: क्वचित्।।३९।।

ब्राह्मणेश्वरयोरत्र शपथो मे निशाचरौ !
पुरोहितस्य पुत्रोऽयं विवाहार्थं समाहृत:।।४०।।

न विघ्नं कुरुतं तत्र नीयतां बालको ह्ययम्।
इत्यस्य वचनान्ते स मुनिपुत्रो जगाद तम्।।४१।।

कथं बद्ध्वा शत्रुहस्ते शिशुं मां त्वं प्रयच्छसि।
अदितिं कश्यपं वापि वदिष्यसि किमुत्तरम्।।४२।।

क्रुद्धश्चेत् कश्यपस्त्वां हि कुर्याद् भस्म न संशय:।
एवं वदति तस्मिँस्तु बालके मुनिनन्दने।।४३।।

भक्षितुं तं समायातौ विडालौ मूषकं यथा।
प्रसार्य वदनं बालो घोरं शब्दमथाकरोत्।।४४।।

चकम्पे च त्रिभुवनं तौ च निश्वासयोगत:।
सम्प्राप्तौ मेघपटलं वात्ययैव यथा तृणम्।।४५।।

मुहूर्तद्वितये जाते व्यस्तौ द्वौ तौ निपेततु:।
नरान्तकस्य नगरे जघनो मनुरेव च।।४६।।

गिरिशीर्षे गण्डशैलौ महावातेरितौ यथा।
पतद्भ्यां तच्छरीराभ्यां चूर्णितानि गृहाणि च।।४७।।

मुखहस्तरवा आसन् हाहाकारो महानभूत्।
किमिदं किमिदं दूता धावमाना ययुस्तदा।।४८।।

मृतौ धूम्राक्षतनयौ श्रुत्वा सम्यग् व्यलोकयन्।
मच्चेतनौ च तौ दृष्ट्वा सावधानावकुर्वत।।४९।।

दूतांस्तावूचतु: सर्वं वृत्तान्तमनुपूर्वश:।
वधं पितु: काश्यपेयात् तस्य श्वासान्निपातनम्।।५०।।

त्यसपछि शपथ खाँदै भने - हे मित्र हो ! मैले यो बच्चालाई तपाईंहरूमाथि आक्रमण गराउन भनेर ल्याएको होइन ।३७-३९। हे निशाचरहरू! तपाईँहरूलाई विश्वास दिलाउन ब्राह्मण र ईश्वरलाई साक्षी राखेर म जस्तो शपथ खान पनि सक्छु। पुरोहितका छोरा हुन्, छोराको विवाह निधो गरेका कारण म यिनलाई लिएर आउँदै थिएँ ।।४०।। यी बच्चा हुन्, केही पनि जान्दैनन् । तपाईँहरूले मेरो मंगल कार्यमा विघ्न नगर्नुहोस् । तपाईँहरूलाई शंका लाग्छ भने यी बालकलाई लिएर जानुहोस्। राजाका यस्ता कुरा सुनेर श्रीगणेशले भन्नुभयो- के मलाई बाँधेर शत्रु दानवका हातमा दिनुहुन्छ त ? अब मेरा बुबा कश्यप र माता अदितिलाई हाम्रो छोरा कहाँ गयो भन्दा के उत्तर दिनुहुन्छ ? ।।४०-४२।। मेरो पिता कश्यप रिसाउनुभयो भने उहाँले तपाईँलाई खरानी बनाउनुहुनेछ, यसमा कुनै सन्देह छैन। यसरी श्रीगणेशले भनिरहनुहुँदा ती दुई भाइ राक्षस दुइटा बिराला एउटो मुसोमाथि झम्टेझैं श्रीगणेशमाथि जाइलागे । त्यस बेला बालक श्रीगणेशले आफ्नो मुख फैलाएर डरलाग्दो गर्जन गर्नुभयो।।४३-४४।। उहाँको डरलाग्दो गर्जनबाट ती राक्षससहित तीन लोक नै कम्पायमान भए। आँधीबेहरीले सुकेका पातलाई उडाएर टाढै पुऱ्याएझैं ती राक्षस पनि श्रीगणेशको श्वासप्रश्वासको वेगमा परेर आकाशमा उडिरहेका थिए। चार घडीको समय बितेपछि बल्ल ती दुई निशाचर जघन र मनु नरान्तकको नगरनेर भुइँमा पछारिए।।४५-४६।। हावाको वेगले भुइँमा खस्दा ती राक्षसहरू पर्वतको शिखरबाट चट्टान खसेझैं खसेका थिए । आकाशबाट भुइँमा पछारिँदा तिनका शरीरको स्पर्शले नगरका अनेक घरहरू चूर्ण-चूर्ण भएका थिए। मानिसहरू मुख फैलाएर रुँदै हातले ताली पिटेर दु:ख व्यक्त गरिरहेका थिए। चारैतिर हाहाकार छाएको थियो। त्यसै बेला के भयो के भयो ? भन्दै दौडेर धूम्राक्षका दूतहरू आए।।४७-४८।। धूम्राक्षका छोरा जघन र मनुलाई सबैले मरणासन्न अवस्थामा देखे। प्राण जान लागिरहेको अवस्थामा तिनले वृतान्त सोधेपछि ती दूतहरूलाई सबै वृत्तान्त सुनाए। कश्यपका पुत्र श्रीगणेशको श्वासप्रश्वासबाट आकाशमा उड्नु, त्यहाँबाट भुइँमा खस्नु र मरणासन्न अवस्थामा पुग्नुजस्ता

स गच्छति स्यन्दनेन काशिराजेन संयुतः।
एवं दूता निशम्यैनं नरान्तकमथाब्रुवन्।।५१।।

पितृव्यं निहतं श्रुत्वा सापराधं नरान्तकः।
ऋषिपुत्रं तथा यान्तं काशिराजेन संयुतम्।।५२।।

क्रोधेनारक्तनयनः पुरः पश्यन्निशाचरान्।
आज्ञापयत् तमानेतुं सहस्त्रप्रमिताँस्तदा।।५३।।

धृत्वाऽऽनेयो मुनेः पुत्रो युद्धकृच्चेत् स हन्यताम्।
काशिराजरथो वाऽपि शीघ्रं गच्छन्तु राक्षसाः।।५४।।

आज्ञामात्रेण ते जग्मुस्त्वरया वातरंहसः।
काश्यपेयञ्च नृपतिं ददृशुस्ते च तौ च तान्।।५५।।

ततो विनायकश्चक्रे भीमशव्दं भयावहम्।
ततो निशाचराः पेतुस्त्यक्त्वा प्राणाँस्तु केचन।।५६।।

केचित् पलायिताः केचिद् भग्नपादाः प्रपेदिरे।
केषाञ्चिन् मस्तका भिन्नाः केचिच्छीर्णोदराः शरैः।।५७।।

भग्नास्या भग्ननेत्राश्च भग्नोरुबाहवः परे।
प्रपलाय्य गता ये तु ह्यागतास्ते नरान्तकम्।।५८।।

उदन्तं सर्वमाचख्युर्विनायककृतं तदा।।५९।।

घटनाहरूका साथै काशिराजका साथमा एउटा बालक रथमा सवार भएर काशीतर्फ जान लागेको वृतान्तसमेत दूतहरूले नरान्तकलाई बताए।।४९-५१।। नरान्तकले आफ्ना कान्छा बुबा धूम्राक्षको मृत्यु भएको सुनी ऋषिपुत्र श्रीगणेशलाई काशिराजका साथ काशीतर्फ जान लागेको थाहा पाएर रीसले आँखा राता गराई हजारौंको संख्यामा रहेका राक्षसहरूतर्फ हेर्दै ती बालकलाई समातेर ल्याउन आज्ञा दियो । त्यसले भन्यो - तिमीहरू गएर त्यो बालकलाई समाती यहाँ ल्याउने काम गर। यदि त्यसले तिमीहरूसँग युद्ध गर्छ भने युद्धमा त्यसलाई मार र काशिराजको रथलाई पनि टुक्रा-टुक्रा पारिदेऊ।।४९-५४।। नरान्तकको आज्ञा सुनेर त्यसका सैनिकहरू रथका पछि दौडे। धेरै पर गएपछि तिनले काशिराज र श्रीगणेशलाई देखे। त्यसैगरी श्रीगणेश र काशिराजले पनि तिनीहरूलाई देख्नुभयो ।।५५।। श्रीगणेशले आफ्ना पछि राक्षसहरू आइरहेको देखेर डरलाग्दो गर्जन गर्नुभयो। उहाँको गर्जनबाट ती राक्षसमध्ये केहीले प्राणत्याग गरे, केही भागे, कसैका खुट्टा भाँचिए, कसैका टाउका छिन्नभिन्न भए, कसैका पेट फुटे, कसैका मुखमा घाउ लाग्यो, कसैका आँखा फुटे र कसैका जाँघ र हातहरू टुक्रा-टुक्रा भए। जुन राक्षस ज्यान जोगाएर पहिल्यै भागेका थिए, तिनले नरान्तकका समीपमा गएर श्रीगणेशको विषयमा सम्पूर्ण वृतान्त सुनाए।।५६-५९।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते निशाचरवधो नाम द्वादशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'निशाचरहरूको संहार' शीर्षकान्वित बाह्रौं अध्याय पूर्ण भयो ।।१२।।

ॐ

## त्रयोदशोऽध्यायः

## { १३ अध्याय }

दूता ऊचुः

विनायकं रथस्थं तमाज्ञां प्राप्य गता वयम्।
सर्वैरेव तदा दृष्टः कृतान्तसदृशस्तु सः।।१।।

सर्वे निशाचराः स्वामिन् ! मृतास्तद्भीतितोऽनघ !
वयं तव प्रसादेन जीवन्तस्त्वां समागताः।।२।।

ईश्वरीयकृपायोगात् सिंहवृन्दाद् गजा इव।
त्रैलोक्ये तु पुमान् नास्ति यो युध्येत् सह तेन वै।।३।।

क उवाच

इत्थं निशम्य तद्वाक्यं जगदे स नरान्तकः।
किं वा वदथ बालिश्यात् क्व बालः क्व नरान्तकः।।४।।

किं कर्तव्यं पतङ्गेन प्रलयानलसन्निधौ।
मेरुगिरिः पतेत् किं वा खनता मूषकेण च।।५।।

ततश्चाज्ञापयद् दैत्यान् काशिराजपुरीं प्रति।
लुण्ठनं तत्र कर्तव्यं येन व्यग्रो भवेन् नृपः।।६।।

तस्मिन् व्यग्रे सोऽपि भवेत् कश्यपस्य सुतोऽपि च।
नो चेदुभौ निहन्तव्यौ सर्वैः सर्वप्रयत्नतः।।७।।

ततो ददौ महार्हाणि तेभ्यो रत्नान्यनेकशः।
वस्त्राणि च विशिष्टानि शस्त्राणि विविधानि च।।८।।

ते तं तदा नमस्कृत्य ययुः काशीशपत्तनम्।
परस्परं समूचुस्ते दिक्चक्रं व्याप्य सेनया।।९।।

तत्र योऽभून् महासेनानीरिवं सोऽदिशत् तदा।
यस्य दृष्टिगतो दैत्याः ! स तु तेन निहन्यताम्।।१०।।

अन्यथा मम दण्ड्यः स तस्याहं प्राणनाशकृत्।
एवं तेन समादिष्टा दैत्या जग्मुर्दिशो दश।।११।।

**दूतहरूले भने** - हे राजा नरान्तक ! हामीहरू हजुरको आज्ञा पाएर रथमा रहेका श्रीगणेशका सामु पुग्यौं। त्यस बेला हामी सबैले ती श्रीगणेशलाई यमराजकै आकारका देख्यौं। तिनको गर्जनबाट धेरैजसो राक्षसहरू मरे। तिनीसँग डराएर धेरै राक्षसहरूको दुर्गति भयो। हामी हजुरको कृपाले बाँचेर यहाँ आउन पाएका छौं। सिंहको स्वर सुनेर हात्ती भागेझैं हामी पनि भाग्यौं। त्यस बालकको तुलना त्रिलोकीको कुनै पुरुषसँग हुन सक्दैन। कुनै पनि वीर त्यो बालकसँग युद्ध गर्न समर्थ छैन ।।१-३।।

**ब्रह्माजीले भन्नुभयो** - दूतहरूका कुरा सुनेर नरान्तकले भन्यो - 'हे दूतहरू ! तिमीहरू कस्तो मूर्खतापूर्ण कुरा गरिरहेका छौ ? कहाँ त्यो बच्चा ? कहाँ म नरान्तक ? मसँग त्यसको तुलना हुनसक्छ ? एउटा जाबो पतङ्ग प्रलयकालको आगोमा डटेर उभिन सक्छ? के मूसाले खन्दा मेरुपर्वत खस्न सक्छ?' यति भनेर नरान्तकले दैत्यहरूलाई आज्ञा दियो - 'तिमीहरू काशी नगरीमा गएर काशिराजको दरबारमा लूटपाट मच्चाऊ, जसबाट त्यो काशिराज आकुल-व्याकुल बन्न सकोस् । काशिराज आकुल भएपछि कश्यपको छोरा गणेश पनि व्याकुल हुनेछ। यदि त्यसो गर्न सक्दैनौ भने तिमीहरू सबैले मिलेर अनेक थरि प्रयत्नबाट काशिराज र श्रीगणेशलाई मारिदेऊ।' यति भनेर नरान्तकले आफ्ना सैनिकहरूलाई उपहारको रूपमा बहुमूल्य रत्न, मूल्यवान् वस्त्र र अनेक विशिष्टखाले शस्त्र प्रदान गर्‍यो।।४-८।। त्यसपछि दूतहरू पनि नरान्तकलाई प्रणाम गरेर काशीमा पुगे। सारा काशी नगरीलाई आफ्नो सेनाले ढाकेर तिनीहरू आपसमा विचारविमर्श गर्न थाले । तीमध्येमा जुन राक्षस सेनापतिको पदमा थियो, त्यसले आदेश दियो- जसले जहाँ भेटाए पनि काशिराज र गणेशलाई मार। यदि तिमीहरूले त्यसो गर्दैनौ भने मबाट दण्ड पाउनेछौ र तिमीहरूको प्राणनाश पनि हुनेछ। यसरी आदेश पाएका ती दैत्यहरूले दसै दिशा ढाके।।९-११।। त्यसबैला रथमा सवार भई काशिराजका साथ श्रीगणेश पनि काशीमा पुग्नुभयो।

विनायकस्तेन राज्ञा रथस्थेन गतः पुरीम्।
नानाध्वजपताकाभिश्चित्रितां रङ्गमालया।।१२।।

वाद्यदुन्दुभिनिर्घोषैः पूजाद्रव्यैरनेकधा।
अमात्या नागराश्चैव प्रतिजग्मुर्विनायकम्।।१३।।

उपचारैः षोडशभिर्भक्त्या सर्वेऽप्यपूजयन्।
राजानञ्च ततो जग्मुर्नगरीमन्तराऽखिलाः।।१४।।

तस्मिन् प्रविष्टे प्रासादान् रुरुहुर्योषितोऽखिलाः।
काश्चिद् द्रष्टुं वहिर्याता व्यस्तालङ्करणाम्बराः।।१५।।

अनादृतपितृभ्रातृभर्तृमातृसुहृज्जनाः।
त्यक्त्वा भोजनपात्रञ्च भुक्तवन्तं पतिञ्च काः।।१६।।

एका निरुद्धा सर्वैः सा ध्यात्वा देवं विनायकम्।
भक्त्या निर्मील्य नयने जहौ प्राणाँस्तदद्भुतम्।।१७।।

लाजवर्षैः पुष्पवर्षैर्ववर्षुस्तं कुमारिकाः।
विमानस्था देवगणा ददृशुस्तं महोत्सवम्।।१८।।

ब्राह्मणाः परमात्मानं पश्यन्ति स्म विनायकम्।
क्षत्रियास्तं महावीरं पश्यन्ति स्म रणोत्सुकम्।।१९।।

वैश्यास्तं ददृशुः सर्वे रुद्रं संहारकारकम्।
शूद्रास्तं हरिरूपेण नृपरूपेण चालुकन्।।२०।।

काशिराज काशीमा पुग्नासाथ अनेक थरि ध्वजा-पताका, फूलमाला, बाद्यबादन र पूजाका सामग्री लिएर मन्त्रीगण र नगरवासीहरू राजा र विनायकको स्वागत गर्न आए। सबैले षोडशोपचारले श्रीगणेशको पूजा गरे र राजाको पनि सत्कार गरे। पूजा सकिएपछि सबैले काशी नगरीभित्र प्रवेश गरे। यिनीहरू रथमा सवार भई काशीका गल्लीहरूमा प्रविष्ट भएपछि अत्यन्त खुसी भएका काशीका सुन्दरीहरूले आ-आफ्ना घरका छतबाट बालक श्रीगणेशलाई देखे। कसैले आफ्ना महलको छतहरूबाट दर्शन गरे, कसैले कोठामा बसिरहेका अवस्थामा श्रीगणेश आएको थाहा पाएर झ्यालबाट दर्शन गरे। केही युवतिहरूले गहना र लुगा लगाइरहेको बेला श्रीगणेश आउनुभएको थाहा पाएर आधा लुगा र गहना लगाई दर्शन गर्न आए। कतिपय नारीहरू बाबुआमा, दाजुभाइ, श्रीमान् र मित्रहरूले बाहिर गल्लीमा नयाँ मान्छे हेर्न जान हुँदैन भन्दा पनि अटेर गरी गएर श्रीगणेशको दर्शन गरे। कुनै युवतिहरू भोजन गर्दागर्दै आधा भोजनको थाली छोडेर बाहिर आए। कुनै सुन्दरीहरू आफ्ना पतिलाई खुवाइरहेको बेला भोजन टक्र्याएर गणेशको दर्शन गर्न दौडिए। एउटी गणेशको दर्शन गर्न आतुर सुन्दरीलाई परिवारका मानिसले श्रीगणेशको दर्शन गर्न जान दिएनन्। त्यसै पीरले तिनले आफ्नो कोठाभित्र बसेर श्रीगणेशको ध्यान गरिन्। भक्तिपूर्वक आँखा चिम्लिन् र मेरा प्रभु हे श्रीगणेश ! भनी सम्बोधन गर्दै प्राणत्याग गरिन्। त्यो एउटा अद्‌भुत घटना थियो।।१२-१७।। भगवान् श्रीगणेशको रथ गल्लीमा अगाडि बढिरहेको थियो। कुमारी सुन्दरीहरूले घर-घरबाट फूल र लावा बर्साइरहेका थिए। त्यस बेला आकाशमा विमानमा रहेका देवताहरूले काशीमा भएको श्रीगणेश भगवान्को स्वागतमहोत्सवलाई आनन्दपूर्वक नजर गरे।।१८।। ब्राह्मणहरूले श्रीगणेशलाई परमात्मा जानेर दर्शन गरे। क्षत्रियहरूले श्रीगणेशलाई महावीर मानेर दर्शन गरे। वैश्यहरूले संहारका नायक रुद्र भगवान् सम्झेर दर्शन गरे। शूद्रहरूले श्रीगणेशलाई राजा र नारायणको रूपमा दर्शन गरे। भनुको तात्पर्य जस-जसका मनमा जस्ता भावना थिए त्यस्तै स्वरूपका श्रीगणेशलाई सबैले देखे। जस्तै स्फटिकमा रातो रङ्गको छाया पर्दा त्यो रातो देखिन्छ, सेतो रङ्गको छाया पर्दा झन सेतो देखिन्छ, पहेंलो रङ्गको छाया पर्दा पहेंलो

यस्य यस्य यथाभावस्तादृशं सोऽभ्यवीक्षत।
यथा रक्ते सिते पीते स्फटिकस्तादृशाकृति:।।२१।।

एक एव पुमान् यद्वत् पिता भ्राता च श्यालक:।
ततो विनायकोऽपश्यत् पुरमध्ये महासुरौ।।२२।।

विघण्टं दन्तुरं रन्तुं समाह्वयत सादरम्।
तौ दैत्यौ दुष्टमनसौ बालकैः समुपागतौ।।२३।।

आलिङ्गितुं कृतोद्योगौ तेन ज्ञातौ दुराशयौ।
आलिङ्ग्य चूर्णयामास पुष्पं हस्तगतं यथा।।२४।।

त्यक्तौ भूमिगतौ तौ तु रेजतुर्दशयोजनौ।
काशिराजश्च लोकाश्च दृष्ट्वाश्चर्यं तु मेनिरे।।२५।।

मुमुचुः पुष्पवर्षाणि देवास्तस्मिन् नभोगता:।
साधु-साध्वितिशब्दैश्च जयशब्दैश्च केचन।।२६।।

मुनयश्चैव देवाश्च तुष्टुवुस्तं विनायकम्।
मायामानुषरूपेण चरन्तं बाललीलया।।२७।।

शक्रादीनामजेयौ यौ तावनेन हि चूर्णितौ।
ततो वीथीरतिक्रम्य रथो यातोऽग्रतोऽग्रत:।।२८।।

ततोऽन्यावसुरौ दृष्टौ हन्तुमेनं समीयतु:।
पतङ्गविधूलौ नाम्ना वात्यारूपौ महाबलौ।।२९।।

ततो व्याकुलितो लोको रजसाच्छादितोऽखिल:।
प्रासादा वृक्षसङ्घाश्च पतिता वसुधातले।।३०।।

देखिन्छ त्यस्तै स्वरूपका गणेशलाई सबैले देखे । अर्थात् त्यहाँका मानिसहरूका मनमा जस्ता भावना थिए, तदनुसार उनीहरूले श्रीगणेशको आकार देखे।।१९-२०।। संसारमा एउटै मानिसलाई कसैले बाबु भन्छ, कसैले भाइ भन्छ र कसैले साला पनि भन्छ । त्यस्तै श्रीगणेशलाई पनि कसैले राजाको भावले, कसैले ब्राह्मणका भावले र कसैले ईश्वरका भावले देखे। त्यसै बेला श्रीगणेशले काशी नगरीको माझमा दुवटा महादैत्यलाई देख्नुभयो।।२१-२२।। तीमध्ये एउटाको नाम विघण्ट थियो भने अर्कोलाई दन्तुर भनिन्थ्यो। श्रीगणेशले ती दुबैलाई युद्धका निमित्त आह्वान गर्नुभयो। ती दुबै दैत्यबालकलाई साथमा लिएर आए। तिनीहरू श्रीगणेशलाई आलिङ्गन गर्छौं भन्दै आएका थिए। उहाँले ती दुबैको दुराशयलाई बुझ्नुभयो र आलिङ्गन गर्दा हात्तीले फूललाई किचेझैं किचेर तिनीहरूलाई मारिदिनुभयो।।२३-२४।। श्रीगणेशद्वारा किचिएका ती दुवै दैत्यका शरीरका अङ्ग-प्रत्यङ्ग दश योजनसम्म फैलिएका थिए । श्रीगणेशको यो लीला देखेर काशीनिवासी नरनारीहरू र स्वयं काशिराज पनि आश्चर्यचकित भए ।।२५।। आकाशमा विमानमा रहेर श्रीगणेशको लीला हेरिरहेका देवताहरूले पनि फूल वर्षाए, साधुवाद गरे र जयजयकार गरे।।२६।। मुनि र देवताहरूले मायाद्वारा मनुष्य बनेर बाललीला गर्नुहुने श्रीगणेशको श्रद्धापूर्वक स्तुति गर्दै भने - 'इन्द्र आदि देवताहरूले पनि जित्न नसकिने पराक्रम भएका विघण्ट र दन्तुरलाई बालक प्रभुले एकै पटकको आक्रमणमा चूर्णचूर्ण बनाइदिनुभयो'। त्यसपछि गल्लीहरू पार गर्दै श्रीगणेशको रथ तीव्र वेगमा अगाडि बढिरहेको थियो। त्यसै बेला श्रीगणेशले दुई दानवलाई देख्नुभयो। एउटाको नाम पतङ्ग थियो र अर्काको नाम विधूल। आँधीबेहरीको रूप लिएर डुल्ने ती दुबै अत्यन्त बलशाली थिए। तिनीहरू श्रीगणेशका समीपमा आए। बालक श्रीगणेशका सामु पर्वताकारका डरलाग्दा दानवहरूलाई आएको देखेर काशीका मानिसहरू व्याकुल भए। ती राक्षसको आगमनमा तिनका खुट्टाबाट उडेको धूलोले पूरा वातावरण अन्धकारमय बन्यो। तिनीहरूको वेगबाट महल र रुखहरू पनि भुइँमा लड्न थाले।।२७-३०।। घर-घरका पर्खालहरू

प्रावारनिचया भान्ति गगने पक्षिसन्निभाः।
केषाञ्चिन् मस्तकात् पेतुरुष्णीषाणि दिशो दश।।३१।।

कोलाहलो महानासीन् न प्राज्ञायत किञ्चन।
रथोऽपि गगनं गन्तुमुद्यतस्तम्भितोऽमुना।।३२।।

निःसारमनुजाः पेतुः सद्योजाता इवावनिम्।
ततोऽतिबलिनौ ज्ञात्वा दधार शिखयोरुभौ।।३३।।

एकेन मुष्टिना देवो भ्रामयित्वा बलाच्चिरम्।
तत्याज स धरापृष्ठे व्यसू तौ ददृशे जनः।।३४।।

तर्कयामास देवोऽयं कश्यपस्य सुतो बली।
यतोऽनेन हतावेतावसुरौ योजनायतौ।।३५।।

अस्मिन् वयसि कस्यापि नेदृशं वीक्ष्यते बलम्।
एतावद्दृष्टसामर्थ्यं काशिराजोऽप्यनन्दत।।३६।।

अवप्लुत्य रथात् तस्मात् तं ननाम विनायकम्।
उवाच च महायोगिन् ! बालस्यापि न ते कृतिः।।३७।।

ब्रह्मादिज्ञानविषया कुतः स्याच्चर्मचक्षुषः।
जगदुत्पादकोऽनेकरूपोऽस्यवनहेतवे।।३८।।

न सङ्ख्या वर्तते स्वामिन्नवतारगता तव।।३९।।

ततोऽग्रतो रथो यातस्त्वरया नृपतेर्गृहम्।।४०।।

ततो ददर्श बालोऽसौ दैत्यं पाषाणरूपिणम्।
ततोऽहनत् परशुना शतधा सोऽभवत् तदा।।४१।।

तस्माद् विनिःसृतो भीमो दंष्ट्रादशनभासुरः।
श्मश्रुलो दीर्घकायश्च पुरुषः पिङ्गलो महान्।।४२।।

ततस्ते बालकाः सर्वे लोकाश्चान्येऽपि दुद्रुवुः।
तञ्चापि न्यहनन् मुष्ट्या स चापि न्यपतद् भुवि।।४३।।

अमंसत जना बालं भगवन्तं धृताकृतिम्।
ततो राजा हृष्टमना रथादुत्तीर्य बालकम्।।४४।।

आकाशमा चरा उडेझैं चारैतिर उड्न थाले। केही मानिसका टाउकाबाट पगरी खसे। चारैतिर कोलाहल भयो। कसैले केही देख्ने वातावरण थिएन। ती दानवहरूका वेगबाट आकाशमा उड्न लागेको श्रीगणेशको रथलाई स्वयं श्रीगणेशले समातेर रोक्नुभयो। निर्बल मानिसहरू त त्यस बेला भर्खर जन्मेका बच्चाझैं जमिनमा लडिरहेका थिए। श्रीगणेशले ती दैत्यहरूलाई अत्यन्त बलवान् छन् भन्ने जानेर ती दुबैका टुप्पी समाउनु भयो। श्रीगणेशको एउटा मुड्कीको प्रहारबाट ती दुबै दैत्य चक्कर खाएर भुइँमा लडे र तत्काल तिनले प्राणत्याग गरे।।३१-३४।। मानिसहरूले यो घटना देखेर भने- 'यी त सामान्य बालक होइनन्, कश्यप ऋषिका बलवान् पुत्र हुन्। अन्यथा यति सानो बालकले एक योजनसम्म फैलिने शरीर भएका यस्ता दानवहरूलाई कसरी मार्न सक्थे ? यो उमेरमा यस्तो बल कसैको पनि देखिँदैन'। यता काशिराज पनि श्रीगणेशको यो सामर्थ्य देखेर अत्यन्त खुसी भए।।३५-३६।। तिनले रथबाट ओर्लिएर भगवान् श्रीगणेशलाई प्रणाम गरे। त्यसपछि हात जोडेर भने- 'हे महायोगी भगवन् श्रीगणेश! हजुर बालकरूपमा हुनुहुन्छ, तर हजुरको लीलालाई ब्रह्मा आदि देवताहरूले पनि राम्ररी जान्न सक्नुहुन्न भने मजस्तो चर्मचक्षु सामान्य मानिसले कसरी जान्न सक्दछु। हजुर संसारका उत्पादक हुनुहुन्छ, संसारको रक्षा गर्न अनेक रूप लिएर विचरण गर्नुहुन्छ। हे शाश्वत स्वरूपले शोभायमान श्रीगणेश प्रभु ! हजुरले कति अवतार लिनुभयो, तिनको कुनै संख्या छैन'।।३७-३९।। त्यसपछि त्यो रथ राजभवनका लागि तीव्र वेगमा अगाडि बढ्यो । त्यसै बेला एउटा दैत्य चट्टानको रूप लिएर श्रीगणेशका सामु आयो। त्यसलाई उहाँले बञ्चराले काटिदिनु भयो। त्यसको शरीरका सयौं टुक्रा भए। त्यसलाई मारेपछि अगाडि बढ्नु भएका श्रीगणेशका सामु डरलाग्दा दाँत एवं दाह्रा र लामा-लामा दाह्री एवं जुँगा भएको महाकाय पिङ्गलनामक राक्षस आइपुग्यो । सबै मानिस र बालबच्चाहरू त्यसलाई देखेर डराई चारैतिर भागे। श्रीगणेशले त्यसलाई पनि आफ्नो मुड्कीले प्रहार गरेर भुइँमा पछार्नुभयो ।।४३।। त्यसपछि सबै मानिसहरूले बालक श्रीगणेशलाई अवतारधारी भगवान् मानेर हृदयदेखि नै सम्मान गरे। यो घटनापछि खुसी

अन्तः प्रवेशयामास स्वयमादाय सत्वरम्।
रत्नवर्णमये स्वीये ह्यासने चोपवेश्य तम्।।४५।।

उपचारैः षोडशभिः प्रपूज्य च यथाविधि।
महार्हवस्त्राभरणैर्दिव्यैश्चैव सुगन्धिभिः।।४६।।

परमाह्लादसंयुक्तस्तुष्टाव च ननाम च।
अन्नञ्च षड्रसं नानापक्वान्नं व्यञ्जनान्वितम्।।४७।।

सुहृद्भिर्भोजयामास परमान्नमनेकधा।
ततो नानाफलान्याशु ददौ तेभ्यो नराधिपः।।४८।।

ततोऽष्टाङ्गञ्च ताम्बूलं रत्नकाञ्चनसंयुतम्।
ततः स्वयं बुभोजाशु शिशुभिः परिवारितः।।४९।।

ततः प्रस्वापयामास कृतसन्ध्याविधिञ्च तम्।
पर्यङ्के रुचिरे दीपवितानपरिशोभिते।।५०।।

स्वयं तदाज्ञया राजा सुष्वाप प्रियया सह।
अन्याप्तांश्चतुरः स्थाप्य जागराय तदन्तिके।।५१।।

भएका काशिराजले रथबाट ओर्लेर बालक श्रीगणेशलाई आफै समाती दरबारभित्र प्रवेश गराए। उनले रत्न र सुवर्णद्वारा तयार गरिएको बहुमूल्य आसनमा श्रीगणेशलाई बसाएर षोडशोपचारद्वारा विधिपूर्वक पूजा गरी बहुमूल्य, वस्त्र, गहना र दिव्य सुगन्ध टक्र्याए।।४४-४६।। राजपरिवारका सदस्यहरू र काशिराजले अत्यन्त आनन्दमा डुबेर भगवान् गणेशको स्तुति र वन्दना पनि गरे । त्यसपछि ६ प्रकारका रसले बनेका अनेक थरि व्यञ्जन र पकवान टक्र्याएर मित्रहरूका साथ बसी श्रीगणेशलाई भोजन गराए। अनेक पटक परम अन्न टक्र्याए । त्यसपछि अनेक थरि फलहरू प्रदान गरे।।४७-४८।। श्रीगणेशलाई भोजन गराएपछि काशिराजले अष्टगन्धले सम्पन्न रत्न र सुवर्ण मिसिएको पान टक्र्याए । त्यसपछि मात्र तिनले आफ्ना परिवारका मानिस र बालबच्चाहरूसँग भोजन गरे। सांयकालको सन्ध्याविधि सकेर विराजमान हुनुभएका श्रीगणेशलाई सुन्दर प्रकाश दिने बत्ती र चँदुवाले सुहाएको अत्यन्त राम्रो पलङ्गमा शयन गराए । आफू पनि श्रीगणेशको आज्ञा लिएर आफ्नी महारानीका साथ शयनकक्षतर्फ लागे । तिनले आफू शयन गर्न जानुभन्दा पहिले श्रीगणेशको सुरक्षाका लागि चारजना आफ्ना विश्वस्त मानिसहरूलाई श्रीगणेशको पहरा दिन लगाए ।।४९-५१।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते विघण्टदन्तूरवधो नाम त्रयोदशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'विघण्टर दन्तूरको वध' शीर्षकान्वित तेह्रौं अध्याय पूर्ण भयो ।।१३।।

ॐ

## चतुर्दशोऽध्यायः

क उवाच

ततः प्रभात उत्थाय शौचं कृत्वा यथाविधि।
चकार मज्जनं सोऽथ सन्ध्यां चक्रे यथाविधि।।१।।

होमं चकार समिधं स्थाप्य कृष्णाजिनं शुभम्।
निधाय दण्डं चिक्रीड बालकैः स विनायकः।।२।।

निशम्य कीर्तिं तत्रत्यो ब्राह्मणो वेदशास्त्रवित्।
धर्मदत्त इति ख्यातो मुनिपुत्रदिदृक्षया।।३।।

आगतो नृपवर्यस्य काशिराजस्य वेश्म सः।
राज्ञा सम्मानितः सोऽथ पप्रच्छ नृपसत्तमम्।।४।।

काऽसौ महाबलः पुत्रः कश्यपस्य वदस्व मे।
ततो लोका जगुरयं क्रीडते बालकैः सह।।५।।

तत उत्थाय विप्रोऽसौ पाणौ धृत्वाऽवदच्च तम्।
मम मित्रसुतस्त्वं हि श्रुता कीर्तिर्मया तव।।६।।

अतस्त्वां स्वगृहे नेतुमागतोऽहं न संशयः।
पुनीहि पादरजसा सर्वं नः सफलीकुरु।।७।।

परब्रह्मस्वरूपोऽसि परमात्मा परात्परः।
भूभारहरणार्थाय जातोऽसि कश्यपालये।।८।।

क्रीडामानुषरूपोऽसि जाने त्वां तत्त्वतोऽर्भक!
ततो विनायकः प्राह किमर्थं त्वमिहागतः।।९।।

आज्ञामात्रेण ते तात ! कथं नायामि तेऽन्तिकम्।
इत्युक्त्वा त्वरया यायाद् धर्मदत्तपुरःसरः।।१०।।

धूलिमुद्धूलयद्भिस्तैर्बालकैरनुगैर्बली।
मार्गे तु गच्छतस्तस्य नरान्तकसमीरितौ।।११।।

कामसंज्ञश्च क्रोधश्च द्वावेतौ राक्षसाधमौ।
परस्परं युद्ध्यमानौ हन्तुमन्तिकमागतौ।।१२।।

## { १४ अध्याय }

13/ ॐ3

( ब्रह्माजीले भन्नुभयो - बालक श्रीगणेश बिहान सबैरै जाग्नुभयो र विधिपूर्वक शौच सम्पन्न गरी स्नान गरेर यथाविधि सन्ध्या पनि गर्नुभयो । त्यसपछि मृगको चर्म बिछ्याएर समिधा हातमा लिई हवन गर्नुभयो । हवन सम्पन्न भएपछि हातमा दण्ड धारण गरी उहाँले बालकहरूका साथमा क्रीडा आरम्भ गर्नुभयो ।।१-२।। कश्यपनन्दन श्रीगणेशको कीर्ति सुनेर काशीनिवासी वेद र शास्त्र जान्ने धर्मदत्त नामबाट विख्यात एक जना ब्राह्मण उहाँको दर्शन गर्ने इच्छाले काशिराजको दरबारमा आए । काशिराजद्वारा सम्मानित धर्मदत्तले उनलाई सोधे- तपाईंको घरमा पाहुना बन्नुभएका कश्यप ऋषिका छोरा महाबली विनायक कहाँ हुनुहुन्छ ? मलाई बताउनुहोस् । यो कुरा सुनेर राजाको वरिपरि रहेका मानिसहरूले भने - ती बालक त यहाँका बालकहरूका साथ क्रीडा गरिरहेका छन् ।।३-५।। त्यसपछि धर्मदत्त ब्राह्मण उठे र श्रीगणेश खेलिरहेको ठाउँमा पुगे। श्रीगणेशको हात समातेर तिनले भने - बाबु ! कश्यप ऋषि मेरा मित्र हुनुहुन्छ। तिमी मित्रका छोरा हौ । मैले तिम्रो कीर्ति धेरै सुनें । त्यस कारण म तिमीलाई आफ्नो घर लिएर जान आएको छु । मेरो कुरामा शंका मान्नुपर्दैन । तिमीले आफ्नो पाउको धूलोद्वारा मेरो घर पवित्र बनाऊ र हामी सबैको जीवन सफल तुल्याइदेऊ। तिमी परब्रह्म परमात्माका स्वरुप हौ। तिमीलाई परात्पर भनिन्छ । पृथिवीको भार हरण गर्न कश्यपका घरमा छोरा भएर जन्मिएका छौ। हे बालक ! म तिमीलाई राम्ररी जान्दछु । तिमी मानिसका रूपमा छौ तापनि लीलाविहार गर्न आएका परमेश्वर हौ । त्यसपछि श्रीगणेशले भन्नुभयो - हे ब्राह्मण ! तपाईं आफै किन दुःख गर्नुभयो ? आज्ञा मात्र गर्नुभएको भए तपाईंको घर म आफै आउँथें । लौ जाऔं हिड्नुहोस् । यति भनेर बालक श्रीगणेशले धर्मदत्तलाई अगाडि लगाएर प्रस्थान गर्नुभयो ।।६-१०।। धूलो उडाइरहेका त्यहाँका बालकहरू श्रीगणेशका पछि-पछि क्रीडा गरिरहेका थिए । बाटामा जाँदा नरान्तकले पठाएका काम र क्रोध नामक दुई अधम राक्षस परस्पर लड्दै उहाँलाई मार्ने नियतले नजिकै आए ।।११-१२।। आपसमा लड्दा-लड्दै

युद्ध्यमानौ निपतितौ बालके दुष्टमानसौ।
खररूपौ यथा वह्निपतङ्गाविव दुर्मदौ।।१३।।
ततस्ते बालकाः सर्वे दुद्रुवुस्ते दिशो दश।
ततो विनायको धृत्वा तयोः पादौ बलेन सः।।१४।।
भ्रामयामास बहुधा पोथयामास भूतले।
ततस्तौ पतितौ भूमौ व्यसू लोका व्यलोकयन्।।१५।।
समकम्पत् त्रिभुवनं पतद्देहरवात् तदा।
लोकवार्तासु विश्वासं धर्मदत्तोऽन्वपद्यत।।१६।।
दृष्ट्वा तस्य महत् कर्म प्रत्यक्षेण महामुनिः।
ततो ययौ धर्मदत्तस्तेन साकं पुरःसरः।।१७।।
ददर्श कुञ्जरं मत्तं गूढरूपं महाबलम्।
इतस्ततो विद्रवन्तं जनं हन्तुं समुद्यतम्।।१८।।
इतस्ततो महावीराः पलायनपरा ययुः।
कोलाहलो महानासीज्जनानां तत्र धावताम्।।१९।।
रजसाऽव्यापि सकलं नीहारेणेव पर्वताः।
गजो यातो राजगजान् मत्तान् हन्तुं महाबलः।।२०।।
गजयुद्धं महाघोरं प्रासादस्था व्यलोकयन्।
व्यभञ्जरश्वशालान्ते दृष्ट्वा बद्धान् हयानपि।।२१।।
उद्बन्धना हया याता गजाश्च ककुभो दश।
धर्मदत्तो गृहीत्वा तं गृहान्तर्गतमुद्यतः।।२२।।
आस्फाल्य तत्करं बालो रुरोह करिणं बलात्।
बिभेद गण्डं सृणिना वारं वारं विनायकः।।२३।।
असृक्प्रवाहः परितो निपपात महीतले।
स गजो बृंहितं कृत्वा सर्वलोकभयावहम्।।२४।।
पतता तेन भग्नानि विस्तीर्णेनायतेन च।
सङ्ख्यातीतान्यगाराणि सर्वोपस्करवन्ति च।।२५।।
चकम्पे पृथिवी सर्वा सपर्वतवनाकरा।
ततोऽन्धकारे विगते तत्रेयुर्नागरा जनाः।।२६।।

पापी मन भएका ती दानवहरू गधाको रूप लिएर बालक श्रीगणेशमाथि जाइलागे । जसरी आगोका सामु गएर पतङ्गहरू डढ्छन् त्यसै गरी ती राक्षसहरू भुइँमा लडे । श्रीगणेशका पछि-पछि आएका धेरै बालकहरू त्यो भयानक दृश्य देखेर दसै दिशातिर लागे। त्यसपछि श्रीगणेशले ती दुवै राक्षसका खुट्टामा समातेर जोडले घुमाई भुइँमा पछार्नुभयो । भुइँमा पछारिएपछि निष्प्राण भएका तिनीहरूलाई संसारले चकित भएर हेर्‍यो। ती दानवहरू पछारिँदा भएको गर्जनबाट त्रिभुवन नै काँप्यो । त्यस बेलामात्र धर्मदत्तले संसारमा श्रीगणेशको विषयमा फैलिएको आश्चर्यजनक कथा साँचो रहेछ भन्ने ठाने ।।१३-१६।। महामुनि धर्मदत्त आफ्नो आँखाका सामु बालकका विचित्र कर्मको दर्शन गर्दै उहाँका साथ अगाडि बढ्दै गए । अगाडि बढ्दै जाँदा तिनले अत्यन्त बलशाली मत्त हात्ती देखे । त्यो हात्ती यता-उति घुम्दै सूँढ फैलाएर मानिसहरूलाई प्रहार गर्न उद्यत देखिन्थ्यो। त्यसलाई देखेर ठूला-ठूला वीरहरू पनि डरले भागिरहेका थिए। त्यहाँ अरू भागिरहेका मानिसहरूको पनि ठूलो कोलाहल थियो। कुहिरोले पर्वतलाई ढाकेझैँ सम्पूर्ण वातावरण धूलोले ढाकिएको थियो । त्यसपछि त्यो हात्ती राजाले पालेका हात्तीलाई मार्न अगाडि बढ्यो।।१७-२०।। त्यो मत्त हात्ती र काशिराजका हात्तीहरूको घोर सङ्ग्राम लाई घरका छतमा रहेर मानिसहरूले हेरिरहेका थिए । हात्तीको युद्धमा घोडा बाँध्ने तबेलाहरू भत्किए। बन्धनमुक्त भएका घोडाहरू चार दिशामा फैलिए । यो दृश्य देखेर धर्मदत्तले बालकलाई समाती कुनै घरमा लुकाउन खोजे। त्यस बेला भगवान् श्रीगणेश धर्मदत्तको हात झट्कारेर मदमत्त हात्तीको पिठ्यूँमा सवार हुनुभयो र त्यसको गण्डस्थल भेदन गर्नुभयो ।।२१-२३।। हात्तीको गालाबाट बगेको रगतको धारा धर्तीमा फैलियो । त्यो डरलाग्दो हात्ती सबैलाई भयभीत तुल्याउँदै ठूलो स्वरले चिच्यायो । श्रीगणेशको प्रहारबाट भुइँमा पछारिँदा त्यसले आफ्नो शरीरको आघातबाट सहरू सामग्रीहरूले परिपूर्ण घरहरू भत्कायो । पर्वत र वनसमेतले सुहाएको पृथिवी-मण्डल काँप्न थाल्यो। चारैतिर अन्धकार फैलियो । नगरवासी नर-नारीहरू त्यहाँ जम्मा भए ।।२४-२६।। डरलाग्दो हात्तीको शरीर र बालकको

भीतभीता महारौद्रे मृते तस्मिन् निरीक्ष्य तम्।
बालं तु बलिनो गत्वा तस्मादुत्तारयन् बलात्।।२७।।

धर्मदत्तः पुनश्चैनं कटावेवाऽभ्यधारयत्।
गृहमध्ये निनायाशु पुनरुत्पातशङ्कया।।२८।।

निवृत्ते त्वनिमित्ते स द्विजातिभ्यो ददौ धनम्।
पूजयामास चैवैनमुपचारैः पृथक् पृथक्।।२९।।

वस्त्रालङ्कारकुसुमैर्नानानैवेद्यसञ्चयैः।
भोजयामास विधिवत् सिद्धिबुद्धी उभे ददौ।।३०।।

दक्षिणार्थं धर्मदत्तो ननाम दण्डवत् क्षितौ।
उवाच च प्रसन्नात्मा हर्षगद्गदया गिरा।।३१।।

मम भाग्यं तु फलितं यद् दृष्टं चरणाम्बुजम्।
जगदीशो जगत्कर्ता जगत्साक्षी जगद्गुरुः।।३२।।

मम वाक्यादिहायात उद्धर्तुं मम पूर्वजान्।
एवं ब्रुवन्नेव मुनिः स्वासने सन्निवेशितः।।३३।।

विनायकेन देवेन पूजितो बहुभक्तितः।
ततोऽतिशुशुभे बालः सिद्धिबुद्धियुतो भृशम्।।३४।।

गङ्गागौरीयुतो यद्वच्छूलपाणिस्त्रिलोचनः।
एतस्मिन्नन्तरे तत्र जृम्भानाम्न्यागताऽशुभा।।३५।।

पीताम्बरधरा चारुकङ्कणा चारुभूषणा।
अतिदुष्टमनाः सा तु पत्नी धूम्राक्षरक्षसः।।३६।।

सोवाच मधुरां वाचं निधानमिदमुत्तमम्।
इत्यरिष्टानि जायन्ते तानि नश्यन्त्ययत्नतः।।३७।।

कथं चारु भवेद् भोगो मातापित्रोरमुष्य वै।
एवमुक्त्वा स्त्रियः सर्वा उवाच च विनायकम्।।३८।।

पराक्रम देखेर ती सबै भयभीत र चकित थिए। नगरवासीहरूले बालकलाई हात्तीबाट ओरालेर ल्याए ।।२७।। त्यसपछि धर्मदत्तले बालक श्रीगणेशलाई आफ्नो काखमा राखेर फेरि यहाँ उत्पात हुनसक्छ, बस्नु हुँदैन भनी आफ्नो घर पुऱ्याए ।।२८।। अचानक आइलागेको विपत्तिको निवारण भएपछि धर्मदत्तले अनिष्ट शान्तिका लागि ब्राह्मणहरू बोलाई धेरै धन दान गरे र बालक श्रीगणेशको पनि अनेक उपचारबाट पृथक्-पृथक् पूजा गरे ।।२९।। वस्त्र, अलङ्कार, फूल, माला, नाना थरि नैवेद्यहरूको सञ्चय टक्र्याएर धर्मदत्तले बालगणेशको पूजा गरेका थिए। त्यसपछि विधिपूर्वक तिनले श्रीगणेशलाई भोजन गराई दक्षिणाको रूपमा सिद्धि र बुद्धि नामक दुई कन्या प्रदान गरे ।।३०।। कन्यादानपछि धर्मदत्तले भुइँमा पल्टेर साष्टाङ्ग दण्डवत् प्रणाम गरे । प्रसन्न भएर हर्षले गद्गद वाणीबाट तिनले भने – 'हे बालक श्रीगणेश ! मेरो भाग्य आज फलीभूत भयो किनकि मैले तपाईंका चरणकमलको दर्शन पाएँ। जगत्का स्वामी, रचयिता, साक्षी र गुरु भगवान् श्रीगणेश मेरो सामान्य अनुरोधमा मेरा पूर्वजहरूको उद्धार गर्न यहाँ आउनुभयो ।' यसरी स्तुति गरिरहेका मुनिलाई श्रीगणेशले प्रसन्न भएर आफ्नै आसनमा राखी भक्तिपूर्वक सत्कार, सम्मान एवं अर्चना पनि गर्नुभयो। त्यसपछि सिद्धि र बुद्धिसहित विराजमान बालक श्रीगणेश अत्यन्त शोभायमान हुनुभयो।।३१-३४।। एकातर्फ गौरी र अर्कोतर्फ गङ्गालाई धारण गरेर त्रिलोचन भगवान् शङ्कर जसरी शोभायमान हुनुहुन्छ त्यसै गरी सिद्धि-बुद्धिसहित श्रीगणेश पनि सुहाउनुभएको थियो । यसै बीचमा त्यस ठाउँमा जृम्भा नामक एउटी नारी आइपुगिन् । बाहिरबाट ती नारीले पीताम्बर धारण गरेकी थिइन् । तिनका हातमा राम्रा चुराहरू थिए र शरीरमा पनि बहुमूल्य अलङ्कार धारण गरेकी थिइन् तर भित्रबाट भने ती साह्रै दुष्ट हृदयकी राक्षसी थिइन्। धूम्राक्ष राक्षसकी पत्नीका रूपमा चिनिएकी ती जृम्भाले मधुर वाणीद्वारा भनिन् – बाबु ! तिम्रा निमित्त तकिया लिएर आएकी छु, यसमा शिर राखेर शयन गर्दा अरिष्ट हुँदैन। तिमीलाई त पाइला-पाइलामा अरिष्ट भइरहेका छन् । यसको सहारा लिएर आराम गऱ्यौ भने ती सबै अरिष्ट समाप्त भएर जानेछन्। तिम्री माता

[illegible]न्यं मम विभो यज्जातं तव दर्शनम्।
[illegible]ोऽस्मि देवेश ! नानादुष्टविनाशनात्।।३९।।

[illegible] कुरु तैलेन सुगन्धेन महामते।
[illegible] ते मर्दयिष्यामि तैलमुद्वर्त्तनं तथा।।४०।।

[illegible]युक्ते ततस्तेन विषहस्ता समादधे।
[illegible] चरणौ तस्य विषोत्कर्षविधायिना।।४१।।

[illegible] जृम्भर्ता जृम्भा लोकास्तां साधु मेनिरे।
[illegible] भावदुष्टाऽशुभभावा पतिं यथा।।४२।।

[illegible] शरीरस्य दाह एवाभवन् महान्।
[illegible]नेन वुद्ध्वा तां दुष्टभावां निशाचरीम्।।४३।।

[illegible]फलेनाशु मस्तके तां जघान सः।
[illegible] सा पतिता भूमौ निजरूपं समास्थिता।।४४।।

[illegible]वाहमध्ये सा विस्तीर्णा योजनद्वयम्।
[illegible] लोकाश्च तदाश्चर्ययुता बभुः।।४५।।

पूजयामास विधिवद् भोजयामास तं पुनः।
पक्वान्नं विविधं स्वादु रसैः षड्भिः समन्वितम्।।४६।।

अस्मिन्नवसरे देवाः पुष्पवर्षं प्रचक्रिरे।
नीराजनं लाजवर्षमङ्गनाः पूजनानि च।।४७।।

ततः स काशिराजस्तमाकारयितुमागमत्।
रथोपरि निवेश्यैनं वाद्यघोषसमन्वितः।।४८।।

गन्धर्वा गानसहिता नृत्यन्त्यप्सरसः पुरः।
निनाय स्वगृहं राजा विनायकमनामयम्।।४७।।

र तिम्रो जीवन कसरी निर्विघ्न हुनसक्छ, त्यस विषयमा म चिन्तित छु ।' त्यो राक्षसीले त्यहाँका नर-नारीका सामु यसरी कुरा गरेपछि भगवान् बालगणेशलाई लक्षित गर्दै भनी- 'हे सर्वव्यापक प्रभु ! आज मेरा लागि ठूलो भाग्यको दिन रहेछ। तपाईँको दर्शन गर्ने अवसर पाएँ । हे श्रीगणेश ! तपाईँ थाक्नुभएको छ, अनेक थरि दानवहरूसँग तपाईँलाई पटक-पटक युद्ध गर्न परिरहेको छ । यो सुगन्धित तेल हेर्नुहोस्, यसले तपाईँको शरीरमा मालिश गर्छु र उबटनको धूलो छरिदिन्छु । जृम्भाको आदरपूर्ण वचन सुनेर श्रीगणेशले हुन्छ भन्नुभयो । ती दुष्ट आइमाईले हातमा विष दलेर आइन् र श्रीगणेशका पाउमा मालिस गरिन् । त्यति बेलासम्म मानिसहरूले जृम्भालाई राम्रै रूपमा लिइरहेका थिए । तर त्यो जृम्भा भावदोषका कारण श्रीगणेशको दुष्ट परिणामको आशा लिएर तेल मालिस गरिरहेकी थिई । त्यसले सेवा गर्दा कुनै पतिव्रता नारीले पतिको सेवा गरेजस्तो लागिरहेको थियो ।।३५-४२।। श्रीगणेशको शरीरमा विषको प्रवेश भएका कारण उहाँलाई पोल्न थाल्यो र छट्पटाउनुभयो । एकछिन विचार गरेर उहाँले दुर्भावनाले आएकी राक्षसी हो भन्ने थाहा पाउनुभयो । तुरुन्तै हातमा नरिवलको फल लिएर त्यसको टाउकामा प्रहार गर्नुभयो। त्यो राक्षसी भुइँमा लडी र त्यसले आफ्नो स्वाभाविक डरलाग्दो स्वरूप धारण गरी ।।४३-४४।। त्यसको शरीरबाट रगतको धारा बग्न थाल्यो । दश योजनसम्म त्यसको शरीर फैलिएको थियो । त्यसको स्वरूप हेर्न धर्मदत्तलगायत नगरवासी नर-नारीहरू जम्मा भएका थिए । ती सबै राक्षसीका शरीरको दृश्य देखेर चकित थिए । त्यो घटनापछि धर्मदत्तले श्रीगणेशलाई घर लगेर राम्रोसँग भोजन गराए । भोजनमा अनेक थरि पकवान र छ किसिमका रसले परिपूर्ण भोज्य सामग्री थिए । त्यस बेला देवताहरूले आकाशबाट पुष्पवर्षा गरे । किशोरीहरूले भगवान्को आरती गरे र लावा वर्षाए । काशिराज पनि श्रीगणेशलाई लिन भनेर त्यहाँ आइपुगे। तिनले श्रीगणेशलाई रथमा राखेर बाजागाजा, गन्धर्वहरूको गान र अप्सराहरूको नृत्यका साथ आफ्नो दरबारमा पुऱ्याए।।४५-४७।। राजासँग दरबारतर्फ प्रस्थान गर्दा श्रीगणेश

गच्छन् स ददृशे बाल: सिंहारूढो धृतायुध:।
अनेकवीरसंयुक्तो देवैरिव शतक्रतु:।।५०।।

सिद्धिबुद्धियुतो भाति गङ्गोमाभ्यां यथा शिव:।
नानाबन्दिस्तूयमान: प्रविवेश नृपालयम्।।५१।।

एवं बालचरित्रं य: शृणुयाज्जगदीशितु:।
सर्वान् कामानवाप्नोति नारिभिर्बाध्यते क्वचित्।।५२।।

सिंहमा सवार हुनुभएको थियो । उहाँका हातमा शस्त्र-अस्त्र थिए । देवताहरूले घेरिएका इन्द्रमहाराजझैं श्रीगणेश चारैतिरबाट नर–नारीहरूद्वारा घेरिनुभएको थियो । सिद्धि र बुद्धिका साथमा भगवान् श्रीगणेश गङ्गा र पार्वतीका साथमा शिवजीझैं सुहाउनुभएको थियो। स्तुतिपाठ गर्ने अनेक मानिसहरूले उहाँको स्तुति गरिरहेका थिए। यसरी भगवान् श्रीगणेश राजदरबारमा प्रवेश गर्नुभयो। जसले श्रीगणेशको बालकचरित्रको श्रवण गर्दछ त्यसका सबै कामनाहरू पूर्ण हुन्छन् र त्यसले कहिले पनि शत्रुको वशमा पर्नु पर्दैन।।४८-५२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते जृम्भावधो नाम चतुर्दशोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'जृम्भा राक्षसीको वध' शीर्षकान्वित चौधौं अध्याय पूर्ण भयो ।।१४।।

ॐ

## पञ्चदशोऽध्यायः { १५ अध्याय } २०५

क उवाच

अपरस्मिन् दिने राजा लोकैः सह सभां ययौ।
विनायकेन सहितो मित्रामात्यसमन्वितः।।१।।

तानुवाच ततः सर्वान् बालकस्य गुणान् बहून्।
गुणवन्तं प्रधानं तं पुरस्कृत्य महाशयम्।।२।।

अहं हि कश्यपं यात आकारयितुमन्तिकम्।
विवाहस्य च सिद्ध्यर्थं पुत्रस्तेनेह योजितः।।३।।

प्रस्थितोऽनेन यावच्च तावद् राक्षसमद्भुतम्।
अरिष्टानां समूहश्च न दृष्टं न च वै श्रुतम्।।४।।

आदावनेन निहतो धूम्राक्षो राक्षसाधिपः।
जघनश्च मनुश्चापि सहस्त्रार्द्धयुतो हतः।।५।।

यो व्योम नीतवानेनं नगरे दन्तुरो हतः।
विघण्टो बालरूपश्च विधूलश्च महाबलः।।६।।

पतङ्गश्चैव नगरे वातरूपधरो हतः।
कूटो नाम हतोऽनेन द्वारि पाषाणरूपधृक्।।७।।

कामक्रोधावपि हतौ खरवेषधरावुभौ।
गजरूपधरः कुण्डो हतोऽनेन निशाचरः।।८।।

यानि चान्यान्यरिष्टानि नाशयिष्यति बालकः।
इदानीं निश्चयः कार्यो विवाहस्य द्विजैः सह।।९।।

देवतास्थापनस्यापि हरिद्रामण्डपस्य च।
विवाहोपस्करार्थञ्च ज्योतिःशास्त्रविशारदैः।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - काशिराज अर्को दिन आफ्ना मानिसहरूका साथ श्रीगणेशलाई लिएर राजसभामा गए। काशिराजका साथमा उनका मित्र र मन्त्रीहरू पनि थिए। काशिराजले सबैका सामु आफ्ना अत्यन्त सज्जन प्रधान अमात्यलाई अगाडि राखेर भने - यी बालक श्रीगणेश अत्यन्त गुणी छन् र यिनले गरेका घटना विचित्र छन् । म कुनै दिन छोराको विवाहका लागि कश्यप ऋषिलाई बोलाउन उहाँको आश्रममा गएको थिएँ। मैले उहाँलाई यहाँ ल्याउने प्रयास गरें तर उहाँ आउनुभएन । उहाँले आफ्नो छोरा श्रीगणेशलाई मेरा साथ लगाएर पठाउनुभयो। म यी बालकलाई लिएर प्रस्थान गरें । बाटा-बाटामा अद्भुत राक्षस र अनेक अरिष्टका समूह आइलागे । त्यस्ता अरिष्ट मैले जिन्दगीमा देखेको र सुनेको थिइनँ।।१-४।। सबभन्दा पहिले बालक श्रीगणेशले राक्षसहरूका स्वामी धूम्राक्षलाई मार्नुभयो। त्यसपछि हजारौं सेनासहित रहेका जघन र मनुलाई पनि मार्नुभयो। अर्को दानव दन्तुरले श्रीगणेशलाई उठाएर आकाशमा पुऱ्यायो । त्यसलाई पनि उहाँले काशी नगरीमा मारिदिनुभयो । त्यसपछि बालक श्रीगणेशले विधूल र विघण्टलाई पनि मारिदिनुभयो । काशीनगरमा प्रवेश गर्दा आँधीबेहरीको रूप लिएर आउने पतङ्गनामक राक्षसलाई मारिदिनुभयो। राजदरबारनेर आइपुग्दा चट्टानको रूप लिएर आउने कूटनामक राक्षसलाई मारिदिनुभयो। त्यसपछि गधाको रूप लिएर आउने काम र क्रोधनामक राक्षसलाई मार्नुभयो । अनि उहाँले हात्तीको रूप धारण गर्ने कुण्ड नामक राक्षसलाई यमलोक पठाउनुभयो । यी केही घटनाहरू हुन् । मलाई लाग्छ, अरू पनि यस्तै घटना हुनसक्छन्। जे जस्ता घटना होऊन् तिनलाई बालक श्रीगणेशले समाप्त पारिदिनुहुनेछ । अब हामीहरूले ब्राह्मणहरूका साथमा बसेर छोराको विवाहको तिथि-मिति तय गर्नुपर्छ । ज्योतिषशास्त्रका विद्वान्हरूलाई बोलाएर देवताको प्रतिष्ठा, हरिद्रामण्डपको निर्माण र विवाहयज्ञमा चाहिने माङ्गलिक वस्तुहरूको व्यवस्थाका लागि मुहूर्त निश्चय गर्नुपर्छ ।।५-१०।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यममात्यावूचतुर्नृपम्।
अयं बालः पुरे यावद् वर्तते नृपसत्तम।।११।।

तावद् विवाहो न भवेदिति नो भाति निश्चितम्।
अस्मिँस्थिते महोत्पाता भविष्यन्ति दिने दिने।।१२।।

पक्षे मासे गते राजन् ! विवाहं कर्तुमर्हसि।
ओमित्युक्ते नृपेणाऽथ जग्मुः सर्वे निजालये।।१३।।

राजा विनायकश्चापि भुक्त्वा सुषुपतुः सुखम्।
ततो निशीथे सम्प्राप्ते सुप्ते सर्वजने मुने।।१४।।

ज्वालामुखो व्याघ्रमुखो दारुणोऽथ त्रयोऽसुराः।
इच्छन्तोऽपचितिं पूर्वहतानां दैत्यरक्षसाम्।।१५।।

सम्पूर्णां नगरीं दग्धुमाद्य ऐच्छत् तदाऽसुरः।
दारुणो वायुरूपेण तत्सहायार्थमुद्यतः।।१६।।

व्याघ्रास्यो भक्षितुं तत्र पलायनपरानभूत्।
एवं ते निश्चयं कृत्वा प्राक्रोशन् सुमहास्वनैः।।१७।।

त्रैलोक्यं कम्पितं सर्वं तदा संशयितं भृशम्।
प्रलयः परचक्रं वा किमागतमिति ब्रुवत्।।१८।।

व्याघ्रास्यः सुमहाकायः स्थाप्योष्ठं धरणीतले।
पूर्वं परञ्च गगने मध्ये जिह्वा नदी इव।।१९।।

उत्सृजन् मुखतो ज्वालाः साम्बरं पत्तनं दहन्।
यथा हनुमता दग्धा नगरी पुच्छवह्नितः।।२०।।

तथा ददाह नगरीं दुष्टोऽसौ मुखवह्नितः।
दग्धा वृक्षा लतारामाः प्रासादनिचयास्तदा।।२१।।

**ब्रह्माजीले भन्नुभयो** - राजाका यी कुरा सुनेर दुई अमात्यहरूले भने - हे राजन् ! जबसम्म यी बालक काशी नगरमा रहन्छन्, तबसम्म तपाईँका छोराको विवाह गर्नु हुँदैन भन्ने हामीलाई लाग्छ । किनकि यी बालक यहाँ रहेसम्म दिन-दिनै ठूला-ठूला उत्पात हुनेछन् । एउटा पक्ष अथवा एउटा महिना बितेपछि मात्र हामीले विवाहको तिथिमिति तय गर्नुपर्दछ। राजाले तिनका कुरा सुनेर स्वीकृति दिएपछि सबै मानिसहरू आ-आफ्ना घरतर्फ लागे।।११-१३।। काशिराज र श्रीगणेश पनि खानपीन गरेर आनन्दपूर्वक शय्यामा गई विश्राम गरे । आधा रात भयो र चारैतिर बाक्लो अन्धकार छायो । संसारका सबै मानिस निदाइरहेका थिए । संसारको वातावरण शान्त थियो । त्यसै बेला ज्वालामुख, व्याघ्रमुख र दारुण नामक तीन राक्षस श्रीगणेशले पहिले मार्नुभएका राक्षस र दैत्यहरूको मृत्युको प्रतिशोध लिन काशी आए ।।१४-१५।। तीमध्ये ज्वालामुखले काशीमा आगो लगाउने निधो गऱ्यो, दारुणले वायुको रूप लिएर आगो फैलाउन सघाउने अठोट गऱ्यो, व्याघ्रमुखले आगो लागेपछि आ-आफ्ना घरबाट भागिरहेका नर-नारीहरूलाई खाएर समाप्त गर्ने निश्चय गऱ्यो । यसरी निश्चय गरी ती दानवहरूले ठूलो स्वरले गर्जन गरे ।।१६-१७।। प्रगाढ निद्रामा सुतिरहेका मानिसहरूका निमित्त त्यस स्वरले भुइँचालो गएको आभास दिलायो । स्वरबाट भयभीत तीनै लोकका नर-नारीहरू काँप्न थाले । सुतिरहेका मानिसहरू जागे र तिनले प्रलय नै आयो कि अथवा शत्रुराजाले ठूलै आक्रमण गरे कि? यसरी शङ्का गर्न थाले ।।१८।। व्याघ्रमुख नामक दानवले ठूलो रूप धारण गऱ्यो, भुइँमा ओठ तेर्स्याउँदा दुई ओँठको मध्यभाग विशाल गगनमण्डलझैँ देखियो र बीचमा रहेको जिब्रो नदीझैँ देखियो । त्यसका मुखबाट अग्निको ज्वाला छुट्यो र त्यसले पूरा शहरलाई ढाक्यो । जसरी अघि लङ्कामा हनुमान्ले आफ्नो पुच्छरमा लागेको आगोबाट पूरा लङ्कालाई नै डढाएका थिए, त्यसैगरी ज्वालामुखले आफ्नो मुखको अग्निबाट सम्पूर्ण काशी नगरीलाई डढायो । रूख-लहरा डढे, वन एवं बगैँचाहरू खरानी हुँदै गए र घर-महलहरू पनि अग्निको ज्वालाबाट ढल्न थाले ।।१९-२१।। मानिसहरूका

कोलाहलो महानासीन्मुखहस्तरवस्तथा ।
हित्वा सर्वाणि कार्याणि विद्रवन्ति जना दिशः ।।२२।।

नगराद् बहिरायान्तं व्याघ्रास्यो ग्रसते नरम् ।
तदेव भोजनं तस्य बालकाश्चोपदंशकाः ।।२३।।

केचिद् विस्रस्तवसना विवस्त्राश्चापरे ययुः ।
स्त्रियः कूर्पासकाः काश्चित् काश्चित् पत्यंशुका ययुः ।।२४।।

व्याघ्रास्यं विवरं मत्वा विविशुर्जीवितेच्छया ।
अन्यानाकारयन्त्यस्ता ह्यभक्षयत सोऽसुरः ।।२५।।

अकाले प्रलये प्राप्ते काशिराजो विनायकम् ।
सर्वं विहाय राज्यं स्वं स्त्रीपुत्रादि स्ववस्तु सः ।।२६।।

स्कन्धे गृहीत्वा भ्रमते नानास्थाने गृहे गृहे ।
अतिदुःखेन सन्तप्तस्तेजसा चैव शुष्मिणः ।।२७।।

कथं मया बाल एष सर्वारिष्टप्रवर्तकः ।
सर्वस्वहारको मौढ्याद् दुर्निमित्तस्य कारणम् ।।२८।।

विनैनं किमहं ब्रूयामदित्यै कश्यपाय च ।
निरस्तानि च पूर्वाणि महारिष्टान्यनेन हि ।।२९।।

आस्ते तूष्णीमिदानीं किं न जानेऽत्रापि कारणम् ।
एवं शोचन् दुर्गमुच्चै रुरोह सह तेन सः ।।३०।।

तत्रापि दहनो वायुसहायः समुपागमत् ।
कुम्भैश्च मृन्मयैः पात्रैः सिषिचुः सेवकास्तदा ।।३१।।

तत्पत्न्यो निर्ययुर्हित्वा व्रीडां बालयुता बहिः ।
अवतीर्य ततो राजा विह्वलोऽधः समाययौ ।।३२।।

मुख र हातबाट निस्किएको कोलाहल चारैतिर फैलियो । सबै आ-आफ्ना काम छाडेर घरबाट चार दिशातर्फ भाग्न थाले । भाग्दै बाहिर आएका मानिसहरूलाई व्याघ्रमुखले आक्रमण गर्दै खान थाल्यो। त्यसले ठूला-ठूला मानिसहरूलाई भोजनका रूपमा खाइरहेको थियो भने साना-साना बालकहरू चटनी भइरहेका थिए ।।२२-२३।। भागिरहेका मानिसका शरीरबाट लुगा खसिरहेका थिए भने केही मानिस नाङ्गै पनि दौडिरहेका थिए । केही नारीहरू आफ्नो कुहिनाले गोप्य अङ्ग ढाकेर दगुरेका थिए भने केही आफ्ना श्रीमान्का वस्त्र धारण गरेर भागिरहेका थिए ।।२४।। व्याघ्रमुख नामक दानव नगरबाहिर गुफाझैं ठूलो आकारको मुख बनाएर बसिरहेको थियो । ती नरनारीहरूले व्याघ्रमुखको मुखलाई गुफा नै ठाने र शरण लिन भनी त्यसैभित्र पसे अनि अरूलाई पनि पस्न लगाए। त्यो दानवले ती सारा नरनारीहरूलाई खायो।।२५।। काशीमा अकालमा प्रलय आएजस्तो भयो। काशिराज आफ्ना पुत्र, पत्नी र श्रीसम्पत्तिको वेवास्ता गरी श्रीगणेशलाई काँधमा राखेर यिनलाई कसरी सुरक्षा प्रदान गर्ने हो भन्दै ठाउँ-ठाउँमा घुम्न थाले । ती अग्निज्वालाको तापले गर्दा अत्यन्त सन्तप्त थिए ।।२६-२७।। तिनले मनमनै भनिरहेका थिए - किन मैले मूर्खता गरी सबै प्रकारका अरिष्ट निम्त्याउने यी बालकलाई लिएर आएँछु । यिनले मेरो सर्वस्व समाप्त पार्ने भए । यिनको आगमन अलच्छिनको कारण बन्यो ।।२८।। यिनलाई मैले अदिति र कश्यपका सामु बुझाउन सकिनँ भने तिनले मलाई के भन्लान् ? पहिले-पहिले भएका सारा अरिष्टलाई त यी बालकले समाप्त पारेका हुन्, अहिले यी किन चुप लागेर बसेका छन् ? यसको कारण पनि मैले बुझ्न सकिनँ । यसरी चिन्ता गर्दै श्रीगणेशलाई काँधमा बोकिरहेका काशिराज एउटा किल्लामा चढे ।।२९-३०।। त्यहाँ पनि वायुरूप दारुणनामक दानवको सहायता लिएर ज्वालामुखको मुखबाट छुटेका अग्निका ज्वालाहरूले आक्रमण गरे । सेवकहरूले गाग्रा र माटाका अरू भाँडामा जम्मा गरेर राखेको पानीद्वारा आगो निभाउने कोशिश गरे ।।३१।। काशिराजका रानीहरू पनि कुनै किसिमको लाज नमानेर आफू बसेको दरबारबाट आफ्ना बाल-बा[illegible] साथ बाहिर आए । ती नारीहरूलाई दरबार

अश्वाश्वतरवीराश्च रथनागपदातयः।
निर्ययुर्नगरात् सर्वे पौराश्च सहगोधनाः।।३३।।

विनायकः काशिराजं काशिराजो विनायकम्।
गवेषयामास तदा वर्तमाने जनक्षये।।३४।।

सर्वेषु लोकेषु गतेषु मध्ये
स व्याघ्रतुण्डो न मिमील तुण्डम्।
यावन्न तुण्डे विशति स्म देवो
विनायकोऽनन्तगुणो महात्मा।।३५।।

उदये तु रवेर्जाते ददर्शाऽथ विनायकः।
व्याघ्रास्यं दग्धनगरं जनपूर्णं च तन्मुखम्।।३६।।

वह्निश्च निकटे वीक्ष्य विवेश तन्मुखं बलात्।
तस्मिन् गते निजास्ये तु न्यमीलयत सोऽसुरः।।३७।।

आस्यं गह्वरसङ्काशं सर्वसंहरणेच्छया।
दारितुं बालकस्तत्र ववृधेऽतीव तत्क्षणात्।।३८।।

पाटयामास तद्देहं व्याघ्रदेहेन रोदसी।
अभूच्चटचटाशब्दो वंशानां पाट्यतामिव।।३९।।

ततो द्वेधाऽभवद्दैत्यो गतासुरभवत् क्षणात्।
तदेकं शकलं तस्य गगने स तु चिक्षिपे।।४०।।

वायुना भ्रमति स्मैतद् दूरे देशे पपात च।
अर्धेन पतता तेन चूर्णितं गहनं वनम्।।४१।।

अपरञ्चाभवत् क्रीडागृहं बालमुदावहम्।
उदतिष्ठँस्ततो लोका अपरानप्यबोधयन् तदा।'।।

बाहिर आएको देखेर व्याकुल भएका काशिराज दुर्गबाट तल ओर्लिए। अश्वसेना, रथसेना, हात्तीसेना र पैदलसेनाका वीरहरू नगरबाट बाहिर निस्कन थाले। नगरवासी गृहस्थहरू पनि आफ्ना गाई-बाच्छा लखेट्दै नगरबाट बाहिर जान थाले। त्यो हुलचालमा श्रीगणेश एकातिर हराउनुभयो भने काशिराज अर्कोतिर हराए। श्रीगणेश काशिराजलाई खोज्दै हुनुहुन्थ्यो भने काशिराज पनि श्रीगणेशलाई खोजिरहेका थिए ।।३२-३४।। मानिसहरू मरिरहेका थिए र भागिरहेका थिए। यस्तो अवस्थामा काशी रित्तिदै थियो। व्याघ्रमुख नामक राक्षसले काशीका सम्पूर्ण नरनारीलाई आफ्ना मुखले निल्यो तर मुख बन्द गरेन। त्यसले जबसम्म अनन्त गुण भएका र महान् आत्मशक्तिले सम्पन्न श्रीगणेश मुखभित्र आउँदैनन् तबसम्म म मेरो मुख खुला राख्छु भन्ने निधो गरेको थियो ।।३५।। यसै रीतिबाट रात बित्यो, बिहान भयो र सूर्य उदाए। त्यस बेला श्रीगणेशले सम्पूर्ण नगरवासीलाई व्याघ्रमुखले निलेको अवस्थामा देख्नुभयो। मानिसलाई खाएर अघाएको व्याघ्रमुख र त्यसको नजिकमा भयङ्कर अग्निज्वाला समेत देखेर श्रीगणेश व्याघ्रमुख दानवको मुखभित्र पस्नुभयो। श्रीगणेश मुखभित्र पस्नुभएपछि व्याघ्रमुखले आफ्नो खुला मुख बन्द गऱ्यो ।।३६-३७।। सबैको संहार गर्ने आशयले खुला राखिएको व्याघ्रमुखको गुफासमान मुखभित्र पस्नुभएका भगवान् श्रीगणेशले तत्काल नै त्यसको शरीरलाई फुटाउने हिसाबले आफ्नो शरीर बढाउनुभयो। श्रीगणेशको शरीर विशाल हुँदै गयो र व्याघ्रमुखको पेटभित्र नअटाउने परिस्थिति भयो। त्यस बेला श्रीगणेश त्यसको पेट चिरेर बाहिर आउनुभयो। भगवान् श्रीगणेशले व्याघ्रमुखको पेट चिर्दा बाँस चिर्दा जस्तो शब्द हुन्छ त्यस्तै शब्द आइरहेको थियो। यसरी पेट चिरिंदा दैत्यको शरीर दुई टुक्रा भएपछि त्यो दैत्य तत्काल मऱ्यो। त्यसको शरीरको एउटा टुक्रालाई श्रीगणेशले आकाशतर्फ फ्याँकिदिनुभयो। हावाद्वारा उडाइएको त्यो टुक्रा धेरै पर गएर जमिनमा खस्यो। जमिनमा खस्दा त्यसको भारले अनेक वनहरू ध्वस्त भए। त्यसको शरीरको अर्को टुक्रा बालकहरूका निमित्त आरोहण एवं अवरोहण गरी खेल्ने क्रीडागृह बन्यो। त्यस बेला व्याघ्रमुखले निलेका मानिसहरू मुखभित्रबाट सरासर बाहिर आउन थाले। धेरै

ततोऽग्निमपिबत् सर्वं पादाघातादचूर्णयत्।

विदारणं महाकायं ज्वालासुरयुतं तदा।।४३।।

एवं निहत्य तान् दुष्टान् योगमायाबलेन सः।

अजीवयन् मृतान् सर्वान् नगरञ्च यथा पुरा।।४४।।

अकार्षीच्च जगर्जाशु केसरीव विनायकः।

सर्वलोकाश्च राजा च ततस्तं तुष्टुवुर्मुदा।।४५।।

नमोऽनन्तशक्ते गुणानामधीश

नमोऽरिष्टहन्त्रे नमः सृष्टिकर्त्रे।

नमो विश्वपात्रे नमो विश्वहन्त्रे

नमो ज्ञानदात्रे नमोऽज्ञानहन्त्रे।।४६।।

अकालप्रलयाद् देव ! वीतिहोत्राज्जगत्पते।

नानावतार! दैत्येभ्यो रक्षिता लीलया त्वया।।४७।।

कस्य सामर्थ्यमेतावद् वह्निं पातुं महाबलम्।

भूगोलसदृशास्यं को हन्यादन्यो महासुरम्।।४८।।

मृतानां जीवनं को नु त्वदन्यः कर्तुमुत्सहेत्।

त्वमेव जननी देव ! त्वमेव जनकोऽविता।।४९।।

महाभाग्यं जनानां मे येन ते सन्निधिः कृतः।

एवमुक्त्वा रुरोहाश्वं सिंहयानं विनायकः।।५०।।

स्वं स्वं वाहनमारूढाः सर्वे वीराः सहस्रशः।

सुखेन मन्दिरं गत्वा नित्यकर्माऽऽचरन्मुदा।।५१।।

कालसम्म व्याघ्रमुखको पेटमा रहँदा बेहोश भएका र निदाएका सबै मानिसलाई श्रीगणेशले जगाउनुभयो र ज्वालामुखले प्रकट गरेको आगोलाई पनि पिइदिनुभयो । त्यसपछि श्रीगणेशले आफ्ना खुट्टाले प्रहार गरी ज्वालामुख दैत्यलाई पनि धूलोपिठो बनाउनुभयो । यसरी विशाल आकार लिएर संसारलाई भयभीत गराउने ज्वालामुख पनि समाप्त भयो । भगवान् श्रीगणेशले आफ्नो योगमायाबाट ती दैत्यहरूको हत्या गरी तिनीहरूद्वारा मारिएका नगरका नर–नारीहरूलाई जस्ताको तस्तै बनाएपछि सिंहगर्जन गर्नुभयो । त्यसपछि नर–नारीहरू र काशिराजले समेत श्रीगणेशको स्तुति गर्दै भने ।।३८–४५।। 'हे अनन्त शक्तिसम्पन्न भगवन् ! हजुरलाई हामी नमस्कार गर्दछौं। हे गुणहरूका स्वामी गुणेश ! हजुरलाई हामी नमस्कार गर्दछौं। हे अरिष्टनाशक श्रीगणेश ! हजुरलाई हामी नमस्कार गर्दछौं। हे सृष्टिकर्ता श्रीगणेश ! हजुरलाई हामी नमस्कार गर्दछौं। हे विश्वका एकमात्र आधार श्रीगणेश ! हजुरलाई हामी नमस्कार गर्दछौं। हे विश्वका संहारक श्रीगणेश ! हजुरलाई हामी नमस्कार गर्दछौं। हे ज्ञानदायक श्रीगणेश ! हजुरलाई हामी नमस्कार गर्दछौं। हे अज्ञाननाशक श्रीगणेश ! हजुरलाई हामी नमस्कार गर्दछौं।।४६।। हे जगदीश्वर ! अकालप्रलयरूपमा आएका अनेक थरि दुष्कर्म गर्ने दैत्यहरूबाट अनेक लीलाधारी हजुरले आफ्नो लीला प्रदर्शन गरी हाम्रो रक्षा गर्नुभयो।।४७।। विशाल अग्निज्वालालाई एकै पटकमा पान गरेर समाप्त पार्ने यस्तो महाबल र यस्तो सामर्थ्य अरू कसको हुनसक्छ ? भूगोलजस्तै विशाल मुख भएको व्याघ्रास्य दानवलाई हजुरबाहेक अरू कसले मार्न सक्छ ? ।।४८।। फेरि मरेका मानिसलाई जस्ताको तस्तै गरी जीवित गराउने काम हजुरबाहेक अरू कसले गर्न सक्छ ? हे श्रीगणेश ! हजुर नै हाम्रा लागि माता हुनुहुन्छ । हजुर नै हाम्रा लागि जन्म दिने र पालन गर्ने पिता पनि हुनुहुन्छ ।।४९।। हजुर नै हाम्रा रक्षक हुनुहुन्छ। काशीका नर–नारीहरूको ठूलै भाग्य रहेछ । मेरो पनि सौभाग्य रहेछ। त्यस सौभाग्यका कारण हामी सबै हजुरको नजिकमा रहन पायौं ।' यसरी स्तुति गरी काशिराज घोडामा सवार भए भने भगवान् श्रीगणेश पनि सिंहमा सवार हुनुभयो ।।५०।। अरू हजारौं वीरहरू पनि आ–आफ्ना वाहनमा सवार भएर सुखपूर्वक घरमा गई हर्षका

स्वं स्वञ्च मन्दिरं याताः सर्वे पौरा निरामयाः।
वाद्यत्सु सर्ववाद्येषु तुष्टुवुर्बन्दिनो नृपम्।।५२।।

काशिराजोऽथ विप्रेभ्यो ददौ दानान्यनेकशः।
स्वस्तिवाच्यैः पुपूजाशु देवाँस्तञ्च विनायकम्।।५३।।

उपायनानि देवाय नानालोका ददुस्तदा।
विनायकोऽपि विप्रेभ्यो ददौ तानि यदृच्छया।।५४।।

अमात्यानाञ्च वीराणामंशुकानि ददौ नृपः।
विसृज्य सर्वान् भुक्त्वा तौ सुखेन स्वापमीयतुः।।५५।।

य इदं शृणुयाद् भक्त्या नगरीमोक्षणं नरः।
सर्वान् कामानवाप्नोति नारिष्टैर्बाध्यते क्वचित्।।५६।।

साथ नित्यकर्म गर्न थाले ।।५१।। मनका कष्ट र वेदना समाप्त हुँदा खुसी भएका नगरनिवासीहरू पनि आ-आफ्नो घरतर्फ लागे। विजयका बाजा बज्न थाले र बन्दीहरूले श्रीगणेशको स्तुति गर्न थाले ।।५२।। दरबारमा पुगेर काशिराजले ब्राह्मणहरूलाई अनेक थरि दान दिए, स्वस्तिवाचन गर्ने ब्राह्मणहरूद्वारा देवताहरूका साथै भगवान् श्रीगणेशको पनि पूजा गरे ।।५३।। नगरवासीहरूले अनेक थरि उपहार ल्याई श्रीगणेशलाई टक्र्याए । श्रीगणेशले पनि इच्छाअनुसार नरनारीहरूले टक्र्याएका उपहार ब्राह्मणहरूलाई दिनुभयो।।५४।। काशिराजले आफ्ना वीर योद्धा र अमात्यहरूलाई विजयको खुसियालीमा वस्त्र प्रदान गरे । सबैलाई बिदा गरी भोजन गरेपछि भगवान् श्रीगणेश र काशिराज पनि शयनकक्षमा जानुभयो ।।५५।। काशी नगरीलाई गणपति भगवान्ले सुरक्षा प्रदान गरेको प्रसङ्गमा आधारित यो कथा जसले पढ्दछ, त्यसले सबै चिताएका फल प्राप्त गर्दछ र त्यसमाथि कुनै किसिमका अरिष्ट आइलाग्दैनन् ।।५६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते नगरीमोक्षणं नाम पञ्चदशोऽध्यायः

(प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'राक्षसहरूबाट काशी नगरीको मुक्ति' शीर्षकान्वित पन्ध्रौं अध्याय पूर्ण भयो ।।१५।।)

ॐ

## षोडशोऽध्यायः

## { १६ अध्याय }

क उवाच

शृणु व्यास ! प्रवक्ष्यामि कथामाश्चर्यकारिणीम्।
यां श्रुत्वा मानवो भक्त्या सुखमत्यन्तमश्नुते।।१।।
उत्थाय कल्ये राजाऽसौ नित्यं कृत्वा ययौ बहिः।
विनायकालयं गत्वा नत्वा तं परिपूज्य च।।२।।
अप्रार्थयद् भोजनार्थं ततो बालं विनायकम्।
ततो ददौ स उद्गारं नानापक्वान्नतृप्तिजम्।।३।।
शेषं ददर्श तत्राऽसौ लड्डूकान् पायसादिकम्।
अपूपान् वटकान् पुण्यमोदनं सूपसंयुतम्।।४।।
दधि दुग्धं मधु घृतं क्वथिकापात्रसञ्चयम्।
मणिमुक्तामयीं मालां नानालङ्करणानि च।।५।।
अपश्यत् तस्य देहेऽसावनर्घ्याणि नवानि च।
पुनर्नत्वा च प्रपच्छ नृपतिस्तं विनायकम्।।६।।
केन भक्तेन पूजेयं कृता ते जगदीश्वर।
तमहं ज्ञातुमिच्छामि द्रष्टुञ्च त्वत्प्रसादतः।।७।।
एवमुक्तो नृपेणाऽथ वदति स्म विनायकः।
भक्ताय काशिराजाय निजभक्तकृतार्हणाम्।।८।।

देव उवाच

शृणु राजन् ! प्रवक्ष्यामि यत् पृष्टोऽहमिह त्वया।
तदहन्ते प्रवक्ष्यामि संक्षेपेण नृपात्मज।।९।।
दण्डकारण्यदेशीये पुरे चामलसंज्ञके।
भ्रुशुण्डिनाम्ना भक्तोऽभूद् भूतभव्यभविष्यवित्।।१०।।
स्रष्टुं पातुञ्च संहर्तुं शक्तस्त्रैलोक्यमाशु यः।
ब्रह्मा भवश्च विष्णुश्च नित्यं यद्दर्शनार्थिनः।।११।।
सर्वकालं मम ध्यानध्वस्तपापो जितेन्द्रियः।
पुरा तपस्यतस्तस्य भ्रूमध्यान्निसृतः करः।।१२।।

**ब्रह्माजीले भन्नुभयो-** हे व्यास ! म तिमीलाई आश्चर्यजनक कथा सुनाउँछु, जुन कथा सुनेर मानिसले श्रीगणेशमा भक्ति गर्दै ठूलो सुख प्राप्त गर्न सक्छ ।।१।। विपत्तिबाट श्रीगणेशले काशीलाई मुक्त गर्नुभएपछि काशिराज आनन्दपूर्वक शयन गरी बिहान सबेरै उठेर नित्यकर्म सम्पन्न गरी दरबारबाट बाहिर आए । भगवान् श्रीगणेशलाई विश्राम गराइएको कोठामा गई उहाँलाई नमस्कार गरी पूजासमेत गरेर बालरूप श्रीगणेशसँग भोजनका लागि प्रार्थना गरे । त्यस बेला श्रीगणेशले भोजन गरिसकेर चुद्दा तृप्तिको परिचय दिने डकार गर्नुभयो ।।२-३।। काशिराजले श्रीगणेश विश्राम गर्नुभएको कोठामा खाएर बाँकी रहेका लड्डु, खीर, मालपुवा, बटुक, दाल, भात, तरकारी, दही, दूध, मह, घिउ यी सबै कुरा देखे। अनि उनले श्रीगणेशको शरीरमा नयाँ-नयाँ मणि र मोतीले बनेका हार, अनेक थरि अलङ्कार र बहुमूल्य वस्त्रहरू पनि देखे । त्यसपछि काशिराजले श्रीगणेशलाई प्रणाम गरी प्रश्न गरे - हे भगवन् श्रीगणेश! कुन भक्तले हजुरको पूजा गरिसके ? म ती भक्तको विषयमा जान्न चाहन्छु । हजुरको कृपा हुन्छ भने ती भक्तको दर्शन गर्न पनि चाहन्छु । यसरी काशिराजले सोधेपछि श्रीगणेशले भन्नुभयो – म तपाईँलाई मेरा भक्तले गरेको पूजाको विषयमा जानकारी गराउँछु ।।४-८।।

**श्रीगणेशले भन्नुभयो -** हे राजन् ! तपाईँले सोध्नुभएको विषयमा म संक्षेपमा भन्दछु ।।९।। दण्डकारण्य देशमा अमल नामक नगर छ । त्यहाँ एक जना भूत, वर्तमान र भविष्यत्कालका घटनाहरूको जानकारी राख्ने भ्रुशुण्डी नामक भक्त छन् ।।१०।। ती भक्त सृष्टि, पालन र संहार गर्न पनि समर्थ छन् । ब्रह्मा, विष्णु र शिवजीले नित्य तिनको दर्शन गर्न चाहनुहुन्छ ।।११।। ती भ्रुशुण्डी प्रत्येक क्षण मेरै ध्यान गरिरहेका हुन्छन् । तिनको मन, वचन एवं कर्ममा कत्ति पनि पाप छैन र ती इन्द्रियजयी छन् । तिनले पहिले तपस्या गर्दा तिनको आँखीभौंबाट सूँढ निस्कियो ।।१२।।

भ्रुशुण्डीति ततः ख्यातस्त्रिषु लोकेषु सर्वदा।
अतिभक्त्या मृत्युलोके सादृश्यं प्रापितो मम।।१३।।

अद्य शुक्लचतुर्थ्यान्तु पूजयामास मां मुदा।
घृतं दुग्धं दधि मधु पश्य मेऽङ्गात् स्रवन्नृप।।१४।।

भुक्तशेषमिदं चान्नं दृष्टं ते नृपसत्तम ! ।

क उवाच

तत ऊचे काशिराजो देवदेव जगत्पते।।१५।।
तमहं द्रष्टुमिच्छामि कथं सोऽत्रागमिष्यति।

विनायक उवाच

गच्छ राजँस्त्वमद्यैव तस्य चाश्रममण्डलम्।।१६।।

सम्पूज्य प्रणिपत्यापि विवाहाय तमाह्वय।
प्रार्थनीयः प्रयत्नेन वाच्यञ्च मद्वचोऽपि च।।१७।।

विनायको मम गृहमागतोऽस्ति यतो मुने।
स चातितृप्तस्त्वत्कृतात् पूजनाद् भक्तितो मुने।
सोऽपि त्वद्दर्शनाकाङ्क्षी तेनेह प्रेषिता वयम्।।१८।।

ममापि दर्शने काङ्क्षा महती पूजने तव।
गृहञ्च सम्पदो मे त्वमागत्य सफलीकुरु।।१९।।

एवमुक्ते त्वया राजन्! श्रुते च मम नामनि।
भ्रुशुण्डी मम भक्तः स तत्क्षणादागमिष्यति।।२०।।

क उवाच

एवमुक्तः स तेनाथ प्रस्थितः परिपूज्य तम्।
तूणीरकार्मुकधरो हयमारुह्य शीघ्रगम्।।२१।।

नदीवनानि च गिरीनतिक्रम्य शनैर्ययौ।
प्राप तस्याश्रमं राजाऽवरुरोह हयात्ततः।।२२।।

दृष्ट्वा मुनिं भ्रुशुण्डिं स प्रणिपातं चकार ह।
तेनापि मानितः सोऽथ पुपूजे तमृषिं मुदा।।२३।।

त्यस कारण तिनलाई संसारले भ्रुशुण्डी भनेर चिन्दछ । तिनले मेरो ठूलो भक्ति गरेकाले ती पृथिवीमा मजस्तै भएर रहेका छन् । आज माघ महिनाको शुक्ल चतुर्थीको दिन तिनले मेरो पूजा गर्दा घिउ, दूध, दही र मह चढाएका थिए । हेर्नुहोस् त, मेरो शरीरबाट तिनले चढाएका ती पदार्थहरूको धारा लागिरहेको छ ।।९-१४।। हे राजन् ! मैले ग्रहण गरेर शेष रहेको अन्न यो कोठामा छरिएको छ र तपाईंले त्यही भोजन देख्नुभएको हो ।

**ब्रह्माजीले भन्नुभयो-** त्यसपछि काशिराजले प्रार्थना गरे- हे जगदीश ! देवाधिदेव श्रीगणेश ! म भ्रुशुण्डीको दर्शन गर्न चाहन्छु । उहाँ कसरी मेरो दरबारमा आउन सक्नुहुन्छ ?

**श्रीगणेशले भन्नुभयो** - हे काशिराज ! तपाईं आज नै तिनको आश्रमतर्फ लाग्नुहोस् ।।१५-१६।। त्यहाँ गएर तपाईंले मेरा भक्त भ्रुशुण्डीको पूजा गर्नुहोस्, प्रणाम गर्नुहोस् र मेरो छोराको विवाहमा आउनुहोस् भनेर निमन्त्रणा टक्र्याउनुहोस्। त्यसपछि तपाईंलाई 'भगवान् श्रीगणेशले पनि बोलाउन भन्नुभएको छ, उहाँ मेरो घरमा आएर बस्नुभएको छ। तपाईंले गरेको पूजा र भक्तिबाट उहाँ अत्यन्त प्रसन्न हुनुहुन्छ । उहाँ पनि तपाईंको दर्शन गर्न चाहनुहुन्छ । उहाँले पठाएर नै म आएको हुँ । मेरो पनि हजुरको दर्शन गर्ने प्रबल आकांक्षा छ र पूजन गर्ने इच्छा छ । तपाईं काशी गएर मेरो घर र श्रीसम्पत्तिलाई पवित्र तुल्याइदिनुहोस्' भनी तपाईंले भ्रुशुण्डीसँग प्रार्थना गर्नुहोस् । हे काशिराज ! तपाईंले यसरी प्रार्थना र अनुरोध गरी मेरो नामसमेत लिएपछि मेरा भक्त भ्रुशुण्डी तत्काल यहाँ आउनेछन्।।१७-२०।।

**ब्रह्माजीले भन्नुभयो-** श्रीगणेशद्वारा यसरी आज्ञा पाएका काशिराज उहाँलाई नमस्कार गरेर भ्रुशुण्डीको आश्रममा जान भनी प्रस्थान गरे । तिनले त्यस बेला हातमा धनु, ठोक्रो र बाण धारण गरेका थिए । अत्यन्त वेगशाली घोडामा सवार भएका काशिराज नदी, वन, पर्वतहरू नाघ्दै मुनिको आश्रमतर्फ लागे र आश्रमको नजिकै पुगेपछि घोडाबाट भुइँमा ओर्लिए।।२१-२२।। काशिराजले आश्रमभित्र प्रवेश गरेर भ्रुशुण्डी ऋषिको दर्शन गरेपछि प्रणाम गरे । ऋषिले पनि काशिराजको स्वागत र सत्कार गरे । काशिराजले श्रद्धापूर्वक भ्रुशुण्डीको पूजा गरे ।

पश्यति स्म महारण्यमुपविष्टस्तदाज्ञया।
नगेवृक्षलतापुष्पैः फलै रम्यं तदाश्रमम्।।२४।।

कैलासो विष्णुलोकोऽथ सत्यलोको न तादृशः।
वेदघोषैः शास्त्रघोषैर्गीतनृत्यैर्विराजितम्।।२५।।

अग्निहोत्रैश्च कासारैः पक्षिभिर्जलजैरपि।
दृष्ट्वा तमाश्रमं राजा मुमुदे हृष्टमानसः।।२६।।

दण्डवत् प्रणिपत्याऽसौ तं मुनिं सर्वमब्रवीत्।
विवाहकृत्यं तत्पूजामाज्ञां वैनायकीमपि।।२७।।

तस्मादेहि मम गृहमिति चाप्रार्थयन्नृपः।।

### ऋषिरुवाच

कस्त्वं वद महाराज ! कोऽसौ तेऽपि विनायकः।।२८।।

### नृप उवाच

काशिराज इति ख्यातं मां विद्धि रविवंशजम्।
कश्यपस्य सुतः सोऽपि दैवतं ते विनायकः।।२९।।

तं भोजयितुकामेन तव कीर्तिः श्रुता मया ।
चतुर्थ्यां पूजितः सम्यङ् नानोपहारसञ्चयैः।।३०।

ते तत्र दर्शितास्तेन तृप्तेन नगरे मम।
तेनोक्तं मम नाम्नैवायास्यति स मुनिर्नृप।।३१।।

अतोऽहमेव संयातः प्रार्थितुं त्वां महामुने।
तवापि दर्शनं मत्वा दुर्लभं चर्मचक्षुषाम्।।३२।।

ऋषिको आज्ञा पाएर राजाले विशाल जङ्गलको माझमा रहेको आश्रममा विश्राम गरे । विश्राम गर्ने क्रममा काशिराजले सरोवर, वृक्ष, लता र फलफूलले रमणीय त्यो आश्रमलाई बडो आनन्दका साथ अवलोकन गरे ।।२३-२४।। आश्रम अवलोकनका क्रममा उनले मनमनै भने - 'यस्तो पवित्र सौन्दर्य कैलास, वैकुण्ठ र सत्यलोकमा पनि प्राप्त हुनसक्दैन । भ्रुशुण्डी ऋषिको यो आश्रम मन्त्रघोष, शास्त्रपाठ र मङ्गलमय सङ्गीतद्वारा शोभायमान छ। यहाँ कहीँ अग्निहोत्र चलेको छ, कहीँ तलाउमा पक्षीहरू खेलिरहेका छन्, सरोवरमा कमल फुलिरहेका छन् ।' राजा यस्ता अनेक दृश्यहरू देखेर आनन्दमग्न भए।।२५-२६।। विश्रामपछि काशिराज भ्रुशुण्डीका सामु गई उनलाई साष्टाङ्ग दण्डवत् प्रणाम गरी आफूले छोराको विवाह आँटेको कुरा, आफूलाई विनायकले आश्रममा पठाएको कुरा र विनायकले पनि आफ्ना भक्त भ्रुशुण्डीको दर्शन गर्न चाहेको कुरा बताए। त्यसपछि प्रार्थनाको स्वरमा उनले भने - हे ऋषि! हजुर मेरो घरमा अवश्य जानुपर्छ ।

**ऋषिले सोधे** - हे राजन् ! तपाइँ को हुनुहुन्छ र तपाइँका विनायक को हुन् ? ।।२७-२८।।

**राजाले भने** - सूर्यवंशमा उत्पन्न काशिराजको नामबाट मलाई चिन्नुहोस् र विनायक भनेका कश्यप ऋषिका छोरा र तपाइँका परम आराध्य देवता हुनुहुन्छ। उहाँलाई भोजन गराउन चाहने मैले उहाँबाट नै तपाइँको विषयमा थाहा पाएको हुँ । तपाइँले माघशुक्ल चतुर्थी तिथिका दिन जस्ता उपहारहरू टक्र्याएर भगवान्‌को पूजा गर्नुभएको थियो, ती सम्पूर्ण वस्तुलाई मैले विनायक भगवान्‌को कोठामा देखेको हुँ । उहाँ तपाइँले दिएका पदार्थहरू भोजन गरेर ज्यादै प्रसन्न हुनुहुन्थ्यो । त्यस अवस्थामा मैले उहाँको दर्शन गरेँ । उहाँले मलाई भन्नुभयो - 'तिमी ऋषि भ्रुशुण्डीको आश्रममा जाऊ, उहाँलाई निमन्त्रण गर । विनायकले पठाएको भनेपछि भ्रुशुण्डी ऋषि आउँछन्।' हे ऋषि ! श्रीविनायकले आज्ञा दिनुभएको कारण म तपाइँलाई बोलाउन आश्रममा आएको छु। तपाइँलाई छोराको विवाहका अवसरमा उपस्थित देख्न चाहन्छु । तपाइँको दर्शन साधारण मानिसका निमित्त दुर्लभ छ । मेरो निमन्त्रणा स्वीकार गरेर तपाइँ मेरासाथ मेरो घर पाल्नुहोस्, म लिन आएको छु ।।२९-३२।।

क उवाच

एवमुक्तो नृपतिना भ्रुशुण्डी विस्मयान्वितः।
उवाच किमिदं सत्यमुत वाऽसत्यमेव च।।३३।।

योऽगोचरो वेदविदां वेदान्तानाञ्च चेतसः।
स कथं त्वद्गृहेऽतिष्ठदिति सन्दिह्यते मनः।।३४।।

त्रयस्त्रिंशत्कोटिदेवा दर्शनार्थं समागताः।
स कथं तव वाक्येन यामीत्युक्त्वा स्वमाश्रमम्।।३५।।

यदि तिष्ठति देवोऽसौ तव गेहे नराधिप! ।
स्वरूपं वद तस्याहं ततो यास्यामि ते गृहम्।।३६।।

नृप उवाच

अनन्तानि स्वरूपाणि गणितुं न क्षमो विधिः।
शेषो वा तस्य कोऽन्यो हि वक्तुमीशो भवेद् द्विज।।३७।।

अवतीर्णः साम्प्रतं स कश्यपस्य गृहे मुने।
विनायकेति नाम्नापि विख्यातो भुवनत्रये।।३८।।

अत्यद्भुतेन रूपेण सप्तवर्षात्मकेन च।
अद्भुतानि च कर्माणि महान्ति जगदीश्वरः।।३९।।

अशक्तो यानि कर्तुं वै तानि तेन कृतानि च।
स्वरूपं तेऽभिवक्ष्यामि येन रूपेण मे गृहे।।४०।।

वसते देवदेवोऽसौ ब्रह्मचारिस्वरूपतः।
अवतीर्णो यदा सोऽभूद् दिव्यकान्तिश्चतुर्भुजः।।४१।।

दिव्यमाल्याम्बरधरो दिव्यालङ्कारसंयुतः।
दिव्यायुधधरो धीमान् दिव्यगन्धानुलेपनः।।४२।।

प्रार्थितः कश्यपेनाऽसौ प्राकृतोऽभूत् तदैव सः।

**ब्रह्माजीले भन्नुभयो -** काशिराजले यसरी निवेदन गरेपछि भ्रुशुण्डी ऋषि ज्यादै चकित हुँदै भने - तपाईंले भनेको कुरा साँचो हो त ? अथवा असत्य पनि हुनसक्छ । किनकि वेद-वेदान्तका ज्ञाता, विशिष्ट विद्वान्हरूले पनि दर्शन गर्न नपाउने संसारका स्वामी श्रीगणेश आएर तपाईंको घरमा कसरी बस्न सक्नुहुन्छ ? मलाई सन्देह लागिरहेको छ । आज मेरो आश्रममा तेत्तीस कोटी देवताहरू मेरो दर्शन गर्न आएका छन् । तिनलाई यहाँ यसै छोडेर तपाईंका सन्देहास्पद कुरा सुनी म कसरी जाऊँ। हे राजन् ! यदि भगवान् श्रीगणेश तपाईंको घरमा बस्नुभएको छ भने लौ तपाईं भन्नुहोस् - तपाईंको घरमा बस्ने श्रीगणेशको स्वरूप कस्तो छ ? स्वरूपको वर्णन चित्त बुझ्दो भयो भने म तपाईंको घर जानेछु ।।३३-३६।।

**काशिराजले भने -** हे ऋषि ! भगवान् श्रीगणेशका अनन्त स्वरूप छन्, ब्रह्माजीले पनि ती स्वरूपको गणना गर्न सक्नुहुन्न । हजार मुख भएका शेषनागले पनि श्रीगणेशको वर्णन गर्न सक्दैनन् । अरू कसले उहाँको बारेमा बताउन सक्छ ? अहिले भगवान् श्रीगणेश कश्यप ऋषिको घरमा अवतीर्ण हुनुभएको छ । विनायकका नामबाट स्वर्ग, मर्त्य, पातालमा विख्यात हुनुहुन्छ । उहाँको स्वरूप अद्भुत छ । अहिले उहाँ सात वर्षको हुनुभएको छ। जगत्का स्वामी भगवान् श्रीगणेशसमान असामान्य कर्म गर्न कुनै मानिस पनि समर्थ हुँदैन । जुन रूपमा मेरो घरमा उहाँ विराजमान हुनुभएको छ, त्यस रूपको बारेमा म बताउँछु ।।३७-४०।। अहिले देवताका पनि देवता भगवान् श्रीगणेश मेरो घरमा ब्रह्मचारीका रूपमा हुनुहुन्छ । जुन बेला कश्यप ऋषिका पुत्रका रूपमा कश्यपाश्रममा पैदा हुनुभएको थियो । त्यस बेला उहाँ दिव्य कान्तिसम्पन्न, चतुर्भुज, दिव्य माला र वस्त्रद्वारा विभूषित, दिव्य अलङ्कारद्वारा अलङ्कृत, दिव्य आयुधधारी, दिव्य गन्ध सम्पन्न र बुद्धि विशिष्ट हुनुहुन्थ्यो । आफ्ना आश्रममा पैदा भएका बालकको चहकिलो स्वरूप देखेर कश्यपले प्रार्थना गर्नुभयो - हे प्रभु ! हजुर सामान्य बालकजस्तो हुनुहोस् । कश्यपको प्रार्थना सुनेर भगवान् सामान्य बालकका रूपमा परिणत हुनुभएको थियो।

मुनिरुवाच

नायं देवो मम ध्यानगोचरो राजसत्तम।।४३।।

यस्य प्रभावान् मे शुण्डा जाता देवर्षिदुर्लभा।
यत्र कुत्रापि यास्येऽहं स चेदाकारयिष्यति।।४४।।

क उवाच

एवं श्रुत्वा मुनिवचश्चिन्ताविष्टोऽब्रवीन्नृपः।
मम भाग्यमभाग्यञ्च महदेतदुपस्थितम्।।४५।।

त्वदाशया महाघोरान् पर्वतान् गहनानि च।
अतिक्रम्येह सम्प्राप्तः प्राप्तं त्वद्दर्शनं महत्।।४६।।

बलात्कारो न मेऽत्रास्ति गन्तुञ्चैवालयं विभो।
ततो मुनिः करुणया नृपमूर्ध्नि करं ददौ।।४७।।

निमीलयाक्षिणी राजन्नित्युक्तः स तथाऽकरोत्।
उन्मील्य नयनेऽपश्यत् क्षणमात्रादसौ नृपः।।४८।।

गृहान्तर्गतमात्मानं पूर्ववत् तदनुग्रहात्।
विनायकाय तं सर्वं वृत्तान्तं समभाषत।।४९।।

दर्शनाद्धर्षसम्पन्नो नागतो दुःखसंयुतः।
नागतस्तव वाक्येन मम यत्नान् मुनिस्तु सः।।५०।।

ब्राह्मणेषु बलात्कारो भस्म सर्वं करिष्यति।।५१।।

**भुशुण्डीले** भने - हे काशिराज ! तपाईंले वर्णन गरेका देवताको स्वरूपलाई मैले कहिले पनि ध्यान गरेको छैन ।।४१-४३।। जुन स्वरूपका ईश्वरको कृपाबाट मेरो अनुहारमा सूँढ पैदा भयो, जुन सूँढलाई देवता र ऋषिले पनि प्राप्त गर्न सक्दैनन्, त्यस्तो दुर्लभ सूँढ मैले पाएको छु । मलाई सूँढ प्रदान गर्ने भगवान् श्रीगणेशको जस्तो स्वरूप थियो त्यस्तै स्वरूपका श्रीगणेशले मलाई बोलाउनु भयो भने म त्यहाँ जानेछु ।।४४।।

**ब्रह्माजीले** भन्नुभयो - भुशुण्डी ऋषिका यी कुरा सुनेर चिन्तामग्न काशिराजले भने – मेरो जीवनमा अहिले ठूलो दुर्भाग्य आइलाग्यो । हजुर जानुहुन्छ भन्ने आशाले ठूला-ठूला पर्वत र जङ्गल नाघेर दर्शन गर्न यहाँ आइपुगें । हे ऋषिवर ! मैले जबर्जस्ती गरेर तपाईंलाई मेरो घर लान सक्तिनँ। राजाको यो करुण प्रार्थना सुनेपछि ऋषिले दयालु भएर काशिराजको शिरमा हात राख्दै भने - हे राजा ! आँखा चिम्लनुहोस् । राजाले पनि त्यसैगरी आँखा चिम्लिए । आँखा खोलेर हेर्दा राजा एकै क्षणमा काशी आइसकेका थिए ।।४५-४८।। आफूलाई आफ्नै घरभित्र राजाले पाए र त्यो सम्पूर्ण वृत्तान्त श्रीगणेशलाई सुनाए ।।४९।। हे श्रीगणेश ! हजुरको आज्ञाअनुसार आश्रममा गएर मैले भुशुण्डी ऋषिको दर्शन पाएँ, खुसी छु तर उहाँ आउनुभएन यस अर्थमा दुःखी पनि छु। उहाँलाई मैले हजुरको आज्ञा सुनाउँदा र मैले धेरैपटक प्रार्थना गर्दा पनि उहाँ आउनुभएन। ब्राह्मणहरूलाई बलपूर्वक ल्याउन हुँदैन । ब्राह्मणहरू रिसाउनुभयो भने सबै कुरा भस्म गर्न सक्नुहुन्छ।।५०-५१।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते नृपप्रत्यागमो नाम षोडशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'काशिराजको भुशुण्डी आश्रमबाट प्रत्यागमन' शीर्षकान्वित सोह्रौं अध्याय पूर्ण भयो ।।१६।।

ॐ

## सप्तदशोऽध्यायः { १७ अध्याय }

क उवाच

आगतं राजशार्दूलं पुनः पप्रच्छ सादरम्।
मेघगम्भीरया वाचा सर्वज्ञोऽपि विनायकः।।१।।

त्वया किमुक्तं तत्राथ तेन वा भाषितं नु किम्।
वद मे नृप ! तत्सर्वं श्रुत्वा वक्ष्यामि ते मतिम्।।२।।

नृप उवाच

तस्मै ते कथितं वाक्यं मयाऽपि प्रार्थितं बहु।
स उवाच मुनिः कस्त्वं कोसावपि विनायकः।।३।।

उपास्यरूपं विभृयात् तदायास्ये तमीक्षितुम्।
एवं निराकृतस्तेन मार्गचिन्तापरः स माम्।।४।।

प्रेषयामास स्वगृहं दत्त्वा मूर्ध्नि करं मम।
निमीलितदृशं चक्रे क्षणादुन्मील्य लोचने।।५।।

तावद् ददर्श पुरतः स्थितं त्वां स्वगृहे सुरः ।
स्मृत्वाश्रमपदं तस्य हर्षश्चेतसि जायते।।६।।

अहसीदिति श्रुत्वैव वाक्यं तस्य विनायकः।

विनायक उवाच

श्रान्तोऽसि नृपशार्दूल! पुनर्गच्छ तमाश्रमम्।।७।।

गजाननेति मन्नाम श्रुत्वायास्यत्यसौ मुनिः।
एवं वदति तस्मिंस्तु सर्वरूपे विनायके।।८।।

तावद् ददर्श भ्रुशुण्डेरात्मानमाश्रमे स्थितम्।
पुनर्दृष्ट्वा स नृपतिं हृदि तर्कानथाकरोत्।।९।।

किमर्थं पुनरायातो राजा किं वा वदिष्यति।
तत ऊचे नमस्कृत्य राजा तं मुनिपुङ्गवम्।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - सर्वज्ञ भए तापनि भगवान् श्रीगणेशले केही नजानेजस्तो गरी भ्रुशुण्डीको आश्रमबाट एकाएक दरबार आइपुगेका काशिराजलाई आदरपूर्वक मेघगम्भीर स्वरबाट उच्चारण गर्दै सोध्नुभयो – हे राजा ! तपाईंले भ्रुशुण्डीको आश्रममा गएर उनीसँग के भन्नुभयो ? र तिनले के जवाफ दिए ? ती कुरा सुनेपछि मात्र मैले तपाईंलाई बुद्धिपूर्वक जवाफ दिनेछु।।१-२।।

**काशिराजले भने** - हे श्रीगणेश ! त्यहाँ गएर मैले हजुरले दिनुभएको सन्देश बताएँ। म आफैले पनि धेरै पटक मेरो घरमा जान प्रार्थना गरें तर भ्रुशुण्डी ऋषिले तपाईं को हुनुहुन्छ ? र ती विनायक को हुन् ? त्यसबारेमा राम्ररी भन्नुहोस्। यदि मैले ध्यान गर्ने गरेका मेरा उपास्य देवता हुँनुहुँदो रहेछ भने म उहाँको दर्शन गर्न जानेछु । यस प्रश्नको उत्तर मैले दिएपछि भ्रुशुण्डीले हजुरलाई नचिनेझैं गर्नुभयो । त्यसबाट म चिन्तित भएँ – यति धेरै बाटो हिंडेर ऋषिलाई नलिईकन रित्तै फर्कनुपर्ने भयो भन्ने चिन्ता गरिरहँदा भ्रुशुण्डी ऋषिले मेरो शिरमा आफ्नो हात राखेर मलाई आँखा चिम्लिन भन्नुभयो। मैले आँखा चिम्लिएँ । एकक्षणमा म आफ्नो दरबारमा आइपुगेंछु। अहिले त्यस आश्रमको वातावरण सम्झिँदा मेरो मनमा अपार हर्ष पैदा हुन्छ ।।३-६।। राजाका यी कुरा सुनेर भगवान् श्रीगणेशले मुसुक्क हाँस्दै भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** - "हे उत्तम राजा ! यद्यपि तपाईं थाक्नुभएको छ, तर तपाईंलाई फेरि भ्रुशुण्डी ऋषिको आश्रममा जानुपर्ने भयो, जानुहोस्। तपाईंले त्यहाँ मेरो नाम श्रीगणेश अथवा विनायक भन्नुभएछ । भ्रुशुण्डी ऋषिसँग मेरो घरमा भगवान् गजानन बस्नुभएको छ भन्नुपर्दछ । गजाननको नाम सुनेपछि ती ऋषि तुरुन्त मेरो दर्शन गर्न आउनेछन्।" यसरी विश्वात्मा श्रीगणेशले भन्नुभएपछि राजाले आफूलाई अचानक भ्रुशुण्डी ऋषिको आश्रममा फेला पारे। आफ्नो आश्रममा फेरि राजालाई आएको देखेर भ्रुशुण्डी ऋषिका मनमा अनेक तर्कहरू तरङ्गित भए - "यी राजा फेरि किन आए ? यिनले

आकारयति त्वां विप्र! स्वामी तव गजानन:।
नाममात्रे श्रुते तस्य जहर्ष च मुमूर्च्छ च।।११।।

रोमाञ्चितशरीरोऽसौ आनन्दाश्रु मुमोच ह।
यदि पक्षौ भवेतां मे तदोड्डीय गतोऽभवम्।।१२।।

इत्युत्कण्ठतया विप्र: प्रतस्थे भूभुजा सह।
भ्रुशुण्डौ चलिते पृथ्वी कदाप्यचलिते मुनौ।।१३।।

चचाल सम्मुखी भूत्वा कम्पन्ती तमथाब्रवीत्।
रक्ष मां मुनिशार्दूल! न भीर्मत्तो धरे तव।।१४।।

गजाननं निजं नाथं द्रष्टुं यामि त्वरान्वित:।
इत्युक्त्वा तां पुरो यातुं चलितोऽसौ द्विजोत्तम:।।१५।।

पदे दत्ते तृतीये तु दर्शयामास तां पुरीम्।
दृष्ट्वा पुरीं नृपो हर्षादुवाच मुनिपुङ्गवम्।।१६।।

त्वत्प्रसादादिदं प्राप्तं पत्तनं वेगवत्तया।
तपतां जपतां दुर्ज्ञो महिमा भवतां मुने।।१७।।

इत्युक्त्वा शीघ्रमनयत् स्वगृहं तं नृपोत्तम:।
उपवेश्य भ्रुशुण्डिं तमासने काञ्चनोत्तरे।।१८।।

अपूजयन् महाभक्त्या पाद्यार्घ्यविष्टरादिभि: ।

ऋषिरुवाच

प्रतारितोऽहं नृपते ! नेक्षे तावद् गजाननम्।।१९।।
तं प्रदर्शय नो चेत् त्वां शप्त्वा यास्ये निजाश्रमम्।

नृप उवाच

क्रीडते बालभावेन बालमध्ये गजानन:।।२०।।

वीरो यथा धूलिलिप्तस्तथैवाऽयं विराजते।
ददर्श च मुनिस्तं तु शुण्डादण्डविराजितम्।
कोटिसूर्यप्रतीकाशं द्विभुजं द्विरदाननम्।।२१।।

मलाई के भन्नेछन् ? ।" त्यसपछि आश्रममा पुगेका राजाले ती ऋषिलाई नमस्कार गर्दै भने – हे ऋषि ! तपाईँका प्रभु भगवान् गजाननले तपाईँलाई बोलाउनुभएको छ । राजाको मुखबाट गजानन नाममात्र सुन्नासाथ ऋषि अत्यन्त ठूलो हर्षमा निमग्न भए । हर्षातिरेकका कारण मूर्च्छित भए ।।७-११।। सम्पूर्ण शरीर रोमाञ्चित भएका भ्रुशुण्डीले आँखाबाट आनन्दका आँसु बगाए । यदि मेरा प्वाँख भएका भए म भर्खरै उडेर मेरा भगवान् गजाननको दर्शन गर्न जाने थिएँ भन्दै र उत्सुकता देखाउँदै काशिराजका साथ काशी जान प्रस्थान गरे। कहिल्यै पनि आश्रम छोडेर नहिंडेका मुनि भ्रुशुण्डीले पाइला चालेपछि तिनको पाउको वेग थाम्न नसकी कम्पायमान भएकी धर्तीले भ्रुशुण्डी ऋषिको प्रार्थना गर्दै भनिन्– हे मुनि मेरो रक्षा गर्नुहोस्। प्रार्थना सुनेर ऋषिले भने – हे पृथिवी ! तिमी मसँग नडराऊ। म मेरा ईश्वर गजाननको दर्शन गर्न तीव्र गतिमा हिंडिरहेको छु। पृथिवीलाई यसरी संझाएर ती ऋषि अगाडि बढे ।।१२-१५।। तीन पाइलामात्र अगाडि बढ्नासाथ तिनले काशीपुरीको दर्शन गरे । काशी पुरीको दर्शन हुनासाथ राजाले सहर्ष भ्रुशुण्डी ऋषिलाई भने – तपाईँको कृपाबाट अत्यन्त ठूलो वेगका साथ हामी तुरुन्तै काशी आइपुग्यौं । तपाईँहरूजस्ता जप-तप गर्ने विद्वान्हरूको महिमा कसैले जान्न सक्तैन ।।१६-१७।। यसरी आफ्ना कुरा भनेर काशिराजले छिटै भ्रुशुण्डी ऋषिलाई आफ्नो दरबारमा पुऱ्याए । सुवर्णमय आसनमा राखेर पाद्य, अर्घ र आसन आदि टक्र्याई भक्तिपूर्वक पूजा गरे।

**ऋषिले भने** – हे काशिराज ! म तपाईँको घर आइपुगें। तर मैले मेरो प्रभु गजाननलाई देखिनँ । म ठगिएँ, उहाँलाई छिटो देखाउनुहोस् । उहाँको दर्शन पाइनँ भने म तपाईँलाई सराप दिएर छिटै आश्रम फर्किनेछु ।

**काशिराजले भने** – हे ऋषि ! भगवान् गजानन बालकहरूको बीचमा बालककै भावमा क्रीडा गरिरहनु भएको छ।।१८-२०।। जसरी बालकहरू धूलोले ढाकिएका हुन्छन् त्यसैगरी गजानन प्रभु पनि जिउभरि धूलैधूलोले ढाकिएर खेलिरहनु भएको छ । त्यसपछि भ्रुशुण्डी ऋषिले पनि लामो सूँढले सुहाउनु भएका र कोटि सूर्यको प्रकाशले प्रकाशित, द्विभुज भगवान् गजाननलाई देखे । दर्शनपछि रिसाएर भ्रुशुण्डीले

उवाच नृपतिं क्रोधात् कथमेनं नमाम्यहम्।
धिक् तं महान्तं यो राजन् ! नमतेऽसौ लघीयसे।।२२।।

तृणमत्ति कथं सिंहो गजगण्डविदारणः ।

क उवाच

श्रुतं तेन मुनेर्वाक्यं तमुवाच ततोऽर्भकः।।२३।।
कौतुकाविष्टचित्तोऽसौ लीलाविग्रहवान् विभुः।

विनायक उवाच

कीदृक् ते स भवेत् स्वामी भुशुण्डे! वद साम्प्रतम्।।२४।।

मुनिरुवाच

दिव्याम्बरो दशभुजो मुक्तामालाविभूषितः।
सिद्धिबुद्धियुतः कर्णकुण्डलाभ्यां विराजितः।।२५।।

शुण्डादण्डमुखो लम्बकर्णः सिन्दूरमण्डितः।
अहिशोभिमहानाभिः क्वणच्चरणनूपुरः।।२६।।

महामुकुटशोभाढ्यो दशायुधलसत्करः।
एकदन्तो भालचन्द्रः क्षुद्रघण्टाविराजितः।।२७।।

मयूरवाहनो देववृन्दवन्दितपादुकः।

क उवाच

इति तद्वचनं श्रुत्वा पद्मासनगतः स्वयम्।।२८।।

तादृग्रूपोऽभवद् बालः सृष्टिरक्षापहारकृत्।
भुशुण्डिस्तं निरीक्ष्यैव स्वस्योपास्यं गजाननम्।।२९।।

लुलुण्ठ भूमौ प्रेम्णा स प्रतिपत्तिपराङ्मुखः।
ननर्त परमानन्दो रोमाञ्चितशरीरवान्।।३०।।

राजालाई भने- हे काशिराज! यी बालकलाई मैले कसरी नमस्कार गरूँ । त्यो मानिसलाई धिक्कार छ जसले यस्ता साना बालकलाई नमस्कार गर्दछ । के हात्तीको गाला फोर्न सक्ने बाघले कहिले घाँस खान्छ ?

**ब्रह्माजीले भन्नुभयो**- मुनिका ती कुरा सुनेर बालकका रूपमा रहनुभएका र लीलाअनुसार मानिसको रूप धारण गर्नुहुने सर्वव्यापक भगवान् श्रीगणेशले चित्तमा उत्सुकता लिएर ती ऋषिलाई भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** – हे भुशुण्डी ! तिम्रा आराध्य भगवान् कस्ता हुनुहुन्छ मलाई बताऊ ? ।।२१-२४।।

**भुशुण्डीले भने** - "मेरा भगवान् दिव्य वस्त्रधारी, दशभुज, मुक्तामाल्यधारी, सिद्धि-बुद्धिसेवित, कर्णकुण्डल-शोभित र शुण्डादण्ड-विभूषित हुनुहुन्छ । उहाँका दुवै कान लामा-लामा छन् । शरीरमा सिन्दूर धारण गर्नुहुन्छ । उहाँको नाभिमा शेषनाग बेरिएका छन् र शिरमा सुन्दर मुकुट सुहाएको छ। उहाँका हातहरूमा दश प्रकारका शस्त्र-अस्त्रहरू छन् । एउटै दाँत भएका कारण उहाँलाई एकदन्त भनिन्छ । उहाँको निधारमा चन्द्रमा सुहाएका छन् र घाँटीमा साना-साना घण्टीहरू झुण्डिएका छन् । उहाँ मयूरवाहन हुनुहुन्छ । सबै देवता आएर उहाँका पाउमा वन्दना गर्दछन् ।"

**ब्रह्माजीले भन्नुभयो** - भुशुण्डी ऋषिका कुरा सुनेर सृष्टि, पालन र संहार गर्न समर्थ भगवान् बालगणेश पद्मासन कसेर बस्नुभयो र आफ्ना आराध्य देवताको जुन स्वरूपको वर्णन भुशुण्डीले गरेका थिए त्यसै स्वरूपमा देखिनुभयो । भुशुण्डी आफ्ना उपास्य देवता गजाननको त्यो रूप देखेर सम्पूर्ण तर्क र शङ्का हटाई प्रेमविह्वल बनी भुइँमा लोटपोट गर्न थाले । तिनले भगवान् गजाननलाई साष्टाङ्ग दण्डवत् प्रणाम गरे । मनमा आएका तर्क र शङ्काबाट पर रही रोमाञ्चित हुँदै परम आनन्दको अनुभव गरेर नाच्न थाले ।।२५-३० ।।
त्यसपछि तिनले देहभाव अँगालेर शरीर झुकाई विधिपूर्वक भगवान् गजाननलाई प्रणाम गरे । अनेक थरि उपचारद्वारा भगवान् गजाननको पूजा गरे। भुशुण्डी ऋषिको आराधनाबाट खुसी हुनुभएका भगवान् गजाननले पनि आफ्ना दश भुजाहरूद्वारा

देहभावं प्रपद्याथ प्रणनाम यथाविधि।
पूजयामास विधिवदुपचारै: पृथक् पृथक्।।३१।।

आलिङ्ग्य दशदोर्दण्डै: परमात्मा जहर्ष ह।
सगद्‌गदौ निरीक्ष्यैतौ साश्रू राजा ततोऽप्यभूत्।।३२।।

ऊचे राजा महापुण्यं फलितं पूर्वजन्मजम्।
देवभक्तभवं सौख्यं दृष्टमद्य मयाऽद्‌भुतम्।।३३।।

उभाभ्यां प्रणिपत्याऽथ पुपूज च यथाविधि।
महासनगतौ तौ तु परस्परमथोचतु:।।३४।।

गजानन उवाच
तव निष्ठा मयाऽज्ञायि राज्ञा चापि निवेदिता।
अत एव धृतो वेषो दशदोर्दण्डमण्डित:।।३५।।

यथा यथा जनोऽन्योऽपि ध्यात्वा मां भजते मुने।
तथा तथाऽहं रूपाणि करोमि च ददामि च।।३६।।

वाञ्छितं तस्य लोकस्य विश्वासे न भजत्यसौ।
दुष्टभारभयाक्रान्ता धरित्री सत्यलोकगा।।३७।।

ब्रह्माणं शरणं याता तेनाऽहं प्रतिबोधित:।
अदित्याश्च वरेणाऽहं जात: कश्यपनन्दन:।।३८।।

भुवो भारं हरिष्यामि शक्रादींश्च निजे पदे।
स्थापयिष्यामि दैत्यानां नाशं कृत्वाऽप्यनेकधा।।३९।।

तवोत्कटमनुष्ठानं दृष्ट्वाऽहमीदृशोऽभवम्।
देवान्तकं सह भ्रात्रा हत्वा यामि निजं पदम्।।४०।।

ऋषिरुवाच
दृष्ट्वा तवाङ्घ्रियुगलं सर्वलोकसुखावहम्।
सर्वक्लेशहरं देववन्द्यं काङ्क्षितदं प्रभो।।४१।।

कृतकृत्य: पवित्रश्च जातोऽहं तव दर्शनात्।
वरं मे देहि विश्वात्मँस्तेन तृप्तो भवाम्यहम्।।४२।।

भुशुण्डीलाई आलिङ्गन गरेर प्रसन्नताको अनुभव गर्नुभयो । भुशुण्डी ऋषि र भगवान् दुवै गद्‌गद हुनुभयो । दुवैका आँखाबाट प्रेमका आँसु रसाए । काशिराजले भक्त भुशुण्डी र भगवान् गजानन दुवैलाई गद्‌गद अवस्थामा देखेर आफू पनि भावविह्वल बनी खुसीका आँसु बगाउन थाले ।।३१-३२।। त्यसपछि राजाले भने - "मेरो पूर्वजन्मको ठूलो पुण्य आज फलीभूत भएको छ। भगवान् र भक्तका मिलनको परम अद्‌भुत आनन्द मैले आज अनुभव गरें ।" त्यसपछि राजाले दुवैलाई प्रणाम गरेर विधिपूर्वक पूजा गरे । भान्छामा भोजनका लागि जानुभएका भगवान् गजानन र भुशुण्डी ऋषिको बीचमा मीठो संवाद भयो ।।३३-३४।।

**गजाननले भन्नुभयो-** हे ऋषि ! तपाईंले ममा गर्नुभएको श्रद्धा मैले थाहा पाएँ र राजाले पनि मलाई यस्तै कुरा गरेका थिए। तपाईंको भक्तिभावलाई बुझेर नै मैले तपाईंको चित्त बुझाउन बालकरूप छाडी दशभुजा भएको स्वरूप धारण गरेर तपाईंलाई दर्शन दिएँ। मेरा भक्तहरूले मेरा अनेक रूपमध्ये जुन रूपको ध्यान गर्दछन्, भजन गर्दछन्, म ती-ती रूपबाट नै तिनलाई दर्शन दिने गर्दछु । ती मेरा भक्तहरू आफ्नो आराध्यलाई आफूले चाहेको रूपमा देख्न पाउँदा विश्वासपूर्वक भजनमा प्रवृत्त हुन्छन्। हे भुशुण्डी ऋषि ! दुष्टहरूको भारले डराएकी पृथिवी एक दिन सत्यलोकमा गएर ब्रह्माजीको शरणमा परेकी थिइन्। ब्रह्माजीले मेरो प्रार्थना गर्नुभयो। अदिति र कश्यपले मलाई पुत्ररूपमा प्राप्त गर्न छुट्टै तपस्या गर्नुभएको थियो। उहाँहरूलाई वरदान दिएका कारण म कश्यप ऋषिका छोरा कश्यपनन्दन बनेर अवतीर्ण भएँ।।३५-३८।। म अब पृथिवीको भार हरण गर्नेछु। दैत्यहरूबाट दु:ख पाएका इन्द्र आदि देवताहरूलाई तिनका ती-ती पदमा फेरि आसीन गराउनेछु। अनेक पटक युद्ध गरी दैत्यहरूको संहार गर्नेछु।।३९।। आज तपाईंको अत्यन्त विशिष्ट साधना देखेर म यस रूपमा तपाईंका सामु उपस्थित छु। देवान्तक नामक दानव र त्यसका भाइ नरान्तकको वध गरेर म आफ्नो धाममा फर्कनेछु ।।४०।।

**भुशुण्डी भने-** हे प्रभु ! सबै प्रकारका क्लेशलाई हरण गर्ने, मनले चिताएको कुरा पुऱ्याउने र सबै लोकलाई सुख

यदा यदाऽहं ध्यायामि रूपेणानेन विघ्नप! ।
तदा तदा मे प्रत्यक्षो भवेथाः करुणानिधे।।४३।।

आशापूरक इत्येवं नाम ते ख्यातिमेतु च।

गजानन उवाच

यदा यदा वाञ्छसे त्वं तदा यास्यामि तेऽन्तिकम्।।४४।।
भक्तिभावादिदं नाम त्वयोक्तं ख्यातिमेष्यति।

क उवाच

एवं वरौ समाकर्ण्य प्रणनाम मुदा मुनिः।।४५।।

प्रणते तु मुनौ तस्मिन् पुनः प्रोचे गजाननः।
निधाय मस्तके हस्तं शनैस्तस्य द्विजस्य सः।।४६।।

यद् यत् ते वाञ्छितं ब्रह्मन् ! तत्सर्वं सिद्धिमेष्यति।
अविस्मृतिश्च भविता मम नित्यं मुने ! तव।।४७।।

क उवाच

एवमुक्त्वा बालरूपश्चिक्रीड स विनायकः।
सोऽपि पद्मासनगतो ध्यानमेवान्वपद्यत।।४८।।

आश्चर्यं परमं चक्रुः सर्वलोकास्तदाऽद्भुतम्।
निरीक्ष्य बालरूपस्य चरितं परमात्मनः।।४९।।

काशिराजोऽवदत्तत्र धन्योऽहं जगतीतले।
दर्शनं प्राप्तवानस्य ब्रह्मादीनां सुदुर्लभम्।।५०।।

तञ्च बालं करे धृत्वा निनायान्तर्गृहं मुदा।
भोजयामास स्वाद्वन्नं शाययामास पूर्ववत्।
आज्ञां गृहीत्वा सुष्वाप स्वयञ्च पूर्ववन्मुने।।५१।।

प्रदान गर्ने हजुरका वन्दनीय चरणहरूको दर्शन पाएर आज म कृतकृत्य र पवित्र भएको छु । हे विश्वात्मा भगवन् ! मलाई वर दिनुहोस्, म त्यसबाट तृप्त हुनेछु । मैले ध्यान गर्दा दशभुजाधारी गजाननका रूपमा सर्वदा दर्शन पाउन सकूँ ।।४२-४३।। हजुरको आशापूरक भन्ने नाम संसारमा प्रसिद्ध होस् ।

**गजाननले भन्नुभयो** - हे भुशुण्डी ऋषि ! तपाईंले जुन बेला मेरो दशभुजस्वरूपको दर्शन गर्न चाहनुहुनेछ त्यस बेला म तपाईंको समीपमा आउनेछु । तपाईंले भक्तिपूर्वक सम्बोधन गर्नुभएको आशापूरक भन्ने मेरो नाम संसारमा प्रसिद्ध हुनेछ।

**ब्रह्माजीले भन्नुभयो** - भगवान्का मुखबाट यी दुई वरदान पाएर भुशुण्डी ऋषिले भगवान्लाई प्रणाम गरे । त्यसपछि भगवान्ले तिनका शिरमा हात राखेर भन्नुभयो – हे ब्राह्मणदेवता! तपाईंले चाहेको कुरा सबै सिद्ध हुनेछ । मलाई तपाईंले कहिल्यै पनि बिर्सनुहुनेछैन ।।४४-४७।।

**ब्रह्माजीले भन्नुभयो** - ऋषिलाई यस्तो वरदान दिएर फेरि बालक बन्नुभएका भगवान् श्रीगणेश बालक्रीडाका निमित्त बालकहरू भएको ठाउँमा जानुभयो । भुशुण्डी ऋषि पनि पद्मासन लगाएर दशभुजा धारण गर्नुहुने भगवान् गजाननको ध्यान गर्न लागे । भुशुण्डी ऋषि र भगवान्को यो लीला देखेर सबै नर-नारीहरू अद्भुत घटना भयो भन्दै आश्चर्यमा परेका थिए । काशिराजले बालरूप धारण गर्नुहुने परमात्मा श्रीगणेशको चरित्र देखेर म संसारमा धन्य भएँ र मैले ब्रह्मा आदि देवताहरूका निमित्त पनि दुर्लभ गजानन प्रभुको दर्शन पाएँ भने ।।४८-५०।। त्यसपछि काशिराजले बालकरूपमा खेलिरहनु भएका भगवान्लाई हातमा समातेर हर्षपूर्वक घरभित्र लिएर गए । तिनले उहाँलाई मीठो भोजन गराई पहिलेजस्तै शय्यामा शयन गराउने काम पनि गरे । त्यसपछि भगवान् बालगणेशको आज्ञा लिएर आफू पनि पूर्ववत् आफ्नो शयनकक्षतर्फ लागे ।।५१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते भुशुण्डिगजाननमेलनं नाम सप्तदशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'भक्त भुशुण्डी र भगवान् गजाननको मिलन' शीर्षकान्वित सत्रौं अध्याय पूर्ण भयो ।।१७।।

ॐ

## अष्टादशोऽध्याय:

व्यास उवाच

अपरेऽहनि सम्प्राप्ते का कथा समपद्यत।
तां मे कथय लोकेश ! शृण्वन् तृप्यामि न क्वचित्।।१।।

क उवाच

शृणुष्वावहितो ब्रह्मन् ! कथयामि समासत:।
विनायककृतां दिव्यां कथां पापापनोदिनीम्।।२।।
उदिते तु दिवानाथे नित्यकर्म समाप्य तौ।
क्रीडार्थमगमद् बालो राजा भद्रासनन्तथा।।३।।
दैत्योऽथ ब्राह्मणो भूत्वा ज्योति:शास्त्रविशारद:।
तालीयं पुस्तकं वामे मालां दक्षे करे दधत्।।४।।
पाटलं परिधानञ्च शिरोवस्त्रं महत्तरम्।
गोपीचन्दनसम्भूताँस्तिलकान् द्वादशापि च।।५।।
अतिदीर्घतमश्मश्रुराजगाम नृपान्तिकम्।
समीपमागतं यावत् तावद् राजा ननाम तम्।।६।।
उत्थाय तं समीपे स स्वासने सन्यवेशयत्।
प्रपच्छ कुशलं तस्मै कार्यञ्चागमनं कुत:।।७।।
किञ्च ते नाम विप्रेन्द्र ! किं ज्ञानं किञ्च ते तप:।
वद सत्यं मुने ! कृत्वा कृपां मयि कृपानिधे।।८।।

क उवाच

एवं पृष्ट: स तेनाशु दत्त्वाशीर्वचनं पुरा।
अनुक्रमेण सकलं निजगाद महामुने।।९।।
हेमज्योतिर्विदित्यैवं नाम मे नृपनन्दन!।।
गन्धर्वलोकादायातो वस्तुं तव समाश्रये।।१०।।
भूतं भवद् भविष्यञ्च शान्तिकानि च वेद्म्यहम्।
प्रश्नाँश्च कथयिष्यामि यान् यान् त्वं पृच्छसेऽनघ।।११।।
अरिष्टान्यत्र जातानि ज्ञातानि तानि मे नृप !।
भावि ते दुष्टचिह्नञ्च विज्ञायाऽहं समागत:।।१२।।
त्वदाश्रयेण वस्तुं मे वाञ्छाऽस्ति नृपसत्तम।

## { १८ अध्याय }

**व्यासले भन्नुभयो** - हे भगवन् ! भगवान् विश्राम गर्न जानुभएपछि दोस्रो दिन के के घटना भए ? तिनको विषयमा मलाई बताउनुहोस् ? हे संसारका स्वामी ! भगवान् श्रीगणेशका कथा सुनेर म कहिल्यै पनि तृप्त हुदिनँ ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! तपाइँ सावधान भएर सुन्नुहोस्, म भगवान् श्रीगणेशको पापनाशक दिव्य कथा सुनाउँछु । अर्को दिन बिहान सूर्य उदाएपछि भगवान् श्रीगणेश र काशिराज दुबैले नित्यकर्म समाप्त गर्नुभयो। भगवान् बालगणेश बालकहरूसँग क्रीडा गर्न जानुभयो भने राजा आफ्नो सिंहासनतर्फ लागे ।।२-३।। त्यो दिन लामा जुँगा भएको एउटा दैत्य ज्योतिषज्ञ ब्राह्मणको रूप धारण गरी बायाँ हातमा ताडपत्रमा लेखिएको पुस्तक र दायाँ हातमा माला लिएर राती कपडाले शिरमा पगरी गुथी बाह्रै अङ्गमा गोपीचन्दनको तिलक लगाएर काशिराजको समीपमा आयो। त्यसलाई देखेर राजाले नमस्कार गरे।।४-६।। त्यसपछि काशिराजले कुशल प्रश्न गरी ती ब्राह्मणलाई आफ्नो नजिकमा रहेको उत्तम आसनमा बसाएर प्रश्न गरे - हे ब्राह्मण देवता ! तपाइँ कुन कार्यले आउनुभएको हो र कहाँबाट आउनुभएको हो ? तपाइँको नाम के हो ? कति र कस्ता-कस्ता विद्याको अध्ययन गर्नुभएको छ ? तपाइँले कहाँ गएर तपस्या गर्नुभयो? ममाथि कृपा गरेर साँचो-साँचो बताउनुहोस् ।।७-८।।

**ब्रह्माजीले भन्नुभयो** - राजाले यसरी प्रश्न गरेपछि त्यो ब्राह्मणरूपधारी दैत्यले छिटै आशीर्वाद दिँदै प्रश्नअनुसारका उत्तर दियो - हे राजा ! मेरो नाम हेमज्योति हो। म गन्धर्वलोकबाट आएको हुँ। म तपाइँको आश्रयमा बस्न चाहन्छु। मैले भूत, वर्तमान र भविष्यको ज्ञानका साथै स्वस्तिशान्तिको विधि पनि जानेको छु। हे निष्पाप राजा ! तपाइँले अरू प्रश्न सोध्नुहोस्, म जवाफ दिनेछु। तपाइँको राज्यमा धेरै अरिष्टहरू भए, ती सबैको विषयमा मलाई थाहा छ । भविष्यमा तपाइँलाई नराम्रो हुने लक्षण बुझेर म यहाँ आएको हुँ ।।९-१२।। हे उत्तम राजा ! तपाइँको आश्रयमा बस्ने मेरो ठूलो धोको छ ।

नृप उवाच

**किं निमित्तमरिष्टानि जायन्तेऽत्र महामुने।।१३।।**

**अग्रेऽपि कानि भावीनि सत्यमेव वदस्व मे।**
**तव प्रतीतौ जातायां स्थापयिष्ये निजे गृहे।।१४।।**

**वृत्तिश्च कल्पयिष्यामि योगक्षेमकरीन्तव।**

गणक उवाच

**यावद् विनायकस्तेऽस्ति गृहे कश्यपनन्दनः।।१५।।**

**तावद् विघ्नानि जायन्ते यतो विघ्नाधिपस्तु सः।**
**असञ्चारे वने चैनं त्यक्त्वायाहि नृपात्मज।।१६।।**

**न भविष्यति विघ्नं ते नगरे वा गृहेऽपि च।**
**अस्मिन् स्थिते जलं सर्व नगरं प्लावयिष्यति।।१७।।**

**तस्मिन् कथञ्चिन्नष्टे तु पर्वता वायुनोदिताः।**
**चूर्णयिष्यन्ति नगरं नृप! नास्त्यत्र संशयः।।१८।।**

**एतत् कथं न जानीषे पूर्वं नासन्नुपद्रवाः।।**
**राज्ञा विश्वसितव्यं नो कपटे लुब्धकेऽशुचौ।।१९।।**

**अतिशूरे स्वोत्कटे च स्वात्मपातं प्रपश्यता।**
**एते घ्नन्ति च राजानं राज्यकामा महाशयाः।।२०।।**

**एतत् कथयितुं यातो ज्ञात्वा राज्यच्युतिं तव।**
**हिताहितमवश्यं हि वक्तव्यं जानता नृपे।।२१।।**

**विविच्य नृप ! मे वाक्यं यथेच्छसि तथा कुरु।।**

क उवाच

**एवमाकर्ण्य तद्वाक्यं राजा तं पर्यभाषत।।२२।।**

राजोवाच

**अतीतानागतज्ञानादुक्तं सर्वं त्वया मुने !**
**मिथ्यैव भासते मह्यं तत्त्वज्ञाने प्रपञ्चवत्।।२३।।**

**राजाले भने -** हे मुनिवर ! यहाँ किन अरिष्ट भइरहेका छन् ? ।।१३।। भविष्यमा कस्ता अरिष्ट हुने सम्भावना छ ? तपाईंले यस विषयमा साँचो-साँचो कुरा बताउनुहोस्। तपाईंले दिएको उत्तरमा मलाई विश्वास लाग्यो भने मैले तपाईंलाई आफ्नो घरमा आश्रय दिनेछु र जीवननिर्वाहका लागि जीविकाको पनि व्यवस्था गर्नेछु ।

**ज्योतिषी राक्षसले भन्यो -** हे राजा ! जबसम्म तपाईंको घरमा कश्यप ऋषिका छोरा श्रीगणेश रहन्छन्, तबसम्म तपाईंका घरमा विघ्नै विघ्न हुनेछन् किनकि ती विघ्नका स्वामी हुन्। हे राजा ! जहाँ मानिसहरूको गतिविधि हुँदैन, त्यस्तो निर्जन वनमा श्रीगणेशलाई फ्याँकेर तपाईं आउनुहोस्।।१४-१६।। त्यसपछि तपाईंको नगर र घरमा पनि कुनै विघ्न हुनेछैन। यी विनायक तपाईंका घरमा बसिरहे भने पानीले तपाईंको नगर डुबाइदिनेछ। पानी कथञ्चित घटेर गए पनि हावाले उडाएका पर्वतहरूले तपाईंको शहरलाई छिन्न-भिन्न तुल्याउनेछन्। हे राजा ! मैले भनेको कुरामा कुनै पनि सन्देह छैन।।१७-१८।। तपाईंले मेरो कुरामा विश्वास गर्नुहोस्। किन विश्वास गर्नुहुन्न ? तपाईंको घरमा श्रीगणेश नआउँदासम्म कुनै विघ्न थिएन । अहिले अनेक विघ्न भइरहेका छन्। हे राजा ! कहिल्यै पनि नीति जान्ने राजाले कपटी, लोभी, अपवित्र, अतिशूर र अति उत्कट पुरुषार्थ भएको मानिसमा विश्वास गर्न हुँदैन। त्यसबाट आफ्नै पतन हुन्छ। यी मैले बताएका मानिसहरूले राजालाई राजगद्दीबाट हटाएर राज्यमा आफ्नो अस्तित्व कायम गर्न चाहन्छन् र ठूलो महत्त्वाकांक्षा लिएर अगाडि बढी राजालाई नै समाप्त पारिदिन्छन्। भविष्यमा तपाईंको राज्यसिंहासनबाट पतन हुने कुरा थाहा पाएर म सूचना दिन आएको हुँ। शास्त्र जान्ने मानिसले राजाको समीपमा आएर हित र अहित दुबै कुरा बताउनुपर्छ । यो नीति हो।।१९-२१।। म त्यसैका निमित्त आएको छु । हे राजा ! मेरो भनाइमाथि विचार गर्नुहोस् । त्यसपछि तपाईंलाई जस्तो मन लाग्छ त्यस्तै गर्नुहोस्।

**ब्रह्माजीले भन्नुभयो -** कपटी ज्योतिषीका यी कुरा सुनेर राजाले त्यसलाई भने।।२२।।

**राजाले भने -** हे ब्राह्मण ! भूत र भविष्यत् कालका विषयको ज्ञान भएका कारण तपाईंले आफूले जानेका कुरा

त्वदुक्तप्रत्यये जाते दास्यामि वेतनं तव।
न ज्ञातो बालकश्चायं त्वया गणकसत्तम।।२४।।

ब्रह्माणं कमलाकान्तमपरं शूलिनं हरम्।
जनयिष्यति वाञ्छा चेद् ब्रह्माण्डानि बहूनि सः।।२५।।

यदि ते निश्चयो वाक्ये स्वकीये ब्राह्मणोत्तम !
नयैनं गहनं घोरं त्यक्त्वैनं पुनरेहि च।।२६।।

लोकद्वेषकृतोऽनेन निहता बलवत्तराः।
स्वद्वेष्टारं कथमयं न जाने स्थापयिष्यति।।२७।।

अनिष्टमस्य मनसि न वयं चिन्तितुं क्षमाः।
अनेन नगरीराज्यं त्रातमुत्पाततो बहु।।२८।।

करोतीन्द्रमनिन्द्रं वाऽशक्तं शक्तं लघुं गुरुम्।
उच्चं नीचं तथा नीचमुच्चमीशमनीश्वरम्।।२९।।

संश्रुत्य वाणीं नृपतेर्गणकोऽभूद् रुषाऽरुणः।
राजानं पुनरारेभे वक्तुं किञ्चिदवाङ्मुखः।।३०।।

मया तव हितं प्रोक्तमनिष्टं तव भासते।
न जातु लङ्घयेत् कोऽपि भावि सुष्ठु तथेतरत्।।३१।।

नृपते ! दर्शयैनं मे बालकं लक्षणानि ते।
कथयिष्ये ततो बालान् सर्वानाकारयन् नृपः।।३२।।

अग्रे विनायकः प्राप्तो धावमानास्ततोऽखिलाः।
गणकं स नमस्कृत्य पप्रच्छ कुत आगतः।।३३।।

सामुद्रलक्षणज्ञोऽसि ज्योतिःशास्त्रविशारदः।
भूतभाविभविष्यज्ञ ! वद मे भाग्यजं फलम्।।३४।।

बताउनुभयो । योगीलाई तत्त्वज्ञान हुँदा संसार झुट्टा लागेजस्तै मलाई पनि तपाईंका कुरामा विश्वास लागिरहेको छैन। तपाईंले भनेका कुरामा मलाई विश्वास लाग्यो भने म तपाईंलाई वेतन दिएर यहाँ राख्नेछु। जुन बालकको विषयमा कुरा गर्नुभयो उहाँको महिमा तपाईंले बुझ्नुभएको छैन ।।२३-२४।। बालकरूप श्रीगणेशले आफूले चाहेको अवस्थामा दोस्रा ब्रह्मा, विष्णु र शङ्कर पैदा गर्न सक्नुहुन्छ।।२५।। अनेक ब्रह्माण्डको रचना गर्न सक्नुहुन्छ। हे ब्राह्मण! यदि तपाईंलाई मेरो वाक्यमा विश्वास छ भने श्रीगणेशलाई गहन र भयङ्कर वनमा पुऱ्याउनुहोस् र त्यहाँ एक्लै छाडेर यहाँ फर्कनुहोस् ।।२६।। श्रीगणेशले संसारसँग द्वेष गर्ने अनेक बलवान् दानवहरूलाई मार्नुभएको छ। जसले आफूसँग द्वेष गर्छ त्यस्ता मानिसलाई उहाँले स्थापित गर्नुहुन्न। हामी त उहाँको विषयमा मनले पनि अनिष्ट चिन्तन गर्न सक्दैनौं । श्रीगणेशले ठूला-ठूला उत्पातबाट काशीराज्यको रक्षा गर्नुभएको छ।।२७-२८।। श्रीगणेशले इन्द्रलाई पीरै पीरमा पार्न सक्नुहुन्छ । बृहस्पतिलाई बोल्न असमर्थ तुल्याउन सक्नुहुन्छ। उँचो मानिसलाई नीचो बनाउन सक्नुहुन्छ र नीचोलाई उँचो बनाउन सक्नुहुन्छ। उहाँले ईश्वरतत्त्वलाई पनि अनीश्वर तत्त्व बनाउन सक्नुहुन्छ।।२९।। राजाको वचन सुनेर त्यस कपटी ब्राह्मणले रिसाएर आफ्नो अनुहार रातो बनायो। केही बेरपछि शिर झुकाएर राजालाई भन्न थाल्यो - हे राजा ! मैले हितकै कुरा गरेको थिएँ तर तपाईंलाई नराम्रो लाग्यो। कसैले पनि भोलि हुने राम्रा अथवा नराम्रा कुरा बदल्न सक्दैन ।।३०-३१।। हे राजा ! मलाई तपाईंले ती बालक देखाउनुहोस् । म तिनका सारा लक्षण बताइदिनेछु। त्यसपछि राजाले सबै बालकहरूलाई बोलाए ।।३२।। राजाले बोलाएको थाहा पाएपछि सबभन्दा पहिले श्रीगणेश दगुर्दै आउनुभयो। उहाँका पछिपछि अरू बालकहरू पनि आए। कपटी ज्योतिषीलाई नमस्कार गरेर श्रीगणेशले सोध्नुभयो - हे ब्राह्मण! तपाईं कहाँबाट आउनु भएको हो ? के तपाईंले सामुद्रिकशास्त्र जान्नुभएको छ? के तपाईं ज्योतिषशास्त्रका पण्डित हुनुहुन्छ? के तपाईंले भूत, वर्तमान र भविष्यत्का कुरा जान्नुहुन्छ ? जान्नुहुन्छ भने भन्नुहोस्, मेरो भाग्यको फल कस्तो छ ? ।।३३-३४।।

क उवाच

सधैर्यं बालवाक्यं तदाकर्ण्य कपटी द्विजः।
तर्कयामास मनसि कथं स्वस्तिगतिर्भवेत्।।३५।।

अनेन निहता दुष्टा बलिनोऽनेकरूपिणः।
शिशोर्हस्तं गृहीत्वा स वदति स्म शुभाशुभम्।।३६।।

चतुर्षु दिवसेषु त्वं कूपमध्ये पतिष्यसि।
चेन्निर्गतः कथञ्चित् त्वं सिन्धौ मज्जनमेष्यसि।।३७।।

ततोऽपि जीवितश्चेत् तु ध्वान्तमग्नो भविष्यसि।
ततोऽपि जीविते शैलस्त्वयि कोऽपि पतिष्यति।।३८।।

महान्तौ कालपुरुषौ जीवन्तं भक्षयिष्यतः।
एतान्यरिष्टानि तव भविष्यन्ति न संशयः।।३९।।

प्रतीकारं ब्रवीम्यत्र निर्भयार्थं कुरुष्व तम्।
ततोऽन्यत्र मया सार्द्धं याहि दिनचतुष्टयम्।।४०।।

पुनरत्रानयिष्यामि शपथो मे तवाङ्घ्रिजः।
निशम्य वाचं बालोऽसौ जगामान्तर्गृहं शनैः।।४१।।

राज्ञो हस्तात् प्रगृह्याशु मुद्रिकां रत्ननिर्मिताम्।
कृत्वा तां स्वकरे बालो वदति स्म द्विजं प्रति।।४२।।

गणकाशु वद त्वन्नो गतं वस्तु महत्तरम्।
केन नीतं कदा प्राप्तं भूयात् ते प्रत्ययो भवेत्।।४३।।

इत्युक्तः स तु बालेन विचार्य जनसंसदि।
बभाण हास्यवदनो मुद्रिका यदि लभ्यते।।४४।।

ममैव यदि देया सा तदेदानीं ब्रवीम्यहम्।
तथेति बालकेनोक्ते तवैव करगेति सा।।४५।।

इत्थमुक्तो जिह्मवेषधारिणा वाडवेन सः।
तया मन्त्रितया बालो न्यवधीत् तं हृदि क्षणात्।।४६।।

स तया भिन्नहृदयो वज्राहत इवाचलः।
निपपात धरापृष्ठे चालयन् वसुधां भृशम्।।४७।।

पतता तस्य देहेन चूर्णितं नगरं कियत्।
काशिराजो जनाः सर्व आश्चर्य मेनिरे तदा।।४८।।

**ब्रह्माजीले भन्नुभयो** – त्यो कपटी ब्राह्मणले धैर्यपूर्वक बालकका कुरा सुनेर मनमा तर्क गन्यो – 'कसरी मैले आफ्नो कल्याण गर्ने बाटो बनाऊँ ? यो बालकले अनेक बलवान् शत्रुहरूलाई मारिसकेको छ।' यसरी मनमनै विचार गरेर त्यसले बालगणेशको हात समाती शुभ र अशुभ बताउन थाल्यो ।।३५–३६।। हे बाबु ! तिमी आजको चार दिनभित्र गहिरो कुवाको माझमा खस्नेछौ। कुनै तरिकाले त्यो कुवाबाट बाहिर निस्कन सक्यौ भने तिमी महासागरमा डुब्नेछौ। महासागरबाट पनि कुनै तरिकाले जिउँदै निस्क्यौ भने तिमी महान् अन्धकारमा डुब्नेछौ।।३७।। त्यहाँबाट जिउँदै निस्कन सफल भयौ भने तिम्रो टाउकामा ठूलो पर्वत खस्नेछ।।३८।। त्यसपछि ठूला-ठूला दुई कालपुरुषले तिमीलाई जिउँदै खानेछन्। यी तिम्रा भविष्यमा हुने अनिष्ट हुन् । यसमा कुनै सन्देह छैन।।३९।। म तिमीलाई आपत्तिबाट जोगाउने र भयमुक्त गराउने उपाय बताउँछु । आगामी चार दिन तिमी यहाँ नबस, मेरो साथमा कतै हिंड। तिमीलाई म चार दिनपछि यहीं ल्याइदिनेछु। तिम्रा खुट्टा छोएर म किरिया खाँदैछु। कपटी ज्योतिषीका यी कुरा सुनेर श्रीगणेश सुस्तरी घरभित्र जानुभयो ।।४०–४१।। राजाको औंठी आफ्नो हातमा लिएर मुठ्ठी कसी कपटी ब्राह्मणलाई भन्नुभयो – हे ज्योतिषी ! तपाईंले छिट्टै बताउनुहोस् मेरो एउटा महँगो वस्तु हराएको छ, कसले लग्यो ? कहिले प्राप्त हुनेछ ? यसको उत्तर दिनुभयो भने मलाई तपाईंमाथि विश्वास लाग्नेछ।।४२–४३।। यसरी बालकले भनेपछि त्यसले जनसमूहको बीचमा हाँस्दै भन्यो – यदि तिम्रो हराएको महँगो वस्तु औंठी हो भने र मैले भनेअनुसार पाइयो भने त्यो औंठी मलाई दिनुपर्छ, अनि म तिमीलाई कहाँ छ त्यो वस्तु बताउनेछु। श्रीगणेशले हुन्छ भन्नुभयो । त्यसपछि कपटी ज्योतिषीले भन्यो– तिम्रै हातमा त्यो औंठी छ। त्यसले उत्तर दिएपछि श्रीगणेशले त्यो औंठी अभिमन्त्रित गरी ब्राह्मणको छातीमा प्रहार गरेर त्यसलाई मारिदिनुभयो ।।४४–४६।। यसरी औंठीद्वारा पेट चिरिएपछि त्यो कपटी दानव वज्र प्रहार गर्दा पर्वत ढलेझैं भुइँमा पछारियो। त्यो भुइँमा खस्दा पृथिवीमा कम्प गएको थियो र त्यसको मृत शरीरको स्पर्शले नगरका केही घरहरू चर्केका थिए । काशिराज र त्यहाँ भएका सबै मानिस बालगणेशको यो चरित्र देखेर आश्चर्यचकित भए ।।४७–४८।। त्यसबेला

जहृषुर्देवता: सर्वा: पुष्पवृष्टिं सुचक्रिरे।
स्वर्गभूवाद्यघोषैर्द्यौर्व्याप्ताभूद् भूतलं तदा।।४९।।

जना ऊचु:

कथं ज्ञातोऽनेन दुष्टो ब्राह्मणो ब्रह्मवेषभृत्।
राज्ञापि न कृतं दैवाद् वाक्यं तस्य दुरात्मन:।।५०।।

अयं बालो न मन्तव्यो भूभारहरणेऽमर:।
अवतीर्ण: कश्यपस्य गृहेऽसौ करुणानिधि:।।५१।।

मुद्रिकाघातमात्रेण कथं प्राणान् जहौ बली।
इत्युक्त्वा पुपूजु: सर्वे नेमुस्तं तुष्टुवुर्जगु:।।५२।।

ददौ दानानि विप्रेभ्यो राजा राजीवलोचन:।।
द्विजचारणवन्दिभ्यो दीनेभ्यश्चाप्यनेकश:।।५३।।

नागरान् मानयित्वा तान् विससर्ज तत: सभाम्।
बालोऽपि बालकै रन्तुं ययौ पूर्ववदज्ञवत्।।५४।।

देवताहरू खुसी भए र फूल वर्षाए। स्वर्ग र पृथिवीमा बजाइएका बाजाहरूका ध्वनिबाट आकाश र धर्ती गुञ्जायमान भए।।४९।।

**मानिसहरूले भने** – भगवान् श्रीगणेशले ब्राह्मणको रूप लिएर आउने मानिसलाई दैत्य हो भन्ने कुरा कसरी थाहा पाउनुभयो ? राजाले पनि त्यो दुरात्माले जसरी कुरा गरेको थियो त्यसरी किन व्यवहार गरेनन् ? हामीलाई अचम्म लागिरहेको छ। यी बालकलाई बालक मात्र हुँदैन। पृथिवीको भार हरण गर्न कश्यपका घरमा अवतार लिनुहुने करुणामय देवता हुनुहुन्छ भन्ने कुरा सबैले विश्वास गर्नुपर्दछ।।५०-५१।। त्यतिविधि बलियो त्यो कपटी राक्षस औंठीको प्रहारबाट मात्र कसरी ढल्यो र कसरी त्यसले प्राणत्याग गऱ्यो ? यस्ता कुराहरू गर्दै सबै मानिसहरूले भगवान् श्रीगणेशको पूजा, वन्दना, स्तुति र गुणगान गरे।।५२।। कमलजस्ता आँखा भएका काशी नरेशले पनि ब्राह्मणहरूलाई दान दिए। सामान्य ब्राह्मण, सेवकगण, स्तुतिगान गर्ने मानिस र दीनदु:खीहरूलाई पनि अनेक उपहार प्रदान गरे। नगरका नर-नारीलाई सम्मानपूर्वक बिदा गरे अनि सभा विसर्जन गरे। श्रीगणेश पनि केही नजान्ने बालक भएसरह बालकहरूसँग क्रीडा गर्न जानुभयो।।५३-५४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते कपटिदैत्यवधो नामाष्टादशोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कपटी दैत्यको वध' शीर्षकान्वित अठारौं अध्याय पूर्ण भयो ।।१८।।

ॐ

## ऊनविंशोऽध्यायः { १९ अध्याय }

क उवाच
बालकेन हतं श्रुत्वा ब्राह्मणं वेषधारिणम्।
नरान्तको महादैत्यः कूपकं कन्दरासुरम्।।१।।
प्रेषयामास बलिनं ब्रह्मलब्धवरं तदा।
दत्त्वा बहूनि वस्त्राणि रत्नानि विविधानि च।।२।।

दैत्य उवाच
गच्छ तं सुमुहूर्तेन हन्तुं बालं तमाशु च।
नानोपायैर्मारितानां कुरुतं निष्कृतिं बलात्।।३।।

क उवाच
एवं तेन समाज्ञप्तावसुरौ कूपकन्दरौ।
सेनया चतुरङ्गिण्या गव्यूतिं सम्प्रतस्थतुः।।४।।
निर्वर्त्य सेनाञ्च तत ईयतुर्भृशहर्षितौ।
विचारं चक्रतुर्मार्गे कूपोऽहं कूपतामियाम्।।५।।
बालो भव क्रीडमानं मयि तं क्षिप यत्नतः।
मण्डूकरूपः कूपस्थो भक्षयिष्यामि तत्क्षणात्।।६।।
अन्तर्द्धानं करिष्यावः कृत्वा कार्यं महत्तरम्।
एवं तौ निश्चितमती काशिराजपुरं महत्।।७।।
प्रापतुरभवत् कूपो महान् कूपो नृपाजिरे।
कन्दरो बालरूपोऽभूद् रन्तुं तेषु मनो दधे।।८।।
राजाऽथ ददृशे कूपं सुजलं तं जहर्ष च।
यावत् पश्यति मध्येऽसौ मण्डूकं तं ददर्श ह।।९।।
नदन्तं मञ्जुलां वाणीं पीतवर्णं भयानकम्।
कन्दरो बालमध्यस्थो जगाद तं विनायकम्।।१०।।
बहिर्याहि महाबाहो ! पश्य कूपं मनोहरम्।
ददर्श कूपं बालैः स बहिरागत्य तत्क्षणात्।।११।।
अत्यन्तं सुन्दरं दृष्ट्वा तं कूपं बालकैः सह।
चिक्रीडे विविधैर्भावैर्नानानिलयनैरपि।।१२।।
मध्याह्ने जलमध्यस्थाः सिषिञ्चुस्ते परस्परम्।
मज्जनोन्मज्जनं चक्रुः कारयन्तः परस्परम्।।१३।।

**ब्रह्माजीले भन्नुभयो -** ब्राह्मणको रूप धारण गर्ने दानवलाई बालक श्रीगणेशले मारेको सुनेर नरान्तक महादैत्यले ब्रह्माजीबाट वरदान प्राप्त गरेका कूपक र कन्दरासुर दैत्यलाई अनेक वस्त्र एवं अलङ्कार प्रदान गरी प्रसन्न तुल्याएर बालक श्रीगणेशसँग युद्ध गर्न पठायो ।।१-२।।

**दैत्यले भन्यो-** तिमीहरू त्यो बालक गणेशलाई मार्न राम्रो मुहूर्त हेरेर जाने काम गर । त्यहाँ गएपछि त्यस बालकले पहिले संहार गरेका दानवहरूको प्रतिशोध लिने काम पनि गर।।३।।

**ब्रह्माजीले भन्नुभयो-** यसरी नरान्तकको आज्ञा पाएर कूपक र कन्दरासुर दैत्यहरू चतुरङ्गिणी सेना लिएर चार कोशको बाटोसम्म पुगे । सेनालाई फर्काएर ती दानवहरू काशी पुगेपछि अत्यन्त खुसी भए। बीच बाटामा तिनीहरूले युद्धको विषय र बालकको वध गर्ने विषयमा विचारविमर्श गरेका थिए । कूपक दैत्यले भन्यो- म कुवा बन्दछु, हे कन्दरासुर! तिमी बालक बन। बालक्रीडा गरिरहेका गणेशलाई समातेर कुवाको रूपमा रहेको मेरो स्वरूपमा तिमीले फ्याँकिदेऊ। मैले तत्कालै भ्यागुतो बनेर त्यो बच्चालाई खानेछु।।४-६।। यति ठूलो काम गरेपछि हामी अन्तर्धान हुनेछौं। यसरी निश्चय गरी ती दुबै दानव काशिराजको नगर नजिकै पुगे । त्यो कूपक दानव राजाको आँगनमा कुवाको रूपमा परिणत भयो। कन्दरासुरचाहिँ बालक बन्यो र त्यसले श्रीगणेशसँग खेलिरहने बालकहरूका साथ खेल्ने मन बनायो।।७-८।। काशिराज आफ्नो आँगनमा अचानक एउटा राम्रो कुवा तयार भएको देखेर हर्षित भए । तिनले कुवाको माझमा हेर्दा मीठो स्वरले कराइरहेको पहेँलो वर्णको भयङ्कर भ्यागुतो देखे।।९।। कन्दरासुर बालकहरूको बीचमा पुग्यो र खेलिरहेका श्रीगणेशलाई भन्यो- लामा-लामा हात भएका हे सुन्दर बालक ! तिमी बाहिर गएर हेर त कति राम्रो कुवा तयार भएको छ। त्यसको कुरा सुनेर श्रीगणेश बालकहरूका साथ तत्कालै बाहिर आई अत्यन्त राम्रो कुवा देखेर अनेक भावना मनमा खेलाउँदै पानीमा खेल्न लाग्नुभयो। कुवाको माझमा गएका तिनीहरूले मध्याह्न हुँदा आपसमा छ्यापाछ्याप गर्ने काम गरे, डुब्ने एवं डुबाउने काम पनि गरे

उड्डानं जलमध्ये ते दूरादागत्य चक्रिरे।
एवं रमित्वा ते तत्र गृहान् गन्तुं समुद्यताः।।१४।।
तावद् विनायकोऽपश्यज्जलमध्ये निजं वपुः।
जानन् तर्तुं जले सर्वान् पश्यन्नासीद् बहिः पुरा।।१५।।
तावन्नुनोद तं दुष्टो जलमध्ये स कन्दरः।
अगाधं तज्जलं ज्ञात्वा लोडयामास लीलया।।१६।।
स्वेच्छया रमणो लक्ष्म्या क्षीराब्धिमिव वाडवः।
अधो याति मुहूर्तं स उपरिष्टात् तथैव च।।१७।।
मायामास्थाय सगणो मज्जितुं समजायत।
चरणौ हस्तकमले चिक्षेप बहुधा शिशुः।।१८।।
लुलुपुः सर्वशो बालास्तावत् तेन धृतो बलात्।
चरणे कन्दरो नीतस्तत्कूपतलमादरात्।।१९।।
अमज्जयद् बलात् तञ्च मुञ्च मुञ्चेति सोऽब्रवीत्।
विनायकोऽपि तं प्रोचे मुञ्च मुञ्चेति मामपि।।२०।।
उभौ समबलौ तौ तु मज्जनोन्मज्जने रतौ।
हिरण्यकशिपुर्लक्ष्मीनृसिंहाविव दुर्धरौ।।२१।।
अधस्ताद् बहुकालन्तौ गतौ ज्ञात्वाऽखिलार्भकाः।
चक्रुरार्तस्वरं दुष्टं मृतो बाल इति स्फुटम्।।२२।।
अपशब्दं तथा श्रुत्वा ययुः स्त्रीवृद्धबालकाः।
काशिराजोऽपि चुक्रोश किं कार्यमिति चाब्रवीत्।।२३।।
अगाधनीरे कूपेऽस्मिन् कथं जीवेत् स बालकः।
कोऽप्यूचे चापरः प्राह शीघ्रं निःसारितो यदि।।२४।।
उपायो भविता कश्चिज्जीवनायास्य निश्चितम्।
येन यत् प्रार्थ्यते दास्ये तदस्मै जीवितं स्वकम्।।२५।।
निष्काम्यतां बहिर्बालो वेगेन च बलेन च।
इति राजवचः श्रुत्वा कूपमध्ये गतास्त्रयः।।२६।।
मग्नास्ते दैत्यकृतया मायया नापरो जनः।
अवतर्तुं मनश्चक्रे ततो राजा शुशोच तम्।।२७।।

र पानीको बीचमा यता र उता दौड्ने काम पनि गरे। यसरी कुवाको पानीमा रमाएर खेलिरहेका ती बालकहरू साँझपख आ-आफ्नो घर जान तयार भए।।१०-१४।। त्यस बेला श्रीगणेशले पानीको बीचमा आफ्नो स्वरूप देख्नुभयो। श्रीगणेश पानीमा तर्न सिपालु हुनुहुन्थ्यो। आफूलाई पानीको माझमा देखेर साथीहरूको अनुहार हेर्दै हुनुहुन्थ्यो। उहाँले साथीहरूको अनुहार हेरिरहँदा पानीको माझमा रहेको कन्दरासुरले पानीलाई खूब हुँडल्यो। पानी गहिरो छ भन्ने जानेर आफ्नो कला देखाउँदै त्यसले पानी धमिलो बनायो। क्षीरसागरको माझमा आफ्नी पत्नी लक्ष्मीका साथ रमण गरिरहनु भएका भगवान्‌का सामु जसरी समुद्रको आगो घरि तल र घरि माथि गर्दै बल्दछ त्यसरी नै कन्दरासुरले पनि आफ्नो माया देखायो। त्यसले माया देखाएपछि बालकहरूले फेरि हामी पानीमा डुबुल्की मारौं भन्ने विचार गरे। श्रीगणेशले पनि आफ्ना हात र पाउ दुबै पानीभित्र डुबाएर पौड्ने कलाको अभ्यास गर्न थाल्नुभयो। सबै बालक त्यसैगरी पौडिरहेका थिए। ती पौडिरहेका बालकहरूलाई कन्दरासुरले समातेको हुँदा ती एकाएक हराए। श्रीगणेशले कन्दरासुरका दुई खुट्टा तानेर कुवाभित्र पुऱ्याई डुबाउनुभयो। कन्दरासुरले आत्तिएर हे गणेश! मलाई छोड, मलाई छोड भन्न थाल्यो। श्रीगणेशले पनि आफूलाई आत्तिएको अवस्थामा देखाएर मलाई छोड, मलाई छोड भन्न थाल्नुभयो।।१५-२०।। समान बल भएका ती दुबैको पानीमा डुब्ने र टाउको बाहिर देखाउने काम चलिरहेको थियो। दुबै हिरण्यकशिपु र नृसिंह भगवान्‌जस्तै बलिया थिए।।२१।। पानी बाहिर गएका बालकहरू दुबैलाई पानीमा डुबेको जानेर 'हाम्रा मित्र बालगणेश मरे' भन्दै आर्तस्वरले नराम्रो समाचार फैलाए। यस्तो नराम्रो खबर पाएर स्त्री, वृद्ध र अरू बालकहरू कुवाका वरिपरि जम्मा भए। काशिराजले पनि श्रीगणेश डुब्नुभएकोमा आत्तिएर अब के गर्ने होला भन्ने प्रश्न गरे। गहिरो पानी भएको कुवामा डुबेका ती गणेश बालक कसरी बाँच्न सक्छन् ? कसैले भन्यो। अर्कोले भन्यो- चाँडै निकाल्न सकिन्छ भने ती बालकको बाँच्ने उपाय गर्न सकिन्छ। काशिराजले भने - जसले जे चाहन्छ त्यो म दिनेछु, गणेश बालकलाई जिउँदै निकाल्नुपर्‍यो। काशिराजका कुरा सुनेर तीन जना मानिसहरू कुवाभित्र गए, तर ती तीनै जना कन्दरासुरको मायामा परेर डुबे। अर्को कुनै पनि मानिसले गणेशको उद्धारका लागि जाने मन गरेन। त्यसपछि काशिराजले म आफैं जान्छु भन्ने अठोट गर्दै चिन्ता व्यक्त गरे।।२२-२७।।

राजोवाच

किं मयाऽकारि दुरितं येन मे दुःखमीदृशम्।
कथं बालो मया नीतः सुखार्थं दुःखदोऽभवत्।।२८।।

दर्शयिष्ये कथं तस्य पितृभ्यां मुखमेव च।
जनाय वा कथमिदं कथमस्य मृतिर्भवेत्।।२९।।

निरस्तान्यत्यरिष्टानि महान्ति बालकेन ह।
कथमस्य वशं यातो न जाने दैवचेष्टितम्।।३०।।

एवं सर्वेषु शोचत्सु स्त्रीवृद्धबालकेषु च।
मण्डूकरूपी कूपस्थो व्यादाय मुखमास्थितः।।३१।।

तावदेवागतो बालो नोदितः कन्दरेण सः।
तेनापि नोदितो दैत्यो दैत्यास्ये न्यपतत् खलः।।३२।।

भक्षयामास कूपस्तं मत्स्यो मत्स्यमिवालघुः।
गिलितो बाल इति स निजरूपं समास्थितः।।३३।।

कूपोऽपि गगनस्पर्द्धां चक्रे श्लाघ्यां यथोर्जिताम्।
सर्वेषामेव दैत्यानामानृण्यं गतवानहम्।।३४।।

इत्युज्जहर्ष मनसा मत्वा देवमविक्रमम्।
कन्दरस्तु रुषाविष्टो विदार्यास्य महोदरम्।।३५।।

निर्गम्य वेगमास्थाय स बालोऽन्तर्हितः क्षणात्।
विदारितं मे जठरमिति कूपोऽपि कन्दरम्।।३६।।

अदशत् कण्ठदेशे स जीवग्राहं रुषा तदा।
एवं परस्परवधात् पतितौ विह्वलौ भृशम्।।३७।।

पादहस्तावमर्देन चूर्णितं नगरं कियत्।
यथा सुन्दोपसुन्दौ तु परस्परवधान्मृतौ।।३८।।

परस्परवधात् तद्वन्मृतौ तौ कूपकन्दरौ।
राजभृत्यैरपाकृष्य त्यक्तौ तौ नगराद् बहिः।।३९।।

काशिराजले भने – 'मैले के पाप गरें हुँला, पटक-पटक मलाई यस्ता दुःख आइलागेका छन्। किन सुखका लागि ल्याइएका बालक मेरा निमित्त दुःखदायक बनिरहेका छन्? ती बालकका बाबुआमाका सामु मैले अब कसरी मुख देखाऊँ? मानिसहरूका सामु कसरी बालक मरे भनूँ? पानीमा डुबेर मरे भन्नु पनि मेरा निमित्त सङ्कोचको विषय बन्न गएको छ। यी बालकले ठूला-ठूला अनिष्टहरूको सामना गरे र निवारण पनि गरे। आज कसरी कुवाको फेला परे भन्ने विषयमा मैले केही भन्न सक्दिनँ। दैवको लीला बताएर सकिंदैन।' यसै गरी अरू नर-नारीहरूले पनि चिन्ता गरिरहेका थिए। स्त्री, वृद्ध र बालकहरूले पनि गणेश बालकलाई सम्झिरहेका थिए। त्यस बेला भ्यागुताको रूप लिएर कुवामा रहेको राक्षस आफ्नो मुख बाएर उँभिएको देखियो।।२८-३१।। कन्दरासुरद्वारा तानिएका गणेश बालक बाहिर आउनुभयो । बाहिर आएर उहाँले त्यो कन्दरासुर दैत्यलाई तानिरहनु भएको थियो । भगवान्द्वारा तानिएको त्यो दैत्य थाहै नपाईकन कूपासुरको मुखभित्र खस्यो । कूपासुरले पनि ठूलो माछाले सानो माछो खाएझैं कन्दरासुरलाई निलिदियो । मैले बालक गणेशलाई निलें भन्ने भ्रान्तिमा परेको कूपासुर आफूलाई विशाल स्वरूपमा परिणत गरी आकाशसँग प्रतिस्पर्धा गरिरहेको थियो । त्यसले 'मैले यो बालकलाई यहाँ फसाएर मरेका दैत्यको प्रतिशोध लिएँ' भन्ने धारणा राख्यो । भगवान् श्रीगणेशको पराक्रमसँग अपरिचित त्यो कूपकासुर दैत्य अत्यन्त प्रसन्न थियो। त्यसै बेला कूपासुरको पेटमा पुगेको कन्दरासुर रीसले वेगपूर्वक त्यसको पेट चिर्दै बाहिर आयो । बालक श्रीगणेश तत्काल अन्तर्धान हुनुभयो। कूपकासुरले मनमनै यो कन्दरासुरले मेरो पेट चिर्ने काम गरेको छ भनी रिसले प्राणै लिने गरी त्यसको घाँटीमा टोक्यो । ती दुई आपसमा लड्न थाले। यसरी परस्परमा लडाइँ गरिरहेका ती दुई दानव व्याकुल भए। हातखुट्टामा प्रहार गर्दा कुवाको वरिपरिका भू-खण्डहरू टुक्रा-टुक्रा हुन थाले। कुनै समयमा सुन्द र उपसुन्द नामक दानवहरू आपसमा लडेर मरेझैं अहिले कूपकासुर र कन्दरासुर पनि गणेशको मायाका कारण आपसमा सङ्ग्राम गरेर मरे । राजाका सेवकहरूले पानीभित्र मरेका ती दुबैलाई तानेर नगरदेखि बाहिर लगी फ्याँकिदिए।।३२-३९।। राजाको आँगनमा देखिएको कुवा

तत्क्षणादजिरे कूपः पिदधे स विनायकः।
ददृशे पूर्ववत् क्रीडन् सर्वबालयुतो जनैः।।४०।।

आश्चर्य मेनिरे तत्र बाला राजा जना अपि।
ऊचुः परस्परं केचित् कापट्यं येन युज्यते।।४१।।

आमूलान्नश्यते सोऽथ स्वयमेव न संशयः।
पतङ्गो दीपनाशार्थमायाति नश्यते यथा।।४२।।

अस्य चालयितुं शक्तो न स्यात् कालोऽपि रोम च।
दृष्टं बहुविधं चास्य सामर्थ्यमवतारिणः।।४३।।

जेतुमीशं गतः कामः स्वयं भस्मत्वमागतः।
काशिराजस्तु तच्छ्रुत्वा सत्यं सत्यमिति ब्रुवन्।।४४।।

ददौ दानानि विप्रेभ्यो विससर्ज प्रपूज्य तान्।
विनायकं नमस्कृत्य गता लोका निजान् गृहान्।।४५।।

केचिदालिङ्ग्य तं बालं ययू राज्ञा प्रपूजितम्।
देवाश्च पुष्पवर्षाणि मुमुचुस्तुष्टुवुर्जनाः।।४६।।

क उवाच

एवं न ज्ञायते ब्रह्मन् ! कार्याकार्यं मरुद्बलम्।
मायास्वरूपं पुंभाग्यं राक्षसाचरणं मुने।।४७।।

अवतारगुणा वापि न ज्ञेयाः परमात्मनः।।४८।।

पनि तुरुन्तै हरायो र भगवान् श्रीगणेश पहिलेझैं आफ्ना बालक मित्रहरूका साथ क्रीडामग्न अवस्थामा देखिनुभयो।।४०।। त्यस बेला बालक समुदाय, नरनारीहरू र काशिराजले समेत आश्चर्य माने । तिनीहरूले परस्परमा भन्न थाले – जसले अरूको मृत्युका लागि कपट गर्दछ त्यो आफै जरैदेखि मासिन्छ । यस कुरामा सन्देह छैन। जसरी पतङ्ग नाम गरेको कीरा बत्ती निभाउन आउँछ तर आफै नष्ट हुन्छ।।४१-४२।। मृत्युले गणेशको एउटा रौं पनि कँपाउन सक्दैन । अवतारपुरुष बालक श्रीगणेशका धेरै-धेरै विचित्र लीला र शक्ति हामीले देख्यौं।।४३।। एक पटक कामदेव शिवजीमाथि विजय गर्न गएका थिए तर स्वयं ती शिवजीबाट खरानी बन्न पुगे । अहिले पनि कूपकासुर र कन्दरासुर बालक गणेशलाई मार्न भनेर आएका थिए तर ती आफै मारिए। यो कुरा सुनेर काशिराजले साँचो हो भने ।।४४।। त्यसपछि काशिराजले ब्राह्मणहरूलाई दान दिएर नमस्कार गरी बिदा गरे। नरनारीहरू पनि बालक श्रीगणेशलाई नमस्कार गरेर आ-आफ्ना घरतर्फ लागे।।४५।। काशिराजद्वारा पूजा गरिएका श्रीगणेशलाई आलिङ्गन गर्दै केही मानिसहरूले बिदा लिए। देवताहरूले पुष्पवर्षा गरे । अरू दर्शक नर-नारीहरूले श्रीगणेशको स्तुति गरे।।४६।।

**ब्रह्माजीले भन्नुभयो**- हे व्यास! सामान्य मानिसले के कार्य हो र के अकार्य हो छुट्याउन सक्दैन । हावाको कति तागत हुन्छ त्यो पनि सबैबाट बुझ्न सकिने विषय होइन । त्यसैगरी मायाको स्वरूप पनि सामान्य मानिसको बोधको विषय होइन । मानिसको भाग्य पनि सबैद्वारा चाल पाइने विषय होइन। यसैगरी राक्षसको आचरण पनि सबैले सजिलै बुझ्न सकिंदैन। अझ योभन्दा विचित्रको कुरा त के हो भने परमात्मा श्रीगणेशका अवतारका विशेषताहरू पनि सामान्य मानिसहरूद्वारा बुझ्न सकिंदैनन् ।।४७-४८।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे कूपकन्दरवधो नामैकोनविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कूपासुर र कन्दरासुरको वद' शीर्षकान्वित उन्नाइसौं अध्याय पूर्ण भयो ।।१९।।

ॐ

# विंशोऽध्यायः  { २० अध्याय }

**व्यास उवाच**

काशिराजगृहे ब्रह्मन् ! विवाहः स कदाऽभवत्।
तन्ममाचक्ष्व भगवन् विस्तराच्चतुरानन।।१।।

**क उवाच**

एकैकं नश्यतेऽरिष्टमपरं याति वै पुनः।
अस्मिन् नष्टे करिष्यामीत्येवं यावद् विचार्यते।।२।।
कूपे च कन्दरे नष्टे त्रयोऽप्यन्ये तदीरिताः।
अन्धकोऽम्भासुरस्तुङ्गो राक्षसाः क्रूरदर्शनाः।।३।।
जिघांसयागता बालं ततो युद्धमवर्तत।
श्रुत्वा येषां तु सङ्ग्रामं ब्रह्माद्याः प्रापलन् भयात्।।४।।
दिग्गजा मर्दिता यैस्तु विबुधानान्तु का कथा।
कदाऽयं कश्यपसुतो भविता दृष्टिगोचरः।।५।।
नाशयामोऽनेकधा तमिति व्यवसिता भृशम्।
यावन्तः प्रेषिता वीरास्तावन्तो निधनं गताः।।६।।
वयमेनं हनिष्यामोऽजित्वा यामो न वै गृहान्।
वह्निरूपं समास्थाय दाहयामो मुनेः सुतम्।।७।।
अन्धकस्त्वब्रवीत् तत्र तमसा व्याप्य खं दिशः।
अन्धकारं करिष्यामि धरायामथ सर्वतः।।८।।
ततः परस्परदृशिर्न स्यात्तेषां कदाचन।
अम्भासुरोऽब्रवीत् तत्र महीं सर्वां जलेन ह।।९।।
आपूरं प्लावयिष्यामि समन्तान् न गतिर्भवेत्।
तुङ्गोऽब्रवीदहं तुङ्गो गिरिर्भूत्वा पुरीं तु ताम्।।१०।।
आलोड्य चूर्णयिष्यामि सपक्ष इव पर्वतः।
अन्धकारे जले वह्नौ पर्वते सर्वतः स्थिते।।११।।

**व्यासले भन्नुभयो-** हे विधाता ! काशिराजको घरमा तिनका छोराको विवाहसम्बन्धी चर्चा पटक-पटक भयो । तर त्यो कहिले र कसरी सम्पन्न भयो भन्ने कुरा सुन्न पाइएन । कृपया त्यस विषयमा मलाई विस्तारपूर्वक बताउनुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो -** मानिसको जीवनमा एउटा-एउटा अरिष्ट आउँछ, त्यसको नाश गरिन्छ, फेरि अर्को अरिष्ट आइलाग्छ। यो अरिष्ट सकिएपछि यो काम गर्नेछु भन्ने विचार गरिन्छ तर, फेरि अर्को अरिष्ट आइलाग्छ । त्यहाँ पनि त्यस्तै अरिष्ट परम्पराले काम गर्‍यो ।।२।। कूपकासुर र कन्दरासुर मरेपछि नरान्तकले पठाएका अन्धकासुर, अम्भासुर र तुङ्गासुर नामक तीन डरलाग्दा राक्षसहरू बालक श्रीगणेशलाई मार्ने इच्छाले त्यहाँ आए । त्यसपछि ठूलो युद्ध भयो । त्यो युद्धको कुरा सुनेर ब्रह्मा आदि देवताहरू पनि डरले भागेका थिए ।।३-४।। ती दानवहरूले दिग्गजहरूलाई पनि परास्त गरे भने सामान्य देवताहरूको त कुरा नै केही भएन । ती दैत्यहरूले कश्यपको छोरा गणेश हाम्रो सामु कतिबेला आउँछ र त्यसलाई अनेक शस्त्रको प्रहारबाट मार्नेछौं भनी निश्चय गरेका थिए । जति वीरहरू आए ती सबै मरेर गए । हामी भने यसलाई मारिछाड्नेछौं र नजितीकन घर फर्कने छैनौं । हामीले अग्निको रूप लिएर कश्यपको छोरा गणेशलाई डढाउनेछौं भन्ने विचार उनीहरूले गरे ।।५-७।। दानवहरूमध्येको एउटा दानव अन्धकासुरले भन्यो - मैले चारैतिर अन्धकार फैलाएर आकाश र दसै दिशामा कालो पोतिदिन्छु । त्यसपछि एकले अर्कोलाई देख्नसक्ने कुरा हुनेछैन ।।८।। अम्भासुरले भन्यो- मैले सम्पूर्ण पृथ्वीलाई पानी-पानीले भरिदिनेछु। कुनै मानिस कहीं जान सक्नेछैन।।९।। तुङ्गासुरले भन्यो - म अग्लो पहाड बनेर काशीपुरीलाई च्यापी चूर्ण-चूर्ण बनाइदिनेछु । इन्द्रले जसरी पर्वतहरूको प्वाँख काटेका थिए त्यसैगरी काशीपुरी छिया-छिया भएपछि यहाँ हाम्रो विरोधी कुनै रहनेछैन । अन्धकार, पानी र आगो चारैतिरबाट फैलिएर रहँदा र तिनका बीचमा म

कोऽपि गन्तुं न शक्नोति कथं बालो गमिष्यति।
एवं निश्चितसङ्कल्पा जगर्जुस्ते त्रयो भृशम्।।१२।।

तेषां गर्जितशब्देन कम्पितं भुवनत्रयम्।
तत्यजुर्निजवेलान्ते सागराः क्षुभितोदकाः।।१३।।

ततो रविं समाच्छाद्य तस्थौ तत्रान्धकासुरः।
अन्धकारे महाघोरे न प्राज्ञायत किञ्चन।।१४।।

अकस्माद् रजनी प्राप्ता व्यवसाय परैर्जनैः।
स्नानासक्तैर्जपासक्तैर्होमासक्तैर्नृभिस्तदा।।१५।।

तपःसु वेदघोषेषु विवाहोपनयादिषु।
कीर्तनेषु पुराणेषु द्विजदेवार्चनादिषु।।१६।।

सक्तैर्नानाविधैर्लोकैर्निशा प्राप्ता व्रतादिषु।
जजल्पुः किमु विन्ध्योऽयं रुणद्धि सूर्यमण्डलम्।।१७।।

अथवा प्रलयो भावी वोपरागः समागतः।
सभायामूचुरासीनं राजानमिति पण्डिताः।।१८।।

तर्कयन्ति यावदेव गावोऽगुः स्वगृहान्तरम्।
असम्भावितवेलासु चक्रुर्दीपान् गृहे गृहे।।१९।।

कथमस्तमतिर्जाता न पाको न च भोजनम्।
व्यस्मयन्त तदा नार्यो दुदुहुर्गाश्च काश्चन।।२०।।

दीपिकाभिः काष्ठदीपैर्व्यवहारं जनास्तदा।
चक्रुर्दुःखेन कार्याणि वणिजो ब्राह्मणादयः।।२१।।

सेवकानां महानन्दः कामिनां चाभवत् तदा।
आलसानां प्रसुप्तानां निद्रालूनां तथैव च।।२२।।

एवं कृते चान्धकेन नाम्ना चाम्भासुरस्तदा।
मेघरूपेण ववृषे धारा हस्तिकरोपमाः।।२३।।

पर्वताकार भएर उभिंदा कुनै पनि मानिस कतै जान सक्नेछैन र त्यो गणेश बालक पनि कहीं जानेछैन । यसरी सङ्कल्प गरेका ती दानवहरूले ठूलो गर्जन गरे ।।१०-१२।। तिनको गर्जन सुनेर तीनै लोक काँपे, पानी क्षुब्द एवं तरङ्गित भएका सागरहरूले आफ्नो मर्यादा छाड्न थाले । त्यसपछि अन्धकासुरले सूर्यलाई पूरै ढाकिदियो। घोर अन्धकारमा धर्तीमा कता के भइरहेको छ भन्ने कुरा कसैलाई थाहा भएन।।१३-१४।। दिउँसोको काममा खटेका मानिसहरूले एकाएक रात परेको देखे। त्यस बेला सायँकालिक सन्ध्याको भ्रान्तिमा परेका कुनै मानिस नुहाइरहेका थिए। कुनै जपमा लागेका थिए र कोही हवन गर्दै थिए। कतिपय मानिसहरू तपस्यामा गर्न लागेका थिए भने केही वेदको मन्त्रघोष गर्दै थिए । केही विवाहसंस्कार सम्पन्न गर्न लागेका थिए भने केही उपनयनसंस्कारमा लागेका थिए। केही कीर्तन र कथाश्रवणमा व्यस्त थिए। केही मानिस ब्राह्मण र देवताको पूजनमा अभ्यस्त थिए । केही व्रतहरूको सिद्धिमा लागेका थिए। यसरी अनेक प्रकारका कर्महरूमा लागेका मानिसहरूले नचिताएको बेलामा अचम्मसँग रात परेको बेहोर्नु पर्‍यो । दिउँसै रात कसरी पर्‍यो ? के विन्ध्याचल आएर सूर्यलाई ढाकिदिए ? के प्रलय हुन लाग्यो ? के सूर्यमा पूर्णग्रास ग्रहण लाग्यो ? यसरी काशिराजको सभामा रहेका पण्डितहरूले तर्कवितर्क गरिरहेका थिए ।।१५-१८।। यस्तै तर्क-वितर्क चलिरहेको समयमा चर्न गएका गाईहरू घर फर्के । सम्भावना नगरिएको समयमा मानिसहरूका घर-घरमा बत्ती बल्न थाले। मानिसहरूमा कसरी सूर्य अस्ताएको बुद्धि पैदा भयो ? न घरमा भोजन पकाउने काम भइरहेको छ, न त भोजन गर्ने बेला नै भएको छ ? असमयमा रात पर्दा नारीहरू चकित भए । त्यहाँ सबैले घनघोर रात महसुस गरे। केही मानिसहरूले गाई दुहुन थाले । अँध्यारो भएको कारणबाट दाउराको प्रकाशमा यताउति हेर्न थालियो। कसैले बत्ती बाले। सामान्य मानिसहरूलाई काम गर्न गाह्रो भयो । ब्राह्मण र बनियाहरूलाई त झनै गाह्रो भयो । सेवक-सेविकाहरूले भने खूब आराम माने । युवा-युवतिहरू सन्तुष्ट भए । अल्छी र सुताहा मानिसहरूका लागि पनि राम्रै भयो। यसरी अन्धकासुरले

शम्पाप्रकाशतो लोकाः क्षणमीक्षां प्रचक्रिरे।
जलधाराभयात् सर्वे गृहमध्ये स्थितास्तदा।।२४।।

प्रासादा न्यपतन् केचिद् गृहाणां भित्तिका अपि।
अन्तः केचिद् बहिः केचिन्मृता जनचयास्तदा।।२५।।

झञ्झावातहता वृक्षाः पतिता धरणीतले।
सौदामिनीभिर्निर्दग्धा द्रुमा गृहचया बहु।।२६।।

उत्तीराभिर्नदीभिः सा समुद्रैरिव संप्लुता।
नगरी सर्वलोकाढ्या सर्वसत्त्वसमाकुला।।२७।।

क उवाच

प्रलयं दैत्यमायाञ्च ज्ञात्वा स करुणाकरः।
विनायकोऽकरोन्मायां बलेन वटमुच्चकैः।।२८।।

निर्ममे तत्क्षणादेकं लतागुल्मैः सुशोभितम्।
शतयोजनविस्तीर्णं जटाशाखासमन्वितम्।।२९।।

पक्षिरूपेण तत्रासौ स्थितो गगनलेहिनी।
पक्षौ भूमौ प्रतिष्ठाप्य स्पृशंश्च शिरसा नभः।।३०।।

प्रकाशयामास पुरीं पीत्वा चञ्च्वा जलं महत्।
करेणाशोषयद् वन्यकरीव पल्वलोदकम्।।३१।।

जना हर्षाद् हि जगदुर्गतो विघ्नो गतं जलम्।
गतेऽन्धकारे ददृशुर्वटं सान्द्रतरञ्च तम्।।३२।।

पक्षिणं चाद्भुताकारं न दृष्टं न च वै श्रुतम्।
सर्वे जना ययुस्तत्र न्यग्रोधे स्थातुमुत्सुकाः।।३३।।

अश्वैर्गजैरथैरुष्ट्रैः शिविकाभिर्नृभिस्तु तैः।
स्त्रीभिर्दासैः काशिराजो वटस्याधः समाययौ।।३४।।

पशवः सारमेयाश्च विडाला वनगोचराः।
विनायकप्रभावेण न वृष्टिस्तत्र नो तमः।।३५।।

दुनियाँको रीतिथिति नै बिगारिदियो। त्यसै बेला अम्भासुरले बादल बनेर हात्तीका सूँढसमान मोटा पानीका धारा बर्साउन थाल्यो । बिजुली चम्कियो । बिजुलीको प्रकाशमा मानिसहरूले केही हेर्ने मौका पाए। वर्षाधाराको भयले मानिसहरू घरबाट बाहिर निस्केनन् । कतिपय पुराना घरहरू ढल्न थाले। केही घरहरूका भित्ता भत्किन थाले। केही मानिस भित्रै मर्न थाले र केही बाहिर मरे । आँधीबेहरीद्वारा ढलाइएका रूखहरू भुइँमा ठाउँ-ठाउँमा लडिरहेका थिए। चट्याङ् पर्नाले घर र रूख पनि डढे । पानी बढेका कारण नदीहरू पनि समुद्रजस्ता लाग्न थाले । सबै प्रकारका प्राणीहरूले भरिएको काशी नगरी पनि जलमय भयो।।१९-२७।।

**ब्रह्माजीले भन्नुभयो** - प्रलयकालजस्तो परिस्थिति र दैत्यको मायालाई जानेर दयालु श्रीगणेश भगवान्‌ले आफ्नो माया देखाउन थाल्नुभयो । उहाँले अचानक एउटा सय योजनसम्म फैलिएको र लहरा एवं जराले जेलिएको अग्लो वरको रूख खडा गर्नुभयो । त्यस बेला श्रीगणेशले आफूलाई वरको रूखमा एउटा पक्षीको रूपमा परिणत गर्नुभयो। आफ्ना प्वाँखहरूले भुइँ छोएर टाउकाले आकाश स्पर्श गर्नुभयो । आफ्नो मुखबाट सम्पूर्ण नगरीको पानी पिएर शरीरको प्रकाशले नगरीलाई उज्यालोले भरिदिनुभयो। वनको हात्तीले झैं आफ्ना हातहरूले पानीको शोषण पनि गर्नुभयो । मानिसहरू खुसी हुन थाले र ठूलो विघ्न टर्‍यो भनी आपसमा कुरा गरे। अन्धकार हटेपछि ती सबै मानिसले विशाल स्वरूप र घना पात भएको वरको रूख देखे । वरको टुप्पामा अद्‌भुत चरा बसेको थियो। ती मानिसहरूले त्यस्तो चरा कहिल्यै देखेका थिएनन् र सुनेका पनि थिएनन्। सबै मानिसहरू उत्सुक भएर वरको फेदमा बस्न गए ।।२८-३३।। केही मानिसहरू हात्ती, केही घोडा, केही रथ, केही ऊँट र केही पालकीमा बसेर गएका थिए । यसैगरी काशिराज पनि आफ्ना रानी एवं सेवकहरूका साथ वरको फेदमा आइपुगे ।।३४।। त्यहाँ वरिपरि कुकुर, बिराला र वनका प्राणीहरू रमाएर बसेका थिए । श्रीगणेशको प्रतापले गर्दा त्यहाँ वर्षा र अन्धकार थिएन ।।३५।। यसरी उज्यालो

चक्रु: सर्वे पूर्ववत् ते वर्णा: कर्म यथाविधि।
पौरा: सद्व्यवसायेषु समसज्जन्त पूर्ववत्।।३६।।

सर्वेषां रक्षणं कर्तुं पक्षिरूपमधारयत्।
जगदीशो गणेशो नु न जानीमोऽत्र किञ्चन।।३७।।

विस्तार्य पक्षान् वृष्टिं यो न्यषेधीद् दैत्यकारिताम्।
वृष्टिं सोल्कां सकरकां स्वयं सेहे सुखेन स:।।३८।।

इति लोकास्तर्कयित्वा स्थिता निर्व्याकुलास्तदा।
एकादश गता घस्रा एवं तत्र स्थितस्य च।।३९।।

नाज्ञासीत् कोऽपि चरितं विनायककृतं द्विज !।
दृष्ट्वा विनायकं बालं क्रीडन्तं बालयूथगम्।।४०।।

ततो दैत्यौ क्षीणशक्ती निश्चेष्टौ समपद्यताम्।
तुङ्गो जगर्ज बहुधा नादयन् प्रदिशो दिश:।।४१।।

गिरिरूपं समास्थाय हनिष्ये पक्षिणं क्षणात्।
ब्रुवन्नेवं क्षणेनासौ पर्वतोऽभूद् भयङ्कर: ।।४२।।

सरोनदीसमायुक्त: पञ्चयोजनविस्तृत:।
दिव्यौषधीभिर्दीप्ताभिर्भासयन् गगनं दिश:।।४३।।

नानापक्षिसमायुक्तो वाडवाश्रममण्डित:।
समक्षं पर्वतं दृष्ट्वा पतमानं स पक्षिराट्।।४४।।

उड्डीय परिबभ्राम वारयामास तज्जलम्।
घूर्णयन् पक्षवातेन जङ्गमाजङ्गमं जगत्।।४५।।

प्रस्था निपतिता भूमौ पर्वतानामितस्तत:।
चञ्च्वा दध्रे स तुङ्गाद्रिं काश्यपि: फणिनं यथा।।४६।।

भएर दिन फर्केपछि सबै मानिसहरूले पूर्ववत् आफ्ना कर्म गर्न थाले। नगरका व्यवसायीहरू व्यवसायमा प्रवृत्त भए। भगवान् श्रीगणेशले सबैको रक्षा गर्न चराको रूप धारण गर्नुभएको थियो । मानिसहरू भन्दै थिए- उहाँ श्रीगणेश हुनुहुन्छ कि जगत्का स्वामी हामी केही जान्दैनौं ।।३६-३७।। चरा बनेर प्वाँख फैलाई दैत्यले गरेको वर्षालाई रोक्ने श्रीगणेशले उल्कापात र असिनासहित परेको वर्षालाई एक्लै सहनुभयो ।।३८।। मानिसले गर्न नसकिने यस्ता काम गर्ने श्रीगणेश भगवान् हुनुहुन्छ भन्ने चर्चा गर्दै अनेक तर्क-वितर्कका साथ मानिसहरू आनन्दपूर्वक रमाएर बसेका थिए। श्रीगणेश भगवान् त्यहाँ रहनुहुँदा एघार दिन बितेछन् तर कसैले पनि भगवान्ले गरेको यो चरित्रलाई यति अवधिसम्मको हो भनेर जान्न सकेनन् । बालकहरूको बीचमा रहेर भगवान् श्रीगणेशले बालक्रीडा गर्नुहुँदा त्यो दृश्यले मोहित भएका मानिसहरूका लागि एघार दिन पनि एक दिनजस्तै लाग्यो ।।३९-४०।। भगवान्को यो लीलापछि शक्ति क्षीण भएका दैत्यहरूले आफ्ना क्रियाकलाप बढाउन सकेनन् र निश्चेष्ट भए । तुङ्गासुर भने दसै दिशा थर्काउँदै गर्जन गरिरहेको थियो। त्यो भन्दै थियो - मैले पर्वतको रूप लिएको छु, अब चराको रूप लिने श्रीगणेशलाई तुरुन्तै मारिदिनेछु। यसो भनिरहेको तुङ्गासुर फेरि विशाल पर्वत बनेर उभियो ।।४१-४२।। तलाउ र नदीले युक्त, पाँच योजनसम्म फैलिएको, चारैतिर प्रकाश छर्ने, सञ्जीवनी आदि औषधिहरूले सम्पन्न, आकाश र दिशाहरूमा प्रकाश छरिरहेको, अनेक थरि पक्षीले परिपूर्ण र ऋषिमुनिका ठूला-ठूला आश्रमले सुहाएको त्यो पर्वत देखियो । यति ठूलो पर्वत देखेपछि 'यो पर्वतले तुरुन्तै खसेर सम्पूर्ण नरनारीहरूलाई समाप्त पार्नेछ' भन्ने तर्क गरी भगवान् श्रीगणेश ठूलो पक्षीका रूपमा परिणत भई उड्न थाल्नुभयो र चारैतिर घुम्नुभयो। उहाँले विशाल पर्वतबाट खसिरहेका पानीका धाराहरूलाई रोक्नुभयो । आफ्ना प्वाँखका हावाले स्थावर-जङ्गम सबैलाई कम्पित गराउँदै पर्वतका चुचुराहरूबाट गएका पहिराहरू रोक्दै उहाँले आफ्नो ठुँडबाट पर्वतलाई थाम्नुभयो।।४३-४६।। सपेराहरूले सर्पलाई

सह तेनाभ्रमन् खेऽसौ लक्षयन् दानवावुभौ।
अन्धकं चरणैकेन परेणाम्भासुरञ्च सः।।४७।।

अतिक्रम्य भुवर्लोकमियाय स महाखगः।
अतिभ्रमणखिन्नास्ते तप्ताश्च सूर्यरश्मिभिः।।४८।।

निपेतुर्व्यसवो भूमौ त्रयः पर्वतसन्निभाः।
पतन्तश्चूर्णयामासुर्वनान्युपवनानि च।।४९।।

द्रष्टुं दैत्यशरीराणि स्त्रीबालसहिता जनाः।
ययुस्ते नगराभ्याशे वीक्ष्याश्चर्यं परं ययुः।।५०।।

खण्डानि तच्छरीराणां खण्डशैला इवाबभुः।
मायायां सन्निरस्तायां लोकास्तत्र विसिस्मिरे।।५१।।

वटं तं देवरूपेण ददृशुर्न च वै पुनः।
अन्तर्हिते वटे पक्षिरूपं तत्याज सोऽर्भकः।।५२।।

ततो विनायकं बालं काशिराजो लिलिङ्ग ह।
पृष्ट्वा कुशलसम्प्रश्नं नागराश्च नृपश्च तम्।।५३।।

पुपूजुः परमप्रीत्या विघ्ननाशं विनायकम्।
प्रशशंसुर्मुदा देवं कश्यपस्य सुतं जनाः।।५४।।

न जानीमो वयं देव ! मायां दैत्यकृतां पराम्।
सामर्थ्यन्ते गुणाँश्चापि यत्र वेदा विकुण्ठिताः।।५५।।

लीलया रक्षिताः सर्वे मोचिता बहुसङ्कटात्।
वाता गता विनाशश्च ह्युत्पाताश्चैव वृष्टयः।।५६।।

भाति बिम्बं रवेः सम्यगन्धकारे गते लयम्।
मनांसि सर्वलोकानां प्रसन्नानि मुदा तदा।।५७।।

लठ्याएझैं श्रीगणेशले पनि पर्वतासुर दानवलाई लठ्याउनुभयो। तुङ्गासुरका साथमा अम्भासुर र अन्धकासुर पनि भगवान्सँग संघर्ष गर्न तयार भएर आए। भगवान् श्रीगणेश एउटा खुट्टाले अन्धकासुर र अर्को खुट्टाले अम्भासुरको शरीरमाथि टेकेर ठूलो गर्जन गर्दै उड्न थाल्नुभयो। उहाँ उड्दा ती तीनै जना दैत्य पनि उड्न थाले । उड्दै जाँदा तिनीहरू अन्तरिक्ष नाघेर सूर्यमण्डल नजिकै पुगे र सूर्यका किरणद्वारा डढ्न थाले । डढ्दा-डढ्दै प्राण परित्याग गरेर पर्वताकारका ती दानवहरू भुईंमा खसे। भुईंमा खस्दा तिनका शरीरहरूले वन र बगैंचालाई ध्वस्त बनाएका थिए । यसरी लडेका दैत्यहरूका शरीर हेर्न बालक र नारीसहित मानिसहरू नगरको सीमामा आए र त्यो दृश्य देखेपछि परम् आश्चर्यको अनुभव गरे ।।४७-५०।। दैत्यहरू आकाशबाट भुईंमा खस्दा टुक्रिएका शरीरका अङ्गहरू जहाँतहीं खसेका थिए । ती अङ्गमात्र पनि चट्टानझैं विशाल देखिन्थे । भगवान् श्रीगणेशले दैत्यको मायालाई समाप्त गर्नुभएपछि संसार प्रसन्न र चकित थियो ।।५१।। दैत्यहरूको विनाशपछि ती सबै मानिसहरूले भगवान्ले निर्माण गर्नुभएको वटवृक्षलाई देवता मानेर दर्शन गरे । केहीबेरपछि त्यो वटवृक्ष पनि अन्तर्धान भयो । बालक श्रीगणेशले पनि चराको रूप त्याग गर्नुभयो ।।५२।। यस्तो दृश्य देखेर काशिराजले बालकका रूपमा रहनुभएका श्रीगणेशको आलिङ्गन गरे । नगरवासी नरनारी र काशिराज सबैले बालक श्रीगणेशसँग भलाकुसारी गरे। तिनीहरूले विघ्नविनाशक भगवान् श्रीगणेशको स्नेहपूर्वक पूजा पनि गरे । कश्यपका पुत्रका रूपमा जन्मिनुभएका भगवान्को स्तुति गर्दै भने – 'हे देव ! हामीले दैत्यद्वारा गरिएको मायालाई जान्दैनौं, त्यो मायालाई समाप्त पार्ने हजुरका गुणहरूको महिमा पनि जान्दैनौं। हजुरको स्वरूप कस्तो छ भन्ने कुरा बुझ्न वेदले पनि सक्दैनन् ।।५३-५५।। आफ्नो लीलाबाट हजुरले हामीहरूलाई ठूला-ठूला सङ्कटबाट रक्षा गर्नुभएको छ । आँधीबेहरी समाप्त भयो, विनाश लीला समाप्त भयो, उत्पातहरू समाप्त भए र अचानक भएको वर्षा पनि रोकियो ।।५६।। अन्धकार समाप्त भएपछि सूर्यको मण्डल पनि प्रकाशमय बन्यो, मानिसहरूका मनहरू प्रसन्न भए, नदीका

नद्यः प्रसन्नसलिलाः सर्वमासीद् यथा पुरा।
ववर्षुः पुष्पवर्षाणि देवदेवे विनायके।।५८।।

नानावाद्यनिनादैस्तेऽलङ्कृतं पुरमाविशन्।
ददुर्दानानि विप्रेभ्यो देवो नः प्रीयतामिति।।५९।।

शान्तिहोमं विधायाऽसौ नृपोऽदाद् गोधनं बहु।
विसृज्य सर्वान् बुभुजे विनायकयुतो नृपः।।६०।।

जलहरू निर्मल भए अर्थात् यो घटना हुनुभन्दा पहिले जस्तो निर्मल वातावरण थियो, त्यो कायम भयो।' त्यसपछि देवताहरूले देवाधिदेव श्रीगणेशका शरीरमा फूल बर्साए।।५७-५८।। यो घटनापछि राजा-रानी र नागरिकसहित भगवान् श्रीगणेश ध्वजापताकाले सजाइएको काशी नगरीमा प्रवेश गर्नुभयो। राजाले ब्राह्मणहरूलाई तपाईंहरू प्रसन्न हुनुहोस् भनेर दान दिए, शान्ति होम पनि गरे। शान्तिहोमपछि गोदानकर्म गरियो। प्रसन्न भएका काशिराजले सबै नगरवासीहरूलाई बिदा दिएर भगवान् श्रीगणेशका साथमा दरबारभित्र गई भोजन गरे।।५९-६०।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते दैत्यत्रयवधो नाम विंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'अन्धकासुर, अम्भासुर र तुङ्गासुरको वध' शीर्षकान्वित बीसौं अध्याय पूर्ण भयो।।२०।।

ॐ

# एकविंशोऽध्यायः		{ २१ अध्याय }

क उवाच

शृणु द्विज ! महाश्चर्यं कथ्यमानं मया तव।
विनायकस्य चरितं सर्वपापहरं नृणाम्।।१।।

अम्भासुरस्य यो मूर्धा स गतो निजमन्दिरम्।
भ्रमरी या निरैक्षिष्ट सखी सा तां न्यबोधयत्।।२।।

प्रसुप्तां काञ्चने तल्पे सोत्थायाङ्गणमाययौ।
पौत्रं शिरो निरीक्ष्यैव मूर्च्छिता पतिता भुवि।।३।।

निघ्नती निजवक्षः सा कराभ्यां शोकनिर्भरा।
निपतद्भूषणा खिन्ना नागामृष्टेव पद्मिनी।।४।।

विभिन्नवलया छिन्नकूर्पा सा तनुमध्यमा।
दृश्यादृश्यमहद्गात्रा लुण्ठती भुवि विह्वला।।५।।

निषिध्यमाना सखीभिर्भ्रातृभिः स्वजनैरपि।
त्रिमुहूर्तैः प्रबुद्धा सा किञ्चिद् वक्तुं प्रचक्रमे।।६।।

उत्थाय च कराभ्यां तु निजघान पुनः शिरः।

भ्रमर्युवाच

येनेयं पृथिवी सर्वा त्रासिता सामरावती।।७।।

मूर्ध्ना सहस्रं शेषस्य भ्रूकटाक्षेण कम्पितम्।
येन राज्येऽभिषिक्तौ तौ देवान्तकनरान्तकौ।।८।।

यस्य क्ष्वेडितमात्रेण रोदसी कम्पिता भृशम्।
स कथं पतितः कुत्र निहतः केन वा सुतः।।९।।

यं दृष्ट्वा कम्पितः कालः स कथं निधनं गतः।
एवमाक्रन्दती दीना विवत्सेव पयस्विनी।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! म तपाईँलाई मानिसहरूका सबै पापहरूको नाश गर्ने आश्चर्यजनक श्रीगणेशको चरित्र सुनाउँछु। तपाईँ सावधान भएर सुन्नुहोस् ।।१।। अम्भासुरको शिर काशीको रणस्थलबाट उछिट्टिएर आफ्नो घरको आँगनमा खसेपछि त्यसकी आमा भ्रमरीले आफ्ना छोराको शिर देखेर विलाप गरिन् । तिनकी सखीले तिनलाई संझाइन् । सुवर्णको शैय्यामा सुतिरहेकी ती भ्रमरी उठेर आँगनमा आइन् र छोराको शिर देखेर मूर्छित भई भुइँमा लडिन् । आफ्ना हातहरूले छाती पिटिरहेकी शोकाकुल भ्रमरीका शिथिल शरीरबाट गहनाहरू खसिरहेका थिए। ती खिन्न थिइन् र हात्तीले माडेको कमलको लहराजस्तै ओइलाएकी थिइन् । तिनका हातबाट चुराहरू भुइँमा खसेका थिए र स्वस्थ शरीर तत्कालै परेको प्रभावबाट अत्यन्त दुर्बल बनेको थियो। भुइँमा लडिबुडी गरिरहेकी भ्रमरीलाई सखी, दाजुभाइ र आफन्तहरूले पीर नगर्न भनी संझाएका थिए । ती तीन मुहूर्तपछि मात्र होशमा आइन् र केही भन्न खोजिन् ।।२-६।। तर तिनका मुखबाट वाणी निस्केन। हातले फेरि शिरमा पिट्न थालिन्। त्यसपछि मात्र तिनको वचन प्रवाह चलेको थियो ।

**भ्रमरीले भनिन्**- "जुन वीरले यस पृथिवीलाई आफ्नो प्रतापबाट थर्कमान बनाएका थिए ।।७।। जुन वीरले देवताको राजधानी अमरावतीलाई पनि भयभीत तुल्याएका थिए । जुन वीरको आँखाको कटाक्षबाट शेषनागका फणा कम्पायमान हुन्थे। जुन वीरले देवान्तक र नरान्तकलाई राज्यमा अभिषेक प्रदान गरेका थिए । जुन वीरले खोक्दा मात्र धर्ती र आकाश कम्पित हुन्थे। आज त्यस्ता वीरलाई पनि भुइँमा लड्नुपर्‍यो । ती वीर कहाँ मारिए र तिनलाई कसले मार्‍यो ? ।।८-९।। जुन वीरलाई देखेर यमराज पनि आफै डराउँथे, ती वीरपुरुष आज कसरी मरेर गए ? ।" यसरी विलाप गरिरहेकी दीन-हीन अवस्थामा रहेकी ती भ्रमरी बाच्छो नहुँदा गाई रोएझैं रोइरहेकी थिइन् । यसरी रुने र विलाप गर्ने भ्रमरीलाई तिनका सँगिनीहरूले निषेध गर्दै भने - हे सखी ! तिमी कति रोइरहेकी ? मरेका मानिसका

एवं विलपतीं तां तु न्यषेधयत् सखीजनः।
न दृष्टा सखि! केनापि मृतेन सह वै मृतिः।।११।।

अतिशोकेन शोकोऽन्यः प्राप्यते मूढजन्तुभिः।
यदि स्नेहेन पुत्रं त्वं शोचसेऽस्य हितं कुरु।।१२।।

चारान् प्रेषय वृत्तान्तग्रहणायाऽस्य सर्वतः।
दह्यतां मस्तको मन्त्रैरेवमस्य हितं कुरु।।१३।।

सुहृदामश्रु पतितं प्रेतस्य तन्मुखे पतेत्।
दहत्येनं न तत्त्याज्यमित्याहुः परमर्षयः।।१४।।

एवमाकर्ण्य तद्वाक्यं सोवाच तां सखीं रुषा।
अयं मूर्द्धा महाभागे स्थाप्यतां यत्नतः सखि!।।१५।।

आनयिष्येऽदितेः पुत्रमस्तकं सह तेन च।
दाहयिष्याम्यमुं तस्मात् स्थाप्यतां तैलमध्यगः।।१६।।

सा राक्षसी राक्षसवर्ययुक्ता
समाययौ राजपुरीं निहन्तुम्।
विनायकं तं निजरूपगोपिनी
पतङ्गपत्नीव धनञ्जयान्तिकम्।।१७।।

आगतादितिरूपेण भासयन्ती दिशो दश।
अतिलावण्यनिलया सर्वालङ्कारशोभिनी।।१८।।

दाडिमीवीजदशना बिम्बोष्ठी तनुमध्यमा।
विलसत्पद्मनयना मुक्तादामलसत्कुचा।।१९।।

वीरा मुमुहिरे दृष्ट्वा तादृशीं नृपसद्मगाम्।
मनसा कामयन्ति स्म यदालिङ्गनचुम्बने।।२०।।

साथमा शोक गर्ने मानिस सँगै मरेर गएको देखिएको छैन । अति शोक गर्दा आफूलाई पनि गाह्रो हुन्छ । त्यसले देख्ने सुन्ने मानिसलाई पनि प्रभावित गर्दछ। यदि ज्यादै मायाका कारण तिमीले छोराको चिन्ता गरिरहन्छ्यौ भने त्यसबाट छोराको हित हुँदैन। छोराको हितका लागि पनि तिमी नरोऊ ।।१०-१२।। आफ्ना छोराको कुन कारणले मृत्यु भयो र कहाँ भयो भन्ने जानकारीका लागि तिमीले आफ्ना मानिसहरूलाई ठाउँ-ठाउँमा पठाऊ। मन्त्र पाठ गरेर आफ्ना छोराको शिरको दाहसंस्कार गर। यसबाट तिम्रा छोराको हित हुनेछ।।१३।। मृत्युकालमा आफ्ना मानिसहरू रुँदा खसेको आँसु मर्ने मानिसको मुखमा पर्छ । यसो गर्दा मरेको प्रेतलाई ज्यादै पोल्छ । त्यस कारण आँसु बगाउन छोड, आँसुले पोल्छ । आँसु खसाउन हुँदैन भनेर ऋषिहरूले पनि भनेका छन्।।१४।। आफ्नी सखीका कुरा सुनेर भ्रमरीले रिसाउँदै तिनलाई भनिन्- मेरो छोराको शिर तिमीले राम्रोसँग राख। म मेरा छोराको ज्यानका साथ अदिति र कश्यपका छोरा गणेशको पनि टाउको लिएर आउँछु। त्यसैका साथ मैले मेरा छोराको दाहसंस्कार गर्नेछु । अहिले मेरा छोराको शिरलाई तेलमा डुबाएर राख।।१५-१६।। आफ्नी सखीलाई यसरी अह्राएर ती भ्रमरी अनेक राक्षसहरूलाई साथमा लिई भगवान् गणेशलाई मार्न भनी काशीमा आइपुगिन् । आफ्नो रूप लुकाएर आएकी ती भ्रमरी पतङ्ग अग्निका सामु गएझैं गणेशका सामु गइरहेकी थिइन् ।।१७।। तिनले आफ्नो रूप परिवर्तन गरी अदिति माताको रूप धारण गरिन् । आफ्ना शरीरको कान्तिले दसै दिशालाई उज्यालो तुल्याउँदै अनेक थरि अलङ्कार लगाएर शोभायमान भएकी ती राक्षसी सौन्दर्यको केन्द्रबिन्दु बनेकी थिइन् ।।१८।। तिनका दाँत दारिमका बीजजस्तै सेता थिए। ओँठहरू गोलक्राँक्रीजस्तै राता थिए। कम्मर छिनेको थियो । आँखाहरू फुलेका कमलजस्तै आकर्षक थिए। छातीका स्तनहरूको वरिपरि मोतीको हार लर्केको थियो।।१९।। यतिविधि राम्री सुन्दरीलाई देखेर काशीका वीरहरू मुग्ध भए। राजाको घरतर्फ जान अगाडि बढेकी ती सुन्दरीलाई उनीहरू आलिङ्गन र चुम्बन गर्न चाहन्थे।।२०।। अरू मानिसले यो

तर्कयामासुरपरे रम्भा किन्नु तिलोत्तमा।
मेनका वा घृताची वा नागी यक्षी शिवा नु किम्।।२१।।

उर्वशी वा रती राज्ञी कश्यपस्यादितिर्नु किम्।
ज्ञात्वा तु राजपत्नी तां प्रणनामादितिं मुदा।।२२।।

पूजयामास सौभाग्यद्रव्यैर्भूषांशुकादिभिः।
उवाच च सुचार्वङ्गी प्रेमगद्गदया गिरा।।२३।।

महाभाग्येन दृष्टाऽसि त्वं देवजननी मया।
विनायकप्रसादेन क्वाऽन्यथा दर्शनं तव।।२४।।

राज्ञीमेवं ब्रुवन्तीन्तु साश्रुकण्ठाऽवदद् वचः।

अदितिरुवाच

मम बालो बहुदिनं स्थापितः कुत्र वर्तते।।२५।।

अत्युत्कण्ठतया सुभ्रूर्दर्शनार्थमिहागता।
स्त्रीणां स्वभावं जानासि मायाव्याकुलचेतसाम्।।२६।।

शोकसन्तप्तगात्राऽहं तमालिङ्गामि चार्भकम्।
तत्संसर्गसुशीताङ्गी प्राप्स्ये सन्तोषमुत्तमम्।।२७।।

इति तद्वचनं श्रुत्वा सादरा सा ससम्भ्रमा।
गवेषितुं तु तं बालं राज्ञी दूतानचोदयत्।।२८।।

अन्ये चख्युः काशिराजं कश्यपस्त्रियमागताम्।
स स्नात्वा गृहमागत्य तां दृष्ट्वा हर्षमाप ह।।२९।।

तां प्रणम्य महाभक्त्या प्रोचे बद्धाञ्जलिर्नृपः।
मे राज्यं जन्म पितरौ धनं दृष्टिः श्रुतं तपः।।३०।।

दृष्टा शक्तिर्देवमाता जगज्जननकारिणी।
न शक्तिर्वर्तते सम्यग्वर्णितुं ते गुणान् मम।।३१।।

बालो विनायकस्तेऽयं शक्रादधिकविक्रमः।
अवदानान्यनेकानि कृतानि बहुधाऽसुरैः।।३२।।

रम्भा हो कि तिलोत्तमा, मेनका, घृताची, नागकन्या, पार्वतीमध्ये कुनै हो कि ? उर्वशी, रति र कश्यपकी पत्नी अदिति नै पो हो कि ? यसरी तर्क गरिरहेका थिए। काशिराजकी महारानीले अदिति हुन् भन्ने थाहा पाएर प्रणाम गरिन्।।२१-२२।। महारानीले तिनलाई सौभाग्य सामग्री, अलङ्कार र वस्त्रहरू टक्र्याएर पूजा गरिन् । त्यसपछि महारानीले प्रेमले गद्‌गद वाणीबाट भनिन्- तपाईं देवताहरूकी आमा हुनुहुन्छ, आज मैले भाग्यले दर्शन पाएँ। यो दर्शन पाउनुमा पनि भगवान् श्रीगणेशकै ठूलो कृपा रह्यो अन्यथा मैले कहाँबाट दर्शन पाउँथें र! ।।२३-२४।। यसरी नम्रतापूर्वक श्रद्धा व्यक्त गरिरहेकी महारानीलाई अदितिको रूप लिएर आएकी राक्षसीले रुँदै भनिन् ।

**अदितिरूप राक्षसीले भनिन्-** धेरै दिनदेखि तपाईंहरूले मेरो छोरालाई यहाँ राख्नुभयो।।२५।। अहिले मेरो छोरा कहाँ छ ? म छोरालाई कतिबेला देखुँली भन्दै अत्यन्त तीव्र गतिले यहाँ आएकी छु। प्रेमले आफ्नो चित्तलाई व्याकुल तुल्याउने नारीजातिको स्वभाव तपाईंले जान्नुभएकै छ।।२६।। मेरो शरीर शोकले तातेको छ। म मेरो बालकलाई आलिङ्गन गर्न चाहन्छु। छोराको शीतल शरीरमा आलिङ्गन गर्दा आफ्नो ज्यान शीतल बनाएर मैले परम सन्तोष प्राप्त गर्नेछु।।२७।। अदितिरूप राक्षसीका यस्ता कुरा सुनेर महारानीले आदर र आतुरीका साथ बालकलाई खोज्न दूतहरू पठाइन् ।।२८।। केही मानिसहरूले काशिराजसमक्ष गएर उनलाई कश्यप ऋषिकी पत्नी अदिति दरबारमा आउनुभएको कुरा सुनाए। काशिराज पनि नुहाएर घरमा आई अदिति माताको दर्शन पाएर अत्यन्त हर्षित भए ।।२९।। अदिति मातालाई प्रणाम गरेर अत्यन्त भक्तिका साथ राजाले हात जोड्दै भने- आज मेरो राज्य, जन्म, माता-पिता, धनदौलत, आँखा, शास्त्रज्ञान र तपस्या धन्य भएका छन् ।।३०।। आज मैले मेरै दरबारमा देवताकी आमा र संसारलाई उत्पन्न गर्ने जगदम्बा शक्तिको दर्शन पाएँ। हे देवमाता ! तपाईंका शक्ति र गुणको वर्णन गर्न म सक्तिनँ।।३१।। तपाईंका सुपुत्र भगवान् श्रीगणेश इन्द्रभन्दा पनि पराक्रमी हुनुहुन्छ। उहाँले धेरै पटक दानवहरूसँग सङ्ग्राम गरेर हामीलाई ठूलो त्राण दिनुभएको छ।।३२।। उहाँले दिनुभएको त्राणको विषयमा म बताएरै

अशक्यानि मया वक्तुं रक्षसां निधनानि च।
तस्यापि वर्णितुं नास्ति गुणानां शक्तिरल्पिका।।३३।।

विश्राम्यतां क्षणं मातर्मम भाग्यं महत्तरम्।
यदनेन हता मायाबलमाश्रित्य दानवा:।।३४।।

अपरिक्षतेन वपुषा बालस्ते वसते सुखम्।
त्वं किमर्थमिहायाताऽऽयाता चेत् स्थीयतां क्षणम्।।३५।।

निवृत्तेऽस्मिन् विवाहे तु प्रापयिष्ये उभावपि।।

सोवाच

किमिदं भाषसे राजन् ! वियोगादस्य मेऽभवत्।।३६।।
महान् खेदो न च सुखं लेभे क्वापीह किञ्चन।

क उवाच

एवं वदत्यां तस्यां स आगतोऽसौ विनायक:।।३७।।

प्रेषितो बालकै: सर्वैरागता जननी तव।।
मालिलिङ्ग ततो बालमश्रुपूर्वा मुदा जगौ।।३८।।

चिरकालं स्थितोऽस्यत्र मां विहायातिनिष्ठुर!।
त्वद्वियोगेन सन्तप्ताऽऽगता सर्वं विहाय च।।३९।।

जीविताशां परित्यज्य त्वदर्थे तप आचरम्।
अतिक्लेशेन लब्धोऽसि तान् क्लेशान् वेत्ति चेश्वर:।।४०।।

विना त्वया क्षणो मेऽतो युगकल्पसमोऽभवत्।
एवं लाघववाक्याऽसौ दुष्टभावेन भामिनी।।४१।।

अतिप्रेमबलात् सा तं कटिदेशे दधार ह।।
सोऽपि तच्चेष्टितं ज्ञात्वाऽऽगस्तस्या: परिचिन्तयन्।।४२।।

गूढाभिसन्धिस्तां प्रोचे पूर्वं किं मे त्वया हृतम्।
एवं तस्मिन् ब्रुवत्येव लड्डुकं सा ततो ददौ।।४३।।

सक्दिनँ। कस्ता-कस्ता राक्षसहरूलाई मार्नुभयो, ती कुरा पनि थोरै समयमा भनेर सकिंदैनन्। उहाँका गुणहरूको वर्णन गर्न मसँग सानो शक्ति पनि छैन।।३३।। हे देवमाता ! हजुरले केहीबेर विश्राम गर्नुहोस्, आज ठूलो भाग्यले हजुरको दर्शन पाएँ। अर्को कुरा तपाईंका सुपुत्रले मायाको आश्रय लिएर भर्खरै घोर दानवहरूलाई मार्नुभएको छ ।।३४।। दानवहरूको हत्याको क्रममा उहाँको शरीरमा सानो घाउ पनि लागेको छैन। उहाँ आनन्दपूर्वक बस्नुभएको छ। हजुर किन यहाँ पाल्नुभयो ? खास कामले होला, नआत्तिईकन आनन्दले बस्नुहोस्। अहिले केही हतार गर्नुपर्ने मैले देख्दिनँ।।३५।। मेरो घरमा छोराको विवाहको प्रसङ्ग चलेको छ। विवाह सकिएपछि म हजुरहरूलाई पुर्‍याउन आफै जानेछु। राजाका यस्ता कुरा सुनेर अदितिरूप राक्षसीले भनिन् ।

**अदितिरूप राक्षसीले भनिन्** - हे राजा ! तपाईं कस्तो कुरा गर्दैहुनुहुन्छ ? छोराको वियोगले गर्दा म कति चिन्तामा परेकी छु ? मैले कहीं पनि सुख पाउन सकिनँ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी राक्षसीले कुरा गरिरहेकै बेला त्यहाँ भगवान् श्रीगणेश आइपुग्नुभयो।।३६-३७।।
२१२ (श्रीगणेशलाई उहाँका साथी बालकहरूले तिम्री आमा आउनुभएको छ भनेर त्यहाँ पठाएका थिए। राक्षसीले पनि आँखामा आँसु लिएर हर्षपूर्वक गणेशलाई आलिङ्गन गरेर भनिन् - 'बाबु ! तिमी यहाँ आएको धेरै भयो, कत्ति निष्ठुर छौ ? तिम्रा वियोगले म कति सन्तप्त भएकी छु । आज सबै कुरा छोडेर यहाँ आएँ।।३८-३९।। मैले तिमीलाई जन्म दिन ज्यान मन गरेर ठूलो तपस्या गरेकी थिएँ । त्यसबाट तिमी मेरो कोखमा छोरा भएर जन्मेका थियौ । मेरा दुःख भगवान्ले मात्र जान्नुहुन्छ।।४०।। तिमीबिना एक क्षण पनि मलाई कल्पसमान भयो।' यसरी चतुरतापूर्वक ती राक्षसीले कपटभावना लिएर कुरा गरिन् ।।४१।। तिनले गहिरो माया देखाउँदै श्रीगणेशलाई आफ्नो काखमा राखिन् । श्रीगणेशले पनि तिनका चेष्टाहरूबाट भित्री अपराधभावना थाहा पाएर भित्रभित्रै एउटा विचार सोचीकन बाहिर देखावटी रूपमा भन्नुभयो - 'आमा ! तपाईंले मलाई के उपहार लिएर आउनुभएको छ ?' गणेशले यसरी प्रश्न गर्नासाथ राक्षसीले लड्डु झिकेर दिइन्। दिएको लड्डु

अत्तेऽस्मिन् पुनरन्यं सा महाविषयुतं ददौ।
अत्तेऽस्मिन् पुनरन्यं स ययाचे लड्डुकं बलात्।।४४।।

काशिराजश्च पत्नी च प्रार्थयामासतुस्तदा।
उत्तिष्ठोत्तिष्ठ मातस्त्वं सबाला भोजनं कुरु।।४५।।

यावदुत्तिष्ठते सा तु तावद् रुद्धार्भकेण सा।
गिरीन्द्रसारवपुषा सा ततो विह्वलाऽभवत्।।४६।।

मुञ्च मुञ्चेति तं प्राह माताऽहं तव बालक !।
बहुकालेन द्रष्टुं त्वामागता स्नेहपाशतः।।४७।।

कथं चूर्णयितुं मां त्वमुद्यतोऽसि गिरिर्यथा।
कराभ्यां नुनुदे सा तं तावन्निद्रां ययौ च सः।।४८।।

प्रसार्य चरणौ हस्तौ श्वासोच्छ्वासपरायणः।
इति राजा न्यषेधत्तां विह्वलां भारपीडिताम्।।४९।।

मा निद्राभङ्गमस्याशु कुरु त्वं जननी सती।
उद्धर्तुं बालकं केचिच्चक्रुः करुणया मनः।।५०।।

उत्थापितुं चालितुं वा सर्वे नाशक्नुवँस्तदा।
प्रार्थयामासुरपरे बालं राजीवलोचनम्।।५१।।

अनुक्रोशं कुरु शिशो ! जननी ते मरिष्यति।
चालयामास चरणौ हस्तौ साऽथ शिरोधराम्।।५२।।

किमिदं क्रियते बाल ! पितरं किं वदिष्यसि।
एवं वदत्सु लोकेषु सा मृताऽथ निशाचरी।।५३।।

दशयोजनदेहेन व्यापितं भूतलं तया।
पलायनपराः केचित् तां दृष्ट्वाऽतिभयानकाम्।।५४।।

श्रीगणेशले खानु भएपछि तिनले अर्को विषाक्त लड्डू दिइन्। श्रीगणेशले त्यसलाई पनि खानुभयो र अर्को लड्डू माग्नुभयो।।४२-४४।। त्यस बेला महारानीसहित काशिराजले प्रार्थना गर्दै भने - 'आमा अदिति! तपाईं उठ्नुहोस् र बालकसहित भान्छामा गएर भोजन गर्नुहोस् ।।४५।।' राजाका कुरा सुनेर जब ती राक्षसी उठ्न खोजिरहेकी थिइन्, त्यस बेला बालक श्रीगणेशले तिनलाई समात्नुभयो। भगवान् गणेशको शरीर चट्टानझैं कठोर थियो। गणेशले समाउँदा ती साह्रै व्याकुल भइन् । तिनले आत्तिंदै गणेशलाई भनिन् - 'मलाई छोड ! मलाई छोड ! म माता हुँ, तिमी छोरा हौ, यसो नगर, धेरै दिनपछि तिम्रो दर्शन गर्न आएकी छु, तिम्रै मायाको डोरीले मलाई यहाँसम्म ल्याइपुऱ्याएको छ ।।४६-४७।। हे बाबु ! किन तिमी मलाई टुक्रा-टुक्रा पार्न चाहन्छौ ? तिम्रो शरीरको स्पर्श मलाई पहाडझैं कठोर लागिरहेको छ।' यसो भनेर ती राक्षसीले आफ्ना हातद्वारा श्रीगणेशको शरीरमा स्पर्श गरिन् । स्पर्श गर्नासाथ श्रीगणेश हातखुट्टा फैलाएर निदाउनु भयो । उहाँको श्वासप्रश्वास तीव्र गतिमा चलेको थियो । ती राक्षसीले श्रीगणेशलाई जगाउन प्रयास गरिरहेकी थिइन्। त्यस बेला काशिराजले गणेशको शरीरबाट च्यापिएर व्याकुल भएकी राक्षसीलाई भने - 'हे माता ! तपाईंले बालकको निद्राभङ्ग नगर्नुहोस्, तपाईं त आमा हो।' अरू मानिसले पनि दया लागेर मूर्च्छित भएका बालकको उद्धार गर्ने चाहना गरे तर कसैले पनि उठाउन र चलाउन सकेनन्। केही मानिसले कमलका जस्ता आँखाले सुहाउनुभएका श्रीगणेशसँग प्रार्थना गर्दै भने - 'हे बालक ! आमामाथि दया गर्नुहोस् अन्यथा तपाईंबाट च्यापिएर तपाईंकी आमा मर्नुहुनेछ।' ती राक्षसीले पनि हातखुट्टा चलाएर घाँटी कपाउँदै प्रार्थनाका स्वरमा गणेशलाई भनिन् - 'हे बाबु ! तिमी के गरिरहेका छौ ? म मरें भने पिताश्रीलाई के उत्तर दिनेछौ ?' यसरी आमाको प्रार्थना र अरू मानिसहरूको अनुरोध हुँदा पनि श्रीगणेशले च्याँप्न छोड्नु भएन। गणेशका शरीरको भारले दबिएर ती राक्षसीको त्यहीं प्राणान्त भयो ।।४८-५३।। दश योजनसम्म फैलिएको ती राक्षसीको शरीरले पृथ्वीतल ढाकियो । मानिसहरू तिनको डरलाग्दो शरीर देखेर चारैतिर भाग्न थाले ।।५४।।

ययुः केचिच्च तां द्रष्टुं विचित्रजनवृत्तयः।
राजा च विस्मितस्तत्र जनाः सर्वे विलोक्य ताम्।।५५।।

कथं कपटरूपेयमागता बालघातिनी।
ऋषिपत्नीस्वरूपेण न ज्ञाता राक्षसीति च।।५६।।

अत्यद्भुतं ज्ञानमस्य सामर्थ्यञ्च विलोकितम्।
इति ब्रुवाणास्तु नरास्तत्समीपं मुदा ययुः।।५७।।

बालमुत्थाप्य तस्यास्तु पुष्पभारसमं जगुः।
अपनेयेति तेऽप्याहुर्दुष्टा दुष्टस्वरूपिणी।।५८।।

परस्यानिष्टमिच्छेद् यः स एव निधनं व्रजेत्।
तुष्टुवुः परिपूज्यैनं काशिराजो जना अपि।।५९।।

ऋषयो लोकपालाश्च भक्त्या देवं विनायकम्।
नाथस्त्वमसि देवानां मनुष्योरगरक्षसाम्।।६०।।

यक्षगन्धर्वविप्राणां गजाश्वरथपक्षिणाम्।
भूतभव्यभविष्यस्य बुद्धीन्द्रियगणस्य च।।६१।।

हर्षस्य शोकदुःखस्य सुखस्य ज्ञानमोहयोः।
अर्थस्य कार्यजातस्य लाभहान्योस्तथैव च।।६२।।

स्वर्गपाताललोकानां पृथिव्या जलधेरपि।
नक्षत्राणां ग्रहाणाञ्च पिशाचानाञ्च वीरुधाम्।।६३।।

वृक्षाणां सरितां पुंसां स्त्रीणां बालजनस्य च।
उत्पत्तिस्थितिसंहारकारिणे ते नमो नमः।।६४।।

पशूनां पतये तुभ्यं तत्त्वज्ञानप्रदायिने।
नमो विष्णुस्वरूपाय नमस्ते रुद्ररूपिणे।।६५।।

नमस्ते ब्रह्मरूपाय नमोऽनन्तस्वरूपिणे।
मोक्षहेतो ! नमस्तुभ्यं नमो विघ्नहराय ते।।६६।।

केही मानिसहरू राक्षसीको शरीर कस्तो रहेछ भन्ने जिज्ञासाले तिनको शरीर हेर्न आए। काशिराज चकित भए। मानिसहरू आपसमा भन्न थाले - 'कसरी कपट रूप धारण गरी बच्चाहरूलाई मार्ने यो राक्षसी ऋषिपत्नी अदितिको रूपमा यहाँ आइपुगी ? हामीले राक्षसी हो भनेर चिन्न सकेनौं। बालकको अद्भुत ज्ञान र विचित्र शक्तिबाट मात्र राक्षसीको रूपमा चिन्न पायौं।' यसरी तर्क-वितर्क गरिरहेका मानिसहरू सहर्ष श्रीगणेशको समीपमा गए ।।५५-५७।। तिनीहरूले राक्षसीको शरीरलाई च्याँपिरहनु भएका बालकरूप श्रीगणेशलाई उठाए। उहाँ फूलझैं हलुका हुनुहुन्थ्यो। केही मानिसहरूले आएर भने - यो भयानक स्वरूप भएकी दुष्ट राक्षसीको लाश टाढै लगेर धन्क्याउनुपर्दछ ।।५८।। काशिराज, काशीका नागरिक, ऋषिमुनि र लोकपालहरूले पनि भक्तिपूर्वक भगवान् श्रीगणेशको पूजा गरेर प्रार्थना गर्दै भने- 'हे नाथ ! हजुर देवता, मानिस, सर्प र राक्षसहरूका पनि स्वामी हुनुहुन्छ।।५९-६०।। हजुर यक्ष, गन्धर्व र ब्राह्मणहरूका स्वामी हुनुहुन्छ। हजुर हात्ती, घोडा, रथ र चराचुरुङ्गीका अधिपति हुनुहुन्छ। हजुर भूतकाल, वर्तमानकाल र भविष्यत्कालका अधिपति र बुद्धि एवं इन्द्रियहरूका पनि स्वामी हुनुहुन्छ।।६१।। हजुर हर्ष, शोक, दुःख, सुख, ज्ञान, मोह, माया, प्रयोजन, कार्य, लाभ र हानिका पनि स्वामी हुनुहुन्छ।।६२।। हजुर स्वर्ग र पाताल आदि लोक, पृथ्वी, सागर, नक्षत्र, ग्रह, पिशाच, वृक्ष र वनस्पतिहरूका पनि अधिपति हुनुहुन्छ।।६३।। वृक्ष, वनस्पति, नदी-नाला, नारी-पुरुष, बालक-बालिका सबैका अधिपति र ती सबैको उत्पत्ति, पालन एवं संहार गर्ने हजुरलाई हामी बारबार नमस्कार गर्दछौं।।६४।। पशुहरूका पति एवं ज्ञानदाता हजुरलाई नमस्कार गर्दछौं। विष्णुका रूपमा रहनुहुने हजुरलाई नमस्कार गर्दछौं। शिवजीका रूपमा रहनुहुने हजुरलाई नमस्कार गर्दछौं।।६५।। ब्रह्माजीका रूपमा रहनुहुने हजुरलाई नमस्कार गर्दछौं। अनन्तरूपमा रहनुहुने हजुरलाई नमस्कार गर्दछौं। हे मोक्षका कारण भगवान् श्रीगणेश ! हजुरलाई नमस्कार गर्दछौं। सम्पूर्ण प्राणीहरूका विघ्नहरूको हरण गर्नुहुने हजुरलाई नमस्कार

नमोऽभक्तविनाशाय नमो भक्तप्रियाय च।
अधिदैवाधिभूतात्मन् ! तापत्रयहराय ते।।६७।।

सर्वोत्पातविघाताय नमो लीलास्वरूपिणे।
सर्वान्तर्यामिणे तुभ्यं सर्वाध्यक्षाय ते नमः।।६८।।

अदित्या जठरोत्पन्न ! विनायक ! नमोऽस्तु ते।
परब्रह्मस्वरूपाय नमः कश्यपसूनवे।।६९।।

अमेयमायान्वितविक्रमाय
मायाविने मायिकमोहनाय।
अमेयमायाहरणाय माया-
महाश्रयायास्तु नमो नमस्ते।।७०।।

एवं स्तुत्वा तु ते सर्वे ययुः स्वं स्वं गृहं मुदा।
त्यक्त्वा तां राक्षसीं छित्त्वा खण्डशो दूरतः पुरात्।।७१।।

य इदं पठते स्तोत्रं त्रिसन्ध्योत्पातनाशनम्।
न भवन्ति महोत्पाता विघ्ना भूतभयानि च।।७२।।

त्रिसन्ध्यं यः पठेत् स्तोत्रं सर्वान् कामानवाप्नुयात्।
विनायकः सदा तस्य रक्षणं कुरुतेऽनघ ।।७३।।

गर्दछौं।।६६।। नास्तिक र दुर्जनहरूको नाश गर्नुहुने हजुरलाई नमस्कार गर्दछौं। भक्तका प्यारा र भक्तहरूको उद्धार गर्नुहुने हजुरलाई नमस्कार गर्दछौं। अधिदैव एवं अधिभूतमा रहनुहुने, आधिभौतिक, आधिदैविक र आध्यात्मिक तीन प्रकारका सन्तापको नाश गर्नुहुने हजुरलाई नमस्कार गर्दछौं।।६७।। सबै प्रकारका उत्पातहरूलाई समाप्त पार्नुहुने लीलामय हे प्रभु ! हजुरलाई नमस्कार गर्दछौं। सबैका हृदयमा अन्तर्यामी बनेर रहनुहुने र सबैका अध्यक्ष हजुरलाई नमस्कार गर्दछौं।।६८।। अदितिका गर्भबाट उत्पन्न हुनुभएका हे भगवन् विनायक ! हजुरलाई नमस्कार गर्दछौं। हे परब्रह्मस्वरूप कश्यप ऋषिका छोरा श्रीगणेश ! हजुरलाई नमस्कार गर्दछौं।।६९।। अपरिमित मायामय पराक्रम धारण गर्नुहुने, मायावीका रूपमा रहनुहुने, मायाद्वारा वञ्चना गर्न आउने राक्षस-राक्षसीहरूलाई मोहित गर्नुहुने, अरूद्वारा प्रयोग गरिएका असङ्ख्य इन्द्रजाललाई समाप्त पार्नुहुने र मायाका महान् आश्रय हजुरलाई बारबार नमस्कार गर्दछौं।।७०।।' यसरी स्तुति गरेर सबै मानिसहरू खुसी हुँदै आ-आफ्ना घरतर्फ गए। घर जानुभन्दा पहिले तिनीहरूले राक्षसीको शरीरलाई टुक्रा-टुक्रा पारेर नगरदेखि बाहिर पुऱ्याइसकेका थिए।।७१।। जुन मानिसले यो स्तोत्र पढ्छ, त्यसका प्रातःकाल, मध्याह्नकाल र सायंकालमा हुने उत्पातहरू नष्ट हुन्छन् र त्यसले जीवनमा कहिल्यै पनि ठूला उत्पात व्यहोर्नु पर्दैन। त्यसमाथि ठूला विघ्न आइलाग्दैनन् । त्यसलाई कुनै प्राणीबाट पनि भय हुँदैन।।७२।। जसले तीनवटै सन्ध्याकालमा यो स्तोत्र पढ्दछ त्यसले सबै कामनाका फल प्राप्त गर्दछ। हे वेदव्यास ! भगवान् गणेशले त्यस्ता भक्तहरूको सधैं रक्षा गर्नुहुन्छ।।७३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते राक्षसीवधो नामैकविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'राक्षसीको वध' शीर्षकान्वित एक्काइसौं अध्याय पूर्ण भयो ।।२१।।

ॐ

# द्वाविंशोऽध्याय:　　{ २२ अध्याय }

### क उवाच

अपरस्मिन् दिने राजा प्रात: स्नानकृतोद्यम:।
[illegible]: सर्वे वितर्क्यैवं नायं देवो न मानुष:।।१।।

न देवश्चेत् कथं पञ्च महान्तो देवदुर्धरा:।
अजेया: शक्रहरिभिर्हता दैत्या महाबला:।।२।।

देव एव भवेद् वालमध्येऽयं क्रीडते लघु:।
इति तर्क्यं ततस्तावदागता राजदर्शनम्।।३।।

[illegible]पि भद्रमगमदुवाच सकलान् प्रति।
[illegible]यन्तु यत्कार्यं तद् व: सिद्धिं प्रयास्यति।।४।।

[illegible]र्थं प्रातरेवेह पौरा यूयं समागता:।
[illegible]चुर्न रहस्यं यत् स्वाभिप्रेतमृते वच:।।५।।

[illegible]ऽयं हि समानीतो मुनिपुत्रो विनायक:।
[illegible] दाम्यमभून्नो हि किञ्चित् क्वापि कदाचन।।६।।

[illegible] नु पूजितोऽनेकवारं स्वशरणे स्थित:।
[illegible] नव गृहे याति तत् तन्न: प्रेषयस्यहो।।७।।

[illegible] नु न कथं राजन् ! प्रेषितो नु विनायक:।

### राजोवाच

[illegible] यत्र जना विभज्य भुज्यते तु यत्।।८।।

[illegible] च विषं विषमन्यद् भवेत् तु तत्।
[illegible] यस्य भवेद् भक्तिर्देवे वा मानुषेऽपि वा।।९।।

[illegible] स्वगृहे नीत्वा पूजयेद् भोजयेदपि।
[illegible] त्रिविधा: पौरा ! रज:सत्त्वतमोगुणै:।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - अर्को दिन बिहानै उठेर काशिराजले स्नान गरे । नगरवासीहरू भने श्रीगणेशको विषयलाई लिएर चिन्तन गर्न थाले - 'यी देवता पनि होइनन् र मानिस पनि होइनन्। देवता होइनन् भने देवताले पनि जित्न नसक्ने, इन्द्र र विष्णुले पनि जित्न नसक्ने बलशाली पाँचवटा दैत्यलाई कसरी मारे ? देवता नै होलान् यी, तर यी श्रीगणेश बालकहरूको बीचमा बालकै बनेर लीला गरिरहेका छन् ।' यसरी तर्क गर्दै ती मानिसहरू राजाका नजिकमा आए।।१-३।। राजा पनि सिंहासनमा आसीन भई ती मानिसहरूलाई लक्ष्य गर्दै भन्न लागे - 'तपाईंहरूको जुन कार्य छ त्यो बताउनुहोस्, सिद्धि प्राप्त हुनेछ ।।४।। हे पुरवासी सज्जनवर्ग! तपाईंहरू बिहानै यहाँ किन आउनुभयो?' तिनीहरूले भने - 'खासै रहस्यको कुरा त केही थिएन तर हामीहरू एउटा कुरा भन्न मन लागेर आएका हौं। तपाईंले ल्याउनु भएका मुनिपुत्र श्रीगणेश हुनुहुन्छ। हामीले उहाँको कहिल्यै कत्ति पनि सेवा गर्न पाएनौं ।।५-६।। तपाईंले त आफ्नो घरमा राखेर नित्य पूजा गर्नुहुन्छ र भोजन गराउने काम पनि गर्नुहुन्छ । तपाईंका घरमा जे-जस्ता वस्तु र व्यक्ति आउँथे तिनलाई तपाईंले हाम्रा घर पठाउने गर्नुहुन्थ्यो, तर बालक गणेशलाई भने तपाईंले हाम्रा घर कहिल्यै पठाउनु भएन ।।७।।

**राजाले भने** - हे नागरिक सज्जन ! तपाईंहरूले राम्रो कुरा गर्नुभयो। कुनै कुरा पनि एक्लै खाइन्छ भने त्यति मीठो हुँदैन, तर बाँडेर खाइयो भने त्यो असाध्यै मीठो हुन्छ। अर्कालाई नदिएर एक्लै खाँदा अमृत पनि विष हुन्छ, अरूसँग बाँडेर खाँदा विष पनि अमृत हुन्छ। चाहे यी देवता होऊन् चाहे मानिस, केही फरक पर्दैन। यिनमा जसको भक्ति छ, ती मानिसहरूले आफ्नो घरमा लिएर गई पूजा गर्नुहोस् र भोजन गराउनुहोस्, यसमा मलाई केही आपत्ति छैन। हे नगरवासीहरू! मानिसहरू तीन प्रकारका हुन्छन् - सत्त्वगुणी, रजोगुणी र तमोगुणी। दुष्टहरूले श्रीगणेश साँचा हुन् कि होइनन् भनेर परीक्षण गर्छन् तर पुण्यवान् मानिसहरूले यिनको श्रद्धापूर्वक

परीक्षन्तेऽनरा दुष्टाः पुण्यवन्तो भजन्त्यपि।
केचिदेनं विनिन्दन्ति प्रशंसन्ति च केचन।।११।।

यस्य स्वभावो यादृक् स्यात् स तथा वर्तते नरः।
न जहाति घृष्यमाणश्चंदनः स्वसुगन्धिताम्।।१२।।

कस्तूरीकर्दमयुतः पलाण्डुर्वा निजं गुणम्।
भवतां यदि भक्तिश्चेदनन्याऽस्मिन् सुते मुनेः।।१३।।

नीयतां पूजयन्त्वाशु भोजनाय प्रियाय च।
परीक्षार्थं न नेयोऽसौ जनको जननी मम।।१४।।

मया कथं नरा वाच्या नीत्वैनं पूजयन्त्विति।
अस्य शक्तिं दृढां दृष्ट्वा मम भक्तिर्विशिष्यते।।१५।।

नायं चेन्मत्पुरी क्वत्या कुतो यूयं क्व चाप्यहम्।
इति राजवचः श्रुत्वा पुनरूचुश्च नागराः।।१६।।

यथा वदसि कल्याण ! तत् तथा न तदन्यथा।
अस्माकं कार्यसिद्धिर्यो तां कुरुष्व जनाधिप।।१७।।

नीत्वेमं स्वगृहे बालं पूजयामो यथार्हतः।
एतस्मिन्नन्तरे बालोऽवदत् तान् सदसि स्थितान्।।१८।।

जानन्नन्तर्गतं तेषां सर्वसाक्षी जगद्गुरुः।

विनायक उवाच

किमर्थं मां प्रार्थयन्तो भवन्तोऽतिमहत्तराः।।१९।।

अहं बालो मुनिसुतो मत्पूजनफलं नु किम्।
भविष्यति न जानेऽहं भवतां व्ययकारिणाम्।।२०।।

विवाहो व्रतबन्धो वा यज्ञो वाऽन्यो महोत्सवः।
तदा भवद्गृहं यास्ये हव्यं कव्यं यदा भवेत्।।२१।।

भजन गर्छन्। कसैले आफ्नो स्वभावअनुसार बालक गणेशको निन्दा गर्छन् भने कसैले प्रशंसा गर्छन्।।८-११।। जुन मानिसको जस्तो स्वभाव हुन्छ त्यसले त्यस्तै व्यवहार गर्छ। जति घोट्दा पनि चन्दनले आफ्नो गन्ध छोड्दैन । हिलैमा मुछिए पनि कस्तूरीले आफ्नो गन्ध दिई नै राख्छ । प्याजले जति लुकाउन खोजे पनि आफ्नो गुण प्रकट गरी नै हाल्छ । मुनिका पुत्र बालक श्रीगणेशमा तपाईंहरूको अनन्य भक्ति छ भने लिएर जानुहोस्, पूजा गर्नुहोस्, प्रेम गर्नुहोस् र मीठा-मीठा पदार्थ टक्र्याएर तृप्त गराउनुहोस् । तपाईंहरूले यी सच्चा देवता हुन् कि होइनन् भन्ने परीक्षणका लागि लिएर जानुहुँदैन। हे नागरिक सज्जनवर्ग ! यी बालक मेरा बाबु र मेरी आमा हुन्।।१२-१४।। मैले त्यसै घर लगेर पूजा गर्नुहोस् भनेको छैन। उहाँको अपरिमित शक्ति देखेर मेरो भक्ति पनि त्यसरी नै बढेको छ। श्रीगणेश भगवान्को अस्तित्व हुँदैन भने मेरो अस्तित्व हुँदैन, काशीपुरीको अस्तित्व हुँदैन र तपाईंहरूको पनि अस्तित्व हुँदैन ।' राजाका यस्ता कुरा सुनेर नगरवासीहरूले फेरि भने - 'हे नरेश! हजुरले जे भन्नुभएको छ त्यो कुरा यथार्थ हो, यसमा कुनै अन्यथा छैन। हामीहरूको कार्यसिद्धि कसरी हुन्छ ? त्यो हजुरले गराइदिनुहोस्।।१५-१७।। हे काशिराज! हामी यी बालकलाई घर लगेर आफ्नो शक्तिअनुसार सम्मान गर्दछौं । त्यतिखेर नै सबैका साक्षी र जगद्का गुरु बालकरूप भगवान् श्रीगणेशले तिनीहरूको भित्री मर्म जान्नुभएको हुँदा ती सबैलाई सम्बोधन गर्दै भन्नुभयो।

**श्रीगणेशले भन्नुभयो** - 'हे नागरिकहरू ! तपाईंहरू आफै अत्यन्त महान् हुनुहुन्छ । किन मलाई आफ्नो घर लिएर जानका निमित्त प्रार्थना गर्दै हुनुहुन्छ ? ।।१८-१९।। म एउटा मुनिको छोरो, बच्चा मानिस हुँ। तपाईंहरूले मेरो पूजा गरेर के पाउनुहुन्छ ? मलाई त तपाईंहरूले ठूलो खर्च गरेर केही पाउनुहुन्छ जस्तो लाग्दैन। कुनै बेला तपाईंहरूका घरमा व्रतबन्ध हुनसक्छ, विवाह हुनसक्छ अथवा कुनै यज्ञ गर्न सक्नुहुन्छ अथवा कुनै उत्सव हुनसक्छ अथवा देवताको पूजा हुनसक्छ अथवा तिथिश्राद्ध हुनसक्छ त्यस्ता अवसरहरूमा तपाईंहरूले मलाई बोलाउनुहोस्, म खुसी भएर जानेछु। अहिले जानुपर्ने कुनै औचित्य म देखिदनँ। तपाईंहरू धेरै हुनुहुन्छ, म एक्लो छु। सबैका घरमा म कसरी जानसक्छु?

असङ्ख्याता भवन्तो हि कथमेको गृहं व्रजे।
वकेशिनीं किमर्थं वा गां धोक्ष्यथ भवद्विधा:।।२२।।

वाञ्छितार्थी कथं याचेत् त्यक्त्वा कल्पद्रुमं द्रुमम्।
अन्यत् क्षुद्रं वाञ्छितं वा तद्वद् यूयं समुत्सुका:।।२३।।

क उवाच

विनायकवच: श्रुत्वा श्रेणीमुख्या जगु: पुन:।
अस्मिन् विवाहे सम्पन्ने न स्थास्यति क्षणं भवान्।।२४।।

गज्ञ: प्रसादाद् दृष्टोऽसि भक्तिं न: सफलीकुरु।
अवाप्तकामस्य च ते सृष्टिस्थित्यन्तकारिण:।।२५।।

सर्वान्तर्यामिण: सर्वचित्तवृत्तीर्विजानत:।
कर्तुं वाप्यन्यथाकर्तुमकर्तुं वा क्षमस्य ह ।।२६।।

चिदानन्दस्य नैवाऽस्ति पूजाभिर्न: प्रयोजनम्।
भक्तिप्रियो देव इति निगमं न वृथा कुरु।।२७।।

निशम्येति वचस्तेषां तानूचेऽथ विनायक:।
एवं चेद् भवतां भक्तिस्तदा यास्ये नृपाज्ञया।।२८।।

एवमाकर्ण्य तद्वाक्यं सर्वेऽपि स्वगृहान् ययु:।
मण्डपान् विदधु: केचित् केचिद् वस्त्रगृहाणि च।।२९।।

तोरणान् विदधुर्भक्त्याऽऽदर्शशोभाद्भुतानि च।
भाजनानि महार्हाणि सुगन्धचन्दनानि च।।३०।।

द्रव्याणि च सुगन्धीनि मृगनाभिभवानि च।
फलानि च विचित्राणि वासांस्याभरणानि च।।३१।।

पक्वान्नानि विचित्राणि पञ्चामृतयुतानि च।
स्थापिता मूर्तयो नानामुक्तामालाविभूषिता:।।३२।।

एवं गृहे गृहे सर्वे सामग्रीं चक्रुरुत्सुका:।
तस्मिन्नगरप्रान्ते ब्राह्मणो वेदशास्त्रवित्।।३३।।

तपाईंहरूजस्ता बुद्धिमान् मानिसहरूले किन बाँझी गाईको दूध दुहुने रहर गर्दै हुनुहुन्छ ? के आफ्नो मनकामना पूरा गर्न चाहने मानिसले कल्पवृक्षलाई छोडेर सामान्य रूखको आश्रय लिन्छ? अथवा क्षुद्र कामनाका लागि पनि कसैले कल्पवृक्ष छाडेर सानो रूखको आश्रय लिँदैन तर तपाईंहरू मजस्तो सामान्य बालकका समीपमा आएर किन याचना गर्दै हुनुहुन्छ?' ।।२०-२३।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशका कुरा सुनेर मुख्य-मुख्य नागरिकहरूले फेरि भने - 'काशिराजको घरमा विवाह सम्पन्न भएपछि हामीलाई थाहा छ कि हजुर एकछिन पनि बस्नुहुन्न। राजाको कृपाबाट हामीले हजुरको दर्शन पाएका छौं। हामी हजुरमा भक्ति गर्दछौं, हाम्रो भक्तिलाई सफल तुल्याउनुहोस्। हजुर पूर्णकाम हुनुहुन्छ र सृष्टि, स्थिति एवं पालन गर्न सक्नुहुन्छ। हजुर सबैका हृदयमा अन्तर्यामी भएर बस्नुहुन्छ। हजुरले सबैका मनोवृत्ति जान्नुहुन्छ । हजुर कुनै काम गर्न, नगर्न अथवा त्यसलाई अन्यथा गर्न समर्थ हुनुहुन्छ। हजुर सच्चिदानन्दस्वरूप हुनुहुन्छ। हजुरलाई हाम्रो पूजा चाहिएको छैन, तर देवता भक्तिका प्यारा हुन्छन् भन्ने शास्त्रवचनलाई व्यर्थ नबनाउनुहोस् ।।२४-२७।।' तिनीहरूका यस्ता कुरा सुनेर फेरि श्रीगणेशले भन्नुभयो - 'तपाईंहरूको यस्तो भक्ति छ भने राजासँग आज्ञा लिएर म तपाईंहरूका घर जानेछु।।२८।।' भगवान् श्रीगणेशका यी कुरा सुनेर सबै नागरिकहरू आ-आफ्ना घरतर्फ लागे। कसैले घरमा मण्डप बनाए, कसैले पाल टाँगे, कसैले आफ्ना घरबाहिर ठूला-ठूला द्वार तयार गरे, कसैले अद्भुत-अद्भुत सामग्री तयार गरे, कसैले बहुमूल्य सुगन्ध र चन्दन आदि वस्तुहरूको सङ्ग्रह गरे र कसैले कस्तूरी आदि पदार्थ एवं बहुमूल्य पात्रहरू जम्मा गरे। फेरि तिनले अनेक थरि विचित्र फल, वस्त्र र गहना पनि जम्मा गरे। तिनका घरमा पञ्चामृतसहित विचित्र मीठा-मीठा पकवानहरू तयार गरियो । अनेक थरि देवताका मूर्तिहरूलाई मोतीका हारले सजाएर राख्ने काम गरियो ।।२९-३२।। यसरी घर-घरमा सबैले उत्सुक भएर श्रीगणेशको स्वागतका लागि सामग्री तयार गरे। काशीनगरको सीमाप्रान्तमा वेद र शास्त्र जान्ने एउटा ब्राह्मण थिए। तिनको नाम शुक्ल थियो। व्यवहार पनि नामअनुसार शुक्ल नै थियो। ती शान्त, इन्द्रविजयी र सहनशक्तिले सम्पन्न

शुक्लनामा शुक्लवृत्तिः शान्तो दान्तः क्षमान्वितः।
श्रौतस्मार्तकर्मनिधिर्ब्रह्मनिष्ठोऽतिथिप्रियः।।३४।।

यस्य पत्नी महाभागा विद्रुमा नाम नामतः।
निस्पृहा ज्ञानसम्पन्ना सर्वावयवसुन्दरा।।३५।।

दरिद्रा ज्ञाननिष्ठा सा पतिप्राणा पतिव्रता।
तस्या गृहगतं दृश्यं नभस्ताराङ्कितं स्फुटम्।।३६।।

न स्वर्णं राजतं ताम्रं भाजनं रीतिजं न च।
गौरा वल्कलसंवीता तेजोज्वाला सुशोभना।।३७।।

यदङ्गतेजसा व्याप्तं दृश्यमानं न दृश्यते।
तेन वृत्तेन तुष्टा सा गृहशोभाविधायिनी।।३८।।

तस्यास्तोषेण तुष्टोऽभूद् विनयेन च सेवया।
स्वस्थः स्थितो ज्ञाननिष्ठस्तिष्ठत्यकृतभोजनः।।३९।।

कदाचिद् भिक्षितुं यातो वारितस्तु गृहे गृहे।
महोत्सवं प्रकुर्वद्भिर्विनायककृते जनैः।।४०।।

यल्लब्धं तेन तुष्टोऽसौ भार्यामेत्याऽब्रवीदिदम्।
श्रूयतां पत्नि ! नगरे वारितोऽहं गृहे गृहे।।४१।।

आयास्यति प्रतिगृहं पूजार्थं स विनायकः।
योऽवतीर्णो मुनिगृहं भूभारहरणोद्यतः।।४२।।

आयास्यति गृहं चेत् स पूजार्थे यत्नमाचर।
साब्रवीन् महतीं पूजां त्यक्त्वाऽन्नं विविधन्तथा ।।४३।।

भवतां सोऽकिञ्चनानां कथं वा गृहमेष्यति ।
गन्धपुष्पं पर्युषितं पक्वं कन्दफलं मुने।।४४।।

थिए । ती वैदिक र धार्मिक कर्मका कोष नै थिए। ती ब्रह्मनिष्ठ र अभ्यागतहरूका सेवक थिए।।३३-३४।। तिनकी पत्नीको नाम विद्रुमा थियो। तिनी ज्ञानसम्पन्न, त्यागमय स्वभाव भएकी सर्वाङ्ग सुन्दर नारी थिइन्। घरमा धनसम्पत्ति केही नहुँदा दरिद्र थिइन् तर तिनलाई दरिद्रताको दुःख थिएन। तिनी ज्ञानमा रमाउने पतिका लागि प्राणसमान प्रिय पतिव्रता नारी थिइन्। तिनको घरको दृश्यको विषयमा के भन्ने ? त्यो घरभित्र बसेर आकाशका तारा गन्न सकिन्थ्यो। न सुन, न चाँदी, न तामो, न पित्तल, कुनै धातु पनि त्यहाँ थिएन। वर्णले गोरी, रूखका बोक्राहरूले ढाकिएकी र चरित्रको तेजले बलेकी ब्राह्मणीका लागि तेजोमय चरित्रमात्र एउटा सम्पत्ति थियो। तिनका शरीरको प्रबल तेजका सामु संसारका सबै पदार्थ फिका देखिन्थे। आफ्नो उत्तम चरित्रबाट सन्तुष्ट भएकी ती गृहिणी शुक्ल ब्राह्मणकी उत्तम गृहिणीका रूपमा बसेकी थिइन्।।३५-३८।। ती ब्राह्मणीको सन्तुष्टि, नम्रता र सेवाका कारण तिनका पति सन्तुष्ट एवं स्वस्थ थिए । ती ब्राह्मण अत्यन्त ज्ञानी थिए र दरिद्रताका कारण यदाकदा भोजन गर्न नपाउँदा पनि परम आनन्दमा रमाउँथे।।३९।। कुनै दिन ती ब्राह्मण भिक्षा गर्न भनी शहरतर्फ लागे। त्यहाँ भगवान् श्रीगणेश हाम्रो घर आउनुहुन्छ भनी मानिसहरूले महोत्सव गरिरहेका थिए। तिनीहरूले आफ्नो घरमा शुक्ल ब्राह्मणलाई भिक्षा माग्न आएको देखेर भिक्षा नदिईकन भगाए। भिक्षा माग्न जाँदा जे जस्तो भिक्षा फेला पर्‍यो त्यसैले सन्तुष्ट भई ती घर फर्केर आफ्नी पत्नीलाई भने - 'हे कल्याणी! सुन त, म नगरमा भिक्षा माग्न गएको थिएँ । गणेशको उत्सवका लागि तयारी गरिरहेका मानिसहरूले मलाई भिक्षा दिएनन् र रित्तै फर्काए। भगवान् श्रीगणेश प्रत्येक घरमा पूजाग्रहण गर्न आउँदै हुनुहुन्छ। उहाँ पृथ्वीको भार हरण गर्न कश्यप ऋषिका घरमा अवतीर्ण हुनुभएको थियो। हाम्रो घरमा पनि आउन सक्नुहुन्छ। तसर्थ तिमीले उहाँको पूजाका लागि बन्दोबस्त गर ।' आफ्ना पतिका कुरा सुनेर विद्रुमाले भनिन् - 'नगरमा हुने ठूलो पूजाको तामझाम र मिष्टान्न छाडेर अकिञ्चन हजुरको घरमा उहाँ किन आउनुहुन्छ ? अकिञ्चन र दरिद्र हामीजस्ता गृहस्थीका घरमा आएर उहाँले के पाउनुहुन्छ ? हाम्रो घरमा चन्दन, फूल, पाकेका

भविष्यति कृतं सम्यगसम्यक् स्वल्पमप्यहो।
किं वा प्रयोजनं तस्य गृहेण भवतां प्रभो।।४५।।

इति प्रियावचः श्रुत्वा पुनरूचे मुनिः प्रियाम्।
स मां भक्तं विजानाति दीनानाथप्रभुः प्रभुः।।४६।।

भक्तिप्रियोऽस्ति देवोऽयं न लोभवशगो विभुः।
अर्णसा च पलाशेन पुष्पेण प्रीयते हि सः।।४७।।

सुवर्णनिचयैर्वापि न हि दम्भात् समर्पितैः।
इत्याकर्ण्य वचस्तस्य विद्रुमा पुनरब्रवीत्।।४८।।

एवं चेत् तर्हि यत् सिद्धं तदेतस्मै निवेद्यताम्।
ततोऽष्टादशधान्यानां कृत्वा पिष्टं पपाच सा।।४९।।

ओदनश्च कृतो जीर्णतण्डुलानां जलाधिकः।
मुष्टिपिष्टं पर्णपुटे पक्त्वा भुङ्क्ते दिने दिने।।५०।।

तत् तेन दीयमानेन द्रव्येण चैलमानयत्।
गन्धाक्षतञ्च पुष्पाणि धूपं दीपं महार्तिकं।।५१।।

वन्यं फलं वल्कलञ्च स्थापयामास चैकतः।
शुष्कामलकखण्डानि मुखवासार्थमेव च।।५२।।

प्रमार्ज्य दर्भनिचयं सुषिक्ते स्वाङ्गणे ध्वजम्।
चकार कशिपुञ्चासौ ध्याननिष्ठोऽभवन्मुनिः।।५३।।

नैवेद्यं वैश्वदेवञ्च कृत्वा पूर्वं प्रयत्नतः।।५४।।

बासी अन्न र कन्दमूल यही मात्र हुनसक्छ । जति राम्रो गरे पनि ती वस्तुबाट मात्र गर्ने हो, नराम्रो गरे पनि ती वस्तुबाटै हुने हो। उहाँलाई हाम्रो घरमा आएर के पाउनु छ र?।।४०-४५।।' आफ्नी पत्नी विद्रुमाका यी कुरा सुनेर शुक्ल ब्राह्मणले तिनलाई भने- 'हे कल्याणी ! उहाँले मलाई चिन्नुहुन्छ । उहाँ दीनहरूका नाथ हुनुहुन्छ र अनाथहरूका पनि नाथ हुनुहुन्छ । उहाँ भक्त र भक्तिका प्यारा हुनुहुन्छ । उहाँ सर्वव्यापक हुनुहुन्छ । उहाँलाई कुनै लोभ छैन। उहाँ त पानी, पात र फूलले पनि प्रसन्न हुनुहुन्छ ।।४६-४७।। पाखण्डीहरूले स्वर्णभार टक्र्याए पनि उहाँले स्वीकार्नु हुन्न।' आफ्ना पतिका कुरा कुरा सुनेर विद्रुमाले फेरि भनिन् - 'त्यसो हो भने तपाईंको घरमा जे छ त्यही टक्र्याउनुहोस्।' त्यसपछि ती ब्राह्मणीले अठार प्रकारका धान्यहरू बटुलेर तिनको पीठो तयार गरिन्। पुराना चामल धेरै पानीमा उमालेर भात तयार गरिन्। ती दुवै दम्पतीले दिनदिनै एकमुठी पीठो पातमा बाँडेर खाने गर्थे। त्यही पीठो बेचेर तिनीहरूले भगवान्लाई टक्र्याउन कपडा किने । गन्ध, अक्षता, फूल, धूप, बत्ती, आरतीको पनि व्यवस्था गरे।।४८-५१।। वनबाट ल्याएका केही फलहरू एकातर्फ राखे। भान्छा गरेपछि भगवान्को मुखशुद्धिका निमित्त सुकेका अमलाका टुक्राहरू तयार गरे। अनि चारैतिर भगवान्को पूजाका लागि कुशहरू जम्मा गरेर तिनै कुशबाट भगवान्को शय्या पनि तयार गरे। त्यसपछि सन्तुष्ट भएका मुनि बलिवैश्वदेव कर्म गरेर भगवान्को पूजा सम्पन्न गरी नैवेद्य चढाएर भगवान् श्रीगणेशको ध्यानमा लीन भए ।।५२-५४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते विद्रुमाशुक्लनिष्ठगणेशभक्तिनिरूपणं नाम द्वाविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'विद्रुमा र शुक्लको गणेशभक्ति' शीर्षकान्वित बाइसौं अध्याय पूर्ण भयो ।।२२।।

ॐ

# त्रयोविंशोऽध्याय:  { २३ अध्याय }

क उवाच

स बालो बालमध्ये तु चिक्रीडे कौतुकान्वित:।
राजा भद्रासनगतो नृत्यं सर्वजनै: सह।।१।।

यावत् पश्यति वेश्यानां तावदेवागतावुभौ।
देवलोकात् सदो रम्यं सनकश्च सनन्दन:।।२।।

उद्भासितं तयोर्दीप्त्या सूर्याग्न्योरिव तत् सद:।
आसनादुदतिष्ठत् स नृपति: सहसेक्ष्य तौ।।३।।

शिर: स्थाप्य पादपद्मे साष्टाङ्गं प्रणनाम तौ।
बद्धाञ्जलिरुवाचाऽथ धन्यमद्य कुलं मम।।४।।

राज्यं ज्ञानञ्च देहश्च पत्नीपुत्रादिकञ्च यत्।
इत्युक्त्वा पाणिना धृत्वा स्वासने चोपवेश्य तौ।।५।।

उपचारै: षोडशभिरपूजयत भक्तित: ।
तौ च विश्रामयामास पादसंवाहनादिभि:।।६।।

पुन: पुन: प्रणम्यासौ वक्तुं समुपचक्रमे।

राजोवाच

मुनीनां न्यस्तदण्डानां निस्पृहाणाञ्च सर्वदा।।७।।

कार्यलिप्सा न काचित् स्यादाज्ञामीहे तथाऽप्यहम्।
तपो राज्यं कुलं शीलं सार्थकं कर्तुमुद्यत:।।८।।

तावूचतु:

अवाप्तसर्वकामोऽसौ परब्रह्मस्वरूपवान्।
लीलावतारी भगवान् कश्यपस्य सुतस्तव।।९।।

गृहे नानाकौतुकानि कुरुतेऽद्भुतविक्रम:।
श्रुत्वाऽवदानं तस्यात्र द्रष्टुमावां समागतौ।।१०।।

अन्यथा शक्रभवनत्यागे किन्न: प्रयोजनम्।
गृहे यस्य कल्पतरु: सोऽन्यं किं याचयिष्यति।।११।।

**ब्रह्माजीले भन्नुभयो** – श्रीगणेश बालकहरूको बीचमा आनन्दपूर्वक खेल्न थाल्नुभयो। राजा सिंहासनमा बसेर वेश्याहरूको नृत्य हेरिरहेका थिए। त्यसै बेला देवलोकबाट सनक र सनन्दन ऋषि राजाको रमणीय सभामा आइपुगे।।१-२।। सूर्य र अग्निको झैं कान्तिले सुहाएका दुबै ऋषिको तेजबाट सभा शोभायमान भयो। सहसा ती दुबैलाई देखेर राजा आसनबाट उठे। तिनका पाउमा शिर राखेर साष्टाङ्गदण्डवत् प्रणाम गरे। त्यसपछि हात जोडेर काशिराजले भने – 'आज मेरो कुल धन्य भएको छ ।।३-४।। मेरा राज्य, ज्ञान, शरीर र पारिवारिक पत्नी पुत्र आदि सबै धन्य भएका छन् ।' यसरी बिन्ती गरी दुबैलाई हातले समातेर आसनमा लगी बसाए। षोडशोपचारले भक्तिपूर्वक पूजा गरे। त्यसपछि पाउ दबाउँदै तिनले दुबै ऋषिहरूलाई विश्राम गर्ने व्यवस्था मिलाए। विश्रान्तिपछि पटक-पटक प्रणाम गर्दै राजाले निवेदन गरे ।

**राजाले भने** – 'हातमा दण्ड धारण गर्ने र संसारका कुनै पदार्थहरूको चाहना नगर्ने तपाईंहरूजस्ता मुनिलाई संसारका कुनै पदार्थको इच्छा हुँदैन । मेरा तपस्या, राज्य, कुल र शील यी सबै सार्थक तुल्याउन म हजुरहरूको के सेवा गरूँ ? आज्ञा दिनुहोस् ।।५-८।।'

**राजाका कुरा सुनेर दुबै ऋषिले भने** – 'हे राजन् ! सम्पूर्ण कामनाहरूका फल प्राप्त गरी कामनाभन्दा माथि उठेका परब्रह्मस्वरूप, लीलाविहारी कश्यप ऋषिका छोरा तपाईंको घरमा आफ्नो अद्भुत पुरुषार्थ देखाएर अनेक थरि आश्चर्यजनक कार्य गर्दै हुनुहुन्छ भन्ने कुरा सुनेर वहाँको दर्शन गर्न हामी आएका छौं ।।९-१०।। अन्यथा इन्द्र महाराजको स्वर्ग त्यागेर हाम्रो यहाँ आउने कुनै प्रयोजन थिएन। जसको घरमा कल्पवृक्ष छ त्यसले अरू के कुरा याचना गर्दछ ? हामी श्रीगणेशको चरणकमलमा नमस्कार गरेर स्वर्ग जानेछौं।' सनक र सनन्दन काशिराजको दरबारमा आएको कुरा सुनेर भगवान् श्रीगणेश पनि राजा र ऋषिहरूको संवाद भइरहेकै बेला क्रीडा गर्न छोडेर त्यहाँ आउनुभयो। श्रीगणेशको हातमा एउटा लड्डू थियो। पाँच प्रकारका उत्तम खाद्यपदार्थहरूले

तस्याङ्घ्रिकमलं नत्वा गच्छावः स्वस्थलं नृप !
एवं तयोरागतयोः श्रुत्वा वाक्यं विनायकः।।१२।।

वदतोरागतः क्रीडां त्यक्त्वा मोदकहस्तकः।
पञ्चखाद्यमयं भक्ष्यं मोदकं लीलया दधत्।।१३।।

तयोस्तं दर्शयामास नृपो हास्यपरो मृदु।
सोऽयं समागतो देवा यद्दर्शनसमुत्सुकौ।।१४।।

आगतो यच्च कर्तव्यं कुरुतं तद् यथेष्टतः।
तं निरीक्ष्य मुनी तौ तु परस्परमथोचतुः।।१५।।

अनेन दूषितो नूनं कश्यपो मुनिसत्तमः।
तत्पुत्रतां समासाद्य स्वाचारं त्यजता भृशम्।।१६।।

स्पृष्टास्पृष्टविचारोऽस्य भक्ष्याभक्ष्यविधिर्न च।
दर्शने स्पर्शने चास्य महान् दोषो भवेत् खलु।।१७।।

कथं स्वनियमाँस्त्यक्त्वा स्थितः क्षत्रियवेश्मनि।
स्वधर्मे नः स्थितानां तु दर्शनेनाऽस्य किं भवेत्।।१८।।

शुश्राव तां गिरं देवो नृपसन्निहितस्तदा।
उवाच वाक्यं वाक्यज्ञो वाचस्पतिरिवापरः।।१९।।

क्व गतं भवतोर्ज्ञानं वृथा श्रमवतोर्मुनी।
स्वर्गं त्यक्त्वा कथमिह सम्प्राप्तौ प्राकृताविव।।२०।।

श्रुत्वेत्थं वचनं तस्य नृपतिं तावथोचतुः।
मायामयस्य देवस्य मायया मोहितो भृशम्।।२१।।

देह्यनुज्ञां गमिष्यावो निजमाश्रममण्डलम्।
ततो नृपतिशार्दूलो दृढभक्तिप्रणोदितः।।२२।।

स्थीयतां श्रूयतां वाक्यं मदीयमित्युवाच तौ।
नत्वा च प्रार्थयामास स्नात्वा भुक्त्वाऽनुगम्यताम्।।२३।।

निशम्य प्रार्थनां तस्य प्रोचतुर्मुनिपुङ्गवौ।
न भुज्यते राजकीयमन्नं तस्माद् व्रजावहे।।२४।।

तदनुज्ञां समासाद्य मणिकर्णीं ततो गतौ।
विनायकः सर्वबालैरनुयातो मुदा रमन्।।२५।।

सम्पन्न त्यस लड्डूलाई लीलापूर्वक हातमा धारण गर्नुहुने श्रीगणेशले ती दुबै ऋषिहरूलाई आफ्नो सुन्दर स्वरूप र सुन्दर लीला देखाउनुभयो। राजा हाँसिरहेका थिए। राजाले ऋषिहरूलाई सम्बोधन गर्दै भने – 'हे ऋषिवर! जसको दर्शनका लागि तपाईँहरू आउनुभएको छ, ती श्रीगणेश देवता अहिले तपाईँहरूका सामु हुनुहुन्छ।।११-१४।। तपाईँहरूले जे गर्नुपर्ने कर्तव्य हो त्यो यथेष्ट गर्नुहोस्।' ती दुबै मुनिले गणेशलाई देखेर परस्परमा भने- 'यी बालकले आफ्नो क्रियाकलापबाट मुनिराज कश्यपलाई कलङ्कित तुल्याएका छन्। ऋषिकुलमा जन्मेर आफ्नो आचार त्याग गरी के खानुपर्छ ? के खानुहुँदैन? के छुनुपर्छ ? के छुनुहुँदैन ? केही पनि विचार नगरीकन यहाँ आई बसेका रहेछन्। यिनको दर्शन र स्पर्शन गर्दा निश्चय नै हामी ऋषिहरूलाई ठूलो दोष लाग्नेछ।।१५-१७।। ऋषिको छोरा भएर ऋषिले गर्नुपर्ने नियमको परित्याग गरी क्षत्रियको घरमा बस्ने यस्ता मानिसको दर्शनबाट हामीलाई के फाइदा हुन्छ र ? ।।१८।।' काशिराजको समीपमा बस्नुभएका भगवान् श्रीगणेशले ती ऋषिका कुरा सुन्नुभयो। वाक्यको रहस्य बुझ्ने दोस्रा बृहस्पतिसमान बालक श्रीगणेशले भन्नुभयो - 'हे मुनि हो ! तपाईँहरूको ज्ञान कता गयो ? स्वर्ग छाडी व्यर्थमा परिश्रम गरेर किन तपाईँहरू यहाँ आउनुभयो ? तपाईँहरूजस्ता ज्ञानी पुरुषहरू पनि सामान्य मानिसको व्यवहार गर्दै हुनुहुन्छ?' श्रीगणेशका यस्ता कुरा सुनेर ती दुबै ऋषिले राजालाई भने- 'हे काशिराज ! मायामय देवताको मायाबाट मोहित भएको बालक रहेछ । हाम्रो यहाँ बस्नुको कुनै औचित्य छैन। हे राजा! तपाईँले आज्ञा दिनुहोस्- हामी आफ्नै आश्रमतर्फ जान्छौँ। ऋषि-मुनिमा ठूलो आस्था राख्ने काशिराजले भक्तिपूर्वक भने- 'हे मुनिवर! मेरा कुरा सुन्नुहोस्, केही बेर बस्नुहोस् र नुहाएपछि भोजन गरेर मात्र यहाँबाट जानुहोस्।' काशिराजको प्रार्थना सुनेर दुबै ऋषिले भने- 'हामी राजाको अन्न खाँदैनौँ, त्यस कारण जान्छौँ ।।१९-२४।।' यसरी राजासँग जाने अनुमति लिएर ती ऋषिहरू काशीको मणिकर्णिका घाटमा गए। भगवान् गणेश पनि सबै बालकहरूका साथ घुम्दै नुहाउन त्यहीँ जानुभयो।।२५।। नुहाएपछि काशीको

स्नात्वा गतः शुक्लगृहं ज्ञात्वा तद्भक्तिमादृतः।
यथा धावति गौर्वत्सं यथा माता रूदच्छिशुम्।।२६।।

यथा कृष्णःसभानीतां द्रौपदीं शरणागताम्।
दृष्ट्वा तौ दम्पती देवं पादयोर्विनिपेततुः।।२७।।

आनन्दाश्रूणि मुञ्चन्तौ वाचा गद्गदया गिरा।
लिलिङ्गतुर्मुदा देवं ननृतुर्हर्षनिर्भरौ।।२८।।

न बिन्दतुः प्रकर्तव्यं देहातीताविवासतुः।
रोमाञ्चाञ्चितगात्रौ तौ बाष्पधाराममुञ्चताम्।।२९।।

मुहूर्ताल्लब्धसंज्ञौ तौ नेमतुर्जगदीश्वरम्।
तत ऊचे मुनिर्देवं दीननाथेति यत् तव।।३०।।

विख्यातं त्रिषु लोकेषु नाम पापहरं शुभम्।
सार्थकं कृतमद्यैव जन्म नः पाददर्शनात्।।३१।।

प्रासादनिचयाँस्त्यक्त्वाऽऽगतः पर्णकुटीमिमाम्।
धन्यो वंशो मदीयोऽद्य जन्म ज्ञानं तपो वयः।।३२।।

अपूजयत् ततस्तं स कुशासनगतं मुनिः।
प्रक्षाल्य चरणद्वन्द्वं जलं तच्छिरसा दधत्।।३३।।

गन्धाक्षतं पुष्पमालां धूपं दीपं ददावथ।
दूर्वाङ्कुरान् शमीपत्रं सुतैलं केतकं शुभम्।।३४।।

खाद्यं स्वल्पं पुरः स्थाप्य फलमारण्यकं तथा।।
पुष्पाञ्जलिं मन्त्रपूतां दत्त्वा नत्वा स लज्जितः।।३५।।

कदन्नं कथमस्मै तद् देयमित्येव चिन्तयन्।
अभिप्रायं विदित्वा तं देवदेवो विनायकः।।३६।।

सीमाप्रान्तमा बसेका गरिब ब्राह्मण शुक्लको भावभक्ति थाहा पाएर जसरी गाई बाच्छालाई भेट्न दौडेर जान्छे अथवा कुनै आमा आफ्नो बालक रुँदा त्यसलाई समात्न जान्छे अथवा भगवान् कृष्ण सभामा पुऱ्याइएकी शरणागत द्रौपदीको नजिकमा जसरी जानुभएको थियो त्यसरी भगवान् गणेश पनि शुक्ल ब्राह्मणका घरमा जानुभयो। दुबै दम्पतीले भगवान्लाई आफ्नो घरमा आउनु भएको देखेर पाउमा झुकेर प्रणाम गरे।।२५-२७।। ती दुबै दम्पतीले हर्षका आँसु बगाउँदै र गद्गद वाणी उच्चारण गर्दै भगवान् गणेशलाई आलिङ्गन गरे । दुबै अत्यन्त हर्षित भएर नाचे । ती दुबैले भगवान् आउनु भएको बेला के गर्नुपर्छ भन्ने कुरा भावावेशका कारण एकछिन बिर्से । तिनीहरूको स्थिति देहातीत योगीहरूको जस्तो भयो । रोमाञ्चित भएका ती दुबैले हर्षका आँसु लगातार बगाइराखे ।।२८-२९।। एक मुहूर्तपछि राम्ररी होशमा आएका ती दुबै दम्पतीले जगत्का स्वामी श्रीगणेशलाई नमस्कार गरे। त्यसपछि प्रार्थनाको स्वरमा शुक्ल ब्राह्मणले भने - 'हे भगवन् ! हजुरको नाम संसारमा दीननाथ भनेर प्रसिद्ध छ। त्यस नामले सबै पापहरूको नाश गर्दछ। आज मेरो घरमा पाउले टेकेर हजुरले आफ्नो नाम र हाम्रो जन्म सार्थक बनाइदिनु भएको छ ।।३०-३१।। ममाथि कृपा गरी हजुर काशीका ठूला-ठूला महलहरू छाडेर एउटा खरले छाएको झुपडीमा पाल्नुभएको छ। मेरो वंश धन्य भयो, मेरो जन्म धन्य भयो, मेरो ज्ञान धन्य भयो र मेरो उमेर धन्य भयो ।' यसरी बिन्ती गरेपछि शुक्ल ब्राह्मणले कुशको आसनमा विराजमान हुनुभएका भगवान् श्रीगणेशको पूजा गरे। तिनले पहिले भगवान् श्रीगणेशका दुबै चरण पखालेको जल शिरमा धारण गरे ।।३२-३३।। त्यसपछि शुक्ल ब्राह्मणले चन्दन, अक्षता, फूल, माला, धूप, दीप, दूर्वाङ्कुर, शमीको पात र केतकीको फूलबाट बनाइएको मीठो सुगन्ध आउने तेल भगवान्लाई अर्पण गरे । भगवान्का अगाडि थोरै खानेकुरा राखेर पछिबाट आफूले वनमा गई सङ्ग्रह गरेर ल्याएका फलहरू टक्र्याए। मन्त्र पढेर पुष्पाञ्जलि दिँदै नमस्कार गरे। त्यसपछि लाज मान्दै मनमन भने - 'मैले भगवान् गणेशलाई नराम्रो अन्न कसरी दिऊँ ।' यसरी सङ्कोच मानिरहेको अवस्थामा रहेका

याचे मातः किमन्नं ते गृहे तद् दीयतां मम।
भक्त्या दत्तं कदन्नं मेऽधिकं स्यादमृतादपि।।३७।।

विषं भवति यद्दत्तं दम्भेनाऽश्रद्धयान्वितम्।
विस्तीर्णमोदनं शुष्कं भास्करीं बहुधान्यजाम्।।३८।।

आस्थापयत् पुरस्तस्य मुनिपत्नी ह्रियान्विता।
तैलञ्च सकलं दृष्ट्वा प्राहसँस्तञ्च बालकाः।।३९।।

अभक्षयत् स पक्वान्नसदृशं परमादरात्।
प्रतिग्रासं जलं पीत्वा जघास बलवत्तरम्।।४०।।

ततस्तेनोदनः पात्रे निक्षिप्तो मुनिनाऽखिलः।
तज्जलं चलितं दिक्षु बालो रोद्धुं न चाशकत्।।४१।।

ततोऽभवद् दशभुजो बुभुजे चौदनं च तैः।
आश्चर्यं ददृशुर्लोका हसन्तो हस्ततालतः।।४२।।

अपूर्वः पाचितोऽयं नु जानुदघ्नजलेन यः।
इत्यूचुर्बुभुजुर्बाला रुच्या पायसकल्पया।।४३।।

साकं तेन च यैर्भुक्तं गतास्ते देवतुल्यताम्।
अशोचन्नितरे पश्चाद् येऽहसन् विवृतै रदैः।।४४।।

कोलाहलो महानासीन्नगरे क्व विनायकः।
केचिदूचुः शुक्लगृहे भुनक्ति शीर्णमोदनम्।।४५।।

रोद्धुं कृता दश भुजा ओदनञ्च भुनक्ति तैः।
भुक्ते तस्मिन् विशुद्ध्यै स शुष्कमामलकं ददौ।।४६।।

मुखशुद्धिं तेन चक्रे जगदात्मा विनायकः।
प्रसन्नः शुक्लमवदत् प्रीतो भावेन तेऽनघ! ।।४७।।

शुक्ल ब्राह्मणको अभिप्राय भगवान्ले आफै बुझ्नुभयो। त्यसपछि उहाँले ब्राह्मणीसँग भन्नुभयो - 'हे आमा! हजुरको घरमा जस्तो अन्न छ त्यो मलाई दिनुहोस्। भक्तिपूर्वक अर्पण गरिएको नमीठो अन्न पनि मलाई अमृतभन्दा मीठो लाग्छ।।३४-३७।। दम्भपूर्वक अश्रद्धाले जे कुरा दिइन्छ त्यो राम्रो भए तापनि विषसमान हुन्छ।' भगवान्का यी कुरा सुनेर ब्राह्मणीले ठूला-ठूला पातमा चिल्लो नराखेको भात, अनेक थरि अन्नहरू पिसेर बनाएको पीठो भगवान्का अगाडि राखिन् तर मनमनै लाज मानिन्। पीठो सामु भाँडोमा तेल राखेकी थिइन्। त्यो देखेर भगवान्का साथमा आएका बालकहरू हाँसे। तर भगवान्ले भने जे टक्र्याएकी थिइन् त्यसलाई मीठो पकवानसमान मानेर खानुभयो। प्रत्येक गाससँगै पानी पिएर भए पनि बलपूर्वक दिएको अन्न निल्नुभयो। त्यसपछि ऋषिले भोजन पात्रमा पकाए जति भात पस्किदिए । पानी धेरै राखेर पकाएको हुँदा माडैमाडले भरिएको त्यो गिलो भात चारैतिर बग्न र पोखिन थाल्यो । भगवान्ले दुई हातले थाम्न सक्नुभएन। त्यसपछि उहाँ दश भुजा धारण गर्ने गणेशका रूपमा देखिनुभयो र ती हातद्वारा उहाँले सम्पूर्ण भोजन गर्नुभयो । मानिसहरू आश्चर्यपूर्वक भगवान्को त्यो रूप देखेर हातले ताली बजाएर हाँस्न थाले। तिनले ब्राह्मणीलाई भने - 'तपाईंले घुँडाघुँडासम्म आउने गरी पानी राखेर अपूर्व भोजन पकाउनु भएको रहेछ।' यसो भन्दै बालकहरूले पनि रुचिपूर्वक खीर खाएझैं मुख मीठो गराएर बाँकी भोजन खाए। त्यस बेला जसले भगवान्का साथमा भोजन गरे ती त देवतासमान नै भए। जुन मानिस भगवान्ले खान लाग्दा दाँत देखाएर हाँसिरहेका थिए, तिनलाई चिन्ता पर्‍यो।।३८-४४।। उता काशीनगरमा भगवान् श्रीगणेश कहाँ जानुभयो भनेर ठूलो कोलाहल भयो। केही मानिस भनिरहेका थिए - 'श्रीगणेश त शुक्ल ब्राह्मणको घर गएर माडैमाडले भरिएको भात खाइरहेका छन्। तिनले एउटा मुखले खान सकिन्न भनेर दशहाते बनी सारा भात तुर्ने आँट गरेर बसेका छन्।' यता भगवान्ले भोजन गर्नुभएपछि शुक्ल ब्राह्मणले मुखशुद्धि भनेर सुकेको अमला दिए। भगवान् जगदीश्वर श्रीगणेशले अमलाको दाना खाएर मुखशुद्धि गर्नुभयो। मुखशुद्धिपछि प्रसन्न हुनुभएका भगवान्ले शुक्ल ब्राह्मणलाई भन्नुभयो - 'हे निष्पाप ब्राह्मण! तपाईंको भक्तिभावले म अत्यन्त प्रसन्न छु।।४५-४७।।

वरान् वृणु महाभाग! मत्तो यानभिकाङ्क्षसे।

हे भाग्यशाली ब्राह्मण ! तपाईं मसँग के माग्न चाहनुहुन्छ, त्यो कुरा माग्नुहोस्।

शुक्ल उवाच

सर्वान् नागरिकाँस्त्यक्त्वा भोक्तुं रुक्षान्नमागतः।।४८।।

अयमेव वरो मह्यं यज्जातं तव दर्शनम्।

प्रभुवाक्यानुरोधेन याचे भक्तिं त्वयि स्थिराम्।।४९।।

अन्ते मोक्षञ्च मे देहि येन नावर्तते पुनः।

न संसारसुखे चित्तं रमते मे विनायक।।५०।।

**शुक्लले भने** - काशीका नगरवासीहरूले हजुरलाई लगेर भोजन गराउन बन्दोवस्त गरेका थिए। तिनको प्रार्थनालाई बेवास्ता गरी हजुर सर्वप्रथम मेरो घरमा रुखो अन्न ग्रहण गरिदिन आउनुभयो। हजुरको यो दर्शन नै मेरा लागि वरदान भइसकेको छ। तर हजुरले माग भनेर आज्ञा गर्नुभएपछि मैले माग्नै पर्छ। हे भगवन् ! हजुरमा मेरो स्थिर, अचल भक्ति रहोस्, अन्तमा मोक्ष प्राप्त गर्न सकूँ। जुन मोक्ष पाएपछि मैले फेरि जन्मनु पर्नेछैन। हे श्रीगणेश ! मेरो मन संसारको सुखमा रमाउँदैन।।४८-५०।।

क उवाच

एवमस्त्विति तं प्रोच्य पूर्ववद् द्विभुजः शिशुः।

गृहं तस्मै शक्रगृहाद् वरं सद्रत्नकाञ्चनम्।।५१।।

अत्युत्तमं स्वरूपञ्च ज्ञानं सम्पदमर्पयत्।

अनुज्ञातो ययौ ताभ्यामन्यत्र बालकैर्वृतः।।५२।।

**ब्रह्माजीले भन्नुभयो** - ब्राह्मणलाई तथास्तु भनेर भगवान् श्रीगणेश पहिलेजस्तै दुईहाते बन्नुभयो। शुक्ल ब्राह्मणलाई उहाँले इन्द्रभवनभन्दा पनि राम्रो रत्न र सुवर्ण आदि धातुले शोभायमान आवास दिनुभयो। उहाँले तिनलाई अत्यन्त राम्रो रूप दिनुभयो र ज्ञान एवं सम्पत्ति पनि दिनुभयो। यसरी बालकहरूद्वारा घेरिएका भगवान् श्रीगणेश दुवै दम्पतीलाई वरदान दिएर ब्राह्मण दम्पतीसँग अनुमति प्राप्त गरी आफ्ना बाल मित्रहरूका साथ अन्यत्र जानुभयो।।५१-५२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते शुक्लवरप्रदानं नाम त्रयोविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शुक्ललाई श्रीगणेशद्वारा वरप्रदान' शीर्षकान्वित तेइसौं अध्याय पूर्ण भयो।।२३।।

ॐ

## चतुर्विंशोऽध्यायः { २४ अध्याय }

क उवाच

व्यलोकयँस्तं नगरे तस्मिन् सर्वे महाजनाः।
विधाय पूजासामग्रीं भोजनस्याप्यनेकधा।।१।।

गृहे गृहे राजगृहे सर्वाऽमात्यगृहेऽपि च।
गवेषयन्ति स्म जनास्तदा कश्यपनन्दनम्।।२।।

अपृच्छन्त जनाःसर्वे कच्चिद् दृष्टो विनायकः।
नेति नेति श्रुतिर्वक्ति यं स कस्याक्षिगोचरः।।३।।

भवेन्नालोकितोऽस्माभिरिति तत्रावदन् जनाः।
पुरप्रान्ते तु ये तत्र तेऽश्रृणवन् जनवाक्यतः।।४।।

स चागतः शुक्लगृहं ततस्ते तद्गृहं ययुः।
नापश्यँस्तमथापृच्छँस्तेनोक्तं स इतो गतः।।५।।

स तु मायामयो बालो जनान् वञ्चितुमुत्सुकः।
विसृज्य बालकान् पश्चाद्द्वारेणाऽऽगत्य सुप्तवान्।।६।।

केचित् तं ददृशुः सुप्तं हर्यक्षमिव गह्वरे।
केचित् तं क्रोधवशगा निनिन्दुर्बालको लघुः।।७।।

पिशाच इव किं यातो दरिद्रस्य गृहं प्रति।
ईशश्चेत् सर्वभावज्ञः सर्वेषां प्रियमाचरेत्।।८।।

उत्थाप्य तं करे धृत्वा याहीति शरणं शुभम्।
सफलं कुरु नः सर्वं त्वदर्थमुपकल्पितम्।।९।।

गतः खेदो भ्रमणजो दृष्ट्वा त्वच्चरणाम्बुजम्।
याहि याहि गृहान् नस्त्वं भोक्तुं बालगणैः सह।।१०।।

**ब्रह्माजीले भन्नुभयो -** काशीका नागरिकहरूले श्रीगणेशलाई आफ्नो नगरमा खोजिरहेका थिए। पूजाका सामग्री र भोजन तयार गरेपछि घर-घरमा, राजभवनमा, सरकारी कर्मचारी एवं मन्त्रीहरूका घरमा पनि कश्यपका पुत्र भगवान् श्रीगणेश कतिबेला आउनुहुन्छ भनेर खोजी भइरहेको थियो। मानिसहरू अरूलाई सोध्दै थिए- के तपाईंले श्रीगणेशलाई देख्नुभएको छ ? उत्तर दिनेले भन्दथे- जसलाई श्रुतिले पनि जान्न नसकी नेति नेति भनेर बताउँछन् ती परमात्मा गणेश कसका आँखासामु आउन सक्छन् ? त्यस कारण हामीले उहाँलाई देखेनौं । हामी आफै खोजी गरिरहेका छौं। श्रीगणेशको खोजी गर्ने मानिसहरूमध्ये केही मानिसहरू श्रीगणेश शुक्लको घरमा जानुभएको छ भन्ने थाहा पाएर शुक्ल ब्राह्मणको घरमा पुगे तर गणेशलाई देख्न पाएनन्। तिनले शुक्ललाई सोधे- 'श्रीगणेश कहाँ जानुभयो ?' उनले भने - 'उहाँ त यहाँबाट गइसक्नुभयो ।' मायामय भगवान् श्रीगणेश मानिसहरूलाई आफ्नो माया देखाएर वञ्चना गर्दै प्रतीक्षा गराइरहनु भएको थियो। उहाँ बालकहरूका साथमा काशिराजको दबारमा पुग्नुभयो र आफ्ना साथ आएका बालकहरूलाई बिदाई गरी आफू पछाडिपट्टिको ढोकाबाट आफ्नो कक्षमा प्रवेश गर्नुभयो। त्यसपछि उहाँले आरामसँग शयन गर्नुभयो ।।१-६।। श्रीगणेशलाई खोज्दै-खोज्दै मानिसहरू त्यहाँ पनि पुगे। गुफाभित्र सुतेको सिंहझैं मस्त निदाइरहनु भएका श्रीगणेशलाई देखे। केही मानिसले रिसाएर गणेशको निन्दा गर्दै भने- 'कति हलुका स्वभावका मानिस हुन्। यी पिशाचझैं किन दरिद्रको घरमा जान्छन्। यदि सबैका भावना बुझ्ने गणेश ईश्वरै हुन् भने तिनले सबैको कल्याण गर्नुपर्दछ।' त्यसपछि 'कसैले उहाँलाई उठाएर हातले समातेर हाम्रो घरमा जाऔं भनी अनुरोध गरे। 'कसैले हाम्रो घरमा तपाईंका निमित्त पूजाका सामग्री तयार छन्, भोजन तयार छ, हामीले सबै कुरा श्रद्धापूर्वक तयार गरेका छौं, हाम्रो आयोजना सफल बनाइदिनुहोस्' भनिरहेका थिए ।।७-९।। 'हजुरका चरणकमलको दर्शन पाएपछि हिंडाइबाट भएको थकान मेटिएको छ । बालकहरूका साथमा

स ऊचे साम्प्रतं भुक्तं पुनरूचुर्जनास्तु तम्।
दरिद्रस्य गृहे किं ते भुक्तं स्याद् भैक्ष्यवर्तिनः।।११।।

नापोऽपि पिबते क्वान्नं कथं भुक्तं त्वया विभो।

गणेश उवाच

उदरं परिपूर्णं मे यातुं शक्तिश्च नास्ति मे।।१२।।

क उवाच

ततः सर्वे विदित्वा तं भुक्तं शुक्लगृहे जनाः।
निराशाभग्नसङ्कल्पा रुष्टा दीना विचेतसः।।१३।।

सम्भारा व्यर्थतां याता नानाक्लेशार्थसञ्चिताः।
बुभुजुस्तान् स्वयं दुष्टा दाम्भिका भक्तिवर्जिताः।।१४।।

ये भक्तास्ते निराहारास्तस्थुर्ध्यानपरायणाः।
एवं सर्वेषु लोकेषु ज्ञात्वा ध्यानस्थितेषु सः।।१५।।

एको नानास्वरूपोऽभूद् घटाकाश इव स्फुटम्।
जलपूर्णेषु कुम्भेषु रविर्नाना यथेक्ष्यते।।१६।।

क्वचित् पर्यङ्कशयनः क्वचिज्जपपरायणः।
क्वचिद् दानरतः क्वापि भोजनाय समुत्सुकः।।१७।।

क्वचित् पाठयते शिष्यान् साङ्गं वेदं सहार्थकम्।
क्वचिद् व्याकुरुते शास्त्रं क्वचिच्च पठति स्वयम्।।१८।।

एवं नानास्वरूपैः स नानागृहगतो बभौ।
अयमस्मद्गृहं यातः पूर्वमित्यभिमेनिरे।।१९।।

तैलमुद्वर्तनं स्नानं पूजनं भोजनं ददुः।
एवं सर्वे जहृषिरे काशिराजसमन्वितम्।।२०।।

भोजन गर्न हाम्रो घर हिंड्नुहोस्।' यसरी मानिसहरूले अनुरोध गर्दा श्रीगणेशले भन्नुभयो - 'मैले भर्खरै शुक्ल ब्राह्मणको घरमा पेटभरि खाएर आएको छु।' मानिसहरूले भने - 'भिक्षा मागेर जनतेन पेट पाल्ने दरिद्रको घरमा तपाईँले के खानुभयो होला ? त्यहाँ पानी त पेटभरि खान पाइँदैन। त्यो नमीठो अन्न कति खानुभयो होला र कसरी खानुभयो होला?'

**श्रीगणेशले भन्नुभयो** - जसरी खाए पनि जति खाए पनि मेरो पेट भरिएको छ, मेरो हिंड्ने ताकत छैन।।१०-१२।।
**ब्रह्माजीले भन्नुभयो** - गणेशलाई शुक्ल ब्राह्मणको घरमा भोजन गर्नु भएको जानेर निराशाका कारण सङ्कल्प छिन्नभिन्न भएका, रिसिएका र विक्षिप्त भएका केही दुष्ट, दम्भी र भक्तिहीन मानिसहरू हाम्रो तयारी व्यर्थ भयो, धेरै सामग्री जुटाउन अनेक कष्ट गर्‍यौं, त्यसको केही फल भएन, उनी आएर खाँदैनन् भने हामी आफैं खाऔं भनी आफैं खान थाले।।१३-१४।। केही भक्त मानिसहरू भने श्रीगणेशलाई पर्खेर भोकै बसेका थिए। श्रीगणेशका मूर्तिको ध्यान गरिरहेका थिए। ती ध्यानमा लागिरहेका मानिसहरूलाई देखेर भगवान् गणेश एकरूप हुनु भए तापनि अनेक रूपमा परिणत हुनुभयो। जसरी गाग्राभित्र आकाश रहन्छ, हजारौं गाग्राहरूमा हजारौं आकाश रहन्छन् र ती गाग्राहरू फुटेको बेला त्यहाँभित्रका आकाश महाकाशमा मिल्दछन् । जसरी पानीले भरिएका भाँडाहरूमा सूर्यको प्रतिबिम्ब पर्छ, एउटै सूर्य पनि अनेक देखिन्छन् त्यस्तै भगवान्ले पनि त्यतिबेला आफूलाई अनेक रूपमा परिणत गराउने इच्छा गर्नुभयो ।।१५-१६।। आफ्नो इच्छाअनुसार भगवान् कुनै घरमा गई पलङ्गमा बस्नुभयो। कुनै घरमा जप गर्दै बस्नुभएको देखिनुभयो। कुनै घरमा उहाँ दान गर्दै हुनुहुन्थ्यो। कुनै घरमा भोजनका लागि हतार गर्दै हुनुहुन्थ्यो। कुनै घरमा वेद-वेदाङ्गजस्ता विषयहरू शिष्यहरूलाई अर्थसहित पढाइरहनु भएको थियो। कुनै घरमा उहाँ शास्त्रको व्याख्यान गर्दै हुनुहुन्थ्यो। कहीं आफैं पुस्तक लिएर पढ्दै हुनुहुन्थ्यो।।१७-१८।। यसरी अनेक स्वरूप लिएर अनेक घरमा विराजमान हुनुभएका भगवान् गणेश शोभायमान हुनुभयो। सबै मानिसले भने - 'भगवान् गणेश हाम्रो घरमा सबभन्दा पहिले आएर हामीलाई स्नेह

दृष्ट्वा देवं परमया मुदा साधु विनायकम्।
पुपूजुर्भोजयामासुर्द्विजान् सुहृद्गणानपि।।२१।।

पञ्चामृतञ्च पक्वान्नं व्यञ्जनं पायसौदनौ।
अन्यद् रुचिकरं सर्वं बुभुजुस्ते यथारुचि।।२२।।

एवं द्विजेषु देवेषु काशिराजे सुहृत्स्वपि।
आशीर्वत्सु सभाविष्टः काशिराजोऽन्वपृच्छत।।२३।।

मायया मुनिपुत्रस्य मोहितोऽनेकधाऽऽकृतेः।

राजोवाच

विनायको गतो भोक्तुं नानागृह इति स्फुटम्।।२४।।

अयं मे निकटेऽप्यस्ति को नु भुङ्क्ते गृहे गृहे।
क्वचिच्च शिविकारूढो याति भोक्तुं विनायकः।।२५।।

गजारूढः क्वचिद् याति हयारूढश्च कुत्रचित्।
एवं सर्वेषु लोकेषु पूजाव्यग्रेषु बालके।।२६।।

ततस्तौ नगरीं यातौ तत्र तत्र विनायकम्।
अपश्यतां भुक्तवन्तं परावृत्य समीयतुः।।२७।।

यत्र यत्र गृहे यातौ तत्र तत्र विनायकम्।।
निर्वृत्य सकलं नित्यं भिक्षार्थं पर्यगच्छताम्।।२८।।

शयानं शयने दिव्ये भक्षयन्तं फलानि च।
चर्वयन्तञ्च ताम्बूलं क्वचिद् गन्धादिचर्चितम्।।२९।।

क्वचिन्नृत्यं प्रपश्यन्तं गणिकानां गणान्वितम्।
क्रीडन्तमक्षैः कुत्रापि क्वचिद् वुद्धिबलेन च।।३०।।

नानालङ्कारसंयुक्तं दिव्यवस्त्रान्वितं क्वचित्।।
पठन्तञ्च जपन्तञ्च ध्यानेन तमपश्यताम्।।३१।।

गर्नुभयो।' यस्तो भावनाले भरिएका प्रत्येक भक्तले भगवान्लाई सुगन्धित तेल र उबटनको धूलो चढाए, स्नान गराए र आफ्नो शक्तिअनुसार मीठा-मीठा भोजन टक्र्याए। यसरी काशिराजलगायतका भगवान्का सम्पूर्ण भक्तहरू भगवान् श्रीगणेशको दर्शन पाएर हर्षित भए। ती सबै भक्तले भगवान्को पूजा गरे । उहाँलाई भोजनद्वारा तृप्त गराए । त्यसैगरी ब्राह्मणहरू र मित्रवर्गलाई पनि भोजन गराए । पञ्चामृत, अनेक थरि पक्वान, विभिन्न किसिमका तरकारीहरू, खीर, भात र रुचिकर वस्तुहरूको सबैले प्रेमपूर्वक भोजन गरे ।।१९-२२।। यसरी ब्राह्मण, देवता, काशिराज र मित्रहरू सबैका घरमा भगवान्ले भोजन गर्नुभयो र ती भक्तहरूले आशीर्वाद प्राप्त गरे । त्यसपछि कश्यपका पुत्र अनेक रूपमा देखिनुहुने भगवान् श्रीगणेशको मायाबाट मोहित भएका सभामा विराजमान काशिराजले भगवान् श्रीगणेशलाई सोधे।

**काशिराजले भने** - हे श्रीगणेश ! सबै मानिसहरू हाम्रा घरमा भगवान् गणेश भोजन गर्न आउनुभएको छ भनिरहेका छन् । तपाईं यहीं मेरो समीपमा हुनुहुन्छ । घर-घरमा कसरी तपाईं भोजन गर्दै हुनुहुन्छ ? कहीं पालकीमा चढेर भक्तका घरमा जानुहुने तपाईंलाई कसैले देखे। कहीं घोडामा सवार भएर जानुभएको पनि देखे। के हो यसको रहस्य मैले बुझ्न सकेको छैन ?।।२३-२५।। यसरी मानिसहरू आ-आफ्नो घरमा आउनुभएका गणेशको पूजामा व्यस्त भएको बेला सनक र सनन्दन काशी नगरी घुम्न भनेर प्रस्थान गरे। त्यहाँ सबै मानिस भगवान् गणेशको पूजा गरिरहेका थिए। जहाँ-जहाँ ती दुबै ऋषि गए त्यहाँ-त्यहाँ तिनले श्रीगणेशको पूजा र श्रीगणेशले भोजन गर्नुभएको दृश्य देखे। जुन-जुन घरमा गएका थिए त्यहाँ-त्यहाँ भगवान् श्रीगणेश भोजन गरेर प्रसन्न मुद्रामा हुनुहुन्थ्यो। ती दुबै भिक्षा माग्ने निहुँले ती ती घरमा गए। कुनै घरमा भगवान् दिव्य शय्यामा आराम गरी फल खाँदै हुनुहुन्थ्यो। कहीं भगवान् सुगन्धित पान चपाइरहेका हुनुहुन्थ्यो। कहीं वेश्याहरूको नृत्य हेरिरहेका हुनुहुन्थ्यो। कहीं द्यूतक्रीडामा मस्त हुनुहुन्थ्यो । कहीं अनेक प्रकारका अलङ्कार र दिव्य वस्त्रले सिंगारिएर बस्नुभएको थियो । कहीं अध्ययन गरिरहनु भएको थियो र कहीं जप गरिरहनु भएका श्रीगणेशलाई ऋषिहरूले ध्यानदृष्टिले हेरिरहेका थिए।।२६-३१।। कहीं

स्तूयमानं क्वचिद् भक्तैस्तुवन्तं जगदीश्वरम्।
दर्शयन्तं विभूतिं स्वां भक्तायाऽनेकशः क्वचित्।।३२।।

युवानं रमयन्तं स्वाः स्त्रियोऽत्यन्तमनोरमाः।
चिकित्सयन्तं वृद्धञ्च सेवन्तं रसमुत्तमम्।।३३।।

रिङ्गन्तं भक्षयन्तञ्च मृदं कुत्रचिदङ्गणे।
परिश्रान्तं पिबन्तं तं क्रीडाभिः कन्दुकादिभिः।।३४।।

एवं तौ क्षुधितौ श्रान्तौ पर्यटन्तौ गृहे गृहे।
सर्वत्र दृष्ट्वा तं देवं परस्परमथोचतुः।।३५।।

अत्रास्ति निर्मलः शुक्लो ब्राह्मणो नगरे शुचिः।
यावो भोक्तुं तस्य गृहे इत्युक्त्वा तत्र जग्मतुः।।३६।।

तत्रापि सोऽङ्गणगतो दृष्टस्ताभ्यां विनायकः।
नगरे नात्र भोक्तव्यं न तु शेषं विनायकात्।।३७।।

इत्युक्त्वा बहिरायातौ पुरो दृष्ट्वा विनायकम्।
तिर्यग्गतिधरौ भूत्वा ततोऽपि समपश्यताम्।।३८।।

प्राच्यां प्रतीच्याञ्च दिशि तमेवैतौ समन्ततः।
अधश्चोर्ध्वं सर्वगतं विनायकमपश्यताम्।।३९।।

विनायकस्वरूपञ्च तौ पुनर्विश्वरूपिणम्।
सर्वं विनायकमयं वस्तुमात्रमपश्यताम्।।४०।।

अथाभावयतां शम्भुं विष्णुं तौ भृशविस्मितौ।
अपश्यतां हृदि तदा तञ्च तञ्च विनायकम्।।४१।।

निमील्य नयने चान्तस्तमेव मुनिसत्तमौ।
उद्घाट्य नयने चापि स्वान्त एनमपश्यताम्।।४२।।

किरीटिनं कुण्डलिनं मुक्तामालाम्बराङ्गदम्।
कटिसूत्रेण हैमेन मुद्रिकाभिश्च भूषितम्।।४३।।

भक्तहरूले भगवान् गणेशको स्तुति गरिरहेका थिए । कहीं फेरि भगवान् गणेश आफ्ना भक्तलाई ऐश्वर्य देखाइरहनुभएको थियो। ती दुवै ती ती घरमा जाँदा भगवान् गणेशले अत्यन्त राम्रा सुन्दरीहरूलाई आफ्ना लीलाहरूद्वारा प्रसन्न तुल्याउँदै हुनुहुन्थ्यो। कहीं भगवान् वृद्धको सेवा गर्दै हुनुहुन्थ्यो । कहीं रोगीको चिकित्सा गर्दै हुनुहुन्थ्यो। कुनै घरको आँगनको धूलोमा खेल्दै बालक बनेर भोजन गर्दै हुनुहुन्थ्यो। कहीं भने उहाँ भकुण्डो खेलेर थाकी गालाबाट पसिना चुहाउँदै घर फर्केका बालकका रूपमा देखिनुभएको थियो । यसरी ती दुवै ऋषि घर-घरमा घुम्दाघुम्दा थाके र भोकाए। त्यसपछि ती दुवैले भगवान् गणेशको लीलाका विषयमा आपसमा कुरा गरे ।।३२-३५।। काशी नगरीमा पवित्र आचार-विचारका शुक्लनामक ब्राह्मण छन्। तिनका घरमा भोजन गर्न जाऔँ भनी ती दुवै त्यहाँ गए। त्यहाँ जाँदा पनि दुवैले आँगनमा खेलिरहेका गणेशलाई देखेर भने- 'यस नगरीमा हामीले कहाँ गएर भोजन गर्ने ? जहाँसुकै श्रीगणेशको भोजन चलिरहेको छ। यसरी कुरा गरेर दुवै बाहिर आए । बाहिर आउँदा पनि तिनीहरूका सामु गणेश उभिनुभएको थियो । ती दुवै लुकी-लुकी आफूलाई जोगाउने प्रयास गरिरहेका थिए तर श्रीगणेशबाट कुनै ठाउँमा पनि जोगिन सकेनन् ।।३६-३८।। पूर्वमा श्रीगणेश हुनुहुन्थ्यो, पश्चिम दिशा हेर्दा पनि श्रीगणेशकै अनुहार देखिन्थ्यो। तल हेर्दा श्रीगणेश देखिनुहुन्थ्यो र माथि हेर्दा पनि श्रीगणेश देखिनुहुन्थ्यो। दुवैले सर्वत्र विनायकरूप श्रीगणेशको दर्शन गरे । त्यसपछि तिनीहरूले विश्वरूपधारी भगवान्को रूपमा दर्शन गरे । तिनीहरूका सामु रूख, पात, चराचुरुङ्गी यावत् जुन वस्तु थिए, ती सबै गणेशका रूपमा देखिए ।।३९-४०।। अत्यन्त चकित भएका ती दुवैले फेरि विष्णु र शिवजीको स्मरण गरे। त्यसो गर्दा पनि आफ्नो हृदयमा विष्णु र शिवजीको सट्टा गणेशको नै दर्शन पाए । आँखा चिम्लेर मुटुमा हेर्ने कोशिश गर्दा पनि गणेश नै देखिनुभयो। आँखा खोलेर बाहिर हेर्दा मस्तकमा किरीट र कानमा कुण्डल धारण गर्नुहुने, कण्ठमा मोतीको मालाद्वारा सुहाउनु भएका, बाहुमा केयूर र कटिमा सुनको कन्धनी धारण गर्नुहुने, प्रत्येक औंलामा सुनको औंठी लगाउनु भएका,

सिंहारूढं दशभुजं सिद्धिबुद्धियुतं शुभम्।
भालचन्द्रं मृगमदतिलकं नागभूषणम्।।४४।।

सूर्यकोटिप्रभं सृष्टिस्थितिसंहारकारिणम्।
त्यक्त्वा भेदं तत्त्वविदौ नेमतुश्चरणाम्बुजम्।।४५।।

नुतः स्म परया भक्त्या देवदेवं विनायकम्।
तस्यैव करुणाप्राप्तबोधौ तौ तु मुनीश्वरौ।।४६।।

निधारमा कस्तूरीको तिलक धारण गर्नुहुने, सिंहमा सवार, दश भुजाद्वारा शोभायमान, वरिपरि सिद्धि र बुद्धिलाई लिएर माझमा प्रकाशमान हुनुभएका, निधारमा चन्द्रमा धारण गर्नुहुने, सर्पलाई गहना बनाएर धारण गर्नुहुने र करोडौं सूर्यको कान्तिले शोभायमान श्रीगणेशको दर्शन गरे । सृष्टि, पालन र संहार गर्ने भगवान्‌लाई देखेर ती दुबैले भेदभाव छाडी उहाँका चरणकमलको ध्यान गरे, परम भक्तिले स्तुति गरे र उहाँको करुणाबाट ज्ञान प्राप्त गरे ।।४१-४६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे विनायकभोजनकथनं नाम चतुर्विंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'एकै समयमा काशीका प्रत्येक घरमा गई भगवान् विनायकद्वारा भोजनग्रहण' शीर्षकान्वित चौबीसौं अध्याय पूर्ण भयो ।।२४।।

ॐ

## पञ्चविंशोऽध्यायः { २५ अध्याय }

तावूचतुः

सर्वेषां कारणानां त्वं कारणं कारणातिगः।
ब्रह्मस्वरूपो ब्रह्माण्डकारणं व्यापकः परः।।१।।

पासीदं सृजसे विश्वं त्वमेव हरसेऽनघ!।
नानारूपैररूपस्त्वं नानामायाबलान्वितः।।२।।

त्वमेव पञ्चभूतानि यक्षगन्धर्वराक्षसाः।
कस्त्वां स्तोतुं समर्थः स्याच्चराचरस्वरूपकम्।।३।।

नेति नेति ब्रवीति स्म त्वद्रूपाज्ञानतः श्रुतिः।
आवां विमोहितौ ज्ञातुं नेशाथे रूपमुत्तमम्।।४।।

महिमानं न जानीवोऽनेकरूपस्य ते विभो!।
कृतकृत्यौ भवत्पाददर्शनात् स्वः प्रभोऽधुना।।५।।

नानावतारैर्भूभारं हरसेऽनन्तशक्तितः।

क उवाच

एवं तयोः स्तुतिं श्रुत्वा प्रीत्या प्रोवाच तावुभौ।।६।।

विनायको बालरूपी कौतुकी मायिकोऽपि च।
तत्त्वज्ञौ मत्प्रसादाच्च सर्वज्ञौ च भविष्यथः।।७।।

एवं दत्त्वा वरं देवस्तत्रैवान्तरधीयत।
ततस्तौ मूर्त्तिमतुलां कृत्वा सम्यग्विनायकीम्।।८।।

कृत्वा प्रासादमतुलं रत्नकाञ्चनसंयुतम्।
स्थापयामासतुरुभौ सनकश्च सनन्दनः।।९।।

आख्याञ्च चक्रतुस्तस्या वरदोऽयं विनायकः।
गणेशकुण्डमिति च कृतं ताभ्यां सरोवरम्।।१०।।

अत्र स्नात्वा पूजयेद् यो वरदं तं विनायकम्।
स कामानखिलान् प्राप्य भुक्त्वा भोगाननेकशः।।११।।

**सनक र सनन्दनले भने** - हे भगवन् ! हजुर सबै कारणका पनि कारण हुनुहुन्छ र कारणभन्दा पनि पर हुनुहुन्छ। सर्वव्यापक हुनुहुन्छ, सर्वोत्तम हुनुहुन्छ र यस ब्रह्माण्डका मुख्य कारण पनि हुनुहुन्छ। त्यस कारण हजुरलाई ब्रह्मरूप भनेर नमस्कार गर्दछौं। हजुरले यस जगत्को सृष्टि गर्नुहुन्छ, पालन गर्नुहुन्छ र संहार पनि गर्नुहुन्छ। हजुरको आफ्नो कुनै रूप छैन तर मायालाई लिएर अनेकरूपमा देखिनुहुन्छ। हजुर नै पृथिवी, जल, आकाश, तेज र पवनका रूपमा विराजमान हुनुहुन्छ। हजुर नै यक्ष, गन्धर्व र राक्षसका रूपमा हुनुहुन्छ। विश्वव्यापी स्वरूप धारण गर्नुहुने हजुरको स्तुति कसले गर्न सक्छ ? हजुरको रूपलाई नजान्ने वेदले पनि नेति-नेति भनेर अर्थात् यहाँभन्दा पर जान्दैनौं भनेर व्याख्या गर्दछन्, हामी हजुरको लीला देखेर मोहित भएका छौं। हजुरको उत्तम रूप हामी जान्दैनौं। हजुरको महिमा पनि हामीले जान्दैनौं किनकि एउटा मात्र रूप भए महिमा जान्न सकिन्छ, अनेक रूपमा हजुर देखिनुभएकाले ती अनेक महिमालाई हामी कसरी जानौं? हजुरको दर्शन पाउनाले कृतकृत्य छौं।।१-५।। हजुरले अनन्त शक्तिको आश्रय लिएर विभिन्न अवतारद्वारा पृथिवीको भार हरण गर्नुहुन्छ ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी दुवैको स्तुति सुनेर बालरूप, कौतुक गर्न निपुण र मायाका स्वामी भगवान् विनायकले प्रीतिपूर्वक भन्नुभयो - तपाईंहरू मेरो कृपाबाट तत्त्वज्ञ र सर्वज्ञ हुनुहुनेछ ।।६-७।। यसरी वरदान दिएर भगवान् श्रीगणेश त्यहीं अन्तर्धान हुनुभयो। त्यसपछि सनक र सनन्दनले भगवान् श्रीगणेशको अत्यन्त सुन्दर मूर्ति बनाएर रत्न र सुवर्णले परिपूर्ण मन्दिर तयार गरे । त्यहाँ तिनले आफूले बनाएका मूर्तिको प्रतिष्ठा गरे । ती दुवैले स्थापित भगवान् श्रीगणेशको मूर्तिलाई वरदविनायक भनेर नामकरण गरे। मन्दिरको नजिकै एउटा पोखरी बनाए। त्यसलाई श्रीगणेशकुण्ड भन्ने नाम दिए। जसले यहाँ आएर भगवान् वरदविनायकको पूजा गर्दछ त्यसले सबै कामनाहरूको फल प्राप्त गर्दछ। यस लोकमा अनेक

अवाप्य पुत्रान् पौत्रांश्च विद्यामायुर्यशो महत्।
धनं धान्यं यशश्चापि तत्त्वज्ञानञ्च शाश्वतम्।।१२।।

अन्ते वैनायकं धाम याति नास्त्यत्र संशय:।

क उवाच

यत्र देवा: सगन्धर्वा यक्षाश्चाप्सरसां गणा:।।१३।।

दृष्ट्वा सम्पूज्य देवेशं तत्रैवान्तर्हिता: क्षणात्।
सम्प्राप्तविस्मयौ तौ च जग्मतुर्दिवमुत्तमम्।।१४।।

काशिराजोऽपि तत्रैत्य सामात्य: सप्रजस्तु तम्।
नानाद्रव्यैरलङ्कारैर्वस्त्रैरुच्चावचैरपि।।१५।।

पक्वान्नैश्चाप्यनेकैश्च फलैर्नानाविधैरपि।
रत्नैर्मुक्ताफलै: पुष्पैर्दक्षिणाभिरनेकश:।।१६।।

पुपूज परया भक्त्या ब्राह्मणै: सह मन्त्रत:।
ब्राह्मणान् पूजयामास वस्त्रालङ्कारकाञ्चनै:।।१७।।

आशिष: परिगृह्यैव नगरं पुनरागमत्।
तथैव ता: प्रकृतय: पुपूजुस्तं विनायकम्।।१८।।

तथैव ब्राह्मणान् पूज्य जगृहुराशिष: परा:।
तत: प्रजास्तं पुपूजुर्यथाशक्ति विनायकम्।।१९।।

सर्वे ते हृष्टमनस: पुरं प्रविविशुस्तदा।
इति ते सर्वमाख्यातं विनायकविचेष्टितम्।।२०।।

सर्वपापहरं पुण्यं किमन्यच्छ्रोतुमिच्छसि।

मुनिरुवाच

श्रुतं चरित्रं शुक्लस्य शुक्लभिक्षारतस्य च।।२१।।

धातुस्पर्शविहीनस्य गृहं यातो विनायक:।
भुजैर्दशभिरादाय ह्योदनं शिथिलं जलै:।।२२।।

जग्ध्वा त्यक्त्वा श्रमं तृप्तो दारिद्र्यञ्च व्यनाशयत्।
दत्तं गृहं तु शुक्लस्य शक्रस्य नगराद् वरम्।।२३।।

सम्पदोऽपि तथा दत्ता या: सन्ति ह्यलकाधिपे।
स्वरूपञ्च तथा दत्तं यत्रास्ति मकरध्वजे।।२४।।

धरि भोग भोगेर छोरा, नाति, विद्या, उमेर, यश, धनधान्यको सुखभोग गरी नित्य ज्ञान प्राप्त गर्दछ ।।८-१२।। अन्तमा श्रीगणेशको धाममा जान्छ । यसमा कुनै सन्देह छैन।

**ब्रह्माजीले भन्नुभयो** - त्यहाँ आएका गन्धर्वसहित देवता, यक्ष र अप्सराहरू वरदविनायक श्रीगणेशको दर्शन गरी पूजा गरेर अन्तर्धान भए। श्रीगणेशको लीला देखेर चकित भएका सनक र सनन्दन पनि उत्तम स्वर्गतर्फ फर्के।।१३-१४।। काशिराजले पनि मन्त्रीसहित रहेर अलङ्कार, वस्त्र, द्रव्य, पकवान, अनेक प्रकारका फल, रत्न, मोतीको हार, फूल, दक्षिणा आदि वस्तुहरू टक्र्याएर ब्राह्मणहरूद्वारा मन्त्र उच्चारण गराउँदै भक्तिपूर्वक वरदगणेशको पूजा गरे। ब्राह्मणहरूको पूजा गरी तिनलाई वस्त्र, अलङ्कार र स्वर्णमुद्रा प्रदान गरे । ब्राह्मणहरूसँग आशीर्वाद लिएर आफ्नो नगरतर्फ आए। त्यसैगरी राजाका मन्त्रीहरूले पनि वरदगणेशको पूजा गरे। तिनीहरूले पनि राजाले झैं ब्राह्मणहरूको पूजा गरी आशीर्वाद प्राप्त गरे। त्यसपछि नगरनिवासी नर-नारीहरूले आफ्नो शक्तिअनुसार वरदगणेशको पूजा गरे।।१५-१९।। ती सबै प्रसन्न हुँदै आफ्नो नगरतर्फ गए । यो भगवान् विनायकको चरित्र अत्यन्त पवित्र र सम्पूर्ण पापनाशक छ । हे वेदव्यास ! मैले तपाईँलाई पापनाशक र पुण्यदायक कथा सुनाएँ। सर्वपापनाशक र पुण्यदायक अरू कुन आख्यान सुन्न चाहनुहुन्छ ?

**व्यासले भन्नुभयो** - मैले विशुद्ध भिक्षाकर्मले जीवनयापन गरिरहने शुक्लब्राह्मणको चरित्र सुनें।।२०-२१।। निर्मल हृदयका साथ भिक्षा माग्न गएर त्यसबाट प्राप्त अन्नद्वारा सन्तुष्ट भई भगवान्को आराधना गर्ने र धनपैसा नछुने त्यस्ता ब्राह्मणको घरमा भगवान् जानुभयो र उहाँले आफ्नो दशभुजा भएको तेजोमय रूप देखाउनुभयो। माडैमाड भएको भात खानुभयो। त्यस्तो बासी र सुकेको अन्न खाँदा पनि थकाइ मेटाई तृप्त हुनुभयो । फलस्वरूप उहाँले आफ्ना भक्त शुक्लब्राह्मणको दरिद्रताको नाश गरिदिनुभयो । उहाँको कृपा भएपछि शुक्लको घर इन्द्रको दरबारभन्दा पनि राम्रो देखियो। त्यतिमात्र नभई श्रीगणेशले शुक्ललाई त्यो सम्पत्ति दिनुभयो जुन सम्पत्ति कुबेरका घरमा मात्र सम्भव हुन्छ। खुसी हुनुभएका श्रीगणेशले

ज्ञानं तस्मै तथा दत्तं यन्नास्ति चतुरानने।
अत्र किं कारणं ब्रह्मन् ! तन्मे व्याख्यातुमर्हसि।।२५।।

क उवाच
सम्यक् पृष्टं त्वया व्यास ! परमेशकथा यतः।
पुनाति प्राश्निकं श्रोतॄन् वक्तारं भक्तितः श्रुता।।२६।।

मनो मे हि स्थितं वक्तुं तत् पृष्टं हि त्वया विभो !
सम्यक् तेऽहं वदिष्यामि भक्तिगम्यस्य चेष्टितम्।।२७।।

सर्वज्ञः सर्वदर्शी च सर्वगः सर्वचित्तवित्।
भक्त्यैव तुष्यते देवो भावो हि तोषकारणम्।।२८।।

भक्त्या हृतं पलाशञ्च जलं पुष्पं मनोहरम्।
तेनैव परितुष्टोऽसावात्मानञ्च प्रयच्छति।।२९।।

दम्भेन हेलया वाऽपि लज्जयाऽपि परस्य वा।
महाधनं महावित्तं रत्नानि विविधानि च।।३०।।

काञ्चनं राजतं मुक्ता दत्तं सर्वं वृथा भवेत्।
शमीपत्रेण तुष्टोऽसौ व्याधायाऽदात् सलोकताम्।।३१।।

प्रसङ्गतोऽपि दत्तेन भावं कृत्वा दृढं हृदि।
अनायासेन लब्धेन तस्माद् भक्तिर्गरीयसी।।३२।।

शुक्लब्राह्मणलाई कामदेवको भन्दा पनि राम्रो रूप दिनुभयो । जुन ज्ञान ब्रह्माजीमा छैन त्यो ज्ञान पनि शुक्ललाई दिनुभयो । यसमा के कारण छ त्यो मलाई बताउनुहोस् ? ।।२२-२५।।

**ब्रह्माजीले भन्नुभयो** – हे व्यास ! तपाईंले राम्रो कुरा सोध्नुभयो। भगवान् श्रीगणेशको कथाले प्राश्निक र उत्तरदाता दुवैलाई पवित्र गराउँछ । मैले जे कुरा भन्नुपर्छ भनेर सोचेको थिएँ, त्यसै विषयमा तपाईंले प्रश्न गर्नुभयो। अब म भक्तिका कारण ज्यादै प्रसिद्ध ती शुक्लब्राह्मणको कथा बताउँछु।।२६-२७।। भगवान् श्रीगणेश सर्वज्ञ र सर्वसाक्षी हुनुहुन्छ । उहाँले सबैका मनको भावना बुझ्नुहुन्छ। उहाँ भक्तिबाट मात्र खुसी हुनुहुन्छ। वास्तवमा उहाँमा सद्भाव राख्नु नै उहाँका लागि सन्तुष्टिदायक विषय बन्दछ । कसैले भक्तिपूर्वक पत्र, जल र पुष्प टक्र्याउँछ भने त्यसबाट सन्तुष्ट हुनुहुने श्रीगणेश त्यो भक्तका वशमा पर्नुहुन्छ । कसैले घमण्ड र हेला गरेर अथवा लाज मानेर भगवान्लाई धेरै धन, ठूलो सम्पत्ति, अनेक थरि रत्न, मोतीको हार, सुन र चाँदी प्रदान गर्दछ भने पनि त्यो व्यर्थ हुन्छ। एउटा शमीको पात टक्र्याउने व्याधलाई उहाँले आफ्नै गणेशधाममा पठाउनु भएको थियो ।।२६-३१।। यद्यपि त्यस व्याधले श्रद्धा र भक्तिका साथ शमीको पत्र चढाएको थिएन । त्यसै प्रसङ्ग पर्नाले त्यसको हातको शमीको पात भगवान्को मूर्तिमा पर्न गएको थियो । अनायास प्राप्त भएको एउटा शमीपत्रले मात्र भगवान् खुसी हुनुभयो। वास्तवमा भगवान्को भक्ति सबभन्दा ठूलो कुरा हो।।३२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते भक्तिप्रशंसाकथनं नाम पञ्चविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'भक्तिप्रशंसा' शीर्षकान्वित पच्चीसौं अध्याय पूर्ण भयो ।।२५।।

ॐ

## षड्विंशोध्यायः { २६ अध्याय }

मुनिरुवाच

किं कर्म कृतवान् व्याधः कथं पत्रं समर्पितम्।
किंनामा स कथं प्राप्तः सालोक्यं तद् वदस्व मे।।१।।

क उवाच

विदर्भदेशे नगरं मदिषाख्यं बभूव ह।
विख्यातं त्रिषु लोकेषु कुबेरनगरोपमम्।।२।।

भीमोनामाऽभवद् व्याधो नगरे मांसविक्रयी।
परेषां दोषकथने दोषो यद्यपि वर्तते।।३।।

प्रश्ने कृते तु वक्तव्यो याथातथ्यान्न मत्सरात्।
स भीमो दोषबहुलो बाणकोदण्डवान् वने।।४।।

शरपूर्णेषुधी खड्गी चापं बिभ्रच्च शस्त्रिकाम्।
अवधीत् प्राणिनो नित्यं कुटुम्बभरणे रतः।।५।।

पथिकान् ब्राह्मणाँश्चापि निर्दयो निर्जने वने।
कदाचिन्नगरे तस्मिन् समारब्धो महोत्सवः।।६।।

प्रातरेव वनं यातो बहुमांसजिघृक्षया।
विक्रयेच्छुर्द्रव्यलुब्धो कुटुम्बस्यापि पोषकः।।७।।

जघान मृगयूथाँस्तान् मांसभारयुतः पुरम्।
यावन् प्रविशते तावदागतो राक्षसो महान्।।८।।

मनुष्यगन्धहृष्टोऽसौ ययौ तस्यान्तिकं क्षणात्।
पिङ्गाक्षो नामतः पिङ्गनेत्रः सर्वभयङ्करः।।९।।

**व्यासले सोध्नुभयो** - त्यस व्याधाले के काम गऱ्यो? कसरी शमीको पात श्रीगणेशलाई समर्पण गऱ्यो ? त्यस व्याधाको नाम के थियो र त्यो कसरी भगवान्‌को गणेशधाममा पुग्यो ? यी कुराहरूको उत्तर मलाई बताउनुहोस्।।१।।

**ब्रह्माजीले भन्नुभयो** - विदर्भ देशमा तीन लोकमा नै प्रख्यात मदिषानामक नगर थियो। त्यस नगरको ऐश्वर्य कुबेरको अलका पुरीसमान थियो। त्यहाँ शहरमा पसल थापेर एउटा भीमनामक व्याधा मासु बेच्ने काम गर्ने व्याधा बस्दथ्यो। यद्यपि अरूका दोष-अपराध बताउँदा आफूमाथि त्यो दोष-अपराध आइलाग्छ । यसो हो तापनि हे व्यास ! तपाईंले प्रश्न गरेपछि मैले यथार्थ बताउनुपर्ने हुन्छ। यस्ता कुरामा इर्ष्या-द्वेषका भावना राख्नुहुँदैन । त्यो भीमनामक व्याधा अपराधी थियो। हातमा धनुष र बाण धारण गरी नित्य वनमा भ्रमण गर्दथ्यो । जतिबेला पनि त्यसका धनुषमा बाण भरिएकै हुन्थे। त्यसका साथमा तरबार, धनुष र छुरा कहिल्यै छुट्दैनथे। यिनै शस्त्रास्त्रको माध्यमबाट त्यसले नित्य प्राणीहरूको वध गर्दथ्यो। त्यसबाट नै त्यसले आफ्ना परिवारको लालनपालन गरिरहेको थियो ।।२-५।। त्यसले निर्जन वनमा बाटामा हिंड्ने ब्राह्मण-हरूलाई पनि छोडेन । कुनै दिन त्यस मदिषानगरमा ठूलो उत्सव आरम्भ भयो । त्यो भीमनामक व्याधा बिहानै उठेर धेरै मासुको सङ्ग्रह गर्न भनी वनतर्फ लाग्यो। धनको लोभी, मांसविक्रय गरी अत्यधिक धनार्जन गर्न खोज्ने र कुटुम्बको पालन गर्न चाहने त्यस व्याधाले झुण्डका झुण्ड मृगहरू माऱ्यो। जब त्यो मासुको भारी बोकेर नगरभित्र पस्दै थियो त्यस बेला त्यसका सामु एउटा पिङ्गाक्षनामक भयानक राक्षस आइपुग्यो । त्यसका आँखा पहेंला थिए, स्वरूप डरलाग्दो र स्वभाव कुटिल थियो। त्यसले मानिस र जङ्गली जनावर जे पाए पनि खान्थ्यो । जति खाए पनि नधाउने त्यो राक्षस आगोजस्तै थियो । त्यसले भीमनामक व्याधालाई देखेपछि त्यसका शरीरका गन्धले खुसी भई त्यो राक्षस त्यस व्याधाको नजिकमा पुग्यो।।६-९।। राक्षसलाई देखेर मानिस र जङ्गली

मनुष्यश्वापदाशी स दुष्पूर इव हव्यभुक्।
चकम्पे स च तं दृष्ट्वा व्याधो भूमावथाऽपतत्।।१०।।

पतितानि च शस्त्राणि नेत्रेऽप्याच्छादिते बलात्।
उन्मील्य नयनेऽपश्यच्छमीवृक्षं समीपतः।।११।।

आरुरोह च भीमस्तं राक्षसोऽपि समारुहत्।
तावच्चिक्षेप शाखां स तत्पत्रं वायुनेरितम्।।१२।।

पपात गणनाथस्य वामनस्थापितस्य ह।
मस्तके तेन तुष्टोऽसावुभाभ्यां पूजितः स्फुटम्।।१३।।

वामनाय वरान् दातुं स्फुटो योऽभूद् गजाननः।
बलिं विजेतुकामाय कश्यपस्यात्मजाय सः।।१४।।

अत्यन्तं तुष्यते देवो दूर्वया च शमीदलैः।
रत्नकाञ्चनसंयुक्ता दिव्यवस्त्रसमन्विता।।१५।।

दूर्वाङ्कुरं विना पूजा निष्फला जायते नृणाम्।
शमीपत्रेण वा सा स्यात् सफला नान्यथा क्वचित्।।१६।।

यज्ञदानव्रतैरन्यैस्तपोभिर्नियमैरपि।
तथा न प्रीयते देवः काञ्चनै रत्नसञ्चयैः।।१७।।

दूर्वाभिश्च शमीपत्रैर्यथा सुप्रीयते विभुः।
तयोस्तुष्टो देवदेवोऽप्रेषयद् यानमुत्तमम्।।१८।।

स्वरूपधारिभिर्युक्तं किङ्करैर्निजलोकतः।
तेषां निरीक्षणान्नष्टाः पापपर्वतराशयः।।१९।।

कृपया च गणेशस्य तयो राक्षसभीमयोः।
यथाग्निकणसम्पर्कान्नश्यन्ते तृणपर्वताः।।२०।।

जनावर खाएर कहिल्यै नअघाउने अग्निसमान सर्वभक्षी र अतृप्त स्वभावको त्यो व्याधा काँप्यो र उपाय केही नपाएर भुइँमा लड्यो । त्यसका शस्त्रहरू पनि भुइँमा खसे र आँखा पनि आफै बन्द भए । धेरै बेरपछि त्यसले आँखा खोलेर हेर्‍यो, त्यसका सामु एउटा शमीको वृक्ष थियो ।।१०-११।। त्यो भीम शमीको रूखमा चढ्यो र राक्षस पनि त्यसैमा चढ्यो। भीम र पिङ्गाक्ष जुन हाँगोमा बसेका थिए त्यस हाँगाका केही पात हावाद्वारा हल्लिरहेका थिए । ती दुवैले तिनै पात टिपेर भुइँमा फ्याँकि। भुइँमा भगवान् वामनले स्थापना गर्नुभएको गणेशको मूर्तिमाथि शमीका पातहरू परे । त्यसकारण भगवान् गणेश प्रसन्न हुनुभयो । यसरी नजानीकन दुवैले भगवान् श्रीगणेशको पूजा गरे ।१२-१३।। प्राचीन समयमा कश्यप ऋषिका छोरा भगवान् वामनले राजा बलिलाई जित्ने उद्देश्यले श्रीगणेशको आराधना गर्दा वामनसँग प्रसन्न भएर श्रीगणेशले गजाननको रूपमा दर्शन दिई वामनलाई वरदान दिनुभएको थियो । त्यसपछि भगवान् वामनले त्यस मूर्तिको प्रतिष्ठा गर्नुभएको थियो । वामनद्वारा स्थापित भगवान् गणेश शमीका पात र दूर्वाङ्कुर अर्पण गरी आराधना गर्दा अत्यन्त छिटो प्रसन्न हुनुहुन्छ । पूजाको सामग्रीमा रत्न, सुवर्ण, अलङ्कार, वस्त्र यी सबै कुरा रहे तापनि दूर्वाङ्कुर र शमीका पात हुँदैनन् भने मानिसले गरेको गणेशको पूजा निष्फल हुन्छ । दूबो नपाइएको स्थितिमा शमीका पात अर्पण गरेर पूजा गर्दा पनि दूबो अर्पण गरेको फल प्राप्त हुन्छ ।।१४-१६।। शमीका पात नपाईंदा दूर्वाङ्कुर चढाए पनि शमीको पात चढाएको फल प्राप्त हुन्छ। दूबो नपाइएमा शमीका पातले पूजा गर्दा भगवान् उत्तिकै प्रसन्न हुनुहुन्छ । यज्ञ, दान, व्रत, तपस्या, नियमहरू गर्दा र रत्न एवं सुन चढाएर पूजा गर्दा पनि भगवान् त्यति छिटो प्रसन्न हुनुहुन्न, जति छिटो दूबो र शमीका पात चढाउँदा प्रसन्न हुनुहुन्छ। राक्षस र व्याधासँग खुसी हुनुभएका भगवान् गणेशले आफूसमान रूप धारण गर्ने गणहरूका साथ आफ्नो धामबाट एउटा उत्तम विमान पठाउनुभयो।।१७-१८।। जसरी आगाको सम्पर्कमा परेपछि ठूला-ठूला सुकेका पातका राशि समाप्त हुन्छन् त्यस्तै श्रीगणेशको कृपा र उहाँका दूतहरूको दर्शनबाट व्याधा र राक्षस दुवैका पर्वतराशिसमान पापराशि

त्यक्त्वा देहौ दिव्यदेहौ गृहीत्वा यानमास्थितौ।
दूतैः सम्पूजितौ नानावस्त्रभूषाविलेपनैः।।२१।।

नानावादित्रनिर्घोषैः स्त्रीगन्धर्वैर्युतं महत्।
नीतौ तौ देवनिकटे नेमतुस्तौ विनायकम्।।२२।।

अशेषपापनिर्मुक्तौ प्रापतुस्तौ सरूपताम्।
आकल्पं स्थापितौ तेन गणेशेन निजस्थले।।२३।।

एवं भावप्रियो देवः प्रीयते भक्तिभावतः।
तथैव मुष्टिमात्रान्नात् सन्तुष्टोऽभूद् द्विजस्य सः।
शुक्लस्य प्रददौ दिव्यमलकासदृशं गृहम्।।२४।।

तस्माद् दूर्वाशमीपत्रैर्विना पूजा वृथा भवेत्।
न महत्या दाम्भिकया पूजया प्रीयते तथा।।२५।।

यथा भावेन कृतया स्वल्पयाऽसौ गजाननः।।२६।।

नष्ट भए ।।१९-२०।। ती दुबैले शरीरत्याग गरेर दिव्यशरीर धारण गरी भगवान्ले पठाएको विमानमा आरोहण गरे। भगवान् श्रीगणेशका सेवकहरूले अनेक थरि वस्त्र, अलङ्कार सुगन्ध प्रदान गरेर सम्मान गरे। त्यो विमान विभिन्न किसिमका बाजागाजा र अप्सरा एवं गन्धर्वले भरिएको थियो। ती दुबैलाई दूतहरूले भगवान् श्रीगणेशको सामु पुऱ्याए। तिनले पनि नम्र भएर भगवान्लाई प्रणाम गरे।।२१-२२।। ती दुबै भगवान्को कृपाबाट पापमुक्त भएर भगवान्कै स्वरूपमा प्राप्त भए। भगवान् श्रीगणेशले ती दुबैलाई एक कल्पसम्म आफ्नो धाममा राख्नुभयो। यी सब कुराहरूबाट प्रमाणित हुन्छ कि भगवान् भक्तिका प्यारा हुनुहुन्छ र अत्यन्त छिटो प्रसन्न हुनुहुन्छ। यस्तै किसिमबाट शुक्लनाम गरेका ब्राह्मणले श्रद्धापूर्वक एक मुठी अन्न टक्र्याई भगवान्लाई सन्तुष्ट बनाए। ती शुक्ललाई भगवान्ले अलका नगरीमा विराजमान कुबेरको राजभवनसमान दिव्य भवन दिनुभयो।।२३-२४।। त्यसकारण दूबो र शमीका पातविना गरिएको गणेशको पूजा व्यर्थ हुन्छ। सम्पन्न मानिसहरूले अहङ्कार देखाएर ठूलो तयारीका साथ पूजा गर्दा पनि भगवान् खुसी हुनुहुन्न तर कसैले भक्तिभावले पूजा गर्दछ भने त्यसको सामान्य पूजाबाट पनि भगवान् प्रसन्न हुनुहुन्छ।।२५-२६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे पिङ्गलव्याध-भीमराक्षसमोक्षणं नाम षड्विंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'पिङ्गलनामक व्याधा र भीमनामक राक्षसलाई मुक्ति प्राप्ति' शीर्षकान्वित छब्बीसौं अध्याय पूर्ण भयो ।।२६।।

ॐ

## सप्तविंशोध्यायः { २७ अध्याय }

व्यास उवाच

पूर्वजन्मनि व्याधोऽसौ क आसीद् राक्षसोऽपि सः।
किंशीलः किंसमाचारस्तन्ममाचक्ष्व नाभिज।।१।।

अनुष्ठानं कृतं तेन वामनेन कथं प्रभो।
कथं तस्मै वरो दत्तो गजाननस्वरूपिणा।।२।।

लोको गणेशस्य कथं पृथगन्यत्र तिष्ठति।
कथं शमी प्रिया तस्य सर्वमेतद् वदाशु मे।।३।।

क उवाच

शृणु वक्ष्यामि ते सर्वं यद् यत् पृष्टं त्वया मुने !
राजासीत् पूर्वजनुषि स व्याधो वेदपारगः।।४।।

सर्वशास्त्रप्रवक्ता च सर्वलक्षणलक्षितः।
यज्वा विनीतो ह्रीमाँश्च देवताऽतिथिपूजकः।।५।।

गजाश्वरथपत्तीनां सङ्ख्या यस्य न विद्यते।
दाता शूरश्च मेधावी समृद्धो मघवानिव।।६।।

ध्वजश्च शत्रुजिद् यस्य प्रधानौ बुद्धिमत्तरौ।
यतोऽधरीकृतः काव्यो गिराम्पतिरपि स्फुटम्।।७।।

यौ तौ क्षितितले जेतुं समर्थौ शस्त्रतेजसा।
पत्नी सुलक्षणाऽस्यासीन्नाम्ना च मदनावती।।८।।

पतिव्रता धर्मशीला सुमुखी सर्ववेदिनी।
न तया सदृशी काचित् त्रिषु लोकेषु कामिनी।।९।।

दीनानाथवृद्धजने कृपालुरतिथिष्वपि।
यजतोर्ददतोरेवं रतयोः पूजने सताम्।।१०।।

तयोर्वृत्तेन तुतुषुः पौरा जानपदा जनाः।
अमित्रा अपि गृह्णन्ति षड्गुणान् साधुसम्मतान्।।११।।

**व्यासले भन्नुभयो** - पूर्वजन्ममा व्याधा र राक्षस को थिए ? ती कस्तो शील र स्वभावका थिए ? कस्तो चरित्र र विचारका थिए ? ती कुरा पनि मलाई बताउनुहोस् । त्यसपछि भगवान् वामनले कसरी श्रीगणेशको आराधना गर्नुभयो ? कसरी गजानन रूपधारी श्रीगणेशले उहाँलाई वरदान दिनुभयो ? कैलास र वैकुण्ठभन्दा छुट्टै कुन ठाउँमा भगवान् श्रीगणेशको धाम रहेको छ ? किन भगवान्ले शमीको पात रुचाउनुहुन्छ ? यी सबै कुराको उत्तर दिनुहोस्।।१-३।।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! तिमीले जे कुरा सोधेका छौ म ती सबैको उत्तर दिन्छु, तिमीले सुन । हे वेदव्यास! पूर्वजन्ममा त्यो व्याधा वेदमा पारङ्गत राजा थियो। त्यो सबै शास्त्र जान्ने, शास्त्रका रहस्यको व्याख्या गर्ने, सबै प्रकारका उदात्त गुणले सम्पन्न, निरन्तर यज्ञ गर्ने, नम्र स्वभावको, नचाहिँने काम गर्दा लाज मान्ने र देवता एवं पाहुनाहरूको सत्कार गर्ने उत्तम स्वभावको मानिस थियो।।४-५।। त्यसको राज्यमा हात्तीसेना, अश्वसेना, रथसेना र पैदलसेना कति थिए ? तिनको गणना गर्न सकिँदैनथ्यो। त्यो राजा दाता, शूरवीर, बुद्धिमान् र इन्द्रझैं ऐश्वर्यसम्पन्न पनि थियो।।६।। त्यसका दुई जना बुद्धिमान् मन्त्रीहरू थिए। एउटाको नाम ध्वज थियो भने अर्काको नाम शत्रुजित् थियो। ती दुवै अमात्यहरूले आफ्नो बुद्धिकौशलबाट शुक्राचार्य र बृहस्पतिलाई पनि परास्त गरेका थिए। तिनले आफ्नो शस्त्रास्त्रको तेजबाट सम्पूर्ण पृथिवीमण्डललाई वशवर्ती तुल्याएका थिए । ती राजाकी रानीको नाम मदनावती थियो। ती उत्तम लक्षणले सम्पन्न, धर्मनिष्ठ, सौम्य अनुहारकी, लोकव्यवहारको ज्ञानमा कुशल पतिव्रता नारी थिइन् । तिनको तुलना संसारका कुनै नारीसँग गर्न सकिँदैनथ्यो। ती रानी दीन, अनाथ र वृद्धजनहरूमा कृपालु थिइन्। अतिथिहरूको सम्मान गर्दथिन्। यसरी ती राजा र रानी यज्ञ, दान, सज्जनको सम्मानजस्ता सुकर्म गर्दै आफ्नो गृहस्थधर्मको निर्वाह गरिरहेका थिए ।।७-१०।। तिनीहरूको सदाचारले गाउँ र नगरका सबै जनताहरू प्रसन्न थिए। शत्रुहरूले पनि सज्जनहरूद्वारा प्रशंसनीय षड् गुण - सन्धि, विग्रह, यान, आसन, द्वैध र आश्रय नामका गुणहरूको

एवं स पुण्यकीर्तिः सन् शशास पृथिवीमिमाम्।
बहुसंवत्सरं दैवात् कालधर्ममुपेयिवान्।।१२।।

मरिष्यमाणश्चक्रेऽसौ गोसहस्रं यथाविधि।
महादानान्यपि ददौ दशाष्टौ चेतराणि च।।१३।।

मृतेऽस्मिन् नगरी सर्वा शुशोच नृपतिं तदा।
अपुत्रत्वात् सहैवास्य पत्नी सहगतिं ययौ।।१४।।

मन्त्रिणौ सर्वसंस्कारान् कारयामासतुर्द्विजैः।
एकादशाहे ददतुर्नानादानानि भक्तितः।।१५।।

गते मासे मन्त्रयतो राज्यार्हं कुलजं नरम्।
धीमन्तं सत्त्वसम्पन्नं शूरं सत्यपराक्रमम्।।१६।।

दुर्धर्षस्य सुतं तस्य दायादस्य महाबलम्।
क्षेत्रजं साम्बनामानं राज्ञा शिष्टञ्च तावुभौ।।१७।।

अमात्यौ निश्चयं कृत्वा राज्यं दातुं तु तस्य ह।
पौरजानपदान् सर्वान् ब्राह्मणान् परिपृच्छ्य च।।१८।।

शुभे मुहूर्त्ते लग्ने च नानासम्भारसञ्चयैः।
कारयामासतुरुभावभिषेकं द्विजैः सह।।१९।।

मुनिरुवाच

कथं क्षेत्रात् समुत्पन्नः किंजातीयः पितामह !
स साम्बस्तन्ममाचक्ष्व सर्वज्ञोऽसि कृपानिधे।।२०।।

क उवाच

दुर्धर्षेण कृता यत्नाः पुत्रार्थं बहुधा मुने !
न च जातः सुपुत्रोऽस्य दुष्टदैवयुतस्य ह।।२१।।

तस्य पत्न्या प्रमदया कैवर्तासक्तचित्तया।
जनितः सुमुहूर्ते स न ज्ञातो जारजस्त्विति।।२२।।

यावन्ति राजचिह्नानि तावन्ति ददतुश्च तौ।
निवेद्य कोशसहितं सर्वं राज्यं सराष्ट्रकम्।।२३।।

अमात्यपदनिष्ठौ तौ जातावास्तां यथा पुरा।
स राज्यं प्राप्य दुर्धर्षसुतो मत्तः श्रियाऽभवत्।।२४।।

कहाँ कसरी प्रयोग गर्नुपर्छ भन्ने कुरा तिनबाट ग्रहण गर्दथे अर्थात् सिक्दथे । यसरी ती राजाले चारैतिर उत्तम कीर्ति फैलाएर पृथिवीमण्डलमा शासन गरिरहेका थिए। धेरै वर्ष राज्य गरी दैववश ती राजा दिवङ्गत भए।।११-१२।। मर्ने बेलामा तिनले विधिपूर्वक एक हजार गाई दान गरेका थिए र अठार प्रकारका महादान पनि गरेका थिए। जब ती मरे, त्यसबेला सारा नगर चिन्तित भयो । छोरा नभएकाले पत्नी पनि पतिका साथै चितामा जलेर मरिन्। मन्त्रीहरूले ब्राह्मणहरूको माध्यमबाट राजा र रानीको अन्तिम संस्कार गराए। एघारौं दिनका दिन मन्त्रीहरूले भक्तिपूर्वक राजा र रानीका निमित्त अनेक थरि दान प्रदान गरे।।१३-१५।। राजा-रानी दिवङ्गत भएको एक महिना बितेपछि ती दुबै मन्त्रीले राजाको पदमा बस्नयोग्य उक्त कुलको योग्य उत्तराधिकारी चयन गर्ने विषयमा मन्त्रणा गरिरहेका थिए । ती दुबै मन्त्रीहरूले पुरानो राजाका नातेदार, बुद्धिमान्, आत्मबलसम्पन्न, शूर, सत्य पराक्रम गर्ने राजाको अपुताली खान दुर्धर्ष राजाका क्षेत्रज छोरा साम्बलाई राजा बनाउने निधो गरे । त्यसबेला नगर र गाउँमा बस्ने सबै जनता र ब्राह्मणहरूसँग सल्लाह गरेर त्यो निधो गरियो ।।१६-१८।। उत्तम मुहूर्त र उत्तम लग्नमा राज्याभिषेकका लागि सामग्रीहरूको सञ्चय गरी ती दुबै मन्त्रीहरूले ब्राह्मणहरूका साथ साम्बको राज्याभिषेक गरे ।।१९।।

**व्यासले सोध्नुभयो** - हे ब्रह्माजी ! त्यो साम्ब कुन जातको मानिस हो र कसरी क्षेत्रज पुत्र मानियो ? मलाई बताउनुहोस्, किनकि तपाईं दयालु र सर्वज्ञ पनि हुनुहुन्छ।।२०।।

**ब्रह्माजीले भन्नुभयो** - दुर्धर्षनामक राजाले पुत्रप्राप्तिका लागि धेरै प्रयास गरेका थिए। दैवको सुदृष्टि नपरेका कारण तिनलाई पुत्र प्राप्त भएन। तिनकी पत्नीले डुँगा चलाउने बोटेलाई भित्रभित्रै माया गर्थिन् र त्यसैको परिणामस्वरूप राम्रो मुहूर्तमा एउटा बालक जन्म्यो। राजालाई यो बालक जारबाट जन्मेको भन्ने थाहा भएन।।२१-२२।। जति राजपुत्रले पाउनुपर्ने राजकुमारका सुविधाहरू हुन्, ती सबै सुविधा र सामग्री राजाले त्यो पुत्रलाई प्रदान गरेका थिए । एक दिन तिनले कोशसहित सम्पूर्ण राज्य त्यसलाई सुम्पिदिए।।२३।। दुईजना अमात्यहरूले त्यसको संरक्षण गरिरहेका थिए। राज्य पाएपछि दुर्धर्षको छोरा सम्पत्तिले उन्मत्त भयो। सुरा, सुन्दरी र मांस भोजनमा

स्त्रीमांसमदिरासक्तो मत्तो गज इवालसः।
दुराचाररतो नित्यं नयमार्गपराङ्मुखः।।२५।।

आदाय धनिनां सर्वं धनं तान् निरवासयत्।
अपमानञ्चकाराशु ब्राह्मणानां सतामपि।।२६।।

बहिश्चकार तान् सर्वान् वृत्तिमाच्छिद्य सान्ततिम्।
शिष्टः स्म प्रकृती नीतिं न तद्वाक्यं समाददे।।२७।।

वारं वारं यदा तौ तं शिष्टः स्म करुणायुतौ।
अमात्यौ स बबन्धाशु निगडाभ्यां रुषान्वितः।।२८।।

शिक्षापयन्तौ पितरौ तस्य तं दुर्हृदं सुतम्।
यत्प्रसादात् त्वया प्राप्तं राज्यं निहतकण्टकम्।।२९।।

विनिग्रहं कथं साध्वोस्तयोस्त्वं कुरुषे खल !
अनादृत्य तु तद्वाक्यं पीयूषमिव पामरः।।३०।।

शृङ्खलाभ्यां निबद्धौ तौ कारागारेऽध्यवासयत्।
अतिदुष्टो दुष्टबुद्धिनामाभूत् तत्सखाऽनिशम्।।३१।।

तमेव सचिवं चक्रे दत्त्वाऽश्वं काञ्चनं गजम्।
रत्नानि दिव्यवासांसि राङ्कवास्तरणानि च।।३२।।

दासीदासानसङ्ख्यातान् पानान्यन्नञ्च नारिकम्।
न करोत्यस्य वाक्यं यस्तस्य छेत्स्ये शिरो बलात्।।३३।।

इत्युक्त्वा सर्वलोकेषु साम्बोऽन्तःपुरमाययौ।।३४।।

आसक्त त्यो राजपुत्र मत्ता हात्तीझैं भ्रमण गरिरहन्थ्यो र कर्तव्य पालनमा अत्यन्त अल्छी थियो। सधैं दुराचारमा संलग्न रहने त्यो राजपुत्र नीतिको मार्गबाट धेरै टाढा थियो ।।२४-२५।। त्यसले धनीहरूका धन लुटेर तिनलाई राज्यबाट निकाला गरिदियो। ब्राह्मण र सज्जनहरूको अपमान गर्दै त्यसले तिनको जीविका पनि खोसिदियो। राज्यको दुर्दशा देख्न नसकी जनताप्रति अत्यन्त दयालु मन्त्रीहरूले उत्तम राजनीतिको विषमा धेरै पटक उपदेश दिए तर त्यसले मन्त्रीका वचनको पनि आदर गरेन। जब ती मन्त्रीले सुधार्ने नियतले पटक-पटक उपदेश दिए। त्यसबेला रिसाएको त्यो राजपुत्रले दुबै मन्त्रीलाई पाता कसेर बाँध्यो।।२६-२८।। दुर्धर्ष र तिनकी पत्नीले आफ्ना पुत्र साम्बको दुराशयपूर्ण व्यवहार देखेर शिक्षा दिंदै भने - बाबु ! तिमीले ती मन्त्रीहरूकै कृपाबाट यो निष्कण्टक राज्य प्राप्त गऱ्यौ । त्यस्ता सज्जन यी मन्त्रीहरूलाई किन थुनेका छौ? ती दुबैलाई मुक्त गर । आफ्ना जन्मदाता मातापिताको वाक्यलाई त्यसले मूर्खले अमृत लत्याएझैं लत्यायो र ती दुबैलाई जञ्जिरले बाँधेर कारागार पुऱ्याई थुन्ने काम गऱ्यो । दुष्ट बुद्धिनामक स्वभावैले दुष्ट त्यसको एउटा मित्र थियो।।२९-३१।। साम्बले त्यस दुष्ट बुद्धिनामक मित्रलाई घोडा, हात्ती, सुवर्णमुद्रा, रत्न, दिव्य वस्त्र र उत्तम कम्बलसमेत प्रदान गरी मन्त्री बनायो। त्यतिमात्र होइन, त्यसले त्यस मन्त्रीलाई दास-दासीका साथै पेय पदार्थ, अन्न र जल पनि प्रदान गरेको थियो । एकदिन त्यसले मेरा मन्त्रीले भनेको कुरा जसले मान्नेछैन त्यसको टाउको काट्नेछु भनी सबैलाई आदेश दिएर अन्तपुरमा प्रवेश गऱ्यो ।। ३२-३४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते साम्बदुःशासनवर्णनं नाम सप्तविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'साम्बनामक राजाको दुराचारवर्णन' शीर्षकान्वित सत्ताईसौं अध्याय पूर्ण भयो ।।२७।।

ॐ

## अष्टाविंशोऽध्यायः

## { २८ अध्याय }

क उवाच

स राजकार्यं कुरुते स्वयं भुङ्क्ते वरस्त्रियः ।
राष्ट्रे श्रृणोति रामां सोऽपतिं वा सपतिं तथा ।।१।।

बलादानयते भोक्तुं क्रन्दतां रुदतामपि ।
न वा गणयते ज्ञातिभेदं विषयलम्पटः ।।२।।

या चोन्नतकुचा नारी तस्य दृष्टिपथं गता ।
तामालिङ्गत्यसौ कामी चुम्बतीमां यभत्यपि ।।३।।

परद्रव्याणि गृह्णाति स्त्रियोऽपि स बलात् पुनः ।
सोऽपि तादृग्गुणो मन्त्री दुष्टबुद्धिपथे रतः ।।४।।

एवं दुराचाररतौ न कन्यां न च मातरम् ।
न वर्जयन्तौ सम्भोगे भगिनीमपि निर्घृणौ ।।५।।

न ब्रह्महत्यां मनुतो न स्त्रीबालवधं तथा ।
एवं पापसमाचारौ पापस्य पर्वताविव ।।६।।

आस्तामुभौ दुष्टबुद्धी राजामात्यौ सुदुःसहौ ।
न ब्राह्मणो यतिर्वापि तद्गृहे याति भिक्षितुम् ।।७।।

न राष्ट्रे नाम तस्यापि गृह्णाति प्रकृतेरपि ।
एकदा मृगयार्थं तौ यातः स्म गहनं वनम् ।।८।।

घ्नतः स्म मृगयूथानि पक्षियूथान्यनेकशः ।
तानि प्रापय्य नगरमश्वारूढौ स्वयं पुनः ।।९।।

वैनायकं महास्थानं पथि तौ पश्यतः स्म ह ।
यस्मिन् विराजते मूर्तिर्जीर्णा वैनायकी शुभा ।।१०।।

स्थापिता रामपित्रा सा पुत्रार्थं कुर्वता तपः ।
भक्त्या साक्षात्कृतो यत्र देवदेवो विनायकः ।।११।।

दशाक्षरेण मन्त्रेण ध्यायता बहुवासरम् ।
दत्त्वा तस्मै वरान् देवो विदधे वाञ्छितानपि ।।१२।।

**ब्रह्माजीले भन्नुभयो-** राजसिंहासनमा आसीन साम्बले राजकाज गर्दै सम्पूर्ण सुखसुविधा आफै भोगिरहेको थियो । कुनै सुन्दरी राष्ट्रमा छन् भन्ने थाहा पाएपछि ती सधवा अथवा विधवा जस्तोसुकै भए पनि जबर्जस्ती ल्याएर तिनीसँग भोग गर्दथ्यो। रोइरहेका र विलाप गरिरहेका मानिसहरूले यसो गर्न हुन्न भन्दा पनि त्यसले वास्ता गर्दैनथ्यो । दाजुभाइ र बन्धु-बान्धवका छोरीबेटी पनि त्यसले भनेन । विषयलम्पट त्यस राजाको दृष्टि ठूला स्तन भएका नारीहरू माथि पर्नासाथ त्यसले तिनीहरूलाई आलिङ्गन, चुम्बन र बलात्कार गर्दथ्यो। अरूको धनसम्पत्ति लुट्ने र विवाहित नारीहरूमाथि बलात्कार गर्ने कामसमेत गर्दथ्यो । जुन चरित्रको राजा थियो त्यसको मन्त्री पनि त्यस्तै दुष्ट चरित्रको थियो । त्यसका मनमा सद्बुद्धि कहिल्यै पनि आएन ।।१-४।। यसरी राजा र मन्त्री दुबै दुराचार र भ्रष्टाचारमा लिप्त थिए । तिनीहरूले कुनै कन्या देख्न हुँदैनथ्यो। निर्लज्ज स्वभावका ती राजा र मन्त्रीले सम्भोगको मामलामा आमा र बहिनी पनि भन्दैनथे। तिनलाई ब्रह्महत्याको डर थिएन, स्त्रीहत्या र बालहत्या गर्न पनि कुनै सङ्कोच थिएन । ती पापाचारी राजा र मन्त्री दुबै पापका पर्वत नै बनेका थिए ।।५-६।। ती दुबै जनताका निमित्त असह्य भए। तिनका घरमा ब्राह्मण, संन्यासी कुनै पनि भिक्षा माग्न जाँदैनथे । राष्ट्रमा कुनै पनि मानिसले राजा र मन्त्रीको नाम लिन चाँहदैनथे । एक दिन ती दुबै राजा र मन्त्री घनघोर जङ्गलमा शिकार खेल्न गए । त्यहाँ तिनले मृग र पक्षीका बथान मारे । ती दुबै मरेका मृग र पक्षीलाई लिएर घोडामा सवार भई राजधानी फर्कँदै थिए। तिनले मार्गमा भगवान् श्रीगणेशको ठूलो मन्दिर देखे । जुन मन्दिरमा भगवान् श्रीगणेशको पुरानो जीर्ण-शीर्ण मूर्ति थियो ।।७-१०।। अघि श्रीरामका पिता दशरथले तपस्या गर्दा त्यस मूर्तिको प्रतिष्ठा गरेका थिए । तिनले आराधनाको क्रममा धेरै दिनसम्म दशाक्षर मन्त्र जपी भक्तिपूर्वक ध्यान गर्दा श्रीगणेशको दर्शन पाएका थिए । भगवान् श्रीगणेशले वरदान दिएर तिनका कामनाहरू पूरा गराउनु भएको थियो । त्यसपछि दशरथले वशिष्ठ ऋषिका

ततो वसिष्ठहस्तेन तेनेयं स्थापिता दृढा ।
वरदेति च नामास्या वसिष्ठेन कृतं ततः ।
अस्या दर्शनतो नृणां पुरुषार्थाश्चतुर्विधाः ।
स्मरणात् पूजनाद् वापि सेत्स्यन्ते नात्र संशयः ।।१३।।
एवं वसिष्ठवाक्येन स्थानं तद् भुवि पप्रथे ।
गणेशभजनेनाऽस्य स्मरणेनाऽर्चनेन च ।।१४।।
रामलक्ष्मणभरताः शत्रुघ्नसहिताः सुताः ।
जाता लोकेषु विख्याताः सर्वज्ञाः शूरसम्मताः ।।१५।।
एवं दृष्ट्वा महारम्यं प्रासादं राजनिर्मितम् ।
उत्तेरतुरश्वपृष्ठाद् राजामात्यौ पुपूजतुः ।।१६।।
पत्रैः पुष्पैर्नेमतुस्तं सर्वपापहरं विभुम् ।
प्रदक्षिणीकृत्य विभुमीयतुः क्षणमात्रतः ।।१७।।
एतदेव परं पुण्यं देवाज्जातं तयोस्तदा ।
एवं पापसमाचारौ राज्यं कृत्वाऽथ मम्रतुः ।।१८।।
बध्वा पाशैर्याम्यदूतैर्नीतौ तौ शमनान्तिकम् ।
चित्रगुप्तं समाहूय पप्रच्छ स शुभाशुभम् ।।१९।।
तेनोक्तं न तयोरस्ति पुण्यलेशो रवेः सुत ।
पापानां गणना नास्ति दूतांश्चैवेदमब्रवीत् ।।२०।।
बध्यतां बध्यतामेतौ लोहदण्डेन पात्यताम् ।
कुण्डे वीचिमये पङ्क्तिसहस्त्रपरिवत्सरान् ।।२१।।
एकैकस्मिन् क्रमेणैतौ कुण्डे भुक्त्वाऽघसञ्चयान् ।
क्षिप्यतां मृत्युलोके च नीचयोनिगतावुभौ ।।२२।।
अनयोः पुण्यलेशोऽस्ति दूताः शृणुत तत्कृतिम् ।
प्रसङ्गादर्चितो दृष्टो देव आभ्यां गजाननः ।।२३।।
तेन पुण्येन सोऽप्येतावुद्धरिष्यति तत्र वै ।
एवमाकर्ण्य तद्वाक्यं दूतैर्बद्धौ हतौ दृढम् ।।२४।।
कुम्भीपाके शोणितोदे निरये रौरवेऽपि तौ ।
निक्षिप्तौ कालकूटे च क्रमशः शतवत्सरान् ।।२५।।
तामिस्रे चान्धतामिस्रे पूयशोणितकर्दमे ।
कण्टके तु क्षताङ्गौ तौ सन्तप्तौ तप्तवालुके ।।२६।।

हातबाट उक्त मूर्तिको प्रतिष्ठा गराएका थिए । वशिष्ठले त्यस मूर्तिको नाम वरदगणेश मूर्ति राखेका थिए । वरदगणेशको दर्शनबाट मानिसका चारवटै पुरुषार्थ धर्म, अर्थ, काम र मोक्ष सिद्ध हुन्छन् । उहाँको संझना र अर्चना गर्दामात्र सम्पूर्ण कामनाहरू पूर्ण हुन्छन् यसमा कुनै सन्देह छैन ।।११-१३।। यो वशिष्ठको बचन हो । त्यसकारण यो स्थान संसारमा प्रसिद्ध भयो । राजा दशरथले श्रीगणेशको भजन, स्मरण र पूजन गर्नाले राम, लक्ष्मण, भरत र शत्रुघ्न नामक संसारमा विख्यात, सर्वज्ञ र वीर चार पुत्र प्राप्त गरेका थिए ।।१४-१५।। राजा साम्ब र त्यसका मन्त्री वनको बीचमा अत्यन्त राम्रो मन्दिर देखेर घोडाबाट ओर्लिए । ती दुवैले पत्र र पुष्प चढाएर भगवान् श्रीगणेशको पूजा एवं प्रदक्षिणा गरी शिर झुकाएर प्रणाम गरे। त्यसपछि ती दुवैले त्यहाँबाट तुरुन्तै प्रस्थान गरे । दैवसंयोगबाट यसरी पुण्य प्राप्त भयो । पापी राजा साम्ब र मन्त्री दीर्घकालसम्म राज्य गरेर मरे ।।१६-१८।। ती दुवैलाई यमका दूतहरूले पाशले बाँधेर यमराजको दरबारमा पुऱ्याए । यमराजले चित्रगुप्तलाई बोलाएर सोधे - यी दुवैका पाप-पुण्य के कस्ता छन् ? चित्रगुप्तले भने - यिनको पुण्य कत्ति पनि छैन र पापको गणना गरेर सकिँदैन । त्यसपछि यमराजले दूतहरूलाई यिनलाई बाँध, फलामको छडले प्रहार गर, हजारौं वर्षसम्म वीचिकुण्डमा दुःखभोग गराऊ । जब यी दुवैले एक-एक गरेर सम्पूर्ण पापका फल भोग्नेछन्, त्यसपछि यिनलाई मृत्युलोकतिर पठाइदेऊ । मृत्युलोकमा गएपछि यी दुवै नीचयोनिमा पैदा हुनेछन् ।।१९-२२।। हे दूत हो ! यिनीहरूको अलिकति पुण्य पनि छ, त्यो तिमीहरूले सुन । यी दुवैले शिकार खेली वनबाट घर आउने प्रसङ्गमा भगवान् श्रीगणेशको दर्शन गरेका थिए । त्यस पुण्यका कारण भगवान् श्रीगणेशले यिनीहरूलाई नरकबाट उद्धार गर्न सहयोग गर्नुहुनेछ। दूतहरूले यमको आज्ञा पाएपछि बाँधिएका ती दुवैलाई कुम्भीपाक, शोणितोद र रौरव नरकमा लगेर दुःख भोगाए । त्यसपछि ती दुवैलाई बाँधेर सय वर्षसम्म कालकूट नामक नरकमा कष्ट भोगाए । यसै क्रमले पीप र रगतको हिलोले भरिभराउ भएको तामिस्र र अन्धतामिस्र नरकमा तिनलाई कष्ट भोगाए । ती ती

विक्षतौ कृमिभिस्तत्र भृशं सूचीमुखैरुभौ ।
असिपत्रवने घोरे ततो नीतावुभावपि ।।२७।।
यत्र शस्त्राभिघातेन वर्ष्मभिद्यतिपापिनाम् ।
ततस्तप्तशिलायां तौ निष्पिष्टौ घनघाततः ।।२८।।
भुञ्जन्तौ नरकानेकविंशतिं बहुवासरम् ।
न दुःखं शक्यते वक्तुं शेषेणाऽशेषतस्तयोः ।।२९।।
एवं कति सहस्राणि भुक्त्वा भोगाननेकशः ।
निस्तीर्णभोगौ तौ पापशेषेण भुवमागतौ ।।३०।।
एको जातः काकयोनौ कौशिकोऽभूत् परोऽपि च ।
तत एको दर्दुरोऽभूदपरः सरटोऽभवत् ।।३१।।
तत एको विषधरो परोऽभूद् वृश्चिकोऽपि च ।
तत्रापि कुर्वतः पापं नानालोकान् विदंशतः ।।३२।।
श्वानमार्जारयोर्योनौ जातौ नकुलसूकरौ ।
वृकजम्बूकयोर्योनौ जातौ घोटकगर्दभौ ।।३३।।
तत उष्ट्रगजौ जातौ ततो नक्रमहाझषौ ।
ततो व्याघ्रमृगौ जातौ ततो वृषभमाहिषौ ।।३४।।
एवं नानायोनिगतौ जातौ चाण्डालकीटकौ ।
राक्षसीभिल्लयोर्योनौ ततश्चान्ते समीयतुः ।।३५।।
पिङ्गाक्षो दुर्बुद्धिरिति नाम्ना ख्यातौ च भूतले ।
आजन्मकृतपापस्य कथ्यते बहुदोषता ।।३६।।
यदा तौ राजप्रकृती आस्तां पापरतौ पुरा ।
एकं पुण्यं तयोरासीन् मृगयायां प्रसर्पतोः ।।३७।।
विनायकस्य नमनं दर्शनञ्च प्रदक्षिणा ।
अर्चनं फलपुष्पाद्यैस्तुष्ट आसीद् गजाननः ।।३८।।
अगाधं तत्तयोः पुण्यमासीत् तज्जन्मसञ्चितम् ।
यदा पुरा राक्षसोऽसौ भीमं भक्षितुमागतः ।।३९।।
स आरूढः शमीवृक्षं तत्पत्राणि च मस्तके ।
पतितानि गणेशस्य तुष्टोऽभूत् स द्वयोरपि ।।४०।।
दिव्यदेहं तयोर्दत्त्वा स्वर्लोकं प्रापयद् विभुः ।
एतत्ते कथितं पूर्वजन्मकर्म मया तयोः ।।४१।।

नरकमा कौंडाले यिनका शरीरमा छेड्ने काम गरियो र तातो बालुवामा तपाउने काम गरियो ।।२३-२६।। यिनलाई विषालु कीराहरूद्वारा टोकाउने काम गरियो । त्यसपछि दुबैलाई सूचीमुख र असिपत्र नामक घोर नरकहरूमा पुऱ्याइयो। ती ती नरकमा शरीर नै छेड्ने गरी शस्त्रको प्रहार गरेर कष्ट दिइयो भने त्यसपछि पोलेर रातो वर्ण भएको शिलामा यिनलाई राखेर घनले प्रहार गरियो ।।२७-२८।। तिनीहरूले हजारौं बर्षसम्म मुख्य - मुख्य नरकहरूमा जुन कष्ट भोगे, तिनको सम्पूर्णतया वर्णन गर्न शेषनाग पनि असमर्थ हुनेछन् ।।२९।। यसरी अनेक कष्टहरू भोगेर अलिकति पाप शेष रहेपछि ती दुबै पृथिवीमा जन्मिए। एउटा कौवा र अर्को उल्लू भएर जन्मिएका थिए । ती दुबै त्यसपछिको जन्ममा एउटा भ्यागुता र अर्को छेपारो भएर जन्मिए । अर्को जन्ममा एउटा विषधर सर्प भयो भने अर्को बिच्छीका रूपमा पैदा भयो । ती ती जन्महरूमा पनि तिनीहरूले अनेक मानिसलाई टोकेर निकै पाप कमाए ।।३०-३२।। त्यसपछि क्रमशः ती दुबै कुकुर र बिरालो, न्याउली र सुँगुर, ब्वाँसो र स्याल, घोडा र गधा, ऊँट र हात्ती, गोही र तिमिङ्गिल माछा, बाघ र मृग, गोरु र राँगो, चण्डाल र कीराका योनिहरू भोग्दै राक्षसी र भिल्लको योनिमा जन्मेका थिए । त्यस जन्ममा ती दुबै पृथिवीमा पिङ्गाक्ष र दुर्बुद्धिका नामबाट प्रसिद्ध भए । आजन्म गरेका पापका कारण अनेक दोष पैदा भएकाले तिनले अनेक कष्ट भोग्नुपऱ्यो ।।३३-३६।। ती दुबैले पापैपाप गरेका थिए। पुण्य भन्ने कुरा त एक दिन वनमा शिकार खेल्न जाँदा हुन आएको भगवान् श्रीगणेशको दर्शन, नमस्कार, प्रदक्षिणा र पूजा कर्मबाट पैदा भएको पुण्य नै थियो । त्यसबाट भगवान् गजानन प्रसन्न हुनुभयो । त्यो जन्ममा सञ्चित पुण्य अगाध थियो । पहिले जुनबेला एउटा राक्षस भीमनामक व्याधालाई खान भनी आयो, त्यसबेला त्यो व्याधा शमीको रूखमा चढेको थियो । रूखमा चढ्दा शमीका पातहरू भगवान् श्रीगणेशको मस्तकमा पर्न गए। भगवान् श्रीगणेश प्रसन्न हुनुभयो र ती दुबै पापीलाई दिव्य शरीर प्रदान गरेर आफ्नो धाममा पुऱ्याउनुभयो । हे व्यास ! मैले तिमीलाई राजा साम्ब र मन्त्री बुद्धिमान्का पूर्वजन्मका कर्म बताएँ ।।३७-४१।। शमीको

शमीपत्रार्चनादेव तुष्टोऽभूत् स गजाननः ।
यथाऽयं स्थापितस्तेन वामनेन तदप्यहम् ।।४२।।

कथयामि मुने ! सर्वं तदनुष्ठानमेव च ।
यथा च गणनाथोऽस्य प्रसन्नो वरदोऽभवत् ।।४३।।

पातले पूजा गर्नाले भगवान् श्रीगणेश प्रसन्न हुनुभयो । जसरी भगवान् वामनले वरद श्रीगणेशमूर्तिको स्थापना गर्नुभयो । त्यस विषयमा पनि म तिमीलाई बताउनेछु । त्यसपछि वामनले गरेको मन्त्रानुष्ठान र त्यसबाट कसरी भगवान् श्रीगणेश प्रसन्न एवं वरदायक हुनुभयो भन्ने समेत बयान गर्नेछु ।।४२-४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते भीमपिङ्गाक्षयोः पूर्वजन्मवर्णनं नामाष्टाविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'भीम र पिङ्गाक्षको पूर्वजन्मको वर्णन' शीर्षकान्वित अट्ठाईसौं अध्याय पूर्ण भयो ।।२८।।

ॐ

## ऊनत्रिंशोऽध्याय:        { २९ अध्याय }

क उवाच

मयाज्ञप्त: कश्यपोऽसौ सृष्टिं नानाविधां कुरु ।
स विनीतो महाज्ञानी भूतभव्यभविष्यवित् ।।१।।

अतिवैश्वानररवितेजा: सुतपसां निधि: ।
सृष्टिसामर्थ्यसम्प्राप्तौ तताप सुमहत् तप: ।।२।।

षडक्षरेण मन्त्रेण ध्यात्वा देवं गजाननम् ।
दिव्यवर्षसहस्रान्ते स देवो वरदोऽभवत् ।।३।।

ईप्सितानस्य सर्वान् स ददौ नानावरान् शुभान् ।
ततोऽसौ मनसा यद् यदकल्पयत लाघवात् ।।४।।

तत् तदग्रे पश्यति स्म वरदानप्रभावत: ।
चतुर्दशसु पत्नीषु ऋतुदानादनेकधा ।।५।।

चकार तेजसा सर्वं जगत् स्थावरजङ्गमम् ।
तासु श्रेष्ठे च द्वे पत्न्यौ दित्यदितीतिनामत: ।।६।।

अदित्याऽपि तपस्तप्तं विष्णुप्रीणनहेतवे ।
संवत्सराणामयुतं ततस्तुष्टो जनार्दन: ।।७।।

जगत्या: पालनायाऽसौ धर्मसंस्थापनाय च ।
शक्रादितत्सुतानाञ्च दुष्टानां निग्रहाय च ।।८।।

पुत्रतामगमत् तस्यास्तया पूर्वं प्रसादित: ।
अथ सा स्वामिनं प्राह दितिर्होमाय सादरम् ।।९।।

ऋतुं मे देहि भगवन् ! बाधते मदनानल: ।
इत्याकर्ण्य वचस्तस्या मुनिस्तां प्राह सादरम् ।।१०।।

अयं कालो घोररूपो होमकाल उपस्थित: ।
क्षणमाचर धैर्यं त्वं पश्चाद् रंस्ये त्वया सह ।।११।।

अस्मिन् काले भवेद् दुष्टमपत्यं देवधर्मधुक् ।
इति स्वामिवच: श्रुत्वा हस्ते धृत्वा ननाम तम् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - मैले कश्यप ऋषिलाई अनेक थरि सृष्टि गर भनेर आज्ञा दिएको थिएँ। ती कश्यप ऋषि नम्र, ठूला ज्ञानी, भूत भविष्य र वर्तमानका घटना जान्ने, सूर्य र अग्निको तेजलाई पनि जितेका, ठूला तेजस्वी थिए । तिनले सृष्टि गर्ने शक्ति प्राप्त गर्न ६ अक्षरको मन्त्रले श्रीगणेशको ध्यान गरी ठूलो तपस्या गरे । दिव्य एक हजार वर्षको समाप्तिपछि भगवान् श्रीगणेशले खुसी भएर वरदान दिनुभयो ।।१-३।। कश्यप ऋषिले चिताएका अनेक थरि वरदान श्रीगणेशले प्रदान गर्नुभएको थियो। कश्यपले मनमा जे कुरा चिताउँथे ती सजिलै उनका सामु आउँथे । यसमा भगवान् श्रीगणेशको वरदानले काम गरिरहेको थियो । कश्यप ऋषिका चौधवटी पत्नी थिए । ती सबैमा ऋतुदान गर्दा अनेक सन्तानहरूको सृष्टि भयो ।।४-५।। त्यस सृष्टिमा कश्यप ऋषिको तेजले सम्पूर्ण स्थावर र जङ्गमको संसार बन्यो । ती चौधवटी पत्नीहरूमध्ये दुईवटी पत्नीहरू श्रेष्ठ थिए । तिनमा एउटीको नाम दिति थियो भने अर्कीको नाम अदिति थियो ।।६।। अदितिले पनि भगवान् नारायणलाई प्रसन्न गराउन ठूलो तपस्या गरिन् । दशहजार वर्ष तपस्या पुगेपछि भगवान् नारायण प्रसन्न हुनुभयो। उहाँले जगत्‌को रक्षा, धर्मको पालन र इन्द्र आदि देवताका वैरीहरूको संहार गर्न अदितिका गर्भमा छोरा भएर जन्मनेछु भन्ने वचन दिनुभयो । त्यसपछि भगवान् नारायण अदितिका पुत्र बनेर पैदा हुनुभयो । एक दिन दितिले होम गर्न चाहने आफ्ना पति कश्यपलाई भनिन् - हे प्राणनाथ ! मलाई कामदेवले साह्रै सताएको छ, ऋतुदान गर्नुहोस् । दितिका यस्ता कुरा सुनेर कश्यप मुनिले भन्नुभयो - 'यो डरलाग्दो समय छ, म होममा लागिरहेको छु । तिमीले धैर्य गर र मैले पछि कुनै समयमा तिमीसँग रमण गर्नेछु ।।७-११।। अहिले रमण गरियो भने देवता र धर्मसँग द्रोह गर्ने दुष्ट छोरा पैदा हुनेछ ।' स्वामीका यस्ता वचन सुनेर दितिले उहाँका दुवै हात समाती प्रणाम गरिन् । तिनका आँखा राता थिए, ती कामदेवको

उवाच रक्तनयना दग्धुकामा जगत्त्रयम् ।
इदानीमेव मे वाञ्छा न कृता चेत् त्वया मुने ।।१३।।

देहत्यागं करिष्यामि विह्वला मदनाग्निना ।
यथा तथास्तां दैवान्मे ह्यपत्यं देवधर्मधुक् ।।१४।।

इति तद्वचनं श्रुत्वा शरणागतवत्सलः ।
ददावृतुं तदा तस्यै होमं स्नात्वा चकार ह ।।१५।।

ततश्चास्याः सुतो जज्ञे हिरण्याक्षो महाबलः ।
हिरण्यकशिपुश्चौभौ चेरतुस्तप उत्कटम् ।।१६।।

पञ्चाक्षरं महामन्त्रं पितुस्तौ बहुवत्सरम् ।
एकाङ्गुष्ठस्थितौ वायुमात्रभक्षौ सवल्मीकौ ।।१७।।

अथाययौ महादेवो वरं दातुं कृपानिधिः ।
तुष्टुवतुस्ततस्तं तौ भक्त्या देवं त्रिलोचनम् ।।१८।।

कृताञ्जलिपुटौ चोभौ प्रणिपातपुरःसरम् ।
यथाशक्ति यथाज्ञानं तद्दर्शनस्फुरन्मती ।।१९।।

यो देवो वृषवाहनो दशभुजश्चन्द्रार्द्धनागान्वितो
नानारूपगणैर्गिरीन्द्रतनयायुक्तो जगत्कारणम् ।
यो व्याघ्राजिनकृत्तिमाँस्त्रिनयनो यः शूलधृक् कामहा
भक्तेच्छापरिपूरणैकनिलयो धर्मार्थमोक्षप्रदः ।।२०।।

इति स्तुत्वा महादेवं सर्वव्यापिनमीश्वरम् ।
नमश्च चक्रतुर्देवं भक्तवाञ्छासुरद्रुमम् ।।२१।।

तावुवाच ततस्तुष्टो वृणुतं वरमित्यसौ ।
वृणुतस्तौ वरान् देवादमृतिं यक्षरक्षसः ।।२२।।

आगोले सन्तप्त भई तीनै लोकलाई डढाउने तेजले बलेकी थिइन् । तिनले भनिन् - 'हे प्राणनाथ ! म अहिले नै तपाईंसँग भोग गर्न चाहन्छु । यतिबेला भोग सम्भव भएन भने म कामाग्निमा डढेर प्राणत्याग गर्न विवश हुनेछु । देवता र धर्मको द्रोह गर्ने छोरा किन नजन्मियोस् ? म अहिले हजुरसँग रतिक्रीडा गर्न आत्तिएकी छु।' दितिका यी कुरा सुनेर आफ्नो शरणमा आएका मानिसलाई माया गर्नुहुने ऋषिले त्यस घोर बेलामा पनि ऋतुदान गर्नुभयो । त्यसपछि स्नान गरेरमात्र आफ्नो नित्य होमकार्य सम्पन्न गर्न लाग्नुभयो ।।१२-१५।। घोर बेलामा गरिएको त्यस ऋतुदानका कारण दितिका गर्भबाट हिरण्याक्ष र हिरण्यकशिपु नामक महाबली दुई भाइ दानव छोरा जन्मिए। ती दुबैले पिताबाट प्राप्त पञ्चाक्षरी महामन्त्र जपेर उत्कट तपस्या गरे। खुट्टाको बूढी औँलामा टेकेर वायुपान गर्दै तपस्यारत ती महाबली दानवहरूका शरीर धमिराको माटोले पुरिएका थिए ।।१६-१७।। जुन बेला भगवान् महादेव ती दुबैलाई वरदान दिन आउनुभयो, त्यस बेला हात जोडिरहेका र भुईँमा लम्पसार परेर प्रणाम गरिरहेका ती दानवहरूले आफ्नो ज्ञान र शिवदर्शनबाट स्फुरण भएको बुद्धिअनुसार भक्तिपूर्वक भगवान् शङ्करको स्तुति गरेका थिए - 'हे भगवन् शङ्कर ! साँढेमा सवार हुनुभएका हजुरका दश हात छन्, हजुरले अर्धचन्द्रलाई शिरमा गहना बनाएर धारण गर्नुभएको छ, घाँटीमा नागको माला लगाउनुभएको छ, अनेक थरि गणहरूका बीचमा घेरिएर बस्नुहुन्छ । हजुरले बायाँ भागमा पार्वतीलाई धारण गर्नुहुन्छ । हजुर जगत्का कारण हुनुहुन्छ । हजुरले बाघ र मृगको छाला धारण गर्नुहुन्छ । हजुर तीन आँखाले शोभायमान हुनुहुन्छ र हातमा त्रिशूलधारण गर्नुहुन्छ। हजुर कामदेवलाई भस्म गराउने अद्वितीय तेजले सम्पन्न हुनुहुन्छ । हजुर आफ्ना भक्तहरूको इच्छापूर्तिका निमित्त समर्पित हुनुहुन्छ। हजुर धर्म, अर्थ, काम एवं मोक्षका दाता हुनुहुन्छ । यस्ता सर्वगुण सम्पन्न हजुरलाई हामी प्रणाम गर्दछौं ।' यसरी सर्वव्यापी, भक्तका इच्छा पुऱ्याउनु हुने देवाधिदेव भगवान् शङ्करको स्तुति गरेर ती दुबै भाइले उहाँलाई फेरि प्रणाम गरे ।।१८-२१।। त्यसबेला भगवान् शिवजीले ती दुबैलाई भन्नुभयो - 'हे दानव वीरहरू !

किन्नरैर्मानुषश्रेष्ठैः पिशाचैश्चारणादिभिः ।
न शस्त्रैर्नार्द्रशुष्कैश्च जन्तुभिर्जलजैरपि ।।२३।।

स्थावरैर्जङ्गमैरन्यैर्न दिवा न निशासु च ।
न पृथिव्यां न चाकाशे नान्तराले तथोषसि ।।२४।।

तथेति तावुवाचेशस्तथा चान्तर्दधे हरः ।
तदैव तावजयतां रोदसी च रसातलम् ।।२५।।

देवस्थानानि सर्वाणि बलादाक्रम्य तौ स्थितौ ।
हिरण्यकशिपोर्जातः प्रह्लादो नाम नामतः ।।२६।।

तनयो विष्णुभक्तेषु गरीयान् वंशकण्टकः ।
जपन् नारायणं देवं पित्रा सन्ताडितो भृशम् ।।२७।।

अनेकयातनायां स रक्षितोऽनेकधाऽमुना ।
जले स्थले विषादग्नेर्विष्णुना करुणावता ।।२८।।

हिरण्यकशिपुः सोऽयं सर्वलोकभयङ्करः ।
नारसिंहेन वपुषा नखरैः स विदारितः ।।२९।।

वाराहेण हतः पूर्वो दंष्ट्रया वसुधा हृता ।
विरोचनसुतस्तस्य बलिस्तस्याऽभवत् सुतः ।।३०।।

विरोचनः सूर्यभक्तो मुकुटं प्राप्तवाँस्ततः ।
ऊचिवाँस्तञ्च सप्ताश्वः परहस्तो यदा स्पृशेत् ।।३१।।

मुकुटस्य तदा ध्वंसो भविता नात्र संशयः ।
स सूर्यवरदानेन चक्रे त्रिभुवनं वशे ।।३२।।

च्युतस्थानास्ततो देवा अच्युतं शरणं ययुः ।
स चिन्तां महतीं कृत्वा निश्चयं नाध्यगच्छत ।।३३।।

म तिमीहरूको तपस्याबाट प्रसन्न छु, वर माग ।' ती दुई भाइले भने - 'हे भगवन् ! देवता, यक्ष, राक्षस, किन्नर, मानिस, पिशाच र चारणहरूबाट हाम्रो मृत्यु नहोस् । हे प्रभु ! शस्त्रबाट, शीतबाट, सुकेका वस्तुबाट पनि हाम्रो मृत्यु नहोस् । हे प्रभु! कुनै स्थलजन्तु र जलजन्तुबाट पनि हाम्रो मृत्यु नहोस्। यसरी नै स्थावर एवं जङ्गमबाट पनि मृत्यु नहोस्। हे शङ्कर ! दिनमा, रातमा, पृथिवीमा, आकाशमा, पृथिवी एवं आकाशको मध्यभागमा र प्रातःकालमा समेत हाम्रो मृत्यु नहोस् । तिनीहरूले यसरी वरदान मागेपछि भगवान् शङ्कर पनि तथास्तु भनी अन्तर्धान हुनुभयो । वरदान प्राप्त गरेपछि ती दुबै दानवले धर्ती, आकाश र पातालमा विजय प्राप्त गरे ।।२२-२५।। तिनीहरूले देवताका ठूला-ठूला मन्दिरहरूमा अधिकार जमाए। हिरण्यकशिपुबाट प्रह्लाद नामक छोरा जन्मिएका थिए ।।२६।। ती प्रह्लाद विष्णुभक्तहरूमा श्रेष्ठ थिए भने राक्षस कुलका लागि कण्टक नै बन्न गए। तिनले निरन्तर भगवान् नारायणको नामजप गरेका कारण पिता हिरण्यकशिपुबाट अनेक पटक ताडना प्राप्त गरे।।२७।। पिता हिरण्यकशिपुले तिनलाई असङ्ख्य ताडना दियो। यातनाको क्रममा दयालु भगवान्ले जल, स्थल, विष र अग्निबाट आफ्ना भक्त प्रह्लादको रक्षा गर्नुभयो । त्यो हिरण्यकशिपु संसारका लागि डरलाग्दो राजा थियो । भगवान् नारायणले नरसिंहको अवतार लिएर आफ्ना नङ्ग्राहरूबाट छाती च्यातेर त्यसलाई मारिदिनुभयो ।।२८-२९।। हिरण्यकशिपुको दाजु हिरण्याक्षलाई भगवान् नारायणले वराह अवतार लिएर मारिदिनुभयो र दानवहरूले पाताल पुर्‍याएकी पृथिवीको उद्धार पनि गर्नुभयो। प्रह्लादका छोरा विरोचन भए। विरोचनका छोरा बलि भए । विरोचन सूर्यका भक्त थिए । तिनले सूर्यबाट उत्तम मुकुट प्राप्त गरेका थिए । विरोचनलाई मुकुट दिंदा सूर्यले भन्नुभएको थियो - अरू कसैका हातबाट मुकुटको स्पर्श भयो भने मुकुट ध्वस्त हुनेछ, यसमा कुनै सन्देह छैन। विरोचनले सूर्यबाट वरदान पाएर त्रिभुवनलाई नै वशमा तुल्याएका थिए ।।३०-३२।। विरोचनले वरदान प्राप्त गरेका कारण देवताहरूले आफ्नो ठाउँ छोडेर भाग्नुपर्‍यो । भागेका ती देवताहरू नारायणको शरणमा गए । भगवान्

ततस्तेन धृतं रूपं सर्वयोषिद्वरं स्त्रियः ।
तेन तं रमयामास बहुकालं विरोचनम् ।।३४।।

ततः स सुरतं कर्तुमुद्यतोऽभूत् कुबुद्धिमान् ।
ततस्तं सुदती प्राह ममैका वासनाऽस्ति भोः ।।३५।।

अभ्यङ्गं कुरु पूर्वं त्वं ततो हि रंस्यसे मया ।
इति श्रुत्वा स तद्वाक्यं कामसक्तोऽन्वमोदत ।।३६।।

उत्तार्य मुकुटं साऽथ मूर्ध्नि तैलं व्यमर्दयत् ।
स तदा शतचूर्णोऽभूत् तत्सारूप्यं स आप्तवान् ।।३७।।

नारायणले ठूलो चिन्ता लिनुभयो तर समस्याको समाधान कसरी गर्ने भन्ने कुराको निधो गर्न सक्नुभएन ।।३३।। त्यसपछि नारायणले अत्यन्त सुन्दरी नारीका रूपमा अवतार लिएर आफ्ना साथमा विरोचनलाई भोगविलासमा प्रवृत्त गराउनुभयो ।।३४।। बुद्धिभ्रष्ट भएका विरोचन ती नारीसँग रतिक्रीडा गर्न उद्यत भए । त्यस बेला सुन्दर दन्तपङ्क्तिले सुहाएकी सुन्दरीले भनिन् – हे विरोचन! मेरो एउटा तीव्र इच्छा छ । पहिले तिमीले आफ्नो शरीरमा तेलले मालिश गर अनि मसँग रमण गर । कामासक्त भएका विरोचनले ती सुन्दरीको प्रस्ताव स्वीकार गरे । आफ्नो शिरमा रहेको मुकुट उतारेर तिनले सम्पूर्ण शरीरमा तेलले मालिश गरे । सुन्दरीको स्पर्शका कारण त्यो मुकुट सय टुक्रा भएर छिन्नभिन्न भयो र विरोचनले भगवान्‌कै स्वरूप प्राप्त गरे ।।३५-३७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते विरोचनवधो नामैकोनत्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'विरोचनवध' शीर्षकान्वित उनान्तीसौं अध्याय पूर्ण भयो ।।२९।।

ॐ

# त्रिंशोऽध्यायः { ३० अध्याय }

### क उवाच

बलिस्तु हरिभक्तत्वान्न किञ्चिदन्वतप्यत ।
वेदवेदाङ्गवित् प्राज्ञः सर्वशास्त्रविशारदः ।।१।।

परनिन्दा-परद्रव्य-परद्रोहपराङ्मुखः ।
दाता यज्वा मानयिता मान्यानां परमादरात् ।।२।।

गच्छन् वदन् स्वपन् भुञ्जन् तिष्ठन्नपि जपन् पिबन् ।
ध्यायति स्म हरिं नित्यं भक्त्या संस्थिरचेतसा ।।३।।

एकदा शुक्रमाहूय परिपूज्य यथाविधि ।
पप्रच्छ तं बलिर्नीतिं शक्रो भुङ्क्तेऽमरावतीम् ।।४।।

कथञ्च भागो नास्माकं भ्रातृत्वे सततं स्थिते ।
इति मे संशयं प्राज्ञ ! छेत्तुमर्हस्यशेषतः।।५।।

### शुक्र उवाच

तव पूर्वैरेतदर्थं कृतं वैरं निरन्तरम् ।
सुरैः सार्द्धं महाभाग ! ते सर्वे नाशमापिताः ।।६।।

देवैर्विष्णुसहायैस्तु नानामायाबलाश्रयात् ।
त्यक्त्वा वैरं भवान् साधु यजतां शतसङ्ख्यया ।।७।।

तत्पुण्यस्य बलादैन्द्रं पदं पूर्णमवाप्स्यसि ।

### बलिरुवाच

सम्यगुक्तं त्वया ब्रह्मन् ! नीतिशास्त्रविशारद ।।८।।

साम्नो दानविधेर्भेदाज्जघन्यो निग्रहो मतः।
सोऽपि पुण्यबलात् सिध्येत् तस्मात् पुण्यं दृढं मतम्।।९।।

### क उवाच

एवं स निश्चयं कृत्वा वसिष्ठादीन् समाह्वयत् ।
भृग्वादींश्च मुनीन्पूज्य सुमुहूर्ते समारभत् ।।१०।।

**ब्रह्माजीले भन्नुभयो–** विरोचनको मृत्युपछि नारायणभक्त भएका कारण बलिले बाबुको मृत्युबारे त्यति चिन्ता गरेनन्। राजा बलि दैत्य भए पनि वेद-वेदाङ्गका ज्ञाता थिए ।।१।। ती बुद्धिमान् र सबै शास्त्रमा निपुण थिए। परनिन्दामा मन लगाउन्नथे र परद्रव्यको अपहरण गर्दैनथे । तिनले अरूसँग रागद्वेष गर्दैनथे। दानी, यज्ञशील, मान्यहरूको मान्यता गर्ने राजा बलि हिंड्दा, बोल्दा, शयन गर्दा, खाँदा, उभिँदा, जप गर्दा, जलपान गर्दा पनि भक्तिपूर्वक स्थिरचित्त भएर नारायणको ध्यान गर्दथे।।२-३।। एक दिन बलिले शुक्राचार्यलाई बोलाएर विधिपूर्वक सत्कार गरी राजनीतिको विषयमा प्रश्न गर्दै भने - हे गुरुदेव ! देवराज इन्द्रले अमरावतीमा राज्य गरिरहेका छन्। देवता र दानव हामी एउटै बाबुका सन्तान हौं । के देवताहरूले राज्यभोग गरिरहने र हामी हाक्रेमात्र भएर बस्ने ? हामीले पनि कसरी स्वर्गको राज्य प्राप्त गर्न सक्छौं, त्यस विषयमा उपाय बताउनुहोस् ।।४-५।। शुक्राचार्यले भने- हे राजन् ! यो तपाइँले मात्रै चिन्तन गर्नुभएको विषय होइन, तपाइँका पूर्वजहरूले पनि यसबारेमा धेरै प्रयास गरेका हुन् । यसै क्रममा देवता र दानवका धेरै पटक लडाइँ पनि भए । भगवान् नारायणको सहयोग पाएका देवताहरूले अनेक थरि इन्द्रजाल, माया र कपटको आश्रय लिएर दैत्यहरूलाई जितेका हुन् । तपाईंले देवताहरूसँग वैरभाव छाडेर एक सय अश्वमेध यज्ञ गर्नुहोस् ।।६-७।। अश्वमेध यज्ञको पुण्यबाट तपाईंले इन्द्रको पद पाउनु हुनेछ ।

**बलिले भने** - हे गुरुदेव ! हजुरले राम्रो उपाय बताउनुभयो। हजुर नीतिशास्त्रका विद्वान् हुनुहुन्छ । साम, दाम र भेदभन्दा पछिल्लो उपाय निग्रह नै हो । त्यो पनि पुण्यबाट मात्र प्राप्त हुनसक्छ । त्यसकारण पुण्यलाई नै राज्यप्राप्तिको सुदृढ उपाय बताइएकोछ ।।८-९।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी निश्चय गरेर बलिले वशिष्ठ आदि ऋषि र भृगु आदि मुनिहरूलाई बोलाई ती सबैको पूजा गरेर सम्पूर्ण व्यवस्था उत्तम भएको र आनन्द प्रदान गर्ने

यज्ञं महासमारम्भं सर्वानन्दकरं परम् ।
सर्वे ते यज्ञकुण्डानि प्राचीसाधनपूर्वकम् ।।११।।

चक्रुश्च कारयामासुर्यज्ञसम्भारसञ्चयान् ।
वेदिकामण्डपादींश्च भूमिशोधनपूर्वकम् ।।१२।।

कृत्वाऽऽभ्युदयिकं श्राद्धं स्वस्तिवाचनपूर्वकम् ।
मातृणां पूजनं कृत्वा स्थापयामासुरादरात् ।
मन्त्रैर्नानाविधैर्विप्राः सर्वा मण्डपदेवताः ।।१३।।

रेजाते दम्पती तत्र श्वेतवस्त्रावलङ्कृतौ ।
अमात्यराजसुहृदां पौराणाञ्च गणैर्वृतौ ।।१४।।

सम्मानिताः स्त्रियोऽपश्यन् गवाक्षैस्तं महोत्सवम् ।
अन्वारब्धा ब्राह्मणास्ते पूर्वाङ्गानि न्यवर्तयन् ।।१५।।

आलभन्त पशुं वेदकल्पवाक्यानुसारतः ।
तत्तद्देवाय तन्मन्त्रैर्जुह्वति स्म विधानतः ।।१६।।

यज्ञवाटे चतुर्द्वारि सर्वेषामनिवारिते ।
आयान्ति यान्ति सर्वेऽपि पूजितास्त्रिविधा जनाः ।।१७।।

विवदन्ते महावादैरेकतो विदुषां जनाः ।
नृत्यन्त्यप्सरसोऽन्यत्र पठन्ते वैदिकाः किल ।।१८।।

गायन्ति वैष्णवाः शैवा मृदङ्गतालवादनैः।
भुञ्जते ब्राह्मणाः स्वेच्छाभोजनं षड्रसैः क्वचित् ।।१९।।

कथयन्ति कथा नानाकथाः शृण्वन्ति मोदकाः ।
एवं सुवितते यज्ञे वसिष्ठाद्या महर्षयः ।।२०।।

वसोर्धारां सुमहतीं पातयामासुरग्निषु ।
उत्तराङ्गाणि सम्पाद्य रथे तौ स्थाप्य दम्पती।।२१।।

कर्तुं चावभृथस्नानं सर्वे लोका विनिर्ययुः ।
नानावादित्रनिर्घोषैर्वरबन्दीरवैरपि ।।२२।।

वेदघोषैर्बहुविधैः सामगानैर्हरिप्रियैः।
स्नात्वाऽऽगत्य हरिं सोऽथ तोषयामास तान् द्विजान्।।२३।।

अनेकरत्ननिचयैर्धनैर्वस्त्रैरनेकशः।
गोभिरश्वैर्गजैर्गन्धैरिच्छाविषयपूरणैः।।२४।।

अश्वमेध यज्ञ उत्तम मुहूर्तमा आरम्भ गरे। शास्त्रको विधिअनुसार यज्ञकुण्डको निर्माण आरम्भ भयो । मानिसहरूले यज्ञका सामग्रीहरू जम्मा गर्ने काम आफै गरे र अरुबाट पनि गराए। वेदीनिर्माण, मण्डपनिर्माण, भूमिशोधनजस्ता काम सम्पन्न गरेपछि स्वस्तिवाचनपूर्वक आभ्युदयिक श्राद्ध पनि गरियो । मातृकाहरूको पूजा गरेर प्रतिष्ठा गर्ने काम भयो । अनेक थरि मन्त्रहरूबाट ब्राह्मणहरूले मण्डपदेवताको पूजा गरे ।।१०-१३।। मन्त्री, छिमेकी राजा, मित्र र नागरिकहरूसहित राजा बलि र तिनको रानी स्वच्छ र सफा वस्त्र धारण गरी यज्ञस्थलमा शोभायमान भए । सम्मानित नारीहरूले घरका झ्यालमा बसेर यज्ञमण्डपको शोभा हेरिरहेका थिए। यज्ञमा वरण गरिएका ब्राह्मणहरूले पूर्वाङ्ग कर्म समाप्त गरे ।।१४-१५।। वेद र कल्पशास्त्रअनुसार पशुहरूको आलम्भन भयो । जुन देवताको जुन मन्त्र हो त्यसलाई उच्चारण गरेर होम आरम्भ गरियो । यज्ञस्थलमा चारवटा मूलढोका थिए। त्यहाँ आउन-जान कसैलाई रोकावट थिएन । ब्राह्मण, क्षत्रिय र वैश्यहरू यज्ञदर्शनका लागि आइजाइ गरिरहेका थिए । यज्ञमण्डप नजिकै रहेको अर्को मण्डपमा विद्वान्हरू शास्त्रको विचार-विमर्श गरिरहेका थिए। यज्ञमण्डप नजिकै निश्चित ठाउँमा अप्सराहरू नाचिरहेका थिए । कहीं वैदिकहरूले मन्त्रपाठ गरेका थिए । वैष्णवहरूले भगवान्को नाम गायन गरिरहेका थिए । शैवहरूले मृदङ्ग र ताल बजाएर भगवान् शिवजीको आराधना गरिरहेका थिए । ब्राह्मणहरूले इच्छानुसार ६ किसिमका रसले परिपूर्ण भोजन ग्रहण गरिरहेका थिए ।।१६-१९।। कथा वाचकहरूले कथा भनिरहेका थिए। सुन्ने मानिसहरू आनन्दपूर्वक कथाश्रवण गरिरहेका थिए । यस्तो विशाल यज्ञमा वशिष्ठ आदि महर्षिहरूले वसुधारा दिने काम सम्पन्न गराए । उत्तराङ्गमा गर्नुपर्ने सबै काम गरी यज्ञ सकिएपछि राजा-रानीलाई रथमा राखेर यज्ञान्तस्नान गर्नका लागि बाजागाजासहित सबै मानिसहरू नदीतीरमा गए । त्यस बेला वेदघोष गुञ्जिएको थियो । सामगान भइरहेको थियो। स्तुतिपाठकहरूले स्तुति पढिरहेका थिए। स्नान गरेर फर्केपछि राजा बलिले भगवान् नारायणको आराधना गरी अनेक थरि धन, रत्न, वस्त्र, गाई, घोडा, गन्धगज र इच्छा गरिएका अन्य पदार्थ दान गरेर ब्राह्मणहरूलाई सन्तुष्ट बनाए ।।२०-२४।।

एकोनशतमेवं ते तस्य यज्ञानपारयन् ।
शते यज्ञे समारब्धे शक्रश्चिन्तां परां ययौ ।।२५।।

कनीयांसं स शरणं स्वपदभ्रंशशङ्कया।
क्षीरसागरमध्यस्थं शेषशायिनमीश्वरम् ।।२६।।

मया संवाहितपदं सेव्यमानं सुरैरपि ।
गीयमानं नारदेन वीणाहस्तेन सादरम् ।।२७।।

तुम्बुरुप्रमुखैरन्यैरप्सरोगणकिन्नरैः ।
अस्तौदसौ हरिर्दृष्ट्वा तं हरिं स्वेष्टसिद्धये।
प्रणम्य सम्पुटं कृत्वा पाण्योर्भावेन सादरम् ।।२८।।

शक्र उवाच

नमोऽनन्तशक्ते ! नमो विश्वयोने !
नमो विश्वभर्त्रे नमो विश्वकर्त्रे ।
नमो दैत्यहन्त्रे नमोऽनेकरूप !
नमो भक्तचित्तार्थदायाऽस्तु नित्यम् ।।२९।।

क उवाच

एवं स्तुत्वाऽब्रवीदेनं वासवो बलिचेष्टितम् ।
बलिर्विरोचनसुतो विख्यातो भुवनत्रये ।।३०।।

ग्रहीष्यति मम पदं मखाच्छतगुणादयम् ।
यावत्तस्य भवेद् वाणी सर्वं ज्ञातं तु विष्णुना ।।३१।।

तत ऊचे स भगवानिन्द्रं सङ्कटचिन्तया ।
मम भक्तो बलिः शक्र ! तपस्वी विजितेन्द्रियः ।।३२।।

तपसः फलमेतेन भोक्तव्यं श्रुतिवाक्यतः ।
न जायते वृथा कर्म शुभं वा यदि वाऽशुभम् ।।३३।।

साधयिष्ये भवत्कार्यं स्थिरीकुरु मनो हरे !
ततः स गर्भतां पेदे चादित्या जठरे विभुः।।३४।।

यस रीतिबाट राजा बलिले उनान्सय अश्वमेध यज्ञ पूरा गरेका थिए । तिनले अन्तिम अश्वमेध आरम्भ गरेपछि स्वर्गका राजा इन्द्रलाई ठूलो चिन्ता पऱ्यो ।।२५।। बलिले सय यज्ञ पूरा गरे भने मैले इन्द्र पद छाड्नु पर्नेछ र यो पदमा राजा बलि आएर बस्नेछन्। यस्तो चिन्ता गरेर देवराज इन्द्र पदच्युति हुने शङ्काले क्षीरसागरको माझमा विराजमान शेषशायी, ब्रह्मद्वारा पाउ दबाई सेवा गरिनुभएका, देवताहरूद्वारा सेवा गरिनुभएका, वीणाधारी नारदजीको वीणागानबाट आराधित र तुम्बुरु आदि प्रमुख गन्धर्व, किन्नर एवं यक्षहरूका गीत, वाद्य र नृत्यद्वारा आराधित, आफ्ना भाइ परमेश्वर श्रीनारायणका समीपमा गई हात जोडेर भावपूर्वक स्तुति गरे ।।२६-२८।।

**इन्द्रले भन्नुभयो-** हे अनन्तशक्तिसम्पन्न ! हे विश्वकारण परमेश्वर हजुरलाई नमस्कार गर्दछु । विश्वका रचयिता र पालक हजुरलाई नमस्कार गर्दछु । हे अनेक रूपधारी प्रभु ! दैत्यहरूको नाश गर्ने हजुरलाई नमस्कार गर्दछु । भक्तिपूर्वक आराधना गर्ने भक्तहरूले चिताएको कामना प्रदान गर्नुहुने हजुरलाई नमस्कार गर्दछु ।।२९।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी स्तुति गरेर देवराज इन्द्रले राजा बलिको गतिविधिको विषयमा भगवान् नारायणलाई अवगत गराउँदै भने - विरोचनको छोरा बलि तीनै लोकमा विख्यात छ। त्यो अहिले सयौं अश्वमेध यज्ञ पूरा गर्दैछ । त्यो यज्ञ पूरा भयो भने त्यसले मेरो इन्द्रपद खोस्नेछ । इन्द्रका यी कुरा सुन्नासाथ भगवान्‌ले सबै रहस्य बुझ्नुभयो ।।३०-३१।। त्यसपछि भगवान्‌ले भन्नुभयो - 'हे इन्द्र ! मेरो भक्त राजा बलि तपस्वी र जितेन्द्रिय छ । आफूले गरेको तपस्याको फल त्यसले पाउनुपर्छ। वेदका वाक्यले कर्मानुसार फल प्राप्ति हुने विषय बताएका छन् । वेदको भनाइअनुसार जुन उद्देश्यले कर्म गरिन्छ त्यो राम्रो अथवा नराम्रो जस्तोसुकै भए पनि खेर जाँदैन । तिम्रा कार्य म सिद्ध गर्नेछु । हे इन्द्र ! तिमीले मन स्थिर बनाऊ। म अदिति आमाको गर्भबाट तिम्रो भाइ भएर जन्मनेछु ।' इन्द्रलाई यसरी उपदेश दिएपछि अन्तर्यामी भगवान् नारायणले अदितिको गर्भमा प्रवेश गर्नुभयो । कश्यप ऋषिकी पत्नी अदितिले पनि गर्भधारणका

सुषुवे नवमे मासि साऽदितिस्तनयं शुभम् ।
प्रभया तस्य ते दीपा निष्प्रभत्वमुपागताः ।।३५।।

स्नात्वा शीतजलेनाशु जातकर्म यथाविधि।
चकार कश्यपो धीमान् स्वस्तिवाचनपूर्वकम् ।।३६।।

कृत्वा पितृमहायज्ञं मातृपूजनपूर्वकम् ।
ददर्श बालकं पश्चात् प्राशयित्वा घृतं मधु।।३७।।

ह्रस्वं पृथुलमूर्धानं लघुपादं बृहत्तनुम् ।
दिव्यज्ञानसमायुक्तं दिव्यदेहञ्चतुर्भुजम् ।।३८।।

नानालङ्कारसंयुक्तं ज्ञात्वा विष्णुमथानमत् ।
उवाच च प्रसन्नात्मा तपो वंशोऽद्य चक्षुषी ।।३९।।

ज्ञानं तथाऽऽश्रमो धन्यो धरा स्वर्गो रसातलम् ।
धन्यास्तद्दर्शनादेते सच्चिदानन्दरूपिणः ।।४०।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यमुवाच जगदीश्वरः।
अदित्यास्तपसा तुष्टः पुत्रत्वमहमागतः।।४१।।

हर्तुं भूभारमतुलं ज्येष्ठकार्यञ्च साधितुम्
इत्युक्त्वा प्राकृतो भूत्वाऽरुदत् स्तन्यं पपावथ ।।४२।।

नामनिष्क्रमणं कर्म चक्रेऽन्नप्राशनं मुनिः।
तृतीये चौलमब्दे स पञ्चमे व्रतबन्धनम् ।।४३।।

नौ महिना पूरा भएपछि सुन्दर बालकलाई जन्म दिइन् । त्यस बालकको कान्तिले त्यस बेला बलिरहेका बत्तीहरू मन्द भएका थिए )।३२-३५।( बालकलाई चिसो पानीले स्नान गराएपछि छिट्टै त्यसको जातकर्म संस्कार विधिपूर्वक सम्पन्न गरियो । कश्यप ऋषिले स्वस्तिवाचनपूर्वक आभ्युदयिक श्राद्ध र मातृकाको पूजन गरे । त्यसपछि घिउ, मह चटाएर बालकको मुख हेर्ने काम गरे। बालकको शरीर भने सानो थियो तर शिर ठूलो थियो । तिनका खुट्टा साना थिए र शरीर मोटो थियो । बालक दिव्य ज्ञानले सम्पन्न थिए । ती दिव्य शरीरद्वारा शोभायमान, चतुर्बाहु र नाना थरि अलङ्कारले अलङ्कृत थिए । कश्यप ऋषिले ती बालकलाई विष्णुकै अवतार हुन् भन्ने जानेर नमस्कार गरे । त्यसपछि प्रसन्न हुँदै भने – हे प्रभु! हजुरले पुत्रका रूपमा अवतरण गर्नुभएर मेरा तप, आत्मा, वंश, नेत्र, ज्ञान र आश्रम सबैलाई धन्य तुल्याउनुभएको छ। हजुरको यस अवतरणबाट पृथिवी, स्वर्ग र पाताल सबै धन्य भएका छन् । सच्चिदानन्द स्वरूप हजुरको दर्शन पाउनाले संसार नै धन्य भएको छ ।।३६-४०।।

**ब्रह्माजीले भन्नुभयो-** 'हे व्यास ! कश्यप ऋषिका वचन सुनेपछि बालकरूप भगवान्ले भन्नुभयो – 'आमा अदितिको तपस्याबाट प्रसन्न भई आज म तपाईँहरूको छोराका रूपमा पृथिवीको भार हरण गर्न र देवताहरूको कार्य सिद्ध गर्न अवतरित भएको छु ।' यसो भनेर चतुर्बाहु भगवान् सामान्य बालक बनेर रुनुभयो र आमाका स्तन चुस्न थाल्नुभयो । ऋषि कश्यपले नामकर्म, निष्क्रमण, अन्नप्राशनजस्ता संस्कार सम्पन्न गरे । बालक तीन वर्षका भएपछि चौलसंस्कार र पाँच वर्ष लागेपछि व्रतबन्ध संस्कार सम्पन्न भयो।।४१-४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते वामनावतारकथनं नाम त्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'वामन अवतारवर्णन' शीर्षकान्वित तीसौँ अध्याय पूर्ण भयो ।।३०।।

ॐ

## एकत्रिंशोऽध्यायः { ३१ अध्याय }

क उवाच

वेदांश्च चतुरः साङ्गानध्यापयत तं मुनिः।
एकस्मिन् दिवसे तातं वामनः पर्यपृच्छत ।।१।।

केनोपायेन देवानां पदप्राप्तिर्भविष्यति।
भूभारहरणं तन्मे यथावद् वक्तुमर्हसि ।।२।।

कश्यप उवाच

उपदेशं करिष्यामि मन्त्रस्य सिद्धिदस्य ते ।
षडक्षरस्य विघ्नेशतोषकस्य ममात्मज।।३।।

तस्मिन् प्रसन्ने विघ्नेशे जगत्स्थित्यन्तकारिणि ।
अनेकब्रह्माण्डविधौ सर्वकारणकारणे ।।४।।

सर्वे कामाः प्रसिध्यन्ति तदर्थं यत्नमाचर ।

क उवाच

एवमुक्त्वा ददौ तस्मै सुमुहूर्ते महामनुम् ।।५।।

तदैव चलितस्तस्मादाश्रमाद् हर्षसंयुतः ।
प्रणम्य तमनुज्ञाप्य जगाम तपसे शिशुः ।।६।।

भ्रमता ददृशे तेन विदर्भे स्थानमुत्तमम् ।
लतावृक्षसमाकीर्णं कासारपरिशोभितम् ।।७।।

तत्र पद्मासनं कृत्वा जजाप तं मनुं शुभम् ।
षडक्षरं वर्षमात्रं निराहारो जितेन्द्रियः।।८।।

निर्वाणं तस्य तज्ज्ञात्वाऽऽविरासीत् सिद्धिबुद्धियुक्।।९।।

मयूरवाहनो देवः शुण्डादण्डविराजितः।
विलसद्दशदोर्दण्डो रत्नमालाविभूषितः ।।१०।।

आशीविषलसन्नाभिर्नानालङ्कारशोभितः ।
आगतो दृढभक्तं तं धेनुर्वत्समिवादरात् ।।११।।

वामनस्तं पुरो दृष्ट्वा सर्वतेजोऽभिभाविनम् ।
सर्वसिद्धिकरं देवं सर्वविघ्ननिवारणम् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - पाँचौं वर्षमा व्रतबन्ध कर्म सकेपछि मुनि कश्यपले आफ्ना बालक पुत्रलाई अङ्गसहित चारै वेद पढाए । एकदिन बालक वामनले आफ्ना बाबु कश्यपसँग सोध्नुभयो - हे पिताश्री! कुन उपायबाट देवताहरूले आफ्नो पद प्राप्त गर्न सक्दछन् र मैले कसरी पृथिवीको भार हरण गर्न सक्दछु ? यस विषयमा हजुरले राम्ररी उपदेश गर्नुहोस्।।१-२।।

**कश्यपले भन्नुभयो** - हे बालक! तिमीलाई सिद्धि प्रदान गर्ने र भगवान् गणेशलाई सन्तुष्ट तुल्याउने छ अक्षरको मन्त्रको उपदेश गर्नेछु।।३।। जगत्को सृष्टि, स्थिति र संहार गर्ने, अनेक ब्रह्माण्डहरूका रचयिता, सबै कारणका पनि परम कारण भगवान् श्रीगणेश प्रसन्न हुनु भएपछि सम्पूर्ण इच्छाहरू पूरा हुन्छन्। त्यसका लागि तिमीले प्रयत्न गर ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी बालक वामनलाई आज्ञा दिएर कश्यप ऋषिले उत्तम मुहूर्तमा गणेशको महामन्त्र सुनाए ।।४-५।। मन्त्र प्राप्त गरेपछि हर्षित भएका बालक वामन आफ्ना पितालाई प्रणाम गरेर उहाँसँग आज्ञा लिई तपस्याका लागि तत्कालै आश्रमबाट वनतर्फ लाग्नुभयो ।।६।। वामनले वनमा भ्रमण गर्दा विदर्भ देशमा लता एवं वृक्षहरूले घेरिएको र तलाउहरूद्वारा शोभायमान उत्तम स्थान देख्नुभयो । त्यहाँ पद्मासन लगाएर वामनले एक वर्षसम्म निराहार रही इन्द्रिय जितेर निरन्तर छ अक्षरको मन्त्र जपिरहनु भयो ।।७-८।। वामनको त्यो त्याग देखेर सिद्धि-बुद्धिसहित, मयूरमा सवार हुनुभएका, लामो सूँडद्वारा शोभायमान, अत्यन्त तेजोमय, दश बाहु धारण गर्नुहुने, रत्नमालाद्वारा विभूषित, नाभिमा शेषनागलाई धारण गर्नुभएका र अनेक थरि अलङ्कारद्वारा अलङ्कृत भगवान् गणेश प्रकट हुनुभयो । जसरी कुनै गाई आफ्नो बाच्छाको मायाले नजिकमा जान्छिन् त्यसैगरी दृढ सङ्कल्प सम्पन्न भक्तका सामु भगवान् गणेश प्रकट हुनुभएको थियो ।।९-११।। तपस्वी वामनले आफ्ना सामु सबै तेजलाई तिरस्कृत गर्ने, सबै प्रकारका विघ्न निवारण गर्ने र सबै प्रकारका सिद्धि प्रदान गर्ने भगवान् श्रीगणेशलाई देखेर परम भक्तिपूर्वक स्तुति गर्नुभयो।।१२-१३।।

तुनाव परया भक्त्या देवदेवं गजाननम् ।।१३।।

वामन उवाच

अव्यक्तं व्यक्तहेतुं निगमनुततनुं सर्वदेवाधिदेवं
ब्रह्माण्डानामधीशं जगदुदयकरं सर्ववेदान्तवेद्यम् ।
मायातीतं स्ववेद्यं स्थितिविलयकरं सर्वविद्यानिधानं
सर्वेशं सर्वरूपं सकलभयहरं कामदं कान्तरूपम् ।।१४।।

तं वन्दे विघ्नराजं विधिहरमुनिभिः सेव्यमानं सनागै-
स्तेजोराशिं त्रिसत्यं त्रिगुणविरहितं तत्त्वमस्यादिबोध्यम्।
भक्तेच्छोपात्तदेहं निजजनसुखदं तत्त्वबुद्धिप्रकाशं
साम्बाद्यैः स्तूयमानं सकलतनुगतं भुक्तिमुक्तिप्रदं तम्।।१५।।

क उवाच

इति स्तुतो देवदेवः प्रसन्नः प्राह वामनम् ।
वरं वरय तुष्टोऽहं यत्ते मनसि वर्तते ।।१६।।

स्तोत्रेण तपसा चैव परितुष्टो ददामि तत् ।

वामन उवाच

न ते स्वरूपं विदुरब्जजाद्या
ब्रह्मर्षयो ये सनकादिकाद्याः।
दृष्टोऽसि स त्वं जगतामधीश !
त्वत्तः कमन्यं वरमद्य याचे।।१७।।

अथापि ते वाक्यभिदाभयात् त्वां
याचे वरं तं मम नाथ! देहि।
पराजयो मे न भवेत् कदापि
कार्येऽखिले विघ्नभयं न च स्यात् ।।१८।।

उद्यतोऽस्ति बलिः शक्रपदमत्तुं क्रतोर्बलात् ।
स च मां शरणं यातस्तस्य सिद्धिर्यथा भवेत् ।।१९।।

**वामनले भन्नुभयो** - अव्यक्त स्वरूप धारण गर्नुहुने, व्यक्त जगत्‌का एक मात्र कारण, वेद-वेदाङ्ग आदिद्वारा स्तुति गरिनु भएका, सबै देवताहरूका पनि परम देवता, अनन्त ब्रह्माण्डका स्वामी, जगत्‌को उदयका कारण, सम्पूर्ण वेदान्त शास्त्रद्वारा जानिनुहुने, मायाभन्दा पर रहनु भएका, आत्माद्वारा जान्न योग्य, संसारको पालन र संहार गर्नुहुने, सबै विद्याका खजाना, सबैका स्वामी, सम्पूर्ण प्राणीहरूमा आत्मतत्त्वका रूपमा विराजमान, सबैका मनमा रहेका भय-शङ्कालाई मेटाउनु हुने, अत्यन्त सुन्दर स्वरूपले सम्पन्न, भक्तका मनका कामनाहरूलाई पूरा गरिदिनुहुने, ब्रह्मा, शिव र ऋषिमुनिहरूद्वारा सेवा गरिनु भएका, तेजका पुञ्ज, भूत, भविष्यत् र वर्तमान कालमा सत्यका रूपमा विराजमान, तीनै प्रकारका गुणहरूद्वारा रहित, तत्त्वमसि आदि वेदका वाक्यहरूद्वारा जान्न सकिने, भक्तको इच्छा पूरा गर्न अवतार धारण गर्नुहुने, सबैलाई सुख प्रदान गर्नुहुने, तत्त्वबुद्धिद्वारा प्रकाशित हुनुहुने, पार्वती परमेश्वर आदि विशिष्ट ईश्वरहरूद्वारा स्तुति गरिनुभएका, सम्पूर्ण प्राणीहरूको हृदयमा अन्तर्यामी बनेर बस्नुहुने र भुक्ति एवं मुक्तिका दाता भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु।।१४-१५।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी स्तुति गरिएका देवताका पनि देवता श्रीगणेश प्रसन्न हुनुभयो र उहाँले वामनलाई सम्बोधन गर्दै भन्नुभयो - हे वामन ! म तपाईँसँग प्रसन्न भएको छु, तपाईँको मनमा कुन कामना रहेको छ ? मलाई बताउनुहोस्, म वरदान दिन्छु।।१६।। म तपाईँले गरेको तपस्या र स्तुतिबाट प्रसन्न छु ।

**वामनले भन्नुभयो** - हे भगवन् ! ब्रह्मा आदि देवता र सनक, सनन्दन आदि ब्रह्मर्षिहरूले पनि हजुरको स्वरूपलाई यथार्थमा जान्दैनन्। आज जगत्‌का स्वामी हजुरको दर्शन गर्ने अवसर पाएको छु। यस दर्शनको महिमाभन्दा ठूलो अरू कुन कुरा हुन सक्दछ ? मैले वरदान याचना गर्ने कुनै विषय रहेको छैन तापनि हजुरको आज्ञाको मर्यादा राख्न म माग्दछु- हे अनाथका नाथ ! हजुरले मेरा ती याचना पूरा गर्नुहोस्। कसैबाट पनि मेरो पराजय नहोस्, कुनै पनि कार्य गर्दा विघ्नको भय नहोस् ।।१७-१८।। आज दैत्यराज बलिको उदय भइरहेको छ । तिनले इन्द्रको पद प्राप्त गर्न यज्ञ गरिरहेका छन् । उता देवराज इन्द्र पनि पदच्युतिको भयले मेरो शरणमा आउनुभएको

तथा कुरु जगत्कर्तर्यदि तुष्टोऽसि मेऽनघ ।

गजानन उवाच

एतत्ते भविता सर्वं स्मरणान् मम सुव्रत ।।२०।।
सेत्स्यन्ति सर्वकार्याणि महान्ति च लघूनि च ।

क उवाच

एवमुक्त्वा गते देवे वामनोऽकारयच्छुभाम् ।
काश्मीरोपलजां सोऽथाऽस्थापयन्मूर्तिमुत्तमाम् ।।२१।।

चतुर्भुजां त्रिनयनां शुण्डादण्डविराजिताम् ।
प्रसन्नकरिहस्तेन भक्तानामभयप्रदाम् ।।२२।।

स्मरणाद् दर्शनाद् ध्यानात् पूजनात् सर्वकामदाम् ।
प्रासादं कारयामास रत्नकाञ्चननिर्मितम् ।।२३।।

तत्रैकं ब्राह्मणं स्थाप्य ग्रामं दत्त्वा धनानि च ।
त्रिकालं पूजनं तस्य कारयामास तेन सः ।।२४।।

आगतः स्वगृहं नत्वा पितरं सर्वमब्रवीत् ।
तपश्च तत्फलं चाथ यज्ञं गन्तुमपृच्छत ।।२५।।

कश्यपेनाऽभ्यनुज्ञातो वामनो दर्भदण्डभृत् ।
सूत्रकृष्णाजिनधरो मेखली यज्ञमाययौ ।।२६।।

ह्रस्वाकृतिं मुनिं दृष्ट्वा मुनयो विस्मितास्तदा ।
नायं मुनिर्यतस्तेजो दृश्यते परमाद्भुतम् ।।२७।।

तं दृष्ट्वा परमायान्तं बलिरुत्थाय सत्वरम् ।
कोऽसि त्वमिति पप्रच्छ नत्वा तं कुत आगतः ।।२८।।

किं वाञ्छसि वद विभो ! पिता माता च कौ तव ।
वसतिस्तव कुत्रास्ति तत ऊचे स वामनः ।।२९।।

छ । हे निष्पाप परमेश्वर ! यदि हजुर मसँग सन्तुष्ट हुनुहुन्छ भने देवराज इन्द्रको कार्यसिद्धि हुने उपाय मलाई बताउनुहोस्।

**श्रीगणेशले भन्नुभयो** - हे सुव्रत वामन ! मेरो स्मरण गरेका कारण तपाईंले मागेका सबै वर परिपूर्ण हुनेछन् र तपाईंले गरेका साना-ठूला सबै कार्य सफल हुनेछन्।

**ब्रह्माजीले भन्नुभयो** - यसरी वरदान दिएर भगवान् श्रीगणेश अन्तर्धान हुनुभएपछि वामनले काश्मीरमा पाइने शिला कुँदेर अत्यन्त राम्रो र अत्यन्त उत्तम गणेशको मूर्ति तयार गरी प्रतिष्ठा गर्नुभयो ।।१९-२१।। वामनले बनाउनुभएको त्यो मूर्ति चार हातले सुहाएको थियो, तीन आँखाले युक्त लामो सूँढले सुहाएको सफा, सुन्दर हातीको सूँढद्वारा भक्तलाई अभय प्रदान गर्ने मुद्राले सम्पन्न थियो । त्यो मूर्ति स्मरण, दर्शन, ध्यान र पूजन आदि कर्म गर्दा सबैको कामना पूरा गर्न समर्थ थियो । उक्त मूर्तिको प्रतिष्ठापछि वामनले रत्न र सुवर्णद्वारा सुन्दर मन्दिर निर्माण गर्नुभयो । त्यस मन्दिरमा पूजा सञ्चालन गर्न एउटा ब्राह्मणलाई पुजारीका रूपमा नियुक्त गर्नुभयो र तिनलाई गाउँ एवं धन-सम्पत्ति प्रदान गर्नुभयो । यसरी वामनले आफूले स्थापना गरेको भगवान् गणेशको तीनै कालमा पूजा गर्ने व्यवस्था बाँध्नुभयो ।।२२-२४।। त्यसपछि वामनले घरमा आएर आफ्ना पितालाई तपस्यासम्बन्धी सम्पूर्ण घटना निवेदन गरी आफ्ना पितासँग राजा बलिको यज्ञमा जान आज्ञा माग्नुभयो। कश्यप ऋषिबाट आज्ञा प्राप्त गरेपछि भगवान् वामन कुश, दण्ड, जनै, कालो मृगचर्म र मेखला धारण गरी राजा बलिद्वारा यज्ञको आयोजना गरिएको ठाउँमा जानुभयो। यज्ञका ब्राह्मणहरू सानो आकारका मुनिलाई देखेर चकित भए। तिनले मनमनै भने - 'यी त मुनिमात्र होइनन्, यिनमा अत्यन्त अद्‌भुत तेज देखिन्छ।' त्यस्ता तेजस्वी ब्राह्मणलाई आफ्नो यज्ञस्थलमा आएको देखेर राजा बलि तुरुन्तै उभिए। नजिकमा गएर तपाईं को हुनुहुन्छ र कहाँबाट आउनुभएको हो ? के चाहनुहुन्छ ? तपाईंका माता-पिता को हुन् ? तपाईंको बसाइँ कहाँ छ ? हे ज्ञानी ब्राह्मण देवता ! बताउनुहोस् भनी प्रश्न गरे। त्यसपछि वामनले पनि उत्तर दिनुभयो।।२५-२९।।

न स्मरे पितरौ राजन्ननाथं विद्धि मां कृशम् ।
त्रैलोक्ये वसतिर्मेऽस्ति याचे भूमिं त्रिभिः पदैः ।।३०।।

मितां कर्तुं पर्णकुटीं शक्तिश्चेदस्ति दीयताम्।

क उवाच

इति वाक्यं मुनेः श्रुत्वा हृदि ज्ञात्वा कृपायुतम् ।।३१।।
तं दातुमुद्यतं भूमिमूचे काव्यो बलिं तदा।

शुक्र उवाच

न ब्राह्मणो हरिरयं कपटं रूपमास्थितः।।३२।।

हरिष्यति त्रिभुवनं पदत्रयमिषेण तु।
मा दीयतामस्य किञ्चिदिति सत्यं ब्रवीमि ते ।।३३।।

तमुवाच महादैत्यो मूढ ! किं वदसे वचः।
हरिश्चेद् विमुखो गच्छेत् सर्वं मे सुकृतं नयेत् ।।३४।।

अस्मात् पात्रं किमन्यत् स्यादस्मै दत्तमनन्तकम् ।
इत्युक्त्वा तं पुनः प्राह वामनं दैत्यपुङ्गवः ।।३५।।

ब्रह्मन् ! दत्ता मया भूमिः सङ्कल्पः क्रियतामिति।
वामनः प्राह राजानं सङ्कल्पयितुमुद्यतम् ।।३६।।

तावद्धारां निरुध्यैव स्थितः शुक्रोऽन्यदेहतः ।
ददौ शलाकां तत्पात्रे भग्ननेत्रो बहिर्गतः ।।३७।।

ततः पाणितले तस्य वामनस्य जलं ददौ ।
स्मृत्वा गणेशं ववृधे वामनो हर्षनिर्भरः ।।३८।।

हे राजन् ! मेरा माता-पिता को हुनुहुन्छ, मलाई संझना छैन। मलाई एउटा अनाथ र दुर्बल ब्राह्मण भनेर चिन्नुहोस्। मेरो स्थायी घर छैन। तीन लोक नै मेरो घर हो। म एउटा झुपडी बनाउन तीन पाइलामात्रको जमिन माग्न आएको छु। तपाईंको सामर्थ्य छ भने त्यति जमिन मलाई दिनुहोस्।

**ब्रह्माजीले भन्नुभयो -** पुड्को आकारका ब्राह्मण बालकका यस्ता वचन सुनेर यी कुनै कृपालु देवता हुन् भन्ने कुरा हृदयमा विचार गरी राजा बलि जमिन दान गर्न तयार भए। त्यसबेला तिनका गुरु शुक्राचार्यले भने।

**शुक्राचार्यले भने** - हे राजन् ! यी बालक ब्राह्मण होइनन्, यी त कपटरूप लिएर तपाईंलाई झुक्याउन आएका नारायण भगवान् नै हुन्। तीन पाइला जमिनको निहुँबाट सम्पूर्ण त्रिलोकलाई नै यिनले अपहरण गर्नेछन्। हे राजन् ! तपाईंले यिनलाई केही पनि नदिनुहोस्। म तपाईंसँग साँचो कुरा गर्दैछु।।३०-३३।। शुक्राचार्यको कुरा सुनेपछि महादैत्य बलिले आफ्ना गुरुलाई भने - 'ए मूढ ब्राह्मण ! तपाईं के कुरा गरिरहनु भएको छ ? यदि मेरो ढोकाबाट नारायण रित्तै फर्कनु भयो भने मेरा सम्पूर्ण पुण्य पनि लिएर जानुहुनेछ। भगवान् नारायण नै आउनुभएको छ भने उहाँभन्दा उपयुक्त दान दिन योग्य अर्को सुपात्र कुन पाउन सकिन्छ ? भगवान् नारायणलाई दिएको दान अनन्त फलदायक हुन्छ।' यसरी आफ्ना गुरुलाई उत्तर दिएर राजा बलिले भिक्षा माग्न आएका वामनलाई भने- 'हे ब्राह्मण ! मैले तपाईंलाई जमिन दिएँ। बलिको अनुरोध स्वीकार गरी सङ्कल्प गराउन चाहने भगवान् वामनले बलिलाई सङ्कल्प लिन लगाउनुभयो। त्यस बेला शुक्राचार्यले अति सूक्ष्म रूप धारण गरी सङ्कल्पका लागि प्रयोग गरिने जलपात्रको जलधारा रोक्ने काम गरे। भगवान् वामनले शुक्राचार्यको गोप्य चाला बुझेर पानीको भाँडामा सुईरो रोप्नुभयो। त्यो संयोगवश शुक्राचार्यको सूक्ष्म शरीरको आँखामा लाग्नाले शुक्राचार्य घाइते भएर जलनिरोध गर्ने काम छोडी अन्यत्र लागे ।।३४-३७।। शुक्राचार्य जलनिरोध गर्न विफल भएपछि राजा बलिले कुश-जल लिएर सङ्कल्प गरी त्यो कुश-जल वामनका हातमा राखिदिए। त्यसबेला हर्षित हुनुभएका वामनले श्रीगणेशको स्मरण गर्नुभयो र आफ्नो शरीर बढाउन थाल्नुभयो ।।३८।।

मूर्ध्न्याक्रम्य स्वर्गलोकमेकपादेन रोदसी ।
पातालान्यपरेणापि दत्तं तन्मस्तकेऽपरम् ।।३९।।

तत ऊचे बलिं देवो गच्छ त्वं धरणीतलम् ।
त्वां विनाऽहं कथं यामीत्येवमाह बलिस्तु तम् ।।४०।।

इत्याकर्ण्य वचस्तस्य पुनस्तं प्राह वामनः ।
सान्निध्यं मम तत्रापि भविता मदनुग्रहात् ।।४१।।

इन्द्रो मां शरणं यातः प्रियं कार्यं हि तस्य मे।
तवापि मम भक्तस्य प्रियं पश्चाद् भविष्यति ।।४२।।

ऐन्द्रे पदे निवृत्तेऽस्य पदं दास्ये तवैव तत् ।
ततो ब्रह्मादयो देवास्तुष्टुवुर्वामनं विभुम् ।।४३।।

मुमुचुः पुष्पवर्षाणि वाद्यानि ववदुः सुराः।
पुपूजुस्तेऽपि सर्वे च जगुश्च ननृतुः परे ।।४४।।

ततश्चाऽन्तर्दधे देवो वामनोऽनन्तविक्रमः।
स्वं स्वं स्थानं गता देवा यथापूर्वं मुदान्विताः।।४५।।

क उवाच

एवं तेन कृता मूर्तिर्विख्याताऽभूज्जगत्त्रये।
गजाननस्य देवस्य सर्वेषां कामदा नृणाम् ।।४६।।

इत्येतत् कथितं सर्वं प्रसङ्गाद् बलिचेष्टितम् ।
लाघवं वामनस्यापि महिमा सुमुखस्य ह ।।४७।।

अदोषाख्ये पुरे तेन स्थापितस्य महात्मना ।
दशबाहोः प्रसिद्धस्य देवदक्षिणभागतः ।।४८।।

प्रियत्वं तस्य शम्यास्ते कथयिष्येऽधुना स्फुटम् ।।४९।।

जमिन र अन्तरिक्ष उहाँको एउटा पाइलामा अटाए। अर्को पाइलामा पाताल आदि सात लोकहरू अटाए। त्यसपछि कुनै ठाउँ नभएका कारण उहाँले तेस्रो पाइला बलिको शिरमा राख्नुभयो। त्यसपछि भगवान् वामनले भन्नुभयो – हे दैत्यराज बलि ! तिमी हारेका छौ, अब पातालमा गएर बस। बलिले भने- हे भगवन्! सर्वस्व त्याग गरेर हजुरको आज्ञा पालन गर्दा मलाई खुसी लागेको छ तर हजुरविना म पातालमा कसरी जाऊँ ? बलिका यी कुरा सुनेर भगवान् वामनले भन्नुभयो – हे राजन् ! तिमीमाथि कृपा गर्नका लागि म त्यहाँ पनि तिम्रा समीपमा नै रहनेछु। अहिले देवराज इन्द्र मेरो शरणमा आएका छन् । मैले तिनको कार्य गर्नुछ। इन्द्रको कार्य सम्पन्न गरेपछि मैले मेरा भक्तको कार्य पनि सम्पन्न गर्नेछु।।३९-४२।। जुन बेला इन्द्रको पदावधि समाप्त हुनेछ, त्यस बेला मैले तिमीलाई इन्द्रपदमा नियुक्त गर्नेछु। त्यसपछि यज्ञस्थलमा दर्शनका लागि आएका ब्रह्मा आदि देवताहरूले सर्वव्यापक भगवान् वामनको स्तुति गरे, फूल वर्षाए र अरू देवताहरूले दिव्य बाजा बजाउँदै पूजा सम्पन्न गरे। कुनै देवता गाउन थाले र कुनै नाच्न थाले । त्यसपछि अनन्त पराक्रमसम्पन्न भगवान् वामन अन्तर्धान हुनुभयो । देवताहरू पनि हर्षपूर्वक आ-आफ्नो धाममा फर्के।।४३-४५।। ब्रह्माजीले भन्नुभयो- भगवान् वामनले बनाउनु भएको श्रीगणेशको मूर्ति सबै मानिसहरूका मनकामना पूर्ण गराउने मूर्तिका रूपमा तीनै लोकमा विख्यात भयो। हे व्यास ! मैले प्रसङ्गले राजा बलिको चरित्र सुनाएँ र भगवान् वामनको चतुरताको विषयमा पनि जानकारी गराएँ। यसका साथै महान् आत्मा वामनद्वारा अदोषपुरमा स्थापित, दश भुजा धारण गर्नुभएकाले दशभुजका नामबाट प्रसिद्ध सुमुख भगवान्को महिमा पनि बताएँ । अब म भगवान्कै दायाँ भागमा अर्पण गर्दा उहाँलाई प्यारो लाग्ने शमीको महिमा बताउनुका साथै भगवान्लाई शमी किन प्यारो लाग्छ भन्ने विषयमा पनि राम्ररी बताउनेछु ।।४६-४९।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते वामनविक्रमो नामैकत्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'भगवान् वामनको पराक्रमवर्णन' शीर्षकान्वित एकतीसौं अध्याय पूर्ण भयो ।।३१।।

ॐ

## द्वात्रिंशोऽध्यायः { ३२ अध्याय }

क उवाच

शृणुष्वावहितो ब्रह्मन्नितिहासं पुरातनम् ।
प्रियव्रतायाऽकथयत् स्वयमेव गजाननः ।।१।।

गजानन उवाच

महिमानं शृणुष्वार्य ! शमीपत्रस्य सत्फलम् ।
न यज्ञैर्न च दानैश्च व्रतैः कोटिशतैरपि ।।२।।

न जपैः पूजनैर्वापि मम तोषस्तथा भवेत् ।
न पद्मैर्नान्यकुसुमैः शमीपत्रैर्यथा भवेत् ।।३।।

शमीति कीर्तनादेव पापं नश्यति वाचिकम् ।
स्मरणान्मानसं पापं स्पर्शनात् कायजं तथा ।।४।।

नित्यं तत्पूजनाद् ध्यानाद् वन्दनाच्चैव भक्तितः।
निर्विघ्नकरमायुष्यं ज्ञानं पापक्षयोऽपि च ।।५।।

वाञ्छासिद्धिरचापल्यं जायते नात्र संशयः।

मुनिरुवाच

कोऽसौ प्रियव्रतो राजा किंशीलः कुत्र वाऽभवत् ।।६।।

कथं वै तस्य कथिता गुणाः शम्या महात्मना ।
एनं मे संशयं ब्रह्मन् ! कृपया नुद सुव्रत ।।७।।

क उवाच

अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ।
शङ्करस्य च संवादं पार्वत्या सह पुत्रक।।८।।

पार्वत्युवाच

कथं शमी प्रिया देव ! सर्वज्ञ ! जगदीश्वर !
गजाननस्य मे शंस यदि ते मय्यनुग्रहः।।९।।

शङ्कर उवाच

शृणु प्रिये ! प्रवक्ष्यामि कथामेकां शुचिस्मिते ।
यथा प्रिया गणेशस्य शमीति ज्ञास्यते तथा।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! सावधान भएर स्वयं भगवान् श्रीगणेशले राजा प्रियव्रतलाई सुनाउनु भएको पुरानो इतिहास सुन ।।१।।

**श्रीगणेशले भन्नुभयो** - हे प्रियव्रत ! तिमीले उत्तम फल दिने शमीपत्रको महिमा सुन । यज्ञ, दान र करोडौं व्रत गर्दा पनि शमीपत्रबाट गरिने पूजाको फल पाउन सकिंदैन। जप र पूजाबाट पनि मलाई त्यति सन्तोष हुँदैन जति सन्तोष शमीपत्रद्वारा पूजा गर्दा हुन्छ।।२-३।। अरू फूल र कमलका फूलहरूद्वारा पूजा गर्दा त्यति सन्तोष हुँदैन जति सन्तोष मलाई शमीपत्रद्वारा पूजा गर्दा हुन्छ। मुखले शमी भनेर उच्चारण गर्दा वाणीबाट भएको पाप नष्ट हुन्छ, शमीलाई संझदा मनले गरेको पाप नष्ट हुन्छ र शमीलाई हातले स्पर्श गर्दा शरीरले गरेको पाप नष्ट हुन्छ।।४।। भगवान् गणेशलाई शमीको पात अर्पण गरेर भक्तिपूर्वक दिनदिनै पूजा, ध्यान र नमस्कार गर्नाले कार्यहरूमा विघ्न आउँदैन, आयुको वृद्धि हुन्छ, ज्ञान प्राप्त हुन्छ, पाप नाश हुन्छ, मनले चिताएका कुरा पूर्ण हुन्छन् र स्वभावमा चञ्चलता रहँदैन। यसमा कुनै सन्देह छैन।

**व्यासले भन्नुभयो** - हे भगवन् ब्रह्माजी ! प्रियव्रत राजा को हुन् ? तिनको भित्री सदाचार कस्तो थियो ? कुन ठाउँमा जन्म लिएका थिए ? किन कसले तिनलाई शमीका गुण सुनाउनु भएको थियो ? मलाई यस्ता प्रश्नहरूले सन्देह पैदा गराइरहेका छन्, हजुरले त्यो सन्देह मेटाइदिनुहोस्।।५-७।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! यस सम्बन्धमा विद्वान्हरूले शङ्कर र पार्वतीको संवादमा आधारित एउटा इतिहास भन्ने गरेका छन् ।।८।।

**पार्वतीले भन्नुभयो** - हे जगदीश्वर शङ्कर ! श्रीगणेशलाई किन शमी प्यारो लाग्छ ? यदि हजुरको ममाथि कृपा छ भने मलाई बताउनुहोस्।।९।।

**शिवजीले भन्नुभयो**- पवित्र मुस्कान भएकी हे प्यारी पार्वती। शमी श्रीगणेशलाई किन प्यारो लाग्छ भन्ने कुरा बताउन म तिमीलाई एउटा कथा सुनाउँछु। त्यस कथाबाट तिमीले शमीको महिमा थाहा पाउनेछ्यौ ।।१०।। पुरानो समयमा अत्यन्त उत्तम

प्रियव्रतो नाम राजा पूर्वमासीन्महामतिः।
सत्यवान् धर्मसम्पन्नो धर्मात्मा शंसितव्रतः ।।११।।
तेजस्वी च वदान्यश्च वेदशास्त्रार्थतत्त्ववित् ।
सर्वलक्षणसम्पन्नश्चतुरङ्गबलाधिकः ।।१२।।
पालयामास पृथिवीं प्रजाः पुत्रानिवौरसान् ।
कीर्तिश्च प्रथमा भार्या प्रभा तस्यापराऽभवत् ।।१३।।
धूर्तश्च कुशलस्तस्य प्रकृती सम्बभूवतुः ।
कुशलौ नीतिशास्त्रेषु षडाननपराक्रमौ ।।१४।।
बुद्ध्या पराक्रमेणापि रसा सर्वा वशीकृता ।
स तु राजा वशं नीतः प्रभया तस्य भार्यया ।।१५।।
क्रीडतेऽहर्निशं सोऽथ नानालङ्कारशोभया ।
यौवनाक्रान्तवपुषा रम्भादिभ्योऽतिरम्यया ।।१६।।
क्षणमात्रं न सहते वियोगं स तया सह ।
धिक्करोति सदा ज्येष्ठां तद्वचो न शृणोत्यपि ।।१७।।
रुषा निरीक्षते तां स तन्मृतिं चिन्तयत्यपि ।
स्वयं न भाषते किञ्चिन्न गृह्णाति तयाऽर्पितम् ।।१८।।
ततस्तस्याऽभवत् पुत्रः प्रभायां पतिसन्निभः।
जातकर्म च राजाऽस्य कृत्वा धर्ममनेकधा ।।१९।।
नाम चास्याऽकरोत् पद्मनाभ इत्थं द्विजेरितम् ।
शुक्लपक्षे यथा चन्द्रो ववृधे सोऽपि बालकः।।२०।।
बुद्धिमान् कुशलो युद्धे पितृतोऽप्यधिकोऽभवत् ।
पञ्चमे व्रतबन्धञ्च चकाराऽस्य नृपस्तदा ।।२१।।
प्रियव्रतो महाबुद्धिर्मद्राणामधिपो बली ।
पाञ्चालराजकन्यां स भार्यां तस्याप्यमेलयत् ।।२२।।
अतिवैभवयुक्तौ तौ विवाहं चक्रतुस्तयोः।
कदाचिदस्य सा पत्नी ज्येष्ठा दासीत्वमापिता ।।२३।।
पादसंवाहनं कर्तुमागता भर्तृसन्निधिम् ।
निपपात महीपृष्ठे सपत्न्या चरणाहता ।।२४।।

बुद्धि भएका सत्यवादी, धर्मात्मा, उत्तम व्रत गर्ने, तेजस्वी, उदार दाता, वेद र शास्त्रका रहस्य ज्ञाता, सबै प्रकारका लक्षणले सम्पन्न, हात्तीसेना, रथसेना, अश्वसेना र पैदल सेनाले सम्पन्न प्रियव्रतनामक राजा थिए। तिनले पृथिवीको रक्षा गर्दै आफ्नै सन्तानसरह प्रजाको पालन गरेका थिए। तिनकी जेठी रानीको नाम कीर्ति थियो र कान्छी रानीको नाम प्रभा थियो ।।११-१३।। तिनका धूर्त र कुशलनामक दुई मन्त्री थिए। ती मन्त्रीहरू नीतिशास्त्रमा कुशल र भगवान् कार्तिकेयझैं पराक्रमी पनि थिए। ती मन्त्रीहरूले आफ्नो पराक्रम र बुद्धिबाट सम्पूर्ण पृथिवीलाई वशमा तुल्याएका थिए। राजा प्रियव्रत भने आफ्नी कान्छी रानी प्रभाको वशमा परेका थिए।।१४-१५।। वास्तवमा प्रभा अत्यन्त सुन्दर वस्त्र र गहनाले सजिएकी, मस्त जवानीका गुणले सम्पन्न, रम्भा आदि अप्सराहरूभन्दा पनि राम्री थिइन्। राजा प्रियव्रत प्रभासँग अहोरात्र भोगविलासमा लिप्त थिए र एकछिन पनि छुट्टिन सक्दैनथे। तिनले सधैं आफ्नी जेठी रानी कीर्तिलाई गाली गर्थे, धिक्कार गर्थे र तिनका कुरा सुन्न पनि चाहँदैनथे। राजाले तिनलाई रीसले बाङ्गो आँखाले हेर्ने गर्थे र यो मरे हुन्थ्यो भनेर मनमनै प्रार्थना गर्दथे। आफू कीर्तिसँग कहिल्यै पनि बोल्दैनथे र तिनले दिएका कुरा पनि ग्रहण गर्दैनथे ।।१६-१८।। कान्छी महारानी प्रभाबाट प्रियव्रतलाई आफूसमान रूप र गुणले सम्पन्न छोरा पैदा भयो । छोरा जन्मेपछि जातकर्म संस्कार गरी अनेक थरिका धार्मिक क्रियाकलाप पनि सम्पन्न गरे । ब्राह्मणको भनाइअनुसार त्यस बालकको नाम पद्मनाभ राखियो। त्यो बालक शुक्लपक्षको चन्द्रमाझैं बढ्न थाल्यो।।१९-२०।। राजकुमार पद्मनाभ बुद्धिमान्, चतुर र सङ्ग्राममा आफ्नो बाबुभन्दा पराक्रमी हुने लक्षणले सम्पन्न थियो। पाँच वर्ष पुगेपछि राजा प्रियव्रतले आफ्ना छोरा पद्मनाभको व्रतबन्ध संस्कार सम्पन्न गरे।।२१।। मद्रदेशका अधिपति अत्यन्त बुद्धिमान् प्रियव्रत राजाले पाञ्चाल देशकी राजकन्यासँग आफ्नो छोराको विवाह गर्ने कुरा चलाए । पछि दुबै सम्पन्न राजघरानाले विवाह गर्ने निधो गरे र अत्यन्त ऐश्वर्यपूर्ण शैलीमा विवाह भयो । एक दिनको कुरा हो, प्रियव्रत राजाकी जेठी रानी कीर्ति कमारीसरह जीवनयापन गरिरहेकी थिइन्। तिनी रातको समयमा आफ्ना श्रीमान्को चरण दबाउन भनी प्रियव्रतको कोठामा गइन्। तिनलाई कोठामा आएको देखेर कान्छी रानी

दुःखिता रुदती ह्रीणा जगाम निजमन्दिरम् ।
कमहं शरणं यायां को मे दुःखं व्यपोहयेत् ।।२५।।

सपत्न्याऽमानितायाया मे त्राता स्याद्धरिरव्ययः।
स्मृतमात्रस्तु यस्त्राता द्रौपद्याः करुणानिधिः ।।२६।।

यां नैव मनुते भर्ता न कोऽपि मनुतेऽपि ताम् ।
अतो न जीवितेनार्थः शोषयिष्ये कलेवरम् ।।२७।।

पिबे हालाहालं वापि पते वापीं जलान्विताम्
न मनो निश्चयं याति तस्या विह्वलचेतसः ।।२८।।

एतस्मिन्नन्तरे दैवाद् देवलो ब्राह्मणोत्तमः।
पुरोहितः समायातः स जगाद गजाननीम् ।।२९।।

उपासनां क्लेशहन्त्रीं सर्वकामफलप्रदाम् ।।
सा तदैव प्रपद्याशु मूर्तिं मन्दारनिर्मिताम् ।।३०।।

गजाननस्य सम्पूज्य स्नात्वा शुद्धदिने तु सा ।
उपविष्टा पूजयितुं परमेण समाधिना ।।३१।।

त्यक्त्वा हरं हरिं चाम्बां तेजोयुक्तं परं रविम् ।
सर्वैः सम्पूज्यते देवदेव आदौ गजाननः ।।३२।।

विचार्यमाणे पञ्चानां भेदो नैवोपलभ्यते ।
यो भेदेनेक्षते चैतान् स याति नरकान् नरः ।।३३।।

एक एव परानन्दपूर्णोऽसौ परमेश्वरः ।
स्वेच्छया पञ्चधा जातो लोकानुग्रहकारणात् ।
एक एव पुमान् यद्वत् पुत्रमातुलनामभिः ।।३४।।

सा सम्यक् षोडशभिस्तमुपचारैः पुपूज ह ।
दूर्वापुष्पैर्दक्षिणाभिर्नमस्कारैरनेकधा ।।३५।।

कृत्वा करपुटं सा तु तुष्टाव जगदीश्वरम् ।

प्रभाले लात्तीले हिर्काएर भुईंमा लडाइन् ।।२२-२४।। त्यसपछि आफ्नी सौताद्वारा ताडना गरिएकी दुःखित र लज्जित जेठी रानी कीर्ति रुँदै आफ्नो कोठामा आइन्। त्यहाँ तिनले मनमनै भनिन् - 'अब म कसको शरणमा जाऊँ ? कसले मेरो दुःख हरिदेला?'।।२५।। सौताद्वारा हेपिएकी मेरा लागि भगवान् नारायण-बाहेक अरू को रक्षक हुनसक्छ ? दयालु भगवान् हरिले संझना गर्नासाथ द्रौपदीको रक्षा गर्नुभएको थियो। जुन नारीलाई पतिले तिरस्कार गर्दछन् तिनलाई अरू सबैले तिरस्कार गर्दछन् । मलाई बाँचेर पनि केही लाभ छैन। मैले अब तपस्या गरी शरीर सुकाऊँ कि? अथवा विषपान गरूँ कि? अथवा पानीले भरिएको पोखरीमा हाम फालेर प्राणत्याग गरूँ कि? यस्तै चिन्ता र तर्क गरिरहेकी रानी कीर्तिले कुनै निधो गर्न सकिनन्। ती अत्यन्त व्याकुल र पागलजस्ती भएकी थिइन्।।२६-२८।। त्यसबेला दैवसंयोगबाट आफ्ना कुलपुरोहित उत्तम ब्राह्मण देवल तिनका समीपमा आए । तिनले रानी कीर्तिलाई मनले चिताएका सम्पूर्ण इच्छा पुऱ्याउने र सबै प्रकारका कष्ट नाश गर्ने गणेशको उपासनाको सम्बन्धमा बताए। त्यसपछि ती रानी कीर्तिले शुद्ध दिनमा स्नान गरेर पारिजातबाट बनाइएको भगवान् श्रीगणेशको मूर्तिमा बाह्य पूजा गरी फेरि उत्तम समाधिद्वारा भगवान् गणेशको आभ्यन्तर पूजा गर्न तत्पर भइन्।।२९-३०।। कीर्तिले भगवान् शिव, भगवान् नारायण, भगवती पार्वती, तेजस्वी भगवान् सूर्य यी सबै देवताहरूलाई छाडेर भगवान् श्रीगणेशको पूजा गरिन्, किनकि ती सबै देवताहरूले पनि सर्वप्रथम भगवान् गणेशकै आराधना गर्दछन् ।।३१-३२।। गहिरिएर विचार गर्दा शक्ति, शिव, नारायण, सूर्य र गणेश यी पाँच देवताहरूमा कुनै अन्तर छैन। जसले भेददृष्टिले हेर्दछ त्यो मानिस नरकमा जान्छ। एउटै आनन्दस्वरूप परमेश्वरले संसारको कल्याण गर्ने उद्देश्यले स्वेच्छापूर्वक आफूलाई पाँच रूपमा विभक्त गरेका हुन्। जसरी एउटै पुरुष कसैको छोरा र कसैको मामा बन्दछ त्यसैगरी परमेश्वर पनि कहीं श्रीगणेश, कहीं शिव, कहीं नारायण, कहीं सूर्य र कहीं देवीका रूपमा देखिनुहुन्छ।।३३-३४।। यस्तो विचार गरेर कीर्तिले सोह्र प्रकारका उपचारहरूद्वारा दूर्वाङ्कुर, पुष्प, दक्षिणा र नमस्कार चढ्याएर धेरै पटक भगवान् श्रीगणेशको पूजा गरिन् । पूजापछि हात जोडेर जगदीश्वर श्रीगणेशको प्रार्थना गरिन् ।

कीर्तिरुवाच

त्वमेव जगदाधारस्त्वमेव सर्वकारणम् ।।३६।।

त्वमेव ब्रह्मा विष्णुश्च वृहद्भानुस्त्वमेव हि ।
चन्द्रो यमो वैश्रवणो वरुणो वायुरेव च ।।३७।

त्वमेव सागरा नद्यो लताकुसुमसंहति:।
सुखं दुखं तयोर्हेतुस्त्वं नाशस्त्वं विमोचक: ।।३८।।

इष्टविघ्नकरो नित्यं महाविघ्नकरो विराट् ।
त्वमेव पुत्रलक्ष्मीदस्त्वमेव सर्वकामधुक् ।।३९।।

त्वमेव विश्वयोनिश्च त्वमेव विश्वहारक: ।
त्वमेव प्रकृतिस्त्वं वै पुरुषो निर्गुणो महान् ।।४०।।

त्वमेव शशिरूपेण सर्वमाप्यायसे जगत् ।
त्वमेव भूतभव्यञ्च भाविभावात्मक: स्वराट् ।।४१।।

शरण्य: सर्वभूतानां शत्रूणां तापन: पर:।
कर्मकाण्डपरो यज्वा ज्ञानकाण्डपर: शुचि: ।।४२।।

सर्ववेत्ता सर्वविधि: सर्वसाक्षी च सर्वग:।
सर्वव्यापी सर्वविष्णु: सर्वसत्यमय: प्रभु:।।४३।।

सर्वमायामय: सर्वमन्त्रतन्त्रविधानवित् ।।४४।।

**कीर्तिले भनिन् -** हे भगवन् गणेश ! हजुर नै संसारका आधार हुनुहुन्छ, हजुर नै सम्पूर्ण संसारका मूल कारण हुनुहुन्छ, हजुर नै ब्रह्मा, विष्णुका रूपमा प्रकट हुनुहुन्छ, हजुर नै अत्यन्त तेजस्वी सूर्यका रूपमा आकाशमा विचरण गर्नुहुन्छ, हजुर नै चन्द्रमा, यमराज, कुबेर, वरुण र वायुका रूपमा रहनुहुन्छ।।३५-३७।। हजुर नै सागर, नदी, लता र फूलको समुदायमा रहनुहुन्छ। सुख र दु:ख पनि हजुरका नै स्वरूप हुन्। सुख र दु:खका कारण पनि हजुर नै हुनुहुन्छ। नाशको रूपमा पनि हजुर नै रहनुहुन्छ र नाशलाई समाप्त पार्ने अर्थात् नाशका नाशक पनि हजुर नै हुनुहुन्छ।।३८।। हजुर विघ्नकर्ता हुनुहुन्छ भने महाविघ्नकर्ता विराट् पनि हजुर नै हुनुहुन्छ। हजुर नै पुत्र र सम्पत्तिका दाता हुनुहुन्छ । हजुरले नै सबै मानिसहरूका कामनाहरू पूरा गर्नुहुन्छ।।३९।। हजुर नै विश्वका मूल कारण हुनुहुन्छ भने हजुरले नै विश्वको संहार पनि गर्नुहुन्छ। हजुर नै प्रकृतिका रूपमा रहनुहुन्छ र पुरुषका रूपमा पनि देखिनुहुन्छ। हजुर नै प्रधानका रूपमा हुनुहुन्छ र निराकार, निर्गुण परमात्मा पनि पनि हजुर नै हुनुहुन्छ।।४०।। हजुरले नै चन्द्रमाको रूपमा उदाएर सम्पूर्ण जगत्लाई तृप्त गर्नुहुन्छ। हजुर नै भूत, वर्तमान र भविष्यको रूपमा हुनुहुन्छ र स्वयंप्रकाश पनि हुनुहुन्छ ।।४१।। हजुर शरणमा आएकालाई शरण दिने कृपालु हुनुहुन्छ र शत्रुका नाशक पनि हुनुहुन्छ। हजुर नै कर्मकाण्डका कर्ता यज्वा हुनुहुन्छ र हजुर नै पवित्र अध्यात्मका साधक पनि हुनुहुन्छ।।४२।। हजुर सर्वज्ञ, सम्पूर्ण विधिविधानका स्रोत, विश्वव्यापी र सर्वसाक्षी पनि हुनुहुन्छ। हजुर सर्वव्यापक हुनुहुन्छ । हजुर विष्णुका रूपमा विराजमान हुनुहुन्छ र सत्यका रूपमा विराजमान परमेश्वर हुनुहुन्छ। हजुर सम्पूर्ण मायाका अधिपति हुनुहुन्छ र सबै मन्त्र एवं तन्त्रका विधानहरूका ज्ञाता एवं तत्त्ववेत्ता पनि हुनुहुन्छ।।४३-४४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते कीर्तिस्तवनं नाम द्वात्रिंशोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'रानी कीर्तिद्वारा भगवान् श्रीगणेशको स्तुति' शीर्षकान्वित बत्तीसौं अध्याय पूर्ण भयो ।।३२।।

ॐ

# त्रयस्त्रिंशोऽध्यायः { ३३ अध्याय }

क उवाच

एवं साऽनुदिनं पूज्य तुष्टाव तं विनायकम् ।
एकस्मिन् दिवसे तस्याः सख्यो दूर्वार्थमाययुः ।।१।।

शुक्रमासवशान्नापुः क्वापि दूर्वाङ्कुरान् शुभान् ।
शमीपत्राणि भूयांसि गृहीत्वा तु तदन्तिकम् ।।२।।

आययुः परमश्रान्ता दूर्वाऽभावं न्यवेदयन् ।
शमीपत्रैः पुपूजैनं सर्वोपचारपूर्वकम् ।।३।।

दूर्वां विना निराहाराऽतिष्ठत् सा नियमे रता
तस्य तुष्टिः परा जाता शमीपत्रैः समर्पितैः ।।४।।

अशेत तत्पुरः स्वप्नमपश्यत् सा महाद्भुतम् ।
अब्दान्ते सैव मूर्तिस्तामिमां वाचमुवाच ह ।।५।।

वरं ददामि ते सुभ्रु ! शमीपत्रैः सुतोषितः।
सा नोवाच यदा किञ्चित् कीर्तिः सा तां पुनर्जगौ ।।६।।

मूर्तिरुवाच

वश्यस्ते भविता कान्तो भोगाश्चानेकशः शुभाः।
मद्भक्तिनिरतः पुत्रो भविष्यति महाबलः।।७।।

क्षिप्रप्रसादनेत्येवं कुरु नामास्य सुन्दरम् ।
तुर्येऽब्देऽस्य विषान्मृत्युर्भविष्यति पुनः क्षणात् ।।८।।

गृत्समदो द्विजोऽभ्येत्य पुनस्तं जीवयिष्यति।
राज्यकर्ता चिरायुश्च धर्मशीलो भविष्यति ।।९।।

इदं स्तोत्रं पठेद् यस्तु मम सन्तोषकारणम् ।
तस्य वश्यो भवेद् राजा किमन्यः प्राकृतो जनः ।।१०।।

पुत्रवान् धनसम्पन्नो वेदवेदाङ्गपारगः ।
बुद्धिश्च वर्धते तस्य मेधावृद्धिर्भवेद् दृढा ।।११।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी ती कीर्तिले दिनदिनै भगवान् श्रीगणेशको पूजा गरी प्रार्थना गर्दथिन्। एक दिनको कुरा हो, तिनका सँगिनीहरू तिनले पूजा गरिरहेको ठाउँबाट दूबो खोज्न मैदानतर्फ गए।।१।। जेठको महिना भएकाले तिनले दूबो प्राप्त गर्न सकेनन्। त्यसपछि दूबोको सट्टा तिनले धेरै शमीका पात टिपेर ल्याए। दूबोको खोजी गर्दा थाकेका ती सँगिनीहरूले आएर भने – 'हे महारानी ! दूबो पाइएन, त्यसको सट्टा शमीका पात टिपेर ल्याएका छौं, तपाईंले यिनै पातबाट भगवान् श्रीगणेशको पूजा गर्नुहोस् ।।२–३।।' दूबोको अभावका कारण निराहार रही यम र नियमपूर्वक पूजा गरिरहेकी कीर्तिलाई दूबोको सट्टा शमीको पात पाएपछि भित्रभित्रै सन्तोषको अनुभव भयो ।।४।। यसरी एक दिन शमीका पातले भगवान्को पूजा गरी सुतेपछि अद्भुत सपना देखिन्। एक वर्षपछि फेरि त्यही सपना देखियो। त्यस सपनामा भगवान् श्रीगणेशको मूर्तिको वाणी सुनियो – 'हे सुन्दरी ! तिमीले एक वर्षसम्म निरन्तर शमीका पात चढाएर पूजा गरिरहेकी छ्यौ, म त्यसबाट खुसी भएको छु।' मूर्तिको यो वाणी सुनेर कीर्ति मौन रहिन्। त्यसपछि मूर्तिबाट फेरि वाणीको उच्चारण भयो ।

**मूर्तिबाट वाणी भयो** – 'हे सुन्दरी ! तिम्रा पति अनुकूल हुनेछन्। अनेक प्रकारका मङ्गलमय भोग प्राप्त गर्नेछ्यौ, तिमीले मेरो सेवा गर्ने, सज्जन र महाबलि पुत्र प्राप्त गर्नेछौ ।।५–७।। पुत्र पैदा भएपछि त्यसको क्षिप्रप्रसादन भनी नामकरण गर । त्यो बालक चार वर्षको हुँदा विषप्रयोगका कारण त्यसको मृत्यु हुनेछ। मृत्युकालमा तत्काल बालकका सामु गृत्समदनामक ब्राह्मण आइपुग्नेछन् र तिनले मरेका बालकलाई जियाउनेछन्। त्यसपछि तिम्रा ती पुत्र ठूला शासक, चिरञ्जीवी र धर्मात्माका रूपमा प्रसिद्ध हुनेछन् ।।८–९।। तिमीले जुन स्तोत्रको पाठ गर्‍यौ त्यो मेरा निमित्त सन्तोषदायक छ। त्यसको पाठबाट मानिसले राजालाई पनि वशमा तुल्याउन सक्नेछ। अरू सामान्य मानिसलाई वशमा ल्याउने विषयमा त कुरा नै नगरौं । यस स्तोत्रको पाठ गर्ने मानिस पुत्रवान्, धनी र

वाञ्छिताँल्लभते सोऽर्थान् त्रिसन्ध्यं य: पठेदिदम् ।
मम भक्तिर्दृढा तस्य मोक्षश्चान्ते भविष्यति ।।१२।।

एवं दत्त्वा वरान् स्वप्ने स देवो पिदधे क्षणात् ।
जागृता साश्रुनयना विस्मिता मानसेऽवदत् ।।१३।।

दीननाथेन महती कृपा मयि नियोजिता।
अनुग्रहो महान्मह्यं यद् दत्तं दर्शनं स्वयम् ।।१४।।

विनायकेन देवेन पोषिता परमादरात् ।
अद्याहं तेन देवेन सर्वभूतानुकम्पिना ।।१५।।

इयमेव परा सिद्धिरिदमेव तप:फलम् ।
अयमेव परो लाभो यदवोचन्मया सह ।।१६।।

क उवाच

तत: प्रभाते स्नाता सा परमानन्दनिर्भरा ।
पुपूज परया भक्त्या गणेशं वरदं शुभम् ।।१७।।

समाप्य नियमं मूर्तिं पूर्वस्थाने न्यवेशयत् ।।१८।।

पुरोहितं समानीय पूजयामास भक्तित:।
गणेशं मनसा ध्यात्वा वदन्ती नाममालिकाम् ।।१९।।

स्मरन्ती तद्वरान् कीर्ति: समयं च प्रतीक्षती।
तत: कालेन महता प्रभा सा निष्प्रभाऽभवत् ।।२०।।

रक्तपित्तवती जाता प्रारब्धादीश्वरेच्छया ।
करौ पादौ च नासा च तस्या: क्षरति नित्यश: ।।२१।।

अतिवीभत्सरूपां तां तत्याज मनसा पति: ।
न वक्ति नेक्षते ज्ञात्वा प्रयत्नान् निष्फलान् बहून् ।।२२।।

तत: कीर्तेर्गृहं यातस्तपसा सुन्दराकृते:।
कृपया गणराजस्य स्वयं वश्योऽभवच्च स: ।।२३।।

वेद-वेदाङ्गमा पारङ्गत हुनेछ। त्यसको बुद्धिवृद्धि हुनेछ र मेधाको दृढ विकास पनि हुनेछ। जसले बिहान, दिउँसो र बेलुका यस स्तोत्रको पाठ गर्दछ त्यसले आफूले चिताएका कामनाहरू परिपूर्ण तुल्याउनेछ। त्यसको हृदयमा मप्रति दृढ भक्ति हुनेछ र अन्तमा त्यसले मोक्ष प्राप्त गर्नेछ।।१०-१२।। यसरी स्वप्नमा वरदान दिएर श्रीगणेशको मूर्ति अन्तर्धान भयो। जागेपछि कीर्तिका आँखामा खुसीका आँसु थिए। तिनले चकित भएर भन्न थालिन्- 'दीन-दु:खीका स्वामी भगवान् श्रीगणेशले ममाथि ठूलो कृपा गर्नुभयो। उहाँको मप्रति अनुपम अनुग्रह भयो किनकि मलाई उहाँले आफै आएर दर्शन दिनुभयो।।१३-१४।। आज म सम्पूर्ण प्राणीहरूमाथि दया गर्नुहुने भगवान् विनायकको दर्शन पाएर पवित्र भएकी छु। मेरा लागि यो ठूलो सिद्धि हो, तपस्याको ठूलो फल यही हो र जीवनको उत्तम लाभ पनि यही हो। किनकि मैले आज स्वप्नमा भगवान्सँग संवाद गर्ने अवसर पाएँ।।१५-१६।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! त्यसपछि ती कीर्ति रानीले परम आनन्दमा मग्न भएर बिहानमा स्नान गरिन्। त्यसपछि अत्यन्त श्रद्धा र भक्तिका साथ वरदायक भगवान गणेशको पूजा गरिन्। नियम र आराधना समाप्त भएपछि मूर्तिलाई आफ्नो ठाउँमा लगेर राखिन्। आफूले पूजा गरेपछि फेरि पुरोहितलाई बोलाएर भक्तिपूर्वक दोस्रो पूजा गरिन्। त्यस बेला तिनले मनले गणेशका नामहरू जपिरहेकी थिइन्।।१७-१९।। भगवान्‌ले दिएका वरदानको याद गर्दै आफ्नो उदयकालको प्रतीक्षा गरिरहेकी थिइन्। समय बित्दै गयो, तिनकी सौता प्रभा कान्तिहीन र कमजोर हुँदै गइन्। ईश्वरको इच्छाले तिनलाई रगत र पित्तको रोग भयो। तिनका हात-खुट्टा र नाकबाट निरन्तर रगत र पीप बग्न थाले। तिनको स्वरूप अत्यन्त घिनलाग्दो भयो। त्यस अवस्थामा तिनका पतिले पनि निर्मम भएर तिनलाई त्याग गरे। बिचरी प्रभा न कसैसँग बोल्थिन्, न कतै हेर्थिन् किनकि तिनले गरेका सबै प्रयत्नहरू निष्फल भइसकेका थिए। त्यसपछि राजा प्रियव्रत तपस्याका कारण अत्यन्त रमणीय देखिएकी धर्मप्राण जेठी रानी कीर्तिको आवासमा गए। भगवान् गणेशको कृपाका कारण कीर्तिले राजालाई केही भन्नु परेन। ती आफै वशमा परे।।२०-२३।।

स गृहीत्वा करे तां तु मञ्चकं समुपानयत् ।
चिक्रीड स्वेच्छया कीर्त्या तन्निष्ठस्तत्परायणः ।।२४।।

न वियोगं क्षणं तस्याः सहते नृपसत्तमः।
साऽपि भोगानलङ्कारानन्नान् बुभुजे सती ।।२५।।

साऽपि गर्भवती जाता कालेन सुषुवे सुतम् ।
शुभे मुहूर्ते राजाऽसौ ददौ दानान्यनेकशः ।।२६।।

पुत्रजन्मप्रहृष्टः सन् ब्राह्मणेभ्यो यथार्हतः।
दिक्षु स्थाप्य द्विजान् पञ्च जातकर्म चकार सः ।।२७।।

क्षिप्रप्रसादनेत्येवं नाम चक्रे ततोऽस्य ह ।
तुतोष पुत्रं दृष्ट्वैव नानालङ्कारसंयुतम् ।।२८।।

अतिप्रीतिमती कीर्तिरभवत् पुत्रदर्शनात् ।
प्रभा च दुःखिता पुत्रं सपत्न्या वीक्ष्य सुन्दरम् ।।२९।।

एष एव भवेद् राजा ज्येष्ठापुत्रोऽयमित्युत।
दध्योदनं तु सविषं कीर्तिपुत्राय सा ददौ ।।३०।।

स तु विह्वलतां यातो विवृत्तनयनः क्षणात् ।
प्रभैव च महाशब्दं कृत्वाऽरोदीद् भृशातुरा ।।३१।।

तस्याः शब्दं समाकर्ण्य कीर्तिस्तमगमत् तदा ।
तमुदन्तं सा पतये न्यवेदयत सादरम् ।।३२।।

भिषजोऽपि ददुस्तस्मा औषधानि नृपाज्ञया ।
परीक्ष्य विषबाधां ते तस्मै राज्ञे न्यवेदयन् ।।३३।।

न गुणाय भवन्ति स्म नानामन्त्रौषधानि च ।
प्रभा तु धिक्कृता भर्त्रा निरस्ता दूरतो गृहात् ।।३४।।

कीर्तिस्तं बालकं गृह्य सखीभिः काननं ययौ ।
नगराद् योजनं याति तावद् बालो ममार सः ।।३५।।

प्रियव्रतले कीर्तिको हात समातेर शय्यामा लगी शयन गराए। निर्मल हृदय भएकी कीर्तिलाई मनले अत्यन्त माया गर्दै कीर्तिमय बनेर धेरै कालसम्म यौनक्रीडा गरे। त्यसपछि कीर्तिप्रति अत्यन्त आसक्त राजाले एकछिन पनि कीर्तिको वियोग सहन सकेनन्। पतिव्रता कीर्तिले पनि राजाको माया पाएर उत्तम वस्त्र र उत्तम अलङ्कारहरूको धारण गर्नुका साथै अनन्त भोगहरू भोगिन्। केही समयमा कीर्ति गर्भवती भइन् र दश महिना लागेपछि उत्तम मुहूर्तमा पुत्र पैदा गरिन्। पुत्रजन्मको शुभमुहूर्तमा खुसी भएका राजाले ब्राह्मणहरूलाई अनेक दान दिए। पूर्व आदि दिशाहरूमा पाँच जना ब्राह्मण राखेर जातकर्म संस्कार गरे। नामकरण संस्कारका दिन तिनले छोराको नाम क्षिप्रप्रसादन राखे। अत्यन्त सुन्दर वस्त्र र अलङ्कारले सजिएका छोरालाई हेरेर राजालाई ठूलो सन्तोष भयो।।२४-२८।। कीर्ति पनि छोराको दर्शन पाएर राजाप्रति अत्यन्त अनुरक्त भइन्। उता प्रभा भने आफ्नी सौताको सुन्दर छोरा देखेर दुःखित भइन् । तिनले मनमनै भनिन् – 'यो जेठी महारानीको छोरा भएका कारण भोलि राजगद्दीमा बस्नेछ ।' यस्ता तर्कले दुर्भावनामा परेकी प्रभाले एक दिन जेठी महारानीका छोरा क्षिप्रप्रसादनलाई दही र भातमा विष मिलाएर दिइन्। विष खाएपछि त्यस बालकले आँखा फर्कायो र पीडाले साह्रै व्याकुल भयो। बालकको त्यो अवस्था देखेर विष खुवाएर त्यो हालतमा पुऱ्याउने कान्छी महारानी प्रभा आफूलाई अत्यन्त दुःखी भएको नाटकीय अभिनय गर्दै छाती पिटेर रुन थालिन्।।२९-३१।। प्रभा त्यसरी ठूलो स्वरमा रोएको सुनेर कीर्ति त्यहाँ पुगिन्। त्यहाँको घटना देखेर तिनले आफ्ना पतिलाई बताइन्। वैद्यहरू आए र राजाको आज्ञाअनुसार आदरपूर्वक औषधि दिए। तिनीहरूले बालकको राम्ररी परीक्षण गरे। त्यसपछि वैद्यहरूले राजालाई विषपानबाट बालकको यो अवस्था भएको हो भन्ने कुरा बताए।।३२-३३।। बालकलाई स्वस्थ तुल्याउन अनेक थरि मन्त्र र औषधिहरूको प्रयोग गरियो, ती सबै प्रयोग विफल भए। राजाले प्रभाबाट नै यो काम भएको हो भन्ने थाहा पाएर तिनलाई धिक्कार गर्दै घरबाट निकालिदिए। कीर्ति त्यो बालकलाई हातमा लिएर आफ्ना सँगिनीहरूका साथ जङ्गलतर्फ लागिन्। नगरबाट चार कोस

अङ्के कृत्वा तु तं बालं रुरोद शोकविह्वला ।
मूर्च्छिता पतिता भूमौ लतेव वायुनेरिता ।।३६।।

च्युतालङ्करणा ध्वस्तकङ्कणाऽमस्तकाञ्चला।
क्षणेन किञ्चिदाश्वस्ता सस्मार द्विरदाननम् ।।३७।।

उत्पत्ते: स्मरती बालचेष्टितं निघ्नती स्वहृत् ।
दैवात् तेनैव मार्गेण प्रययौ मुनिसत्तमः ।।३८।।

नाम्ना गृत्समदः साधुः साक्षात् सूर्य इवापरः।
गणेशभक्तप्रवरस्तपसां परमो निधिः।।३९।।

स तस्थौ करुणाविष्टः सा कीर्तिः प्रणनाम तम् ।
उवाच श्वसती सा तं गणनाथप्रसादजः ।।४०।।

अयं बालो मम मृतो जीवयैनं तपोबलात् ।
क्षिप्रप्रसादन इति नाम देवाज्ञया कृतम् ।।४१।।

सपत्न्या दुष्टभावेन विषमस्मै समर्पितम् ।
ततोऽनेन समप्रापि मुने ! मरणमीदृशम् ।।४२।।

न सतां दर्शनं व्यर्थमिति याचे तपोधन !
शरणागतसन्त्यागं नेहन्ते साधवो जनाः ।।३३।

इति तस्या वचः श्रुत्वा मुहूर्तं ध्यानतत्परः।
अभवन्मुनिशार्दूलस्ततो गृत्समदोऽब्रवीत् ।।४४।

शृणु देवि प्रवक्ष्येऽहमुपायं पुत्रजीवने ।
अज्ञानतः शमीपत्रैस्त्वयाऽपूजि विनायकः ।।४५।।

तत्पुण्यमस्य हस्ते त्वमर्पयस्व ममाज्ञया ।
तत्प्रसादादाशु सुत उत्थास्यति तवाधुना ।।४६।।

सा तु तद्वचनस्यान्ते कीर्तिर्हर्षसमन्विता ।
ददौ तस्मै शमीपूजासम्भवं पुण्यमुत्कटम् ।।४७।।

उत्तस्थौ स कुमारोऽस्या अमृतेनोक्षितो यथा।
सा तु हर्षान्मुनेः पादौ ववन्दे शिरसा पुनः।।४८।।

पर जाँदा त्यो छोराले प्राणत्याग गर्‍यो । मरेका छोराको लाश काखमा लिएर शोकले विह्वल भएकी रानी कीर्ति रोइन्। केही बेरपछि मूर्च्छित भएर वायुद्वारा भुइँमा लत्रिएको लहराझैं भुइँमा लडिन्।।३४-३६।। त्यसबेला कीर्तिका शरीरमा रहेका गहनाहरू खसेका थिए र हातका चुरा एवं बाला फुटेका थिए। तिनको शिर ढाक्ने पछ्यौरा भुइँमा खसेको थियो। केही बेरपछि होशमा आएकी कीर्तिले भगवान् गणेशको संझना गरिन्।।३७।। तिनले बालकको उत्पत्ति कालमा भएका घटनाहरू याद गरिन् । त्यसबेला त्यसै बाटोबाट कतै जाने इच्छाले दैवसंयोग त्यहाँ गृत्समदनामक मुनि आइपुगे।।३८।। ती मुनि साक्षात् सूर्यझैं तेजस्वी, गणेशका भक्त र तपस्याका परम निधि थिए।।३९।। ती ऋषि रानीलाई रोएको देखेर दया जागेका कारण उभिए। तिनलाई कीर्तिले प्रणाम गर्दै भनिन् - 'हे मुनिवर! भगवान् श्रीगणेशको प्रसादबाट प्राप्त मेरो यो बालक आज मरेको छ । यसलाई तपाईँले आफ्नो तपस्याको शक्तिबाट जगाउनुहोस् । भगवान् गणेशको आज्ञाबाट यसको नाम क्षिप्रप्रसादन राखिएको छ । मेरी सौताले मनमा दुर्भावना राखेर यसलाई विषपान गराइन्। त्यसकारण यसले आज अकालमा मर्नुपर्‍यो।।४०-४२।। हे तपस्वी मुनि ! सज्जनको दर्शन खेर जाँदैन भन्छन्। तसर्थ म हजुरसँग प्रार्थना गरिरहेकी छु । सज्जनहरूले शरणमा आएका मानिसको मरण गर्दैनन्। हजुरले मेरो उद्धार गर्नुहोस्। ती रानीका यी वचन सुनेर गृत्समद ऋषिले एक मुहूर्त भगवान्को ध्यान गरेपछि आँखा खोलेर रानीलाई भने – हे रानी ! म तिम्रा पुत्रको जीवनरक्षाका लागि उपाय बताउँछु । तिमीले अज्ञानबाट भए पनि शमीका पात चढाएर भगवान् गणेशको पूजा गरेकी छ्यौ।।४३-४५।। त्यस पूजाबाट पाएको पुण्य मेरा आज्ञाले तिमीले आफ्नो छोरालाई सुम्पिदेऊ। त्यसबाट तिम्रो छोरा भर्खरै जाग्नेछ।।४६।। मुनिले भनेजस्तै गरी हर्षपूर्वक रानी कीर्तिले आफूले शमीका पत्र अर्पण गरेर प्राप्त गरेको पुण्य दान गरिन्।।४७।। पुण्यदान गर्नासाथ त्यो बालक अमृतको सिञ्चन प्राप्त गरेझैं तुरुन्त जागेर उभियो । बालकलाई उभिएको देखेर कीर्तिले हर्षपूर्वक मुनिका पाउमा शिर राखी वन्दना गरिन्। त्सपछि तिनले भनिन्-

उवाच तं मुनिं ज्ञातं कथं शम्या प्रपूजनम् ।
महिमानं वद मुने ! शमीपूजनसम्भवम् ।।४९।।
येन सञ्जीवितो बालो मुक्तश्च यमकिङ्करैः।
ज्ञात्वा तच्च करिष्यामि नित्यं शम्या प्रपूजनम् ।।५०।।
येन वै बहुधा क्रूरा यमदूता दुरासदाः।
निरस्ता गणनाथस्य दूतैर्बहु रणाजिरे ।।५१।।
जीवयित्वा शिशुं मे ते गता धाम गजाननम् ।
येन पुण्येन बालो मे विषं त्यक्त्वा सुखी पुनः ।।५२।।
सञ्जीवन्नुत्थितः शीघ्रं सुप्तोत्थित इवापरः।
अतोऽहं परिपृच्छामि महिमानं शमीभवम् ।।५३।।

क उवाच

इति तद्वचनं श्रुत्वा प्रोचे गृत्समदस्तु ताम् ।

गृत्समद उवाच

उच्चारिते नाम्नि यस्याः कोटिपातकनाशनम् ।।५४।।
महिमानं हि कस्तस्याः साकल्येन वदेद् भुवि ।
सङ्क्षेपेण तु वक्ष्यामि महिमानं यथामति ।।५५।।
व्रतदानतपोभिश्च नानातीर्थनिषेवणैः।
पञ्चाग्निसाधनैरप्सु निवासैर्हिमकालिकैः ।।५६।।
न तत्फलमवाप्नोति यत् स्याच्छम्या प्रपूजने ।
प्रातःकाले त्रिसन्ध्यं वा शमीं नित्यं स्मरेत् तु यः ।।५७।।
वन्दयेदर्चयेद् वापि भक्तिभावसमन्वितः ।
ध्यात्वा गजाननं देवं तस्य तुष्टो विनायकः ।।५८।।
ददाति वाञ्छितानर्थानन्ते मोक्षं न संशयः ।
अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ।।५९।।
नारदस्य च संवादं शक्रस्य च महात्मनः ।।६०।।

हे मुनिवर ! मैले शमीका पातले पूजा गरेको कुरा हजुरले कसरी थाहा पाउनुभयो ? शमीको पातबाट पूजा गरेको फल मलाई सुनाउनुहोस्।।४८-४९।। आज शमीपत्रको अर्पणबाट प्राप्त पुण्य अर्पण गर्दा मेरो बालक पुत्र बाँचेको छ। यमका दूतहरूले बीच बाटामा छाडेर गएका छन्। म शमीपत्रको महिमा राम्ररी जानेपछि दिनदिनै शमीका पात चढाएर गणेशको पूजा गर्नेछु । शमीपत्र समर्पणबाट प्राप्त पुण्यका कारण भगवान् गणेशका दूतहरूले यमका भयङ्कर दूतहरूलाई परास्त गरेका छन् । ती श्रीगणेशका दूतहरू मेरो बालक पुत्रलाई जीवन दान दिएर गणेशधाम फर्किसकेका छन् । जुन पुण्यका कारण मेरो बालकपुत्र विषको पीडाबाट मुक्त भएर बाँचेको छ। त्यस पुण्यको विषयमा पनि मलाई बताउनुहोस्। म शमीको महिमा अझ सुन्न चाहन्छु।।५०-५३।।

**ब्रह्माजीले भन्नुभयो** - रानी कीर्तिले भनेका यी कुरा सुनेर गृत्समद ऋषिले रानीलाई सम्बोधन गर्दै भने।

**गृत्समदले भने** - हे कीर्ति ! शमीपत्रको नाम लिनासाथ कोटिकोटि पापहरू नाश हुन्छन्। शमीका पातको महिमा सम्पूर्ण रूपमा यस पृथिवीमा कसैले बताउन सक्दैन । म तिमीलाई संक्षेपमा त्यसको महिमा बताउँछु।।५४-५५।। व्रत, दान, तपस्या, अनेक तीर्थमा गरिने स्नान, पञ्चाग्निसाधना र जलसाधनाबाट पनि त्यो फल पाइँदैन जुन फल शमीका पात चढाएर भगवान् गणेशको पूजा गर्नाले पाइन्छ। बिहान, दिउँसो र बेलुका जसले दिनदिनै शमीको स्मरण र नमस्कारका साथै भगवान् गणेशको ध्यान गरेर पूजा गर्दछ, त्यस भक्तप्रति भगवान् गणेश सन्तुष्ट बन्नुहुन्छ र उहाँले त्यसलाई चाहेका पदार्थ प्रदान गर्नुका साथै अन्तमा मोक्ष पनि दिनुहुन्छ। यस सम्बन्धमा इन्द्र र नारदजीको संवादमा आधारित एउटा इतिहास रहेको छ ।।५६-६०।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालसञ्जीवनं नाम त्रयस्त्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कीर्तिपुत्रलाई पुनर्जीवनप्राप्ति' शीर्षकान्वित तेत्तीसौँ अध्याय पूर्ण भयो ।।३३।।

ॐ

## चतुस्त्रिंशोऽध्यायः { ३४ अध्याय }

कीर्तिरुवाच

ब्रूहि ब्रह्मन्नशेषेण संवादं नारदेन्द्रजम् ।
श्रुत्वा तं संशयं त्यक्त्वा तृप्ताः स्याममृतादिव ।।१।।

क उवाच

इति तस्या वचः श्रुत्वा वक्तुं समुपचक्रमे।
स मुनिरितिहासं तं संवादं नारदेन्द्रजम् ।।२।।

मुनिरुवाच

कदाचित् पर्यटन् सुभ्रु ! नारदो दिव्यदर्शनः।
यदृच्छया गतः शक्रं त्रिलोकीभ्रमणे रतः ।।३।।

शक्रस्तं परिपूज्यैव पप्रच्छौरवचेष्टितम् ।
यदाह नारदो धीमाँस्तच्छृणुष्व महामुने ।।४।।

नारद उवाच

देशे मालवसंज्ञात औरवो नाम वै द्विजः।
वेदवेदाङ्गवित् साक्षाद् भानुरस्तं विना यथा ।।५।।

शक्तो यो मनसा स्रष्टुं पातुं हर्तुं चराचरम् ।
धर्मपत्नीरतो नित्यं समलोष्ठाश्मकाञ्चनः ।।६।।

मेधावी तपसा श्रेष्ठो जातवेदा इवापरः ।
सुमेधा नाम तस्यासीत् पत्नी परमधार्मिका ।।७।।

लावण्यलहरी कान्ता नानालङ्कारशोभना ।
रूपेण निर्जितरतिर्धिक्कृताप्सरसोगणा ।।८।।

पतिशुश्रूषणरता लालिता परमादरात् ।
तयोः समभवत् कन्या साऽपि ताभ्यां सुलालिता ।।९।।

नामास्याश्चक्रतुरुभौ शमिकेति निजेच्छया ।
यद् यत् प्रार्थयते सा तद् तां ददाति पिता विभुः।।१०।।

सा तु कन्या रूपवती सञ्जाता सप्तवार्षिकी ।
तदर्थं चिन्तयामास वरार्थमौरवो गतः।।११।

**कीर्तिले भनिन्** - हे मुनिवर ! इन्द्र र नारदजीको संवादमा भएका कुराहरू मलाई विस्तारपूर्वक बताउनुहोस्। त्यो संवाद सुनेर म निःसन्देह अमृतपान गरेझैं तृप्त हुनेछु।।१।।

**ब्रह्माजीले भन्नुभयो** - कीर्तिका कुरा सुनेर गृत्समद ऋषिले इन्द्र र नारदजीको संवादमा आधारित इतिहास बताए।

**मुनिले भने** - हे सुन्दरी ! कुनै समयमा अत्यन्त सुन्दर र दिव्य स्वरूपले सम्पन्न देवर्षि नारद स्वेच्छाले त्रिभुवनको भ्रमण गर्ने क्रममा इन्द्रको समीपमा आइपुगे।।३।। इन्द्रले पूजा एवं सम्मान गरेर नारदजीसँग औरव ऋषिको विषयमा सोधे । त्यसको उत्तर दिंदै नारदजीले जुन कुरा गरेका थिए, त्यो म बताउँछु।।४।।

**नारदजीले भन्नुभयो** - मालवनामक देशमा वेद र वेदाङ्गका ज्ञाता, सधैं उदाइरहेका सूर्यझैं तेजस्वी औरवनामक ब्राह्मण थिए।।५।। उनी आफ्नो मनबाट जगत्को सृष्टि, पालन र संहार गर्न समर्थ थिए। तिनले आफ्नी धर्मपत्नीमा मात्र प्रेम गर्दथे। उनको दृष्टिमा माटाको ढेला, ढुंगा र सुनमा केही फरक थिएन। अत्यन्त तीव्र बुद्धि भएका ती ऋषि तपस्याका कारण भव्य व्यक्तित्वले सम्पन्न थिए र तेजले अग्निझैं शोभायमान थिए। तिनकी पत्नीको नाम सुमेधा थियो। ती अत्यन्त धार्मिक स्वभावकी थिइन्।।७।। सुमेधा सौन्दर्यकी खानी थिइन् र अनेक थरि वस्त्र र अलङ्कारले अझ सुन्दर देखिन्थिन्। तिनले रूपबाट रतिलाई जितेकी थिइन् र अप्सराहरूलाई धिक्कारयोग्य तुल्याएकी थिइन् । पतिको सेवामा नित्य लागिरहने ती सुमेधा पतिद्वारा पनि परम आदरका साथ लालित र पालित थिइन् । ती दुबै दम्पतीबाट एउटी कन्या जन्मिन्। ती कन्याको दुबैले राम्ररी पालनपोषण गरे। पति-पत्नीले आफ्नी छोरीको शमिका भन्ने नाम राखे । ती कन्याले जुन कुरा चाहन्थिन् त्यो उनका पिता औरवले पुऱ्याउँथे ।।८-१०।। सात वर्षको उमेरमा ती कन्या अत्यन्त रूपवती देखिइन्। तिनका लागि औरवले वरको चिन्ता गरे । ती एक दिन वरको अन्वेषण गर्न घरबाट बाहिर निस्किए।।११।।

धौम्यपुत्रं स शुश्राव वेदशास्त्राङ्गपारगम् ।
शौनकस्य मुनेः शिष्यं तेजोराशिं परं मुनिम् ।।१२।।

गुरुवाक्यरतं दान्तं गुरुशुश्रूषकं परम् ।
मन्दारनामकं शान्तं समाहूय शुभे दिने ।।१३।।

तां ददौ गृह्यविधिना पारिबर्हं ददौ बहु ।
जाते विवाहे मन्दारो ययौ स्वस्याश्रमं प्रति।।१४।।

यौवनस्थां तु तां ज्ञात्वा शमिकां पुनरायर्यौ ।
मन्दारो मानितः सम्यग्गौरवेण सुपूजितः।।१५।।

सम्भोज्य सुमुहूर्तेन दत्त्वा वस्त्रादि काञ्चनम् ।
प्रास्थापयदुभौ विप्रो जामातरमथाब्रवीत् ।।१६।।

इयं सुता मम ब्रह्मन् ! दत्ता तुभ्यं विधानतः ।
पालयस्व बहुस्नेहादद्ययावन्मया यथा ।।१७।।

प्रणिपत्याथ श्वशुरमोमित्युक्त्वा जगाम सः ।
स्वमाश्रमपदं प्राप्य चिक्रीड निजभार्यया ।।१८।।

कदाचिद् ऋषिमुख्योऽसौ भ्रुशुण्डी तस्य चाश्रमम् ।
मन्दारस्य समायातो द्विरदाननभक्तिमान् ।।१९।।

रुष्टोऽसावनलः साक्षात् तुष्टश्चेदीश्वरोपमः।
तपसा निर्गता शुण्डा भ्रुशुण्डीति च सोऽभवत् ।।२०।।

स्थूलोदरो बृहत्कायो नानालङ्कारमण्डितः ।
ददर्शतुरुभौ तं तौ मन्दारः शमिका तदा ।।२१।।

विरूपमिव तं दृष्ट्वा जहसतुर्मुदा तदा ।
सोऽपमानभयात् त्रस्तश्चुकोपारुणलोचनः।।२२।।

उवाच तं मन्दमते ! न जानासि मदोद्धतः।
अहसीद् विवृतैर्दन्तैः पत्न्या सह यतस्तु माम् ।।२३।।

अतो यातं वृक्षयोनौ सर्वप्राणिविवर्जितौ ।

घरबाहिर गएर तिनले मानिसहरूका मुखबाट वेद र शास्त्रमा पारङ्गत, तेजस्वी गुरुको आज्ञा पालन गर्ने, इन्द्रियविजयी, गुरु-सेवामा तत्पर, शौनक मुनिका शिष्य र धौम्यऋषिका छोरा मन्दारको नाम सुने। घर फर्केपछि तिनले उत्तम मुहूर्तमा मन्दारलाई गृह्यसूत्र-अनुसार कन्यादान गरी आफ्नी छोरी सुम्पिदिए र प्रशस्त दाइजो पनि दिए । विवाह सम्पन्न भएपछि मन्दार आफ्नो आश्रमतर्फ प्रस्थान गरे ।।१२-१४।। केही वर्षपछि मन्दार आफ्नी पत्नी शमिका युवती भएको थाहा पाएर तिनलाई घरमा ल्याउने उद्देश्यले ससुराका घर गए। त्यहाँ आउँदा अत्यन्त श्रद्धापूर्वक तिनको स्वागत गरियो। राम्रोसँग भोजन गराएर उत्तम साइत हेरी वस्त्र, अलङ्कार दिएर औरव दम्पतीले छोरी-ज्वाइँलाई बिदा गरे। बिदाइको अवसरमा ससुराले ज्वाइँलाई भने- हे मन्दार ! मैले यी छोरी तपाइँलाई विधिपूर्वक दिएँ, धेरै स्नेह गरेर आजसम्म मैले जसरी यिनको पालन गरेको थिएँ, त्यसरी नै स्नेहपूर्वक तपाइँले पनि अब उप्रान्त यी कन्याको पालनपोषण गर्नुपर्छ।।१५-१७।। ससुराले भनेका कुरा सुनेर उहाँलाई प्रणाम गरी मन्दार आफ्नी पत्नी शमिका साथ आश्रमतर्फ गए। आश्रममा पुगेपछि अत्यन्त आनन्दका साथ दाम्पत्य धर्म निर्वाह गर्दै भोगविलास गरे।।१८।। कुनै दिन ऋषिहरूमा श्रेष्ठ भ्रुशुण्डी ऋषि मन्दारको आश्रममा आए। ती ऋषि श्रीगणेशका परम भक्त थिए। रिसाउँदा अग्निझैं डरलाग्दा देखिन्थे र प्रसन्न हुँदा भगवान् सदा शिवशङ्करसमान आशुतोष देखिन्थे। लामो कालसम्म तपस्या गर्दा तिनको मुखमा सुँढ निस्किएको हुँदा तिनलाई सबैले भ्रुशुण्डी भन्दथे । तिनको पेट ठूलो थियो, शरीर विशाल थियो र ती अनेक प्रकारका अलङ्कारद्वारा अलङ्कृत थिए। शमिका र मन्दारले भ्रुशुण्डी ऋषिलाई राम्ररी नियालेर हेरे। तिनलाई कुरूपजस्तो जानेर ती दुबै दम्पती हाँसे । तिनीहरूबाट आज भएको अपमान र भोलि पनि हुनसक्ने अपमानको त्रासका कारण भ्रुशुण्डीले क्रुद्ध भएर राता आँखा देखाए । त्यसपछि तिनले भने - हे मन्दार ! जवानीको मदले मातेका र मन्दबुद्धि भएका तिमीले मलाई देखेर आफ्नी पत्नीका साथमा बसी दाँत देखाएर मेरो उपहास गर्‍यौ। तसर्थ तिमीहरू दुबै प्राणीशून्य वनमा वृक्षको योनिमा जन्मनेछौ ।

 

क उवाच

शापं श्रुत्वाऽतिकठिनं सन्तप्तौ तौ बभूवतु:।।२४।।

प्रणम्य प्रोचतुर्विप्रमुच्छापं वक्तुमर्हसि।
तत ऊचे भ्रुशुण्डी स जानन् करुणया युत:।।२५।।

शुण्डां दृष्ट्वा कृतं हास्यं युवाभ्यां मूढभावत: ।
शुण्डावान् देवदेवोऽसौ सुप्रसन्नो भवेद् यदा ।।२६।।

तदा युवां निजं रूपं प्राप्स्येथे नात्र संशय:।
एवमुक्त्वा गतो यावन्मुनिराश्रममण्डलम् ।।२७।।

तावत्तौ वृक्षतां यातौ त्यक्त्वा देहौ तु मानुषौ ।
मन्दारताञ्च मन्दारो ब्राह्मण: प्राप तत्क्षणात् ।।२८।।

शमिका शमितां प्राप्ता सर्वत: कण्टकैर्वृता ।
उभौ वृक्षौ प्राणिमात्रैर्वर्जितौ मुनिवाक्यत:।।२९।।

अनागतौ तु तौ ज्ञात्वा शौनकश्चिन्तयान्वित:।
मासमात्रे गते नैव याति कस्मान्महाबल: ।।३०।।

मन्दारं यामि तं द्रष्टुं शिष्या यान्तु मया सह ।
शीघ्रमौरवमागम्य पप्रच्छ शनकैरिदम् ।।३१।।

आनेतुं शमिकां प्राप्तो मन्दार: क्वास्ति तद्वद ।

औरव उवाच

मयाऽप्रेषि तदैवाशु दत्त्वा कन्यां तया सह ।।३२।।

नागतश्चेत् स्वाश्रमं स न जाने क्व गतो ह्यसौ ।।
चिन्तयामासुरथ ते औरव: शौनकादय:।।३३।।

किमुभौ भक्षितौ मार्गे वृकव्याघ्रतरक्षुभि:।
अथवा निहतौ चोरैर्दष्टावाशीविषेण वा ।।३४।।

ततस्ते त्वरिता जग्मुस्तदुदन्तबुभुत्सया ।
क्वचित् क्वचिज्जना ऊचुर्मासमात्रमितो गतौ ।।३५।।

वनेऽरण्ये पदे दृष्टे स्त्रीपुंसोश्चारुरूपिणी ।
अनूपं ते तयोर्ज्ञात्वा स्नात्वा ध्यात्वा व्यलोकयन् ।।३६।।

**ब्रह्माजीले भन्नुभयो -** भ्रुशुण्डी ऋषिको कठोर सराप सुनेर ती दुबै अत्यन्त सन्तप्त भए ।।१९-२४।। ती दम्पतीले प्रणाम गरेर भने- हे ऋषि! सरापबाट मुक्त हुने उपाय बताउनुहोस्। त्यसपछि भ्रुशुण्डीले दयालु भएर भने - तिमीहरू मूर्खतावश मेरो सूँढ देखेर हाँस्यौ । जहिले तिमीहरूले आफ्नो आराधनाबाट मुखमा सूँढ धारण गर्ने देवतालाई प्रसन्न गराउनेछौ, त्यस बेला मात्र स्वाभाविक स्वरूप प्राप्त गर्नेछौ। यसमा कुनै सन्देह छैन । यसरी उपाय बताएर ती मुनि आफ्नो आश्रमतर्फ गए। त्यतिबेला नै मन्दार र शमिका पनि मानिसको शरीर परित्याग गरी वृक्षको रूपमा परिणत भए। मन्दार ऋषि मन्दारनामक वृक्ष भए अर्थात् पारिजात वृक्ष भए भने तिनकी पत्नी शमिका सर्वाङ्गमा काँडैकाँडाले भरिएको शमीको वृक्षका रूपमा परिणत भइन्। मुनिको वचनले गर्दा दुबै वृक्ष निर्जन वनमा रहेका थिए ।।२५-२९।। आफ्ना शिष्य र शिष्यालाई आश्रममा नदेखेर शौनक ऋषिले चिन्ता गर्दै भने - शमिका र मन्दार यहाँबाट गएको एक महिना भइसक्यो, किन आउँदैनन् ?।।३०।। म मन्दारको खोजी गर्न जान्छु। हे शिष्य हो ! तिमीहरू पनि मेरा पछिपछि लाग । त्यसपछि शौनक औरवका घरमा आए र मन्दारको विषयमा जानकारी लिंदै भने - शमिकालाई लिन भनी ससुराल आएका मन्दार कहाँ छन् ?

**औरवले भने -** मैले त उतिबेला नै आफ्नी कन्याका साथ लगाएर पठाएको हुँ। यदि ती आश्रममा गएका छैनन् भने कहाँ गए ? यसरी प्रश्न गर्दै ऋषि चिन्तित भए । त्यसपछि ऋषिपरिवारका सबै मानिसहरूले आपसमा दुःखका कुरा गर्दै तर्क गर्न लागे। औरव र शौनकले मनमा कुरा खेलाउँदै भने - दुबैलाई ब्वाँसो, बाघ, चितुवाले त खाएन ? अथवा चोरले त मारेन ? अथवा सर्पले त टोकेन ? ।।३१-३४।। यसरी तर्क गरेपछि सबै मिलेर शीघ्रतापूर्वक मन्दार र शमिकाको समाचार थाहा पाउन हिंडे। कहीं कहीं मानिसहरूले भने - एक महिना अघि तिनीहरूलाई यो बाटोमा हिंडेको देखेका थियौं।।३५।। त्यसपछि ती सबैले निर्जन वनभागमा पुगेपछि स्त्री र पुरुषका सुन्दर पदचिह्न भेटाए । ती पदचिह्न देखेर ध्यान गरे । ध्यानदृष्टिबाट हेर्दा तिनीहरूले उपहासका कारण रीस उठ्दा भ्रुशुण्डीले सराप दिएकाले शमिका र मन्दार कीराफट्याङ्ग्रा

ज्ञात्वा भ्रुशुण्डिना शप्तावुपहासरुषावशात् ।
वृक्षताङ्गमितौ सर्वपक्षिकीटविवर्जितौ ।।३७।।

मन्दारतां तु मन्दारः शमिका शमितामपि ।
शोचाते तावुभौ विप्रौ औरवः शौनकोऽपि च ।।३८।।

धौम्यपुत्रः साधुरयमध्येतुं समुपागतः।
अधीतविद्यः स कथं गमितो द्रुमतां बलात् ।।३९।।

पिता श्रुत्वा त्यजेत् प्राणान् पृष्टः किं वा वदामि तम् ।
औरवोऽपि शुशोचैनां शमिकां निजकन्यकाम् ।।४०।।

क उवाच

तावुभौ परिचिन्त्यैवं न भेदो भक्तदेवयोः।
गणेशं परिराध्यैवं मोचयाव इमावघात् ।।४१।।

जितेन्द्रियावूर्ध्वदृष्टी निराहारौ दृढव्रतौ ।
एकाङ्गुष्ठस्थितावुर्व्यां तोषयामासतुर्मुदा ।।४२।।

ततस्तौ कृपयाविष्टौ तेपाते परमं तपः।
षडक्षरेण मन्त्रेण देवदेवं विनायकम् ।।४३।।

एवं द्वादशवर्षाणि चेरतुस्तप उत्तमम् ।
औरवः कन्यकार्थञ्च शिष्यार्थं शौनकोऽपि च ।।४४।।

र चराचुरुङ्गीले पनि बास नगर्ने घोर वनमा वृक्षयोनिमा परिणत भएको थाहा पाए। त्यसैगरी तिनले मन्दार मन्दारका रूपमा र शमिका शमीवृक्षका रूपमा परिणत भएको समेत राम्ररी जानकारी पाए ।।३६-३७।। औरव र शौनकले चिन्ता गर्दै भने - धौम्यका छोरा ती मन्दार सज्जन स्वभावका र पढेलेखेका ज्ञानी पुरुष थिए, आज कसरी रूख बन्न पुगे ? तिनका पिताले यो कुरा सुनुभयो भने प्राणत्याग गर्नुहुनेछ। उहाँलाई के भनेर चित्त बुझाउने हो ? औरवले पनि आफ्नी छोरी शमिकाको संझना गर्दै पीर गरे।।३८-४०।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसबेला चिन्तामा परेका औरव र धौम्यले भने - भक्त र भगवान्‌मा भेद हुँदैन। तसर्थ भगवान् गणेशको आराधनाबाट नै वृक्षको रूपमा परिणत भएका यी दम्पतीलाई वृक्षयोनिबाट मुक्त गर्नेछौं । त्यसपछि औरव र शौनकले इन्द्रिय जितेर आकाशतिर दृष्टि लगाउँदै निराहार एवं पवित्र रही व्रत गर्दै खुट्टाको एउटा बूढीऔंलाको भरमा उभिएर मन्दार र शमिकाप्रति दयालु हुँदै ठूलो तपस्या गरे। ६ अक्षरको मन्त्र जपेर भगवान् श्रीगणेशको आराधना गरे। यसरी तिनीहरूको तपस्या बाह्र वर्षसम्म जारी रह्यो । औरव आफ्नी कन्याको मुक्तिका लागि तपस्या गरिरहेका थिए भने शौनक ऋषि आफ्नो शिष्यको उद्धारका लागि तपस्या गरिरहेका थिए।।४१-४४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते भ्रुशुण्डिशापवर्णनं नाम चतुस्त्रिंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'औरव र शौनकको कथाप्रसङ्ग' शीर्षकान्वित चौंतीसौं अध्याय पूर्ण भयो ।।३४।।

ॐ

## पञ्चत्रिंशोऽध्यायः { ३५ अध्याय }

क उवाच

ततस्तुष्टः पाशपाणिर्दृष्ट्वा क्लेशं तथा तयोः।
आविरासीन्महातेजा दशबाहुर्विनायकः ।।१।।
किरिटं कुण्डले मालामङ्गदे कटिसूत्रकम् ।
बिभ्रत् सर्पोपवीतञ्च सिंहारूढोऽग्निसन्निभः ।।२।।
पश्यतः स्म परां मूर्तिं कोटिसूर्यसमप्रभाम् ।
तुष्टुवतुरुभौ देवं नत्वा बद्धाञ्जली उभौ ।।३।।

तावुचतुः

विश्वस्य बीजं परमस्य पाता
नानाविधानन्दकरः स्वकानाम् ।
निजार्चनेनादृतचेतसां त्वं
विघ्नप्रहर्ता गुरुकार्यकर्ता ।।४।।
परात्परस्त्वं परमार्थभूतो
वेदान्तवेद्यो हृदयेतिगुप्तः ।
सर्वश्रुतीनाञ्च न गोचरोऽसि
नमाव इत्थं निजदैवतं त्वाम् ।।५।।
न पद्मयोनिर्न हरो हरिश्च
हरिः षडास्यो न सहस्रमूर्द्धा ।
मायाविनस्ते न विदुः स्वरूपं
कथं नु शक्यं परिनिश्चितुं तत् ।।६।।
तवानुकम्पा महती यदा स्याद्
विभुञ्जतः कर्म शुभाशुभं स्वम् ।
कायेन वाचा मनसा नमेत् त्वां
जीवँश्च मुक्तो नर उच्यते सः ।।७।।
त्वं भावतुष्टो विदधासि कामान्
नानाविधाकारतयाऽखिलानाम् ।
संसृत्यकूपारविमुक्तिहेतु-
रतो विभुं त्वां शरणं प्रपद्ये ।।८।।

**ब्रह्माजीले भन्नुभयो -** औरव र शौनकको तपस्याबाट भगवान् श्रीगणेश प्रसन्न हुनुभयो। मन्दार र शमिकाको कष्टबाट दुःखी हुनुभएका भगवान् श्रीगणेश दश भुजा, किरीट, कुण्डल, माला, केयूर र कटिसूत्र धारण गरेर सिंहमा सवार भई प्रकट हुनुभयो। ती दुबै ऋषिले करोडौं सूर्यसमान तेजस्वी श्रीगणेशको मूर्ति देखेर हात जोडी प्रणाम गरेपछि स्तुति गरे।।१-३।।

**ऋषिहरूले भने-** हे श्रीगणेश ! हजुर संसारका कारण हुनुहुन्छ र संसारका रक्षक पनि हजुर नै हुनुहुन्छ। संसारलाई अनेक थरि आनन्द दिने दाता हजुर हुनुहुन्छ र आफ्ना भक्तहरूको कल्याण गर्ने कल्याणकारी देवता पनि हजुर नै हुनुहुन्छ। कसैले आदरपूर्वक पूजा गऱ्यो भने त्यसका विघ्नहरूको हरण गर्नुहुन्छ र ठूला-ठूला कार्यहरूमा सिद्धि प्रदान गर्नुहुन्छ।।४।। हजुर ब्रह्मको अन्तिम रूप हुनुहुन्छ। संसारका सबै प्राणी र पदार्थ नाशवान् छन् तर हजुर अन्तिम सत्य र परमार्थका रूपमा विराजमान हुनुहुन्छ। हजुरलाई वेदान्त आदि शास्त्रहरूबाट जान्न सकिन्छ। हजुर हृदयमा गुप्तरूपमा विराजमान हुनुहुन्छ। सम्पूर्ण वेद आदि शास्त्रले पनि हजुरलाई यस्तै स्वरूपका हुनुहुन्छ भनेर बताउन सक्दैनन्। यस्ता हाम्रा परम देवता हजुरलाई प्रणाम गर्दछौं।।५।। ब्रह्मा, शिव, नारायण, इन्द्र, कार्तिकेय र शेषनागले पनि हजुरको स्वरूप जान्नुहुन्न । अनेक थरि माया र इन्द्रजाल जान्ने मानिसहरूले पनि हजुरको स्वरूप जान्न सक्दैनन् भने हामीहरूले हजुरको स्वरूप यस्तै छ भनेर कसरी भन्न सकौं ? ।।६।। आज हजुरको ठूलो कृपा भयो र हामीले दर्शन गर्न पाएका छौं। हे भगवन् ! जब भक्तमाथि हजुरको ठूलो कृपा हुन्छ, तब तिनले दर्शन पाउन सक्छन्। आज हामी पनि हजुरको दर्शन पाएर कृतार्थ भएका छौं। शरीर, मन र वाणीले हजुरलाई प्रणाम गर्दछौं। हजुरको कृपाबाट मानिस जीवन्मुक्त बन्न सक्दछ।।७।। हजुर भक्तको भक्तिभावबाट प्रसन्न हुनुभयो भने त्यसका सबै कामना परिपूर्ण तुल्याउनुहुन्छ। सबै भक्तहरूले जस्तो चाहेका हुन्छन् त्यस्तै रूपमा परिणत भएर कल्याण गर्न पनि सक्नुहुन्छ। संसारसागरमा डुबेका मानिसका लागि हजुर एकमात्र मुक्तिका साधन हुनुहुन्छ। त्यस कारण हामी अन्तर्यामी हजुरको शरणमा पर्दछौं ।।८।।

गणेश उवाच

तुष्टोऽहं परया भक्त्या तपसा परमेण च ।
अनया परया स्तुत्या ब्राह्मणौ ! वृणुतं वरान् ।।९।।

कुजन्मनाशकमिदं मम स्तोत्रं पठेत् तु यः।
त्रिसन्ध्यञ्च त्रिवारञ्च सर्वान् कामानवाप्नुयात् ।।१०।।

षण्मासाज्जायते विद्या लक्ष्मीर्नित्यजपादपि ।
पञ्चवारजपान्मर्त्य आयुरारोग्यमाप्नुयात् ।।११।।

क उवाच

श्रुत्वा गणेशवाक्यं तावूचतुः परमादृतौ।
औरवस्य सुता देव ! शमिका नामतः शुभा ।।१२।।

मन्दाराय सुता दत्ता वेदशास्त्रार्थदर्शिने ।
शौनकस्य च शिष्याय धौम्यपुत्राय धीमते ।।१३।।

उभौ प्रहसितौ मोहाद् दृष्ट्वा मार्गे भ्रुशुण्डिनम् ।
स च मत्वा निजावज्ञां शशाप परया रुषा।।१४।।

तच्छापाद् वृक्षतां यातौ मन्दारः शमिकाऽपि सा।
तयोश्च मातापितरौ शोचन्तौ भृशदुःखितौ ।।१५।।

आवाञ्च क्लेशितौ देव ! सर्वेषां नः प्रियं कुरु।
एतयोः कुजतां दूरीकुरु शीघ्रं गजानन ।।१६।।

गजानन उवाच

असम्भावि वरं दास्ये कथं विप्रौ कथं वृथा।
करिष्ये भक्तवचनं तस्मात् तुष्टो ब्रुवे वरम् ।।१७।।

अद्यप्रभृति मन्दारमूलं स्थास्यामि निश्चलः।
मृत्युलोके स्वर्गलोके मान्योऽयञ्च भविष्यति ।।१८।।

मन्दारमूलैर्मे मूर्तिं कृत्वा यः पूजयेन्नरः।
शमीपत्रैश्च दूर्वाभिस्त्रितयं दुर्लभं भुवि ।।१९।।

**श्रीगणेशले भन्नुभयो**– हे ब्राह्मण भक्तहरू ! तिमीहरूको परम भक्ति र परम तपस्याबाट म सन्तुष्ट भएको छु। तिमीहरूको यस उत्तम स्तुतिबाट पनि म प्रसन्न छु। तिमीहरूले आफूले चाहेको कुरा माग । जसले तिमीहरूद्वाराम्भगरिएको स्तुतिलाई पढ्दछ, त्यसको नराम्रो योनिमा जन्म हुँदैन। त्यस कारण मानिसले प्रातःकाल, मध्याह्नकाल र सायंकालमा तीन-तीन पटक यस स्तोत्रको पाठ गर्नुपर्दछ । जसले त्यसो गर्छ त्यसका सबै कामना पूर्ण हुन्छ ।।९-१०।। ६ महिनासम्म नित्य यस स्तोत्रको पाठ गर्दा विद्या सिद्ध हुन्छ। नित्य पाठ गर्ने मानिसले लक्ष्मी प्राप्त गर्दछ । दिनको पाँच पटक पाठ गर्ने मानिसले आयु र आरोग्य प्राप्त गर्दछ ।।११।।

**ब्रह्माजीले भन्नुभयो** – श्रीगणेशको आशीर्वाद सुनेर उहाँप्रति श्रद्धा व्यक्त गर्दै ती दुबै ऋषिले भने – 'हे प्रभु ! औरव ऋषिकी छोरीको नाम शमिका हो। तिनको विवाह वेदशास्त्रका ज्ञाता मन्दार ऋषिसँग गरियो । ती मन्दार शौनक ऋषिका शिष्य र धौम्य ऋषिका छोरा हुन्। एक दिन शमिका र मन्दार घरतर्फ आउने क्रममा बाटोमा भ्रुशुण्डी ऋषिलाई देखेर हाँसे। भ्रुशुण्डी ऋषिले आफ्नो अपमान भएको ठान्नुभयो र अत्यन्त रिसाएर सराप दिनुभयो। त्यो सरापबाट ती दुबै दम्पती वृक्षका रूपमा परिणत भए। मन्दार मन्दार वृक्ष बने र शमिका शमीको रूखमा परिणत भइन् । तिनका आमा-बाबुहरू चिन्तित र दुःखित छन् ।।१२-१५।। हामी पनि दुःखी छौं। हे भगवन् ! हामी सबैको इष्टसिद्धि गर्नुहोस्। ती दुबै दम्पतीको वृक्षभावलाई हटाई तिनलाई पूर्ववत् मानवरूपमा परिणत गरिदिनुहोस् ।।१६।।'

**श्रीगणेशले भन्नुभयो** – 'हे ऋषिहरू ! मैले सराप परेका मानिसलाई वरदान दिएर कसरी मुक्त गरूँ। तपाईंहरूजस्ता भक्तले याचना गर्नुभएको हुँदा सन्तुष्ट भएर म वरदान दिन्छु– आजदेखि म मन्दारवृक्षको फेंदमा निश्चल रूपमा बस्नेछु। मन्दारवृक्ष मृत्युलोक र स्वर्गलोकमा पनि मान्य हुनेछ।।१७-१८।। मन्दारवृक्षको काठबाट मूर्ति बनाएर जसले शमीपत्र अथवा दूर्वाङ्कुर चढाई मेरो पूजा गर्दछ त्यसले संसारमा दुर्लभ मानिएका विषय पनि प्राप्त गर्दछ। म शमीवृक्षको फेंदमा पनि सर्वदा स्थिरभावले रहनेछु। मैले यही वरदान दिएँ। यस

यतः शमीमधिष्ठाय सर्वदाऽहं स्थिरो मुनी ।
अयमेव वरो दत्तो वृक्षयोरतिदुर्लभः ।।२०।।

त्वद्वाक्यानुरोधेन न भ्रुशुण्डिवचोऽन्यथा।
दूर्वाभावेऽथ मन्दारो द्वयाभावे शमी मता ।।२१।।

उभयोः मा फलं दद्यान्नात्र कार्या विचारणा।
नानायज्ञैर्न तत् पुण्यं नानातीर्थव्रतैरपि ।।२२।।

दानैश्च नियमैश्चैव पुण्यं तत् प्राप्नुयान्नरः।
यत् स्यान्मम शमीपत्रैः पूजनेन द्विजोत्तमौ ।।२३।।

नाहं प्रीये धनकनकचयैर्नान्नदानैर्न वस्त्रै-
र्नानापुष्पैर्न च मणिगणैर्नैव मुक्ताफलैश्च ।
यद्वच्छम्या दलनिचयकृतैः पूजनैर्ब्राह्मणानाम्
मन्दाराणां कुसुमनिचयैः सर्वकालं मुनीन्द्रौ ।।२४।।

यः शमीं प्रातरुत्थाय पश्येद् वन्देच्च पूजयेत् ।
न कष्टञ्च रोगञ्च न विघ्नं न च बन्धनम् ।।२५।।

प्राप्नोति मत्प्रसादेन दारान् पुत्रधनानि च ।
पशूनन्यांश्च कामाँश्च मुक्तिमन्ते मदाश्रयाम् ।।२६।।

इदमेव फलं प्रोक्तं मन्दारैरपि पूजने ।
मन्दारमूर्तिपूजाभिरहं गृहगतोऽभवम् ।।२७।।

दारिद्र्यं नैव विघ्नानि नापमृत्युर्न च ज्वरः।
नाग्निचोरभयं तत्र कदाचिदपि जायते ।।२८।।

वेदवेदाङ्गविद् विप्रः क्षत्रियो विजयी भवेत् ।
वैश्यस्तु वृद्धिप्राप्नोति शूद्रः सद्गतिमाप्नुयात् ।।२९।।

क उवाच

एवमुक्त्वा स्थितो देवो मूले मन्दारके तदा।
शमीमूलेऽपि तस्थौ स देवदेवो विनायकः ।।३०।।

वरदानबाट दुबै वृक्षको महिमा पनि बढ्न जाँदा ती वृक्षहरूका लागि ठूलो उपलब्धि भएको छ।।१९-२०।। तपाईंहरूको अनुरोधका कारण मैले यो वरदान दिएको हुँ। भ्रुशण्डी ऋषिले दिएको वचनलाई तोड्न म सक्दिनँ। म दूर्वाङ्कुर चढाउँदा जति खुसी हुन्छु, मन्दारपत्र चढाउँदा पनि त्यत्तिकै खुसी हुन्छु। दूर्वाङ्कुर र मन्दारपत्र नपाइएको अवस्थामा शमीपत्रको उत्तिकै महत्त्व हुने गर्दछ। यस विषयमा सन्देह गर्नुपर्दैन। अनेक थरि यज्ञ, तीर्थ, व्रत, दान र अनेक शास्त्रका नियममा रही तपस्या गरेर जुन पुण्य पाइँदैन त्यो पुण्य मन्दार, शमी र दूर्वाङ्कुर चढाएर पूजा गर्दा पाउन सकिन्छ।।२१-२३।। हे ऋषिहरू ! म धन र सुनको राशिबाट खुसी हुँदिन, म अन्नदानबाट पनि त्यति खुसी हुँदिन, अनेक थरि फूलहरू चढाएर पनि म त्यति खुसी हुँदिन, अनेक थरि मणि, रत्न र मोतीको हार चढाएर पनि म प्रसन्न हुँदिन परन्तु शमीपत्र चढाएर पूजा गर्दा म प्रसन्न हुन्छु।।२४।। जसले बिहान उठेर शमीको दर्शन गरी नमस्कार र पूजा गर्दछन्, तिनका रोग, कष्ट, विघ्न, बाधा र बन्धन समाप्त हुन्छन्।।२५।। यसका साथै ती मानिसले मेरो कृपाबाट पत्नी, पुत्र र धन प्राप्त गर्दछन्। यसैगरी अनेक थरि उत्तम पशु प्राप्त गर्दछन्। अनेक प्रकारका कामनाहरूको भोग गरेर अन्तमा तिनले मुक्ति पनि प्राप्त गर्दछन्।।२६।। दूर्वाङ्कुर अर्पण गरेर पूजा गर्दा जुन फल प्राप्त हुन्छ, शमीपत्र चढाएर पूजा गर्दा जुन फल प्राप्त हुन्छ, मन्दारपत्र चढाएर पूजा गर्दा जुन फल प्राप्त हुन्छ, त्यही फल मन्दारको काठबाट बनेको मूर्तिमा पूजा गर्दा पनि प्राप्त हुन्छ। जसले मन्दारको मूर्ति बनाएर घरमा भित्र्याउँछन् तिनले दरिद्रता व्यहोर्नु पर्दैन, तिनका जीवनमा विघ्न आइलाग्दैन, तिनको अकालमा मृत्यु हुँदैन, तिनलाई ज्वरो आउँदैन र आगो एवं चोरको डर कहिल्यै पनि हुँदैन।।२७-२८।। शमीपत्र, दूर्वाङ्कुर र मन्दारपत्रद्वारा भगवान् गणेशको पूजा गर्दा ब्राह्मण वेदवेदाङ्गको ज्ञाता बन्दछ, क्षत्रियले युद्धमा विजय प्राप्त गर्दछ, वैश्यले वृद्धि प्राप्त गर्दछ र शूद्रले उत्तम गति प्राप्त गर्दछ।।२९।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी वरदान दिनुहुने भगवान् श्रीगणेश मन्दारवृक्षको फेँदमा गएर बस्नुभयो । त्यसैगरी शमी-वृक्षको फेँदमा पनि गएर बस्नुभयो। गणेश आराधनाको महत्त्व

औरवोऽपि सपत्नीकस्तपस्तप्तुं स्थिरोऽवत् ।
तस्य मूले तपस्तप्त्वा त्यक्त्वा देहं दिवङ्गतः ।।३१।।

शमीगर्भगतो दुःखादौरवो दृढयोगतः ।
शमीगर्भ इति ख्यातो जातौऽसौ हव्यभुक् ततः ।।३२।।

अत एव शमीकाष्ठं मथनन्तीहाग्निहोत्रिणः ।
शौनकोऽपि वचः श्रुत्वा गजाननसमीरितम् ।।३३।।

कृत्वा मन्दारमूलस्य मूर्तिं चारु गजाननीम् ।
मन्दारैश्च शमीपत्रैर्दूर्वाभिश्चार्चयन्मुदा ।।३४।।

ददौ वरान् शौनकाय परितुष्टो गजाननः ।
ततः स्वमाश्रमं यातः सर्वदाऽपुपूजच्च तम् ।।३५।।

गृत्समद उवाच

तदारभ्य शमी तस्य गणेशस्य प्रियाऽभवत् ।
इति ते सर्वमाख्यातं पुनश्च कथयामि ते ।।३६।।

बुझेका औरव ऋषिले पनि पत्नीसहित तपस्या गर्न आरम्भ गरे। शमीको फेंदमा बसेर तपस्या गरेकाले तिनको तपस्या सफल भयो। देहत्याग गरेपछि स्वर्गमा गए।।३०-३१।। शमीको गर्भमा भगवान् श्रीगणेशको निवास भयो। औरव ऋषिले कष्टपूर्वक तपस्या गरेर भगवान्लाई खुसी गराए। शमीको गर्भमा अग्निका रूपमा भगवान्को निवास भयो। त्यस दिनदेखि अग्निलाई पनि शमीगर्भ भन्न थालियो।।३२।। अग्निहोत्र गर्ने विद्वान्हरूले आज पनि शमीको काठलाई घर्षण गरेर अग्नि पैदा गर्ने गर्दछन्। औरव ऋषि मुक्त भएको घटना शौनक ऋषिले पनि सुने र तिनले पनि मन्दारको फेंदका काठबाट भगवान् श्रीगणेशको मूर्ति बनाई मन्दारपत्र, शमीपत्र र दूर्वाङ्कुरबाट पूजा गरे । भगवान् श्रीगणेश प्रसन्न हुनुभयो र शौनकको आश्रममा जानुभयो। त्यसपछि शौनकले पनि दिनदिनै भगवान्को दर्शन र पूजा गर्ने अवसर प्राप्त गरे।।३३-३५।।

**गृत्समदले भने** - त्यस दिनदेखि श्रीगणेशका लागि शमीवृक्ष अत्यन्त प्यारो भयो। यी सबै कुरा मैले तपाईंलाई बताएँ। अरू पनि शमीसम्बन्धी र दूर्वाङ्कुरसम्बन्धी महत्त्वका विषयमा बताउनेछु।।३६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते शमीमन्दारप्रशंसा नाम पञ्चत्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शमी र मन्दारको प्रशंसा' शीर्षकान्वित पैंतीसौं अध्याय पूर्ण भयो ।।३५।।

ॐ

## षट्त्रिंशोध्यायः

### गृत्समद उवाच

सह्याद्रिपर्वते देवो न्यवसद् गिरिजायुतः।
स्वगणैर्मुनिभिर्युक्तः पुण्यक्षेत्रे महाबले ।।१।।
दिदृक्षुः प्रययौ तत्र ब्रह्मा लोकपितामहः।
पत्नीद्वयसमायुक्तो देवगन्धर्वकिन्नरैः।।२।।
दृष्ट्वा तु शङ्करं पूज्य स्वाभिप्रायं न्यवेदयत् ।
आकारयामास तदा परमर्षीन् सदाशिवः।।३।।
जमदग्निं वसिष्ठञ्च मार्कण्डेयञ्च नारदम् ।
कपिलं पुलहं कण्वं विश्वामित्रं त्रितं द्वितम् ।।४।।
न आययुः शिवाहुता अन्ये सर्वे दिदृक्षवः।
उत्र काले मुहूर्ते ते निष्कास्य प्रारभन् मखम् ।।५।।
भगवन्तोऽथ विस्मृत्य पूजां वैनायकीं शुभाम् ।
सावित्रीं गृहकार्येषु सक्तां त्यक्त्वा मुनीश्वराः।।६।।
गायत्रीमुपवेश्यैव पुण्याहवाचनञ्च ते ।
कारयित्वाऽऽभ्युदयिकं मातृपूजनपूर्वकम् ।।७।।
अस्थापयन्नग्निकुण्डे यावद् वैश्वानरञ्च ते ।
सावित्री तावदायातारम्भं दृष्ट्वा रुषान्विता ।।८।।
उवाच क्रोधरक्ता सा वीक्ष्य सर्वान् सभासदः।

### सावित्र्युवाच

मन्नादृत्य यागोऽयं समारब्धो न सेत्स्यति ।।९।।

### ऋषिरुवाच

स्फुरन्ती मुखतो ज्वाला दग्धुकामा चराचरम् ।
शशाप सा देवमुनीन् जडा यूयं भविष्यथ ।।१०।।
निवृत्त्याऽनधिकारां तां गायत्रीं सर्व एव यत् ।
ततो देवाः प्रणम्योच्चैः प्रार्थयामासुरुत्सुकाः ।।११।।
सावित्रि सर्वजननी डलयोरैक्यतः शुभे।
अस्माकं भविष्यामो नदीनदस्वरूपिणः।।१२।।

## { ३६ अध्याय }

**गृत्समदले भने-** भगवान् शङ्कर पार्वतीका साथ आफ्ना गण र मुनिहरूलाई लिएर पुण्यक्षेत्र महाबलमा आश्रम बनाएर बस्नुभएको थियो।।१।। एक दिन लोकपिता ब्रह्माजी भगवान् शङ्करको दर्शन गर्न महाबलमा जानुभयो। ब्रह्माजीका साथमा उहाँका दुई पत्नी, देवता, गन्धर्व एवं किन्नरहरू पनि थिए।।२।। भगवान् शङ्करको दर्शन गरी पूजा गरेर ब्रह्माजीले आफ्नो अभिप्राय प्रकट गर्नुभयो। त्यस बेला भगवान् शिवजीले महर्षि जमदग्नि, वशिष्ठ, मार्कण्डेय, नारद, कपिल, पुलह, कण्व, विश्वामित्र, त्रित, द्वितजस्ता परमर्षिहरूलाई आमन्त्रित गर्नुभयो । शिवजीद्वारा आमन्त्रित ती सबै ऋषिहरूका साथ अन्य दर्शनार्थीहरू पनि त्यहाँ आए। तिनले प्रातःकालमा उत्तम मुहूर्त निकाली हतार गर्दै भगवान् श्रीगणेशको मङ्गलमय पूजा बिर्सेर गृहकर्ममा संलग्न सावित्रीको पनि त्याग गरी गायत्रीलाई मात्र यज्ञमण्डपमा राखी मातृका पूजन गरी आभ्युदयिक श्राद्ध गराएर यज्ञ आरम्भ गरे। त्यस बेला सावित्री आइपुगिन् । तिनले यज्ञको कार्य भइराखेको थाहा पाएर क्रोधले आँखा तर्दै सबै सभासद्‌हरूलाई भनिन्।

**सावित्रीले भन्नुभयो –** मलाई घरको काममा लगाएर मेरो बेवास्ता गरी तपाईंहरूले यज्ञ आरम्भ गर्नुभएको छ । यो यज्ञ पूरा हुँदैन।।३-९।।

**गृत्समदले भने –** मुखबाट अग्निको ज्वाला निकालिरहेकी, चराचरमय संसारलाई डढाउन चाहेझैं डरलाग्दो अवस्थामा रहेकी सावित्रीले देवता र मुनिहरूलाई सराप दिँदै भनिन् तिमीहरू जड हुनेछौ।।१०।। यज्ञमा बस्ने अधिकार नभएकी गायत्रीलाई साथ लिएर यज्ञको आरम्भ गर्‍यौ, त्यसको फल यही हो । त्यसपछि देवता र ऋषिहरूले प्रणाम गरेर उत्कण्ठापूर्वक प्रार्थना गरे ।।११।। देवता र ऋषिहरूले भने – हे सावित्री ! हजुर संसारकी माता हुनुहुन्छ, हजुरलाई हामी प्रणाम गर्दछौं। हजुरले जड बन्ने सराप दिनुभयो । संस्कृत व्याकरणमा डकार र लकारलाई एउटै मानिएको छ। हामी जडको सट्टा जलरूप भएर नदी र नदका रूपमा रहन चाहन्छौं ।।१२।।

तथेत्युक्ते तया देव्या नदीरूपत्वमागताः।
वेण्या नाम्ना महेशोऽभूत्कृष्णः कृष्णाऽभवन्नदी ।।१३।।

तत्तन्नाम्ना बभूवुस्ते सरितः सर्वदेवताः।
यत्र पूर्वं विघ्नराजो नार्च्यते ज्ञानदुर्बलैः ।।१४।।

तत्र विघ्ना भवन्त्येवं शङ्करस्य यथा पुरा ।
पुरत्रयवधे जाता विघ्नास्तस्याऽप्रपूजनात् ।।१५।।

ब्रह्मा चिन्तां परां प्राप मखविघ्न उपस्थिते ।
मन्निमित्तं सुराः सर्वे धुनीरूपमुपागताः।।१६।।

विमानं सर्वलोकेषु गमितः केन कर्मणा।
सङ्कल्पबाधश्च कथमद्य प्राप्तो दुरत्ययः ।।१७।।

विघ्नहर्ता जगन्नाथो न स्मृतो न च वाऽर्चितः।
सर्वेषां चैव देवानां यतो मोहः समाविशत् ।।१८।।

तं प्रसन्नं करिष्यामि ततो यज्ञो भविष्यति।
एवं यावच्चिन्तयते ब्रह्मा तावत्सुराङ्गनाः।।१९।।

देवान् वै तादृशान् ज्ञात्वा समीयुर्ब्रह्मणोऽन्तिकम् ।
पुलोमजा च गिरिजा छायाऽपि कमलाऽपि च ।।२०।।

अन्या अपि सम्प्रूचुस्तं सर्वास्ताः कमलाननम् ।
कथं यज्ञः समारम्भि मान्या नो मानिताः कथम् ।।२१।।

नापूजि च कथं विघ्नहर्ता पूर्वं गजाननः।
त्वयि विस्मरणं चैव न वाऽस्मारि सुरैः कथम् ।।२२।।

किमस्माभिरनुष्ठेयं देवैर्वा जलरूपिभिः।
कं याम शरणं देव ! त्वदृते कमलोद्भव ।।२३।।

इति तासां वचः श्रुत्वा मा भयं कुरुतेति कः।
ता उवाच यजिष्येऽहं यथा सर्वं भवेच्छुभम् ।।२४।।

किमसाध्यं हि भक्तानां सुप्रसन्ने गजानने।
सर्वाः कुरुध्वं तद्भक्तिं स वः सर्वप्रियं चरेत् ।।२५।।

तिनका कुरा सुनेर सावित्रीले पनि हुन्छ भन्नुभयो र देवता एवं ऋषिहरू नदीरूपमा परिणत भए। भगवान् शङ्कर वेणी नदी हुनुभयो र भगवान् कृष्ण कृष्णानदी हुनुभयो।।१३।। यसरी नै सबै देवताहरू अनेक नदीका रूपमा परिणत भए। जुन कर्ममा ज्ञानदुर्बल मानिसहरूले सर्वप्रथम विघ्नराज श्रीगणेशको अर्चना गर्दैनन् त्यहाँ विघ्न हुन्छन्। अघि शङ्करले पनि त्रिपुरको वध गर्दा श्रीगणेशको पूजा नगर्नु भएकाले ठूला विघ्न भएका थिए।।१४-१५।। यज्ञमा विघ्न भएपछि ब्रह्माजीलाई ठूलो चिन्ता पर्‍यो । उहाँले भन्नुभयो- आज म कुन कर्मले अपमानित भएँ। किन आज दुर्निवारणीय सङ्कल्पबाधा आइलाग्यो ? सबै देवताहरू मेरा निमित्त नदीका रूपमा परिणत भए । मैले विघ्नहरण गर्ने संसारका स्वामी भगवान् श्रीगणेशको संझना र पूजा पनि गरिनँ । त्यसकारण देवता र ऋषिहरूमा पनि मोह आइलाग्यो । आज म श्रीगणेशलाई प्रसन्न तुल्याउने कार्य गर्दछु। त्यसपछि मात्र मेरो यज्ञ पूरा हुनेछ। यसरी ब्रह्माजीले मनमा विचार गरिरहनुहुँदा देवाङ्गनाहरू त्यहाँ आइपुगे ।।१६-१९।। ती देवाङ्गनाहरू सम्पूर्ण देवताहरू जलरूपमा परिणत भएको जानेर ब्रह्माजीका समीपमा आएका थिए। तिनीहरूमा पुलोमजा, गिरिजा, छाया, कमला र अरू पनि थिए। ती सबैले ब्रह्माजीलाई भने - हे भगवन् ! तपाईंले कस्तो यज्ञ थाल्नुभयो ? त्यहाँ मान्यहरूको मान्यता भएन । किन तपाईंले सर्वप्रथम विघ्नहर्ता श्रीगणेशको पूजा गर्नुभएन ? कारणवश तपाईंले बिर्सनुभयो भने पनि अरू देवता र ऋषिहरूले किन त्यो कुरा याद गरेनन् ?।।२०-२२।। अब हामी देवाङ्गनाहरूले पानीको रूपमा परिणत भएका आफ्ना पति देवताहरूसँग कसरी व्यवहार गरौँ ? हे ब्रह्माजी ! अब हामी कुन देवताको शरणमा जाऔँ? देवाङ्गनाहरूका यी कुरा सुनेर ब्रह्माजीले भन्नुभयो - 'हे देवी हो! तपाईंहरू चिन्ता र डर केही नमान्नुहोस् । म श्रीगणेश भगवान्को यज्ञ गर्दैछु। त्यसबाट सर्वमङ्गल हुनेछ ।।२३-२४।। भगवान् श्रीगणेश प्रसन्न हुनुभएपछि संसारमा नहुने कुरा केही पनि छैन। तपाईंहरू सबैले भगवान् श्रीगणेशमा भक्ति गर्नुहोस्। त्यसपछि उहाँले पनि तपाईंहरूका लागि आनन्द प्रदान गर्ने

प्रमादयिष्येऽहमपि जगदीशं विनायकम् ।
अनादिनिधनं देवं सर्वकारणकारणम् ।।२६।।

इत्युक्त्वास्ता गता दूरं देशं कर्णाटकं शुभम् ।
मन्दारमूलं विघ्नेशं स्थित्वा ध्यातुं तदीरिताः।।२७।।

रामेण स्थापितं पूर्वं वक्रतुण्डेति नामतः।
यद्दृगैर्विजयी रामो हत्वा राक्षसपुङ्गवान् ।।२८।।

दशाननञ्च विख्यातं ययौ पत्न्या निजं पदम् ।
तेपुस्तत्र तपो घोरं सर्वास्ताः सुरयोषितः ।।२९।।

काचिन्नामजपं चक्रे काचिन्मन्त्रजपं तथा ।
काचित् पद्मासनं तस्थौ ध्यायन्ती परमेश्वरम् ।।३०।।

काचिद् वीरासनगता निराहारा तथाऽपरा।
सम्मार्जयन्ती द्वाराणि चत्वराणि गृहाणि च ।।३१।।

प्रदक्षिणानमस्कारैः कुर्वन्ती भक्तिमुत्तमाम् ।
काचिदेकाङ्गुष्ठगता तस्थौ ध्यात्वा विनायकम् ।।३२।।

काचिन्निमील्य नयने स्तोत्राण्येवाऽपठत् तदा ।
बहुकाले व्यतिक्रान्ते न तुतोष विनायकः ।।३३।।

तदा चिन्तां परां जग्मुः किं कुर्म इति विह्वलाः।
ततः सुमनसां भारान् दूर्वाभाराँस्तथाऽपराः ।।३४।।

समर्प्य पुपूजुर्देवं धूपदीपान्नकाञ्चनैः।
मन्दारपुष्पैरन्याश्च शमीपत्रैरथापराः ।।३५।।

नभोवाणीं ततः श्रुत्वा शमीपत्रं विना विभुः।
न मन्तुष्येदिति तदा सर्वा एव शमीदलैः।।३६।।

पुपूजुः परया भक्त्या देवदेवं गजाननम् ।।
ततः परमकारुण्यात् सुप्रसन्नः शमीदलैः ।।३७।।

प्यारो काम गर्नुहुनेछ। मैले पनि संसारका स्वामी, अनादि, अनन्त र सबै कारणका पनि कारण, परमदेवता विनायकलाई आराधनाबाट प्रसन्न तुल्याउनेछु।।२५-२६।।' ब्रह्माजीले यसरी भन्नुभएपछि ती देवाङ्गनाहरू भारतको कर्णाटक प्रान्तमा गएर मन्दार वृक्षको फेदमा बसी भगवान् श्रीगणेशलाई प्रणाम गर्दै ध्यान गर्न थाले।।२७।। अघि मर्यादापुरुषोत्तम भगवान् रामले त्यस पवित्र स्थानमा वक्रतुण्ड नामबाट भगवान् श्रीगणेशको स्थापना गर्नुभएको थियो। वक्रतुण्ड भगवान्ले प्रसन्न भएर रामलाई दिनुभएको वरदानबाट उहाँले घोर सङ्ग्राममा रावण आदि ठूला-ठूला राक्षस मारेर विजय प्राप्त गरेपछि आफ्नी पत्नी सीतालाई साथ लिएर अयोध्या आई राजसिंहासनमा विराजमान हुनुभयो । यो कुरा ध्यानमा राखी देवाङ्गनाहरूले मन्दारको फेदमा बसेर कठोर तपस्या गरे। कुनै देवाङ्गना नामजप गरिरहेका थिए भने केहीले मन्त्र जपिरहेका थिए । कुनै देवाङ्गना पद्मासन लगाएर परमेश्वर श्रीगणेशको ध्यान गर्दै बसेका थिए । कुनै देवाङ्गना वीरासनमा रहेर भगवान्को आराधना गर्दै थिए । अर्की देवाङ्गना निराहार रहेर भगवान्को आराधना गरिरहेकी थिइन्। गणेश मन्दिरका ढोका, आँगन र कोठाचोटाहरूको सरसफाइमा तल्लीन कुनै देवाङ्गना प्रदक्षिणा र नमस्कारद्वारा उत्तम भक्ति गर्दै भगवान् श्रीगणेशको आराधना गरिरहेकी थिइन्। कुनै देवाङ्गना खुट्टाको बूढी औंलाले टेकेर भगवान् विनायकको ध्यानमा बसेकी थिइन्। कुनै देवाङ्गनाले दुवै आँखा चिम्लेर भगवान् श्रीगणेशका स्तोत्रहरूको पाठ गरिरहेकी थिइन्। यसरी आराधनाको धेरै समय बित्दा पनि भगवान् श्रीगणेश प्रसन्न हुनुभएन।।२८-३३।। तसर्थ ती सबै देवाङ्गनाहरू ठूलो चिन्तामा परे। तिनीहरू हामी के गरौं भन्ने आशय व्यक्त गर्दै व्याकुल भए । त्यसपछि भारीका भारी फूल र दूबो चढाएर नमस्कार गरी धूप, दीप, अन्न र सुवर्ण समर्पण गर्दै ती देवाङ्गनाहरूले श्रीगणेशको पूजा गरे। कुनै देवाङ्गनाले मन्दारको फूल र कुनैले शमीको पात चढाएर पूजा गरे। त्यसै बेला आकाशवाणी भयो - 'शमीपत्र अर्पण नगरेसम्म भगवान् श्रीगणेश प्रसन्न हुनुहुन्न।' यो आकाशवाणी सुनेर ती सबै देवाङ्गनाहरूले एकै पटक एकै भावनाले शमीका पातहरू समर्पण गरी परम भक्तिले भगवान् श्रीगणेशको पूजा

आविरासीत् पुरस्तासां लसच्चारुचतुर्भुजः।
किरीटकेयूरधरो हारकुण्डलमण्डितः।।३८।।

लम्बकर्णो लसद्रण्डो विषाणद्वयमण्डितः।
सिद्धिबुद्धियुतश्चाखुवाहनः पीतवस्त्रवान् ।।३९।।

सर्वास्ता ददृशुर्देवं कोटिसूर्यसमप्रभम् ।
निमील्य नयने नेमुर्दण्डवत् पृथिवीतले ।।४०।।

तुष्टुवुस्ताः करपुटं कृत्वा सौम्य ! महाव्रतम् ।
अतिप्रसन्नवदनाः परमानन्दनिर्भराः।।४१।।

गरे। शमीका पातहरूको अर्पणद्वारा प्रसन्न हुनुभएका भगवान् श्रीगणेश ती देवाङ्गनाहरूप्रति ठूलो अनुकम्पा गर्दै तिनका सामु प्रकट हुनुभयो। उहाँ सुन्दर चार भुजाहरूद्वारा शोभायमान हुनुहुन्थ्यो र किरीट एवं केयूर धारण गर्नुभएको थियो । मोतीको हार र कुण्डलले सुहाउनुभएका, सुन्दर कपोलद्वारा सुशोभित, लम्बकर्ण, दुईवटा दाँत धारण गर्नुहुने, सिद्धि र बुद्धिको उपस्थितिबाट शोभायमान, पीताम्बर भगवान् गणेश आफ्नो वाहन मूसामा सवार हुनुभएको थियो । यस्ता श्रीगणेशको सबैले दर्शन गरे। करोडौं सूर्यसमान कान्तिले सुहाउनुभएका भगवान् श्रीगणेशलाई सबै देवाङ्गनाहरूले आँखा चिम्लेर भुइँमा साष्टाङ्ग दण्डवत् प्रणाम गरी स्तुति गरे । ती देवाङ्गनाहरू यसरी व्रत गरी परम आनन्दको सागरमा डुबुल्की मारिरहेका थिए।।३४-४१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते शमीपत्रार्पणप्रसन्नेन विनायकेन देवाङ्गनाभ्यः स्वरूपदर्शनं नाम षट्त्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शमीपत्र समर्पणबाट प्रसन्न विनायकद्वारा देवाङ्गनाहरूलाई वरप्रदान' शीर्षकान्वित छत्तीसौं अध्याय पूर्ण भयो ।।३६।।

ॐ

## सप्तत्रिंशोऽध्याय:	{ ३७ अध्याय }

**कीर्तिरुवाच**

कथं स्तुतिः कृता ताभिस्तां मे वद महामुने ।

**मुनिरुवाच**

कृता मा स्तुतिः कीर्ते! शृणुष्वावहिता च ताम् ।।१।।

**ता ऊचुः**

नमस्ते सर्वरूपाय सर्वान्तर्यामिणे नमः।
नमः सर्वकृते तुभ्यं सर्वदात्रे कृपालवे ।।२।।

नमः सर्वविनाशाय नमस्तेऽनन्तशक्तये ।
नमः सर्वप्रबोधाय सर्वपात्रेऽखिलादये ।।३।।

परब्रह्मस्वरूपाय निर्गुणाय नमो नमः।
चिदानन्दस्वरूपाय वेदानामप्यगोचर ।।४।।

मायाश्रयायामेयाय गुणातीताय ते नमः।
सदसत्स्वरूपाय गुणविक्षोभकारिणे ।।५।।

शरणागतपालाय दैत्यदानवभेदिने।
नमो नानावताराय विश्वरक्षणतत्पर ।।६।।

अनेकायुधहस्ताय सर्वशत्रुनिबर्हण।
अनेकवरदात्रे ते भक्तानां हितकारक ।।७।।

**क उवाच**

एवं स्तुत्वा पुनर्नत्वा याचन्ति स्म वरान् बहून् ।
देवानां जलरूपाणां स्वरूपाणि प्रयच्छ भोः।।८।।

नास्मृतिः सर्वदा ते स्यात् तथा कर्तुमिहार्हसि ।

**गणेश उवाच**

ददामि वाञ्छितं वोऽहमनुष्ठानवशीकृतः।।९।।

**कीर्तिले भनिन्** - हे महर्षि ! देवाङ्गनाहरूले कसरी स्तुति गरे ? त्यो स्तुति मलाई बताउनुहोस्।

**गृत्समदले भने** - हे कीर्ति ! त्यो स्तुति म सुनाउँछु, तपाईँले सावधान भएर सुन्नुहोस् ।।१।।

**देवाङ्गनाहरूले स्तुति गर्दै भने-** सबै चराचरका स्वरूपमा रहनुभएका हे श्रीगणेश ! हजुरलाई नमस्कार छ। सबैका अन्तर्यामी परमात्मा श्रीगणेशलाई नमस्कार छ। सम्पूर्ण संसारको सृष्टि गर्नुहुने हजुरलाई नमस्कार गर्दछौं। सबै पदार्थ र सम्पत्ति प्रदान गर्नुहुने कृपालु श्रीगणेशलाई नमस्कार गर्दछौं। सबैका संहारक, अनन्त शक्तिले सुहाउनु भएका श्रीगणेशलाई नमस्कार गर्दछौं। सबैका बोधस्वरूप एवं जागरणस्वरूप, सबैका एकमात्र आधार एवं सबैभन्दा पहिले एक रूप भएर रहनुभएका श्रीगणेशलाई नमस्कार गर्दछौं। परब्रह्मस्वरूप र निर्गुणस्वरूप श्रीगणेशलाई बारबार नमस्कार गर्दछौं। चिदानन्दस्वरूप र वेदद्वारा पनि जान्न नसकिने हे अगोचर ! हजुरलाई नमस्कार गर्दछौं। मायाको आश्रय लिएर प्रकट हुनुहुने, अपरिमित गुण र स्वभावले सम्पन्न, गुणदेखि पर रहनु भएका श्रीगणेशलाई नमस्कार गर्दछौं। सत् र असत् स्वरूपले युक्त, गुणमा विक्षोभ पैदा गरी संसारको सृष्टि गर्नुहुने, शरणागतरक्षक र दैत्य-दानवहरूको नाश गर्नुहुने श्रीगणेशलाई नमस्कार गर्दछौं। हे विश्वको रक्षामा तत्पर श्रीगणेश ! नाना किसिमका अवतार लिनुहुने हजुरलाई नमस्कार गर्दछौं। हे सम्पूर्ण शत्रुहरूका नाशक श्रीगणेश ! आफ्ना भुजाहरूमा अनेक आयुध धारण गर्नुहुने हजुरलाई नमस्कार गर्दछौं। हे भक्तहरूका कल्याणकारी प्रभु ! अनेक किसिमका वरदान दिएर भक्तहरूको मनोरथ पूरा गर्नुहुने हजुरलाई नमस्कार गर्दछौं।।२-७।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी स्तुति गरेर फेरि नमस्कार गरी ती देवाङ्गनाहरूले अनेक थरि वरहरूको याचना गर्दै भने- हे श्रीगणेश! पानीको रूपमा परिणत भएका देवताहरूलाई पूर्वस्वरूप प्रदान गर्नुहोस्।।८।। हामीलाई कहिल्यै पनि हजुरका नामको विस्मरण नहुने वर दिनुहोस् ।

स्तुत्याऽनयाशु सन्तुष्टस्तथाऽस्तु वचनं तु वः।
सावित्र्या वचनाज्जाता जलभूताः सुराः शुभाः ।।१०।।

तद्वाक्यमन्यथा कर्तुं न हि शक्तः पितामहः ।
निजं स्वरूपं यास्यन्ति स्थित्वांऽशेन तथाविधान् ।।११।।

स्वाधिकारान् प्रपत्स्यन्ते नान्यथा भाषितं मम।
शमीपत्रैः पूजयन्तु यूयं देवास्तु मामिह ।।१२।।

येनार्पितं शमीपत्रं भुवनं तेन चार्पितम् ।
सुवर्णशतभाराणां फलं प्राप्तं न संशयः।।१३।।

क उवाच

एवं ब्रुवति विघ्नेशे स्वरूपधारिणः सुराः।
स्थिता अंशान्नदीरूपा ददृशुस्ते विनायकम् ।।१४।।

तेऽपि सम्प्रार्थयामासुर्नत्वा स्तुत्वा गजाननम् ।
क्षमापराधं नो देव ! बुद्धिमोहव्यपाश्रयात् ।।१५।।

त्यक्त्वा ज्येष्ठां भवन्तञ्च प्रारभामो यजिञ्च ताम् ।
दृष्टन्तु तत्फलं सद्यः प्रसादात् ते पुनर्नवाः।।१६।।

जाताः स्मः परमानन्दं प्राप्ताः स्मः कृपया तव।
एवमुक्त्वा पुपूजुस्ते शमीपत्रैर्विनायकम् ।।१७।।

सोऽपि तान् प्रतिनन्द्याऽथ पिदधे विघ्ननाशनः।
ततस्ते सुन्दरां मूर्ति कृत्वा पाषाणतः शुभाम् ।।१८।।

चतुर्भुजां करिकराननां हेरम्बनामतः।
प्रासादं परमं कृत्वा स्थापयामासुरादरात् ।।१९।।

ऊचुश्च सर्वलोकानामुपकाराय ते सुराः।
इमां यः पूजयेद् भक्त्या विद्याधीशं सुपत्तने ।।२०।।

तस्य प्रसन्नो भगवान् सर्वान् कामान् प्रदास्यति।
वन्दनात् स्मरणाद् वापि नमनान् नात्र संशयः।।२१।।

**श्रीगणेशले भन्नुभयो**- हे देवाङ्गनाहरू ! तपाईँहरूको अनुष्ठानबाट म वशीभूत भएको छु।।९।। म तपाईँहरूलाई वरदान दिन्छु, किनकि म तपाईँहरूको स्तुतिबाट सन्तुष्ट भएको छु। तपाईँहरूले जे वरदान माग्नुभयो ती सबै पूरा हुनेछन्। सावित्रीको सरापबाट सम्पूर्ण देवताहरू पानी बनेका छन्।।१०।। सावित्रीको वचनलाई उल्ट्याउने सामर्थ्य ममा छैन। तिनीहरू केही अंशमा जलरूपमा रहनेछन् र पूर्णरूप आफ्नो स्वरूपमा फर्केर अधिकार प्राप्त गर्नेछन् । मैले भनेको कुरा फरक पर्दैन। तपाईँहरूले शमीको पात चढाएर मेरो पूजा गर्नुहोस्।।११-१२।। जसले शमीको पात अर्पण गरी मेरो पूजा गर्दछ, त्यसले सम्पूर्ण संसारलाई तृप्त गराउँछ र सय भारी सुन दान गरेसमान फल प्राप्त गर्दछ, यसमा कुनै सन्देह छैन ।।१३।। ) २२४

(**ब्रह्माजीले भन्नुभयो** - यसरी श्रीगणेशले आज्ञा गर्नुभएपछि देवताहरूले अंशरूपमा नदीरूप रहे तापनि पूर्वस्वरूप धारण गरे । तिनले भगवान् श्रीगणेशको दर्शन पाए ।।१४।। ती देवताहरूले श्रीगणेशलाई नमस्कार एवं स्तुति गरी अपराध क्षमापनका लागि प्रार्थना गर्दै भने - 'हे भगवन् ! हाम्रा बुद्धिमा रहेको मोहको जालो हटाइदिनुहोस्। मोहको जालो लाग्नाले हामीबाट हुन गएको अपराधलाई क्षमा गर्नुहोस् ।।१५।। ब्रह्माजीकी जेठी पत्नी सावित्री र हजुरलाई छाडेर हामीले यज्ञ आरम्भ गर्‍यौं। त्यसको फल पाइसकेका छौं । अहिले हजुरको कृपाबाट नवजीवन प्राप्त गरेका छौं र परम आनन्दमा मग्न भएका छौं।।१६।। यसरी आफ्ना भाव प्रस्तुत गरेर देवताहरूले शमीको पात चढाएर श्रीगणेशको पूजा गरे।।१७।। भगवान् श्रीगणेश पनि तिनीहरूको पूजालाई स्वीकार गरी ती सबैको अभिनन्दन गरेर अन्तर्धान हुनुभयो। त्यसपछि देवताहरूले शिलाको चतुर्भुज, हात्तीको जस्तो मुखमण्डल र सूँढसमेत भएका हेरम्ब भगवान्‌का नामबाट मूर्ति तयार गरी त्यस मूर्तिको स्थापनाका लागि आदरपूर्वक अति उत्तम मन्दिर बनाई प्रतिष्ठा गरे ।।१८-१९।। ती देवताहरूले सबै मानिसको उपकारका लागि प्रार्थना गर्दै भने - यस नगरमा आएर विद्याका अधिपति हेरम्ब भगवान्‌को जसले भक्तिपूर्वक पूजन गर्दछ त्यसमाथि भगवान् प्रसन्न हुनुहुनेछ र त्यसलाई सबै कामनाका फल प्रदान गर्नुहुनेछ । पूजामात्र नभई नमस्कार, स्मरण र वन्दना गर्नाले पनि सबै मानिसले सम्पूर्ण कामनाका फलहरू प्राप्त गर्नेछन्, यसमा कुनै सन्देह छैन।।२०-२१।। मन्दार वृक्षको काठबाट बनाइएको

या तत्रासीन्महामूर्तिर्मन्दारतरुनिर्मिता ।
तां गृहीत्वा ययाविन्द्रः स्वपुरं परमर्द्धिमत् ।।२२।।
सपत्नीकः पूजयते भक्त्येदानीमपि प्रभुः।
सर्वे देवाः स्वस्वपदे ततो मन्दारवृक्षजाम् ।।२३।।
कृत्वा मूर्तिं गणेशस्य शमीपत्रैरपूजयन् ।
मुदं प्रापुः स्वयोषिद्भिरापुः कामाननुत्तमान् ।।२४।।
ब्रह्मा द्वादशवर्षाणि तपः कृत्वा महत्तरम् ।
कृत्वा प्रसन्नं विघ्नेशं पुनर्यागमकारयत् ।।२५।।
सोऽपि मन्दारजां मूर्तिं पुपूजे परमादरात् ।
विघ्नराजस्य वरदां शमीपत्रैरनेकधा ।।२६।।
स्वर्णपत्रैश्च दूर्वाभिर्मन्दारैः केतकैरपि।
श्वेतदूर्वाङ्कुरैश्चापि सर्वकामफलप्रदाम् ।।२७।।

गृत्समद उवाच

एव ते वर्णितो मातर्महिमा लेशतः शुभे ।
मन्दारस्य च शम्याश्च श्रवणात् पापनाशनः।।२८।।
तत्प्रभृति देवस्य प्रियाऽत्यन्तं शमी शुभा।
अर्चित स त्वया ज्ञानात् तेनासौ पुत्र उत्थितः।।२९।।
मन्दारस्यापि महिमा मया सम्यङ् निरूपितः।
इदानीमनुजानीहि गमिष्ये निजमन्दिरम् ।।३०।।

क उवाच

श्रुत्वा च महिमानं सा शमीमन्दारसम्भवम् ।
प्रणम्य मुनिं पुत्रजीवनं विससर्ज ह ।।३१।।
य इदमाख्यानवरं गणेशप्रीतिवर्द्धनम् ।
शृणुयात् न सङ्कष्टमाप्नोति सर्वान् कामाँल्लभेन्नरः।।३२।।
यः स्मरेत् प्रातरुत्थाय शमीं मन्दारमेव च ।
गजाननं सदा भक्त्या निष्पापः स सुखी भवेत् ।।३३।।

श्रीगणेशको सुन्दर मूर्तिलाई देवराज इन्द्रले आफ्नो साथमा लिएर गए । त्यो मूर्ति आफ्नो धाममा राखेर इन्द्रले देवलोकलाई समृद्ध तुल्याए ।।२२।। अहिले पनि सपत्नीक इन्द्र मन्दारमूर्तिमा निरन्तर भक्तिपूर्वक पूजा गर्दछन् । देवताहरूले पनि आ-आफ्नो पदमा प्राप्त भएपछि मन्दारको काठबाट श्रीगणेशको मूर्ति बनाएर आ-आफ्नो धाममा स्थापना गरी शमीपत्र चढाएर पूजा गरेपछि प्रसन्नता प्राप्त गरेर आफ्ना देवाङ्गनाहरूका साथ उत्तम कामभोग गरे।।२३-२४।। ब्रह्माजीले पनि बाह्र वर्षसम्म ठूलो तपस्या गरेर भगवान् श्रीगणेशलाई प्रसन्न तुल्याई फेरि यज्ञ आरम्भ गर्नुभयो।।२५।। उहाँले पनि मन्दारको काठबाट बनेको भगवान् श्रीगणेशको मूर्तिमा शमीपत्र चढाएर परम आदरका साथ पूजा गर्नुभयो।।२६।। त्यसपछि उहाँले स्वर्णपत्र, दूर्वाङ्कुर, मन्दार, केतकीपुष्प र सेता दूर्वाङ्कुरद्वारा पनि अनेक कामनाको फल प्रदान गर्ने श्रीगणेशको मन्दारमूर्तिमा पूजा गर्नुभयो।।२७।।

**गृत्समदले भने-** हे कीर्ति! मैले तपाईंलाई मन्दार शमीको लेशमात्र महिमा बताउन सकें। मन्दार र शमीको नाममात्र सुन्दा पनि पापहरूको नाश हुन्छ।।२८।। त्यस दिनदेखि भगवान् श्रीगणेशका निमित्त शमी अत्यन्त प्यारो वृक्षका रूपमा प्रसिद्ध भयो। तपाईंले ज्ञानपूर्वक शमीका पात चढाएर श्रीगणेशको पूजा गर्नुभयो। त्यसैले गर्दा तपाईंका छोरा मृत्युको मुखमा परेर पनि जागे।।२९।। मैले तपाईंलाई मन्दार वृक्षको महिमा बताएँ। अब मलाई आज्ञा दिनुहोस्! म अब आफ्नो आश्रमतर्फ जान्छु ।।३०।।

**ब्रह्माजीले भन्नुभयो-** कीर्तिले गृत्समद ऋषिबाट मन्दार र शमीको महिमा सुनेर आफ्नो छोरालाई जीवनदान गर्ने ती मुनिलाई प्रणाम गरी बिदा दिइन्।।३१।। जुन मानिसले श्रीगणेशको प्रीति बढाउने यो आख्यान सुन्दछ त्यसले कहिल्यै पनि सङ्कट प्राप्त गर्दैन र सबै कामनाका फलहरू प्राप्त गर्दछ।।३२।। जसले बिहान उठेर भगवान् गणेश, मन्दारवृक्ष र शमीवृक्षको भक्तिपूर्वक स्मरण गर्दछ त्यो मानिस निष्पाप र सुखी बन्दछ।।३३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते शमीमन्दारमाहात्म्यं नाम सप्तत्रिंशोऽध्यायः

प्र. डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शमी र मन्दारको महिमा' शीर्षकान्वित सैंतीसौं अध्याय पूर्ण भयो ।।३७।।

ॐ

## अष्टात्रिंशोऽध्यायः

## { ३८ अध्याय }

कीर्तिरुवाच

सम्यगुक्तं त्वया ब्रह्मन् ! शमीमाहात्म्यमादरात् ।
मन्दारस्यापि कथितं तेन मे तुष्यते मनः ।।१।।
जीवितश्च कुमारोऽयमुपदिष्टः षडक्षरम् ।
न चोच्चारयितुं शक्यं बालभावान्मुनीश्वर ।।२।।
सुगमं सुप्रसादञ्च स्वराज्यप्रापकं मुने ।
जप्तुं शक्यं बालकेन मन्त्रमस्मै दिशाधुना ।।३।।

मुनिरुवाच

सम्यग् दृष्टा तव मतिर्गजाननपदाम्बुजे ।
अतोऽहमस्य दास्यामि निजं मन्त्रं सुखप्रदम् ।।४।।
सर्वस्य जगतो हेतुर्नाम यच्चतुरक्षरम् ।
शुभाशुभस्य च द्रष्टुर्दुष्टदैत्यहरस्य च ।।५।।
सर्वधर्मपरित्रातुर्दिवोदासोपकारिणः।
द्विजरूपधरस्यापि वाराणस्यां स्थितस्य ह ।।६।।
विश्वेश्वरस्याविमुक्तप्राप्त्यै यत्नं प्रकुर्वतः।
सर्वान्तर्यामिणश्चापि विश्वेश्वरनुतस्य ह ।।७।।
जगतः पालनार्थाय जनार्दननुतस्य च ।
ध्यातस्य पूजितस्यापि ब्रह्मणा सृष्टिहेतवे ।।८।।
अर्चितस्य शिवेनापि सर्वसंहारहेतवे।
पुलोमजाधवेनापि पूजितस्य सुभक्तितः।।९।।
दैत्यानां निधनार्थाय देवराज्यसुखाप्तये।
सूर्येण वरुणेनापि शशिना च यमेन च ।।१०।।
अग्निना वायुना स्वस्वगुणोत्कर्षाय पूजितः।
बृहस्पत्युशनोभ्याञ्च स्वस्वोत्कर्षाय पूजितः।।११।।
शेषेणाराधितो ढुण्ढिर्धराधरणहेतवे।
गन्धर्वकिन्नरा यक्षाः सिद्धचारणराक्षसाः।
ऋषयः पशवः सर्वे स्थावरा जङ्गमाः शुभाः।।१२।।

**कीर्तिले भनिन्** - हे मुनि ! हजुरले आदरपूर्वक शमी र मन्दारको महिमा सुनाउनुभयो, तर सुनेर मेरो मन अघाउँदैन।।१।। हजुरबाट ६ अक्षरका मन्त्रको उपदेश प्राप्त गरी बालक पनि जीवित भयो। बालक अवस्थामा त्यस मन्त्रको उच्चारण गर्न सकिँदैन। त्यस कारण हे मुनीश्वर ! बालकद्वारा पनि जप्न सकिने, सुगम, छिट्टै प्रसन्नता दिलाउने र राज्य प्राप्त गराउने मन्त्रको उपदेश गर्नुहोस् ।।२-३।।

**मुनिले भने** - हे कीर्ति ! गणेशका चरणकमलमा तपाईँको राम्रो भक्ति देखेँ। त्यस कारण म यस बालकलाई मैले जप्ने गरेको सरल तर प्रभावकारी मन्त्रको उपदेश गर्दछु ।।४।। जगत्का उत्पत्तिकारण, शुभ र अशुभको पहिचान गर्ने, दुष्ट दैत्यहरूको नाश गर्ने, सबै धर्महरूको रक्षा गर्ने, दिवोदासनामक पौराणिक पात्रको उपकार गर्ने, ब्राह्मणको रूप धारण गर्ने, वाराणसीमा वर्तमान विश्वेश्वरका कृपाबाट मोक्षप्राप्तिका लागि यत्न गर्ने, सर्वान्तर्यामी, विश्वेश्वरद्वारा वन्दित, संसारको पालनका निमित्त नारायणद्वारा वन्दित, ब्रह्माजीद्वारा ध्यान गरिएका र सृष्टि सफल होस् भन्नाका निमित्त पूजा गरिएका, शिवजीद्वारा पनि कार्य सफल होस् भन्ने अर्थले पूजा गरिएका, देवराज इन्द्रद्वारा पनि दैत्यहरूको नाश र देवराज्यको सुख एवं समृद्धिका लागि भक्तिपूर्वक आराधना गरिएका श्रीगणेशको चार अक्षरको पवित्र नाम रहेको छ ।।५-९।। सूर्य, वरुण, चन्द्रमा, यम, अग्नि, वायु आदि देवताद्वारा पनि आ-आफ्नो उत्कर्ष प्राप्तिका लागि आराधना गरिएका, बृहस्पति र शुक्राचार्यद्वारा ज्ञान र कलाको उत्कर्षका लागि पूजा गरिएका, शेषनागद्वारा पृथिवी धारण गर्ने सामर्थ्य बढाउनका लागि आराधित भगवान् गणेश ढुण्ढिराजका नामबाट प्रसिद्ध हुनुहुन्छ। गन्धर्व, किन्नर, यक्ष, सिद्ध, चारण, राक्षस, ऋषि, पशु, सबै स्थावर एवं जङ्गमले पनि आ-आफ्नो कार्यसिद्धिका लागि विश्वका स्वामी श्रीगणेशको आराधना गर्दछन् ।।१०-१२।।

आराधयन्ति विश्वेशं स्वस्वकार्यार्थसिद्धये।
अपारगुणपारोऽयं ढुण्ढिराजोऽखिलेश्वरः।।१३।।
गुणान्तं न ययुर्यस्य ब्रह्मविष्णुशिवादयः।
तस्मिँस्तु पूजिते भक्त्या शमीपत्रेण भावतः।।१४।।
पुत्रस्ते भविता राज्यभागी शत्रुनिबर्हणः।

कीर्तिरुवाच

श्रुतो मे महिमा ब्रह्मन् ! ढुण्ढिराजाश्रयोऽखिलः ।।१५।।
किंकर्मा कथमुत्पन्नः कस्यांशः किंपराक्रमः।
केनास्य च कृतं नाम केनासौ पूजितः पुरा ।।१६।।
इमं मे संशयं ब्रह्मंश्छेत्तुमर्हस्यशेषतः।

मुनिरुवाच

सम्यक् पृष्टं त्वया भद्रे ज्ञानाधिकतया शुभे।।१७।।
भक्त्या निवेदितश्चायं संशयस्तं नुदामि ते ।
यथा दुरासदो दैत्यो हतोऽनेन तु राक्षसाः ।।१८।।
मायावतारो मोहाय दिवोदासं नृपं गतः ।
अविमुक्तं समानीतो यथा विश्वेश्वरो हरः।।१९।।
ढुण्ढिराजेति नामास्य येन जातं नृपाङ्गने ।
तत्सर्वं कथयिष्यामि यथा स्कन्दाच्छ्रुतं मया ।।२०।।
अगस्त्याय कथयता शृणुष्वैकमनाः शुभे।

स्कन्द उवाच

शृणुष्वावहितो ब्रह्मन्नविमुक्ताश्रयां कथाम् ।।२१।।
यस्याः श्रवणमात्रेण सर्वपापैः प्रमुच्यते ।
कश्यपाय हरिः प्राह सृज नानाविधाः प्रजाः ।।२२।।
प्रकृष्टतपसा कायः ससृजेऽथ जरायुजाः प्रजाः।
एकविंशतिसाहस्रमण्डजाः स्वेदजास्तदा ।।२३।।
उद्भिजाश्चैव तावन्त्यो मानुष्यं तासु दुर्लभम् ।
पुण्येन लभते तच्च ब्राह्मण्यं बहुपुण्यतः।।२४।।

भगवान् ढुण्ढिराज गणेश्वर अपरम्पार गुणसम्पन्न हुनुहुन्छ र सबैका स्वामी हुनुहुन्छ। ब्रह्मा, विष्णु र शिवजी पनि श्रीगणेशका गुणको अन्त पाउँदैनन्। हे कीर्ति ! तपाईँले भक्तिपूर्वक शमीपत्र चढाएर ढुण्ढिराज श्रीगणेशको आराधना गर्नुभयो भने तपाईँका छोराले शत्रुनाश गरेर राज्याधिकार प्राप्त गर्नेछन्।

**कीर्तिले भनिन्**- हे मुनिवर ! मैले ढुण्ढिराज भगवान्सँग सम्बद्ध सम्पूर्ण महिमा सुनें।।१३-१४।। भगवान् ढुण्ढिराजका योगदान के हुन् ? उहाँ कसरी उत्पन्न हुनुभयो ? उहाँ कसका अंशावतार हुनुहुन्छ ? उहाँको पराक्रम कस्तो छ? उहाँको नामकरण कसले गरेको हो ? कसले उहाँको सबभन्दा पहिले आराधना गर्‍यो ? मेरा यस्ता संशय छन्।।१५-१६।। हजुरले यी संशयहरूको छेदन गर्नुहोस्।

**मुनिले भने** - हे कल्याणी ! तपाईँ ज्ञानका दृष्टिबाट सम्पन्न र कल्याणमय आचारले युक्त हुनुहुन्छ । तपाईँले आफ्नो व्यक्तित्व अनुकूल उत्तम प्रश्न सोध्नुभएको छ ।।१७।। तपाईँले भक्तिपूर्वक आफ्ना संशयहरू बताउनुभएकी हुनाले म त्यो संशय हटाउन तयार छु। जसरी भगवान् गणेशले दुरासदनामक दैत्य र अरू राक्षसलाई पनि मार्नुभयो, फेरि मायावतार लिएर दिवोदासलाई मोहित गर्न तिनका समीपमा जानुभयो । जसरी उहाँले विश्वेश्वर शङ्कर भगवान्लाई वाराणसीमा ल्याउनुभयो, जसरी उहाँको नाम ढुण्ढिराज रहन गयो ती सबै प्रश्नको उत्तर मैले भगवान् स्कन्दले अगस्त्य ऋषिलाई बताउँदा सुनेअनुसार तपाईँलाई बताउनेछु । सावधान भएर सुन्नुहोस् ।

**स्कन्दले भन्नुभयो** - हे अगस्त्य ऋषि ! तपाईँले अविमुक्तसँग सम्बद्ध कथा सुन्नुहोस्।।१८-२१।। त्यस कथाको श्रवणमात्र गर्दा श्रोता पापबाट मुक्त हुन्छ। एक दिन भगवान् नारायणले कश्यप ऋषिलाई भन्नुभयो - 'तिमीले अनेक थरि सृष्टि गर।' कठोर तपस्या गरेपछि कश्यपले पनि अनेक थरि प्रजाहरूको सृष्टि गरे। ती सृष्टि गरिएका सन्तानहरूमा जरायुज, अण्डज, उद्भिज र स्वेदज गरी चारथरिका प्राणीहरू थिए। जरायुज, अण्डज र स्वेदज प्रत्येक एक्काइस हजारको संख्यामा सृष्टि गरिएका थिए अनि उद्भिज पनि त्यत्तिकै संख्यामा रचिए। मनुष्यजीवन दुर्लभ छ र पुण्यले प्राप्त गरिन्छ। मनुष्यमा पनि

तच्चेत् संरक्षितं सम्यग् धर्माधर्मव्यवस्थया।
ददाति परमं स्थानं यद् गत्वा न निर्वतते ।।२५।।

चतुरशीतिलक्षेषु नो चेत् पतितजन्मसु ।
दुराचारा नरा याम्ययातनासु पतन्ति वै ।।२६।।

कर्मक्षये ततो जाते बहुकालेन ते पुनः।
मृत्युलोकं समायान्ति काणाः कुब्जा दरिद्रिणः ।।२७।।

तदेषामनुकम्पार्थं ब्रह्मेशानादयः सुराः।
ऋषयश्च महाभागा नानातीर्थानि चक्रिरे ।।२८।।

क्षेत्राणि च महार्हाणि प्राणिपापहराणि च।
विलयन्तः स्थितास्तत्र पापं देवर्षयस्तदा ।।२९।।

यत्र स्थितानां जन्तूनां पापस्य विलयो भवेत् ।
जन्तून् पापात् परित्रातुं स्थिता देवर्षयः सदा।।३०।।

सर्वश्रेष्ठां सर्वगुणां भुक्तिमुक्तिप्रदां शुभाम् ।
विश्वेश्वरो निर्ममेऽथ ध्यातृज्ञातृविमुक्तिदाम् ।।३१।।

सर्वतीर्थमयीं रम्यां नाम्ना वाराणसीं पुरीम् ।
यत्र चक्रे सरः ख्यातं विष्णुना प्रभविष्णुना ।।३२।।

तपस्यता कृतं चारु स्नानमात्रेण मुक्तिदम् ।
यद् दृष्ट्वा कन्धराकम्पाच्छिवस्य कुण्डलान्मणिः।।३३।।

पतितस्तत्र सञ्जाता नाम्ना सा मणिकर्णिका ।
ततो भगीरथाहूता जाता भागीरथी नदी ।।३४।।

अत्र कीटपतङ्गानां मुक्तिर्मरणतो भवेत् ।
त्रिवारनामस्मरणात् काशीवासफलप्रदा ।।३५।।

धन्यास्ता वीरुधो वल्ल्यस्तृणवृक्षा न चान्यतः।
गछन्ति कमठा मत्स्या भूकैलासं विहाय तत् ।।३६।।

ब्राह्मण वर्णको जीवन धेरै पुण्यबाट मात्र प्राप्त हुन्छ।।२२-२४।। धर्म र अधर्मलाई जानेर ब्राह्मणले आफ्नो ब्राह्मणत्वको रक्षा गरे भने त्यसले परम स्थान प्रदान गर्दछ, जुन स्थानबाट कहिल्यै फर्कनु पर्दैन।।२५।। ब्राह्मण भएर उत्तम कर्म गर्ने मानिसहरू कहिल्यै पनि चौरासी लाखको चक्रमा पर्दैनन्। दुराचारी मानिसहरू भने यमका यातना भोग्न बाध्य हुन्छन्।।२६।। कर्मभोग समाप्त भएपछि मात्र धेरै कालमा ती पापी प्राणीहरू पृथिवीमा जन्मिन आउँछन् । नरक भोगेर आएका ती प्राणीहरू काना, कुजा र कङ्गाल भएर जन्मिन्छन्।।२७।। नरकबाट फर्केर आएका मानिसहरूमाथि कृपा गर्न ब्रह्मा, विष्णु, नारायण आदि देवता र ऋषिहरूले पनि अनेक तीर्थको परिकल्पना गरेका थिए ।।२८।। त्यसैगरी तिनीहरूले मानिसका पापलाई नाश गर्न गौरवशाली धाम र तीर्थहरूको व्यवस्था गरे। ती तीर्थ र धामहरूमा देवता र ऋषिहरू निवास गर्दछन् र तिनले सबैका पाप नाश गर्दछन् ।।२९।। तीर्थ र धाममा जाने तीर्थालु मानिसहरूका पाप नष्ट हुन्छन् । देवता र ऋषिहरू प्राणीलाई पापबाट जोगाउन तीर्थहरूमा बसिरहेका हुन्छन् ।।३०।। भगवान् विश्वेश्वरले सबैभन्दा श्रेष्ठ, सबैभन्दा गुणसम्पन्न, भुक्ति र मुक्ति दिने, ध्यान एवं ज्ञान गर्ने मानिसहरूलाई मोक्षको आनन्द प्रदान गर्ने, सबै तीर्थहरूभन्दा उत्तम सर्वतीर्थमय वाराणसी पुरीको निर्माण गर्नुभएको थियो । त्यहीं नै भगवान् विष्णुले तपस्याकालमा स्नानमात्र गर्दा मुक्ति प्रदान गर्ने एउटा महत्त्वपूर्ण सरोवरको निर्माण गर्नुभयो।।३१-३२।। जुन सरोवरको दर्शन गर्नासाथ शिवजीका काँधमा कम्पन भयो र कम्पनका कारण कानको कुण्डलबाट मणि खस्न गयो। मणि खसेका कारण वाराणसीमा मणिकर्णिका तीर्थको उत्पत्ति भयो। राजा भगीरथले तपस्या गरेर धर्तीमा ल्याइएकी भागीरथी नदी पनि मणिकर्णिकामा आएर पूर्वतिर बग्ने गर्दछिन्।।३३-३४।। मणिकर्णिकामा प्राणत्याग गर्नाले कीरा र पतङ्गहरूको पनि मुक्ति हुन्छ। तीन पटक मणिकर्णिका भन्नाले काशीवासको फल प्राप्त गरिन्छ। ती बिरुवा, लता, तृण र वृक्षहरू धन्य छन् जसले मणिकर्णिकाको स्पर्श गर्दछन् । त्यसैगरी त्यहाँ रहने माछा र कछुवा पनि धन्य छन् । ती सबैलाई पृथिवीको सुन्दर क्षेत्र हिमालयअन्तर्गत कैलासबाहेक अन्यत्र जानु

नित्यं यत्र स्थितः शम्भुर्नानारूपोऽथ रूपवान् ।
रविः शशी हरिर्ब्रह्मा स एव गिरिजापतिः ।।३७।।

विनायकः शक्तिरूपः कारणं जगतोऽपि सः।
प्रलयेऽपि त्रिशूलाग्रे ध्रियते येन काशिका ।।३८।।

एकोऽयं पञ्चधा जातो लोकानुग्रहकाम्यया ।
भक्तो यां ध्यायति मूर्तिं सा तेन ध्रियते क्षणात् ।।३९।।

अत्र यो मनुते भेदं सोऽवीचीर्लभते नरः।
स्तुतिमेकत्र निन्दां वा परत्र यः समाचरेत् ।।४०।।

स याति नरकानेकविंशतिं बहुवत्सरम् ।
अतो भस्मासुरसुतः ख्यातो नाम्ना दुरासदः ।।४१।।

स शुक्रमुपसङ्गम्य विद्यां पञ्चाक्षरीमगात् ।
दिव्यवर्षसहस्रं स एकाङ्गुष्ठस्थितोऽभवत् ।।४२।।

निराहारः काष्ठभूतः सवल्मीकोऽस्थिशेषवान् ।
नेत्रमात्रावशिष्टोऽसौ जजाप परमं मनुम् ।।४३।।

आययौ तं वरं दातुं तत्क्लेशपरितोषितः ।
दशबाहुः पञ्चवक्त्रो रुण्डमालाविभूषितः ।।४४।।

त्रिशूलं डमरुं बिभ्रज्जटाजूटविभूषितः।
गङ्गाधरस्त्रिनयनश्चिताभस्माङ्गलेपनः।।४५।।

वृषध्वजो वृषारूढः शशिरेखाविभूषितः।
अपर्णाङ्कृपाविष्टो जगाद दैत्यपुङ्गवम् ।।४६।।

शिव उवाच

उत्तिष्ठोत्तिष्ठ भद्रं ते तपसा क्लेशितो भृशम् ।
ईप्सितं ते प्रदास्यामि वरयस्व हृदि स्थितम् ।।४७।।

क उवाच

तत उन्मील्य नयने बद्धाञ्जलिपुटोऽसुरः
प्रणम्य परितुष्टाव वरदं तं महेश्वरम् ।।४८।।

पर्दैन।।३५-३६।। त्यहाँ भगवान् शिवजी नाना रूप धारण गरेर विराजमान हुनुहुन्छ। सूर्य, चन्द्रमा, नारायण, ब्रह्मा, शिव, गणेश एवं शक्तिरूप र जगत्‌का कारण विश्वनाथले प्रलयकालमा पनि काशीलाई आफ्नो त्रिशूलको टुप्पामा धारण गर्नुहुन्छ।।३७-३८।। भगवान् शिवजी नै लोकमाथि अनुग्रह गर्न पञ्चमुख र पञ्चब्रह्मका रूपमा विराजमान हुनुहुन्छ। भक्तले जुनसुकै मुख अथवा मूर्तिको ध्यान गरे पनि त्यस रूपबाट भगवान्‌ले त्यसलाई धारण गर्नुहुन्छ।।३९।। जसले भेददृष्टिले ती पाँच स्वरूप र पाञ्चायन देवतालाई हेर्दछ त्यसले अवीचीनामक नरकमा गई दुःखभोग गर्दछ । जसले कहीं गएर महादेवको स्तुति गर्ने र कहीं गएर निन्दा गर्ने गर्दछ त्यो दोधारे मानिसले अनेक वर्षसम्म नरकमा बास गर्दछ । भस्मासुरको दुरासदनामक पुत्र थियो । त्यसले इन्द्रसँग गएर पाँच अक्षर भएको शिवमन्त्र प्राप्त गरी एक हजार दिव्य वर्षसम्म खुट्टाको एउटा बूढीऔंलाले टेकेर तपस्या गर्‍यो।।४०-४२।। त्यसले निराहार रहेर काठजस्तै निश्चल भई हाडछाला मात्र बाँकी रहुञ्जेल धमिराको माटाले पुरिएर केवल आँखाबाट मात्र चिनिँदै ॐ नमः शिवाय मन्त्रको जप गर्‍यो।।४३।। त्यसको कष्टपूर्ण तपस्याबाट सन्तुष्ट भएर भगवान् शङ्कर दर्शन दिन आउनुभयो। दर्शन दिन आउनुहुँदा भगवान् शिवजी दश हात र पाँच मुखले सम्पन्न हुनुहुन्थ्यो । उहाँ नरमुण्डको मालाले अलङ्कृत, त्रिशूल र डमरुद्वारा सुशोभित, जटाजूटद्वारा शोभायमान, शिरमा गङ्गा नदीलाई धारण गर्नुहुने, चिताको खरानीद्वारा विभूषित, वृषभध्वजको रूपबाट परिचित भई साँढेमाथि सवार हुनुहुन्थ्यो र उहाँको सर्वाङ्ग शरीर चन्द्रमाका किरणले ज्योतिर्मय बनेको थियो। आफ्ना काखमा पार्वतीलाई लिनुभएका कृपालु भगवान् शङ्करले दुरासदलाई भन्नुभयो।।४४-४६।।

**शिवजीले भन्नुभयो** - हे दुरासद ! तिमी उठ । तिम्रो तपस्याबाट म प्रसन्न भएको छु, तिम्रो कल्याण होस् । म तिम्रो अभीष्ट पूरा गर्न आएको छु । तिम्रा मनमा भएका कुरा बताऊ । मैले तिमीलाई वरदान दिनेछु।।४७।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् शङ्करले सम्बोधन गरेपछि दुरासदले आँखा खोलेर हेर्‍यो, हात जोड्यो, प्रणाम

त्वं जगत्कारणं देव परमानन्दविग्रहः।
क्षराक्षरातीततनुर्गुणत्रयविकारकृत् ।।४९।।

गुणातीतो ज्ञानमयो व्यक्ताव्यक्तविधानवित् ।
मुनिध्येयतनुः सर्वभक्तानुग्रहकारकः ।।५०।।

ब्रह्माण्डानामनन्तानां हेतुः श्रेयस्करः सताम्।
अखण्डानन्दपूर्णस्त्वममोघफलदायकः।।५१।।

सर्वाधारः सर्वसहः सर्वशक्त्युपबृंहितः ।
पृथिवीवायुसलिलवह्नितेजःस्वरूपवान् ।।५२।।

अद्य धन्यं तपो नेत्रे पितरौ जन्म ते यतः।
दृष्टं स्वरूपं साक्षान्मे गतं पापं लयं परम् ।।५३।।

योगिहृच्छ्रुतिवाचो यो गोचरो न कदाचन ।
इदानीं वरये देव तन्मे त्वं दातुमर्हसि ।

शिव उवाच

निश्शङ्कं वरयाशु त्वं सर्वं दास्येऽतिदुर्लभम् ।।५४।।
स्तोत्रेण तपसा चैव प्रणयेन सुतोषितः।

मुनिरुवाच

ततो वव्रेऽयं देवात् सुप्रसन्नात् सदाशिवात् ।।५५।।
चतुराकरजेभ्यो मे मा मृत्युः सम्भवेदिति।
यक्षरक्षःपिशाचेभ्यो देवदानवकिन्नरात् ।।५६।।

मुनिमानवगन्धर्वसर्पेभ्यो हि वनेचरात् ।
दृष्ट्वा रूपं मदीयं तु त्रसेयू रणमूर्द्धनि ।।५७।।
सर्वे देवा महाभाग ! सुरराज्यञ्च यच्छ मे ।
संस्मृतिश्चरणे नित्यं भक्तिस्तेऽव्यभिचारिणी ।।५८।।

शिव उवाच

एकां शक्तिं विना सर्वदेवेभ्योऽदायि तेऽभयम् ।
शक्तितेजोद्भवः कश्चिज्जित्वा सञ्जीवयिष्यति ।।५९।।

गऱ्यो र वरदायक भगवान् शिवजीको स्तुति गर्दै मन्यो – 'हे शिवजी ! हजुर जगत्का कारण र परम आनन्दस्वरूप हुनुहुन्छ। हजुरको स्वरूप क्षर र अक्षर दुई प्रकारको छ । हजुरले सत्त्व, रज र तमोगुणमा विकार पैदा गरेर संसारको सृष्टि गर्नुहुन्छ ।।४८-४९।। हजुर गुणभन्दा पर विराजमान, ज्ञानमय, व्यक्त र अव्यक्तका विधानका ज्ञाता र मुनिहरूद्वारा ध्यान गर्न योग्य हुनुहुन्छ । सबै भक्तमाथि दया गर्नुहुन्छ । अनन्त ब्राह्माण्डका कारण हुनुहुन्छ । सज्जनहरूका कल्याण-कारक देवता हुनुहुन्छ । अखण्ड आनन्दले परिपूर्ण हुनुहुन्छ। अमोघ फलका दाता हुनुहुन्छ । सबैका आधार हुनुहुन्छ । सबै कुरा सहनुहुन्छ । सबै प्रकारका शक्तिले सम्पन्न हुनुहुन्छ । पृथिवी, वायु, आगो, पानी र तेजका रूपमा हुनुहुन्छ ।।५०-५२।। आज मेरो तपस्या धन्य भएको छ, मेरा आँखा सफल भएका छन्, माता-पिता धन्य हुनुभएको छ र मेरो जन्म पनि धन्य भएको छ किनकि मैले आज हजुरको साक्षात् दर्शन पाएको छु । दर्शनबाट मेरा पाप समाप्त भएका छन्। योगीहरूका हृदयमा मात्र विराजमान हुनुहुने र वाणीद्वारा अगोचर हजुरको मैले दर्शन पाएको छु । अहिले म वरदान माग्न चाहन्छु, हजुरले त्यो पूरा गर्नुहोस् ।

**शिवजीले भन्नुभयो** – हे दुरासद ! तिमीले निःशङ्क भएर वरदान माग, म तिमीलाई दुर्लभ वरदान दिनेछु किनकि म तिम्रो विनय, तपस्या र स्तुतिबाट खुसी भएको छु ।

**मुनिले भने** – त्यसपछि दुरासदले प्रसन्न हुनुभएका भगवान्सँग वरदान माग्यो ।।५३-५५।। हे ईश्वर ! जरायुज, अण्डज, उद्भिज र स्वेदज प्राणीहरूबाट मेरो मृत्यु नहोस्। यक्ष, राक्षस, पिशाच, दानव, किन्नर, मुनि, मानिस, गन्धर्व, सर्प र वनचर यी कसैबाट पनि मेरो मृत्यु नहोस्। सबै देवताहरू मलाई युद्धको मैदानमा देखेर डरले थरथर काँपून्। मलाई हजुरले देवताको राज्य प्रदान गर्नुहोस्। मैले हजुरको निरन्तर संझना गर्दै भक्ति गर्न पाऊँ ।।५६-५८।।

**शिवजीले भन्नुभयो** – हे दुरासद ! एउटा शक्तिबाहेक अरू सबै कुरा मैले तिमीलाई प्रदान गर्दछु । तिमीलाई शक्तिको

शिरसि स्थाप्य चरणं धरिष्यति निरन्तरम् ।
निष्कासितो यदा तेन चरणस्ते शिरोगतः ।।६०।।
तदा पुनस्त्रिलोकीं त्वं बलाज्जेष्यसि तेजसा।
भक्तिश्च मे दृढतरा स्मृतिस्ते वै भविष्यति ।।६१।।

गृत्समद उवाच

एवं दत्त्वा वराँस्तस्मै शिवोऽन्तर्धानमन्वगात् ।
दुरासदोऽपि स्वगृहमाययौ हर्षनिर्भरः।।६२।।
इदं स्तोत्रं पठेद् यस्तु सर्वान् कामानवाप्नुयात् ।।६३।।

तेजबाट उत्पन्न कसैले जित्नेछ र जीवन पनि प्रदान गर्नेछ। त्यो तिम्रो शिरमा टेकेर उभिइराख्नेछ । जब त्यसले आफ्नो खुट्टा चलाउँछ, त्यस बेलामा तिम्रो शिर खस्नेछ। त्यसपछि जागेर तिमीले संसारलाई नै आफ्नो वशमा ल्याउनेछौ। ममा तिम्रो दृढभक्ति हुनेछ र सधैं मलाई संझनेछौ।।५९-६१।।

**गृत्समदले भने** - दुरासदलाई यसरी वरदान दिएर भगवान् शिवजी अन्तर्धान हुनुभयो। दुरासद पनि हर्षपूर्वक आफ्नो घर गयो । जसले दुरासदले गरेको स्तुतिको पाठ गर्दछ त्यसले चिताएका सम्पूर्ण फल प्राप्त गर्दछ ।।६२-६३।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते दुरासदवरप्राप्तिवर्णनं नामाऽष्टात्रिंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'दुरासदलाई शिवजीद्वारा वरप्रदान' शीर्षकान्वित अठतीसौं अध्याय पूर्ण भयो ।।३८।।

ॐ

## ऊनचत्वारिंशोऽध्यायः　　{ ३९ अध्याय }

मुनिरुवाच

ततस्तु वरगर्वेण शिवलब्धेन दैत्यराट् ।
न ममर्ष निजात्मानं मोहितः केवलं तु सः ।।१।।
इयेष पृथिवीं जेतुं हयारूढोऽभवत् पुरा ।
निबद्धकेशहस्तस्तु विलसत्कर्णकुण्डलः ।।२।।
असिहस्तो धनुष्पाणिर्निषङ्गद्वयशोभित :।
रत्नमुक्तामणिमयीं बिभ्रन्मालां महाधनाम् ।।३।।
कस्तूरीतिलको दिव्यवस्त्रच्छन्नः सकञ्चुकः ।
ताम्बूलविलसद्वक्त्रः प्रकृतिद्वयसंयुतः ।।४।।
याभ्यां स्वभुजवीर्येण जिता वीरा अनेकशः ।
उभयोः पार्श्वयोस्तस्य यौ गच्छेतां बलान्वितौ ।।५।।
चतुरङ्गं तु तत्सैन्यं पृथिवीविजयोद्यतम् ।
रजसाच्छादयद् व्योम विस्तीर्णं जलधेरिव ।।६।।
यो यो वीरो भवेत् स्फीतस्तं तमेवाजयच्च सः ।
तत आदाय रत्नानि द्रव्याणि च सहस्रशः ।।७।।
आस्थापयत् स तत्स्थाने स्वीयानाप्तान् महाबलान् ।
नानाधिकारे बलवान् वशे कृत्वाऽखिलान्नृपः ।।८।।
ये चाशस्त्राः करान् स्थाप्य तमेव शरणं ययुः ।
अत्यन्तं भीरवो ये तु त्यक्त्वा राज्यमपीपलन् ।।९।।
दूतैरेव वशे चक्रे तानपीत्थं दुरासदः ।
एवं भूण्डलं जित्वा शक्रं जेतुमियेष सः ।।१०।।
ससैन्यः सहसा प्रायान्नगरीं शक्रपालिताम् ।
ज्ञात्वा वरस्य सामर्थ्यं तस्य दुष्टस्य देवराट् ।।११।।
पलाय्य च गुहां यातः सामरः सकुटुम्बकः ।
तस्मिन्नेव क्षणे विष्णुः स्थानात् क्षीराब्धिमाययौ।।१२।।
अङ्के लक्ष्म्याः शिरः स्थाप्य शेते स्म मधुसूदनः ।
त्यक्त्वा कैलासशिखरं काशीं यातस्तु शूलभृत् ।।१३।।

( मुनिले भने - वरदान पाएर अभिमानी बन्न पुगेको दैत्यराजले आफ्नो आत्मालाई शान्त राख्न सकेन । त्यो मोहित भएको थियो र पृथिवी जित्ने इच्छा राखेर घोडामा सवार भयो। कपालमा जुरो एवं कानमा कुण्डल धारण गर्ने, हातमा तरवार र धनु धारण गर्ने, बाण राख्ने ठोक्राहरू भिरेको, रत्न, मोती र मणिले बनेको माला धारण गर्ने, कस्तूरीको तिलक लगाएको, सुन्दर वस्त्र धारण गर्ने, मुखमा पान चपाउँदै दुई जना मन्त्रीहरूलाई वरिपरि राखेर हिंडिरहेको त्यस दानवले संसारलाई नै आफ्नो अधिकारमा ल्याउने इच्छा राखेको थियो। जुन मन्त्रीहरूको सहायताबाट त्यसले अनेक युद्धमा वीरहरूलाई जितेको थियो, त्यस्ता बलवान् दुई मन्त्री त्यसका दायाँ र बायाँतर्फ सँगै हिंड्थे ।।१-५।। त्यसको सागरझैं फैलिएको चतुरङ्गिणी सेना पृथिवीमाथि विजय प्राप्त गर्न जोशिएको थियो । त्यसका वीरहरूले खुट्टा चाल्दा धर्तीबाट उडेको धूलोले आकाश ढाक्यो। त्यसले आफ्ना सामु लड्न आउने प्रत्येक वीर राजालाई जित्दै गयो । यसरी जित्दै जाँदा त्यसले ती ती पराजित राजाहरूबाट त्यसले अनेक रत्न र द्रव्यहरूको सङ्ग्रह गर्‍यो । आफूले जितेका राजाहरूका रिक्त पदहरूमा त्यसले आफ्ना विश्वस्त, बाहुबली वीरहरूलाई नियुक्त गर्‍यो । अत्यन्त कातर स्वभावका जुन राजाहरूले शस्त्र भुकाएर त्यसको शरण लिए र जुन कातर राजा भयले राज्यत्याग गरी भागे । ती सबैलाई दुरासदले आफ्ना दूतहरूको माध्यमबाट वशवर्ती बनायो । यसरी दुरासदले आफ्ना वीर र राजदूतहरूको माध्यमबाट पृथिवीमण्डलमा अधिकार कायम गरेर इन्द्रलाई पनि जित्ने इच्छा राख्यो ।।६-१०।। एक दिन सेनासहित दुरासद अचानक देवराज इन्द्रद्वारा रक्षा गरिएको अमरावती नगरीमा गयो । दुरासदले पाएको वरदानको शक्ति बुझेर इन्द्र पनि आफ्ना कुटुम्ब र देवताहरू सबै लिएर भागी एउटा गुफामा गएर बसे । त्यसबेला विष्णु पनि आफ्नो वैकुण्ठ धाम छाडेर क्षीरसागरमा जानुभयो ।।११-१२।। शेषशय्यामा लक्ष्मीको काखमा आफ्नो शिर राखेर सुकला गर्नुभयो । भगवान् शङ्कर पनि कैलास छाडेर काशी आउनुभयो ।।१३।। बाठा

तेनैव साकमगमद् चतुरश्चतुराननः ।
यो यो याति पदं त्यक्त्वा तत्र तत्र स दैत्यराट् ।।१४।।

स्थापयत्येव बलिनं निजं दूतं सुहृत्तमम् ।
एवं निर्जित्य विबुधान् दर्पेणैव महाबलः ।।१५।।

कैवर्तकानां विषये त्ववसद् भस्मके पुरे ।
मुकुन्दपुरमित्येव ख्यातं लोकेषु सर्वतः ।।१६।।

यस्मिन् भस्मासुरो राजा पूर्वमासीद् बलान्वितः ।
शङ्करेण वरो यस्मै दत्त आश्चर्यकारकः ।।१७।।

स मरिष्यति मूर्ध्नि त्वं यस्य हस्तं प्रदास्यसि ।
एवं दत्तवरो दैत्यो दुष्टभावप्रचोदितः ।।१८।।

परीक्षार्थं वरस्याथ वरदातुस्तु मस्तके ।
करं दातुं ययौ दुष्टः पपाल गिरिजापतिः ।।१९।।

स दृष्टश्चक्रहस्तेन विष्णुना प्रभविष्णुना ।
सुन्दरं मोहिनीरूपं धृत्वा यातस्तदन्तिकम् ।।२०।।

उवाच मम वाक्ये चेत् स्थास्यसि त्वं नरोत्तम ।
अङ्गनाऽहं तदा ते स्यां हर्षादोमिति सोऽब्रवीत् ।।२१।।

नृत्यति स्म तदा सा तु तद्वाक्यात् स ननर्त ह ।
सा यथाऽदर्शयद् भावं सोऽपि दर्शयते तथा ।।२२।।

तथाऽस्थापि स्वशिरसि हस्तस्तेनापि तत्क्षणात् ।
भस्मसादभवद् दैत्यो दुष्टचेष्टितमन्तकृत् ।।२३।।

मुकुन्दोऽपि स्थितस्तत्र तन्नाम्ना पप्रथे पुरम् ।
अनुष्ठानवतां नृणां सद्यः परमसिद्धिदम् ।।२४।।

सा मोहिनी सर्वकामान् ददाति भक्तितो नृणाम् ।
तत्र स्थित्वा त्रिभुवनं शास्ति गर्वाद् दुरासदः ।।२५।।

उवाच मन्त्रिणो गर्वात् कथं त्रिभुवनं मया ।
आक्रान्तं स्वप्रतापेन जयताऽसुरवैरिणः ।।२६।।

ततोऽमात्याः समूचुस्ते विमुक्तं न जितं त्वया ।
इमं खण्डमिति तत्तुल्यं नास्ति हि कुत्रचित् ।।२७।।

ब्रह्माजी पनि शिवजीकै साथ काशीतिर लाग्नुभयो । जुन जुन देवताहरू आ-आफ्ना पद छाडेर भागिरहेका थिए ती ती ठाउँमा दुरासद दैत्यले आफ्ना बलि वीर र उत्तम दूतहरूको नियुक्ति गरिरहेको थियो । यसरी देवताहरूलाई जितेपछि बलशाली दुरासद निषाद देशको भस्मकपुरमा गएर बस्यो । त्यो भस्मकपुर संसारमा मुकुन्दपुरका नामबाट पनि प्रख्यात छ ।।१४-१६।। पहिले त्यस ठाउँमा बलशाली भस्मासुरनामक राजा थियो । शङ्कर भगवान्ले त्यस राक्षसलाई विचित्र वरदान दिँदै भन्नुभएको थियो- 'तिमीले जसको शिरमा हात राख्नेछौ त्यो प्राणी मर्नेछ।' यस्तो वरदान प्राप्त गरेपछि दुष्ट भावनाले भरिएको भस्मासुर एक दिन प्राप्त वरदानको परीक्षण गर्न वरदाता भगवान् शङ्करकै शिरमा हात राख्छु भन्दै गयो। भगवान् शिवजी पनि आफ्नै वरदान पाएर उन्मत्त भएको भस्मासुरदेखि डराएर भाग्नुभयो ।।१७-१९।। भगवान् शङ्कर भाग्नुभएपछि उन्मत्त बनेको भस्मासुरलाई चक्रधारी नारायणले देख्नुभयो । त्यसपछि उहाँले अत्यन्त आकर्षक युवतीको रूप धारण गरेर त्यसको नजिकमा गई भन्नुभयो- 'हे राजा भस्मासुर! म एउटी आइमाई हूँ । यदि मैले भनेको मान्छौ भने म सधैंका लागि तिम्री हुनेछु।' मोहिनीरूप भगवान्का यी कुरा सुनेर भस्मासुर खुसीले नाच्न थाल्यो। मोहिनीरूप भगवान् पनि नाच्नुभयो। सुन्दरीले जस्ता भाव र चेष्टा देखाइरहेकी थिइन्, भस्मासुर पनि त्यसै गर्दै थियो ।।२०-२२।। सुन्दरीले जुनबेला आफ्नो शिरमा हात राखिन् त्यसले पनि आफ्नो शिरमा हात राख्यो तर तुरुन्तै खरानी भयो । त्यसको दुष्ट चेष्टालाई समाप्त गर्नुहुने भगवान् त्यहीं रहनुभयो । मुकुन्दले त्यसरी भगवान् शङ्करको रक्षा गर्नुभएको ठाउँ हुनाले त्यस नगरलाई पछि मुकुन्दपुर भनियो । भगवान्को आराधना गर्ने मानिसहरूका निमित्त त्यो पुर अत्यन्त सिद्धिदायक मानिएको छ ।।२३-२४।। भगवान्ले मोहिनीरूप लिएर त्यहाँ भक्तहरूलाई समय-समयमा दर्शन दिनुहुन्छ र तिनका कामनाहरू परिपूर्ण तुल्याउनुहुन्छ । अहिले दुरासद नामक दैत्य पनि त्यहीं बसेर शासन चलाइरहेको छ।।२५।। दुरासदले एक दिन मन्त्रीहरूलाई घमण्डका साथ भन्यो - 'मैले आफ्नो प्रतापले हामी राक्षसका वैरीहरूमाथि विजय गर्दै तीनै लोकलाई आफ्नो अधिकारमा ल्याएको छु।।२६।।' त्यसपछि मन्त्रीहरूले भने - 'तीन लोकमा सबै कुरा हजुरले जित्नुभयो, तर अविमुक्त क्षेत्रलाई हजुरले जित्नुभएन । त्यसलाई ब्रह्माण्डको

यत्रास्ते शङ्करः सर्वसुरैरपि च सेव्यते ।
न जितं यत्पुरं यावत् तावत् ते पौरुषं वृथा ।।२८।।

इति तद्वाक्यमाकर्ण्य मुदं लेभे रणप्रियः ।
उवाच तान् सद्य एव यामि तां वै ससैनिकः ।।२९।।

विमानवरमास्थाय क्षणाद् यातः स काशिकाम् ।
प्रविष्टमात्रे दैत्येन्द्रे हाहाकारः पुरेऽभवत् ।।३०।।

तत्र ये विबुधा आसन् सर्वे चान्तर्दधुस्तदा ।
शिवस्तु निजभक्तत्वान्न चुकोपाथ किञ्चन ।।३१।।

दत्तं राज्यं कियत्कालमित्युक्त्वा परिवारवान् ।
केदारक्षेत्रमगमन् मुनयोऽपि पलायिताः ।।३२।।

जैगीषव्यं विना सर्वे क्षेत्रसंन्यासिनं शुभे ।
ततो बभञ्ज मूर्ति स मोहाविष्टो दुरासदः ।।३३।।

प्रासादान् महतो भङ्क्त्वा मुमुदे ज्ञानदुर्बलः ।
कोऽपि चेत् स्मरते देवं तं ताड्य कुरुते बहिः ।।३४।।

न स्वाहा न वषट्कारः स्वधाकारो न च क्वचित् ।
न वेदाध्ययनं क्वापि न शास्त्राध्ययनं क्वचित् ।।३५।।

न पुराणं देवपूजा न व्रतं न प्रदक्षिणाः ।
दुरासदे दुष्टमतौ तत्र राज्यं प्रशासति ।।३६।।

कर्ममार्गे विलुप्ते तु धर्मोऽपि लयमाययौ ।
नष्टे धर्मे सुराः कीर्ते ! आसन् सर्वे बुभुक्षिताः ।।३७।।

दसौँ खण्ड मानिन्छ र त्यस क्षेत्रको तुलना कुनै क्षेत्रसँग गर्न सकिँदैन ।।२७।। त्यहाँ भगवान् शङ्कर विराजमान हुनुहुन्छ । सम्पूर्ण देवतागण त्यहाँ बसेर भगवान् शङ्करको सेवा गरिरहेका छन् । जबसम्म हजुरले अविमुक्त क्षेत्रलाई जित्नुहुन्न तबसम्म हजुरको पराक्रम व्यर्थ छ ।।२८।।' मन्त्रीहरूका यी कुरा सुनेर युद्ध रुचाउने दुरासद आनन्दित भयो । त्यसले तिनीहरूलाई भन्यो - 'म अब सैनिक लिएर छिट्टै त्यतातर्फ लाग्छु।।२९।।' यी कुरा गरेर त्यो तुरुन्तै विमानमा सवार भयो। केही समयमा नै काशी पुग्यो। त्यसको प्रवेश हुनासाथ काशी पुरीमा हाहाकार भयो ।।३०।। त्यहाँ जति देवताहरू लुकेर बसेका थिए, ती सबै अन्तर्धान भए । भगवान् शिवजी भने त्यो दुरासद आफ्नो भक्त भएका कारण कत्ति पनि रिसाउनु भएन ।।३१।। उहाँले दुरासदलाई सम्बोधन गर्दै भन्नुभयो - ' हे दुरासद ! मैले तिमीलाई केही समयका निमित्त राज्य दिएँ ।' त्यसपछि उहाँ आफ्नो परिवार लिएर हिमालयको केदारक्षेत्रमा जानुभयो। ऋषिहरूले पनि भगवान्सँगै पलायन गरे ।।३२।। क्षेत्रसन्यासी जैगीषव्य भने भाग्नु भएन । सबै ऋषिहरूका साथ भगवान् शङ्कर जानुभएपछि दुरासदले अज्ञानमा परेर काशीका देवताका मूर्तिहरू तोड्न थाल्यो ।।३३।। अज्ञानी दुरासदले ठूला-ठूला मन्दिरहरू भत्काएर अत्यन्त आनन्दको अनुभव गऱ्यो । कसैले भगवान्को नाम लिएमा त्यसलाई पिटेर बाहिर धपाइदिन्थ्यो ।।३४।। दुष्ट बुद्धि भएको दुरासदले राज्य गर्दा काशीको व्यवस्था दुर्दशाले ग्रस्त भयो । त्यहाँ यज्ञ भएन, मन्त्रजप भएन र पितृहरूको श्राद्ध पनि भएन । कतै वेद पढेको सुनिएन र शास्त्रको अध्ययन पनि चलेन । त्यहाँ पुराण प्रवचन सुनिएन र देवताको पूजा पनि कसैले गरेनन् । त्यसबेला कुनै पनि मानिस व्रतमा लागेन र कसैले पनि मन्दिरको प्रदक्षिणा गरेनन् । कर्ममार्ग रोकिएपछि धर्म पनि समाप्त भयो । धर्म समाप्त भएपछि सारा देवताहरू भोक र प्यासले व्याकुल भए ।।३५-३७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते दुरासदोपाख्यानं नामैकोनचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'दुरासदको उपाख्यान' शीर्षकान्वित उनन्चालीसौं अध्याय पूर्ण भयो ।।३९।।

ॐ

## चत्वारिंशोऽध्याय: { ४० अध्याय }

गृत्समद उवाच

ततः केदारमगमन् सर्वे देवर्षयस्तदा ।
व्यजिज्ञपुः पद्मभवं सशिवं सर्ववित्तमम् ।।१।।

प्रणम्य शिरसा सर्वे वागीन्द्राग्निपुरःसराः ।

देवर्षय ऊचुः

पदभ्रष्टा वयं देवाः स्वाचारान्मुनयोऽपि च ।।२।।

दुरासदभिया देव ! स्नानं कर्तुं न च क्षमाः ।
केनास्मै हि वरो दत्तो येनासौ भुवनेश्वरः !।।३।।

जातो दुष्टो वधश्चास्य कस्मादेतद् विचिन्त्यताम् ।
येनैव सौख्यं लोकानां तत्कर्तव्यं दयालुभिः।।४।।

क उवाच

इति तद्वचनं श्रुत्वा प्रोवाच चतुराननः ।
उपायं कथयिष्यामि तद्वधाय सुरर्षयः ।।५।।

यदा तेन तपस्तप्तं दारुणं बहुवासरम् ।
ददावस्मै वरान् देवो ह्यनन्तानम्बिकापतिः ।।६।।

एनं यो घातयेद् देवः स नास्ति भुवनत्रये ।
कदाचिद् देवदेवोऽसौ गुणत्रयविभागकृत् ।।७।।

अहं शिवश्च विष्णुश्च त्रेधा जाता यदाज्ञया ।
गुणत्रयविभागात् स गुणेश इति पप्रथे ।।८।।

विश्वव्यापी च मायावी विश्वकर्ताऽपहारकः ।
गुणातीतो गुणेशश्च परात्परतरः शिवः ।।९।।

विभृयात्सोऽवतारं चेत् पार्वत्या जठरे विभुः ।
तदैव तस्य नाशः स्यान्नान्यथा सुरसत्तमाः ।।

स्तुवन्तु सर्वे तस्मात् तं विश्वचिन्ताकरं प्रभुम् ।
आदौ कुरुत तां देवीं प्रसन्नां भववल्लभाम् ।।१०।।

**गृत्समदले भने-** सबै देवता र ऋषिहरू दुरासदको अत्याचारबाट आत्तिएर हिमालयको केदार क्षेत्रमा गए। बृहस्पति, इन्द्र, अग्नि आदि देवताहरूले त्यहाँ गएर शिवजीलाई प्रणाम गरी उहाँसँग बस्नुभएका ब्रह्माजीलाई सारा वृत्तान्त निवेदन गरे ।

**देवता र ऋषिहरूले भने -** हामी देवताहरू पदभ्रष्ट भएका छौं र हामी मुनिहरू आचारभ्रष्ट भएका छौं । दुरासदको डरका कारण स्नान गर्न पनि समर्थ छैनौं । कसले यसलाई भयङ्कर वरदान प्रदान गर्‍यो ? आज यो दुष्ट त्रिलोकीको स्वामी भएको छ, यसको वध कसरी गर्न सकिन्छ ? यसबारे हजुरहरूले विचार गर्नुहोस् । जुन कर्म गर्दा संसारले सुख पाउँछ, त्यो कर्म हजुरहरूजस्ता दयालु देवताहरूले गर्नुपर्दछ।।१-४।।

**ब्रह्माजीले भन्नुभयो -** हे देवता र ऋषिहरू! म तपाईँहरूलाई त्यसको वध गर्ने उपाय बताउनेछु ।।५।। पहिले कुनै समयमा दुरासदले धेरै वर्ष लगाएर कठोर तपस्या गरेको थियो । त्यस बेला प्रसन्न भएर पार्वतीपति भगवान् शङ्करले ज्यादै महत्त्वपूर्ण वरदान दिनुभयो ।।६।। अहिले दुरासदलाई मार्न सक्ने देवता तीनै लोकमा छैनन् । तर एउटा देवता भने हुनसक्नु हुन्छ, जुन देवताले सत्त्वगुण, रजोगुण र तमोगुणको विभाग गरेर संसारको सृष्टि, पालन र रक्षा गर्नुहुन्छ ।।७।। ब्रह्मा, शिव र विष्णुनामक हामी देवताहरू पनि उहाँकै आज्ञाबाट तीन गुणको सहयोग लिएर तीनरूपमा प्रकट भएका छौं । तीन गुणहरूको विभाग गरेका कारण भगवान् श्रीगणेश अहिले संसारमा गुणेशका नामबाट पनि चिनिनुहुन्छ ।।८।। उहाँ विश्वव्यापी, मायाका स्वामी, विश्वका सृष्टिकर्ता, विश्वका संहारक, गुणदेखि पर रहनुभएका, गुणका स्वामी, परात्पर र कल्याणरूप पनि हुनुहुन्छ ।।९।। हे उत्तम देवताहरू ! यदि परमपुरुष भगवान् शिवजीले गर्भबाट उहाँलाई पार्वतीको छोराको रूपमा अवतरण गराउनु भयो भने दुरासद दैत्यको नाश सम्भव छ, अन्यथा कुनै अर्को उपाय देखिँदैन । तपाईँ देवता र ऋषिहरूले मिलेर विश्वको चिन्ता गर्नुहुने दयालु प्रभु शिवजीको स्तुति

तत्तेज:सम्भवो बालो दुरासदवधे भवेत् ।
एवमेव वरस्तेन शङ्करेण कृतोऽस्य ह ।।११।।

मुनिरुवाच

एवं वाक्यं ब्रह्ममुखाच्छ्रुत्वा देवा जहर्षिरे ।
तुष्टुवुर्भवकान्तां तां भवानीं भक्तवत्सलाम् ।।१२।।

देवर्षय ऊचु:

नमामहे त्वां जगदेकहेतुं
परात्परां विश्वविचित्रशक्तिम् ।
अचिन्त्यरूपां त्रिदशैरशेषै-
रशेषवन्द्यां त्रिगुणां गुणेशाम् ।।१३।।

धराधरां त्वां धरणीस्वरूपा-
माधारभूतां स्थिरजङ्गमानाम् ।
त्रैलोक्यसारां त्रिगुणादिभूतां
त्रयीतनुं तां त्रिदशस्वरूपाम् ।।१४।।

नमामहे देवि ! वरप्रदां त्वां
विष्णोर्विमोहां पददां सुराणाम् ।
भक्तार्तिहन्त्रीं सकलार्थदात्रीं
त्रैलोक्यकर्त्रीं निखिलार्थगोप्त्रीम् ।।१५।।

एवं स्तुता तदा देवी जगाद सुरसत्तमान् ।
वृणुध्वं वाञ्छितं देवा: स्तोत्रेणानेन तोषिता ।।१६।।

ददामि सकलान् कामान् भवतां ये मनोगतान् ।
तत ऊचु: सुरा: सर्वे वृत्तान्तं ब्रह्मणेरितम् ।।१७।।

तत ऊचे च तान् देवी स्तुवन्तु गणनायकम् ।
शुभाशुभस्य य: कर्ता सर्वसिद्धिकरो विभु: ।।१८।।

गर्नुहोस् । शिवजीको स्तुतिभन्दा पहिले शिवजीकी अर्धाङ्गिनी जगदम्बा पार्वतीलाई प्रसन्न तुल्याउनुहोस् ।।१०।। शिव एवं पार्वतीको तेजबाट उत्पन्न बालकले दुरासदको वध गर्नेछ । शङ्करले पनि दुरासदलाई वरदान दिंदा यसै रहस्यको उल्लेख गर्नुभएको थियो ।

**गृत्समदले भने** – ब्रह्माजीका मुखबाट यी कुरा सुनेर देवता र ऋषि प्रसन्न भए । सर्वप्रथम तिनले भक्तहरूलाई स्नेह गर्ने भगवान् शङ्करकी अर्धाङ्गिनी भगवती पार्वतीको स्तुति गरे।।११-१२।।) २३।

(**देवता र ऋषिहरूले भने** – 'विश्वकी विचित्र शक्ति, संसारका सम्पूर्ण सत्यहरूभन्दा पर रहेकी परम सत्यस्वरूप, जगत्को उत्पत्तिकी एकमात्र कारण, अचिन्त्य रूप भएकी, सम्पूर्ण देवताहरूद्वारा वन्दनीय, गुणरहित तर गुणहरूकी स्वामिनी भगवतीलाई नमस्कार गर्दछौं ।।१३।। पृथिवीलाई धारण गर्ने तर पृथिवीकै स्वरूपमा रहेकी, चराचरकी आधार, त्रैलोक्यकी सार, सत्त्व, रज र तमोगुणकी कारण, वेदमूर्ति र देवमूर्तिका रूपमा रहनुहुने हे भगवती! हामी हजुरलाई प्रणाम गर्दछौं।।१४।। भक्तहरूलाई वर प्रदान गर्ने, विष्णुलाई पनि मोहित तुल्याउनु हुने, देवताहरूलाई विभिन्न पदमा आसीन गराउनु हुने, ठूला-ठूला कष्ट र वेदनाहरूको निवारण गर्नु हुने, भक्तहरूलाई सम्पूर्ण कामनाका फल प्रदान गर्नुहुने, स्वर्ग, मर्त्य र पातालको रचना गर्नुहुने र सृष्टिका सम्पूर्ण सामग्रीहरूको रक्षा गर्नुहुने हे भगवती पार्वती ! हजुरलाई हामी प्रणाम गर्दछौं।।१५।।' यसरी देवता एवं ऋषिहरूद्वारा गरिएको स्तुति श्रवण गरेपछि भगवती पार्वतीले देवता र ऋषिहरूलाई भन्नुभयो– 'हे देवता एवं ऋषिहरू ! तपाईँहरूको यस स्तोत्रबाट म प्रसन्न भएकी छु, वर माग्नुहोस्। तपाईँहरूले मनमा भएका जुन कुराहरू माग्नुहुन्छ, म ती सबैलाई परिपूर्ण तुल्याउनेछु।' त्यसपछि ब्रह्माजीद्वारा अभिप्रेरित देवताहरूले सम्पूर्ण वृत्तान्त बताए ।।१६-१७।। त्यसपछि भगवती पार्वतीले ती सबैलाई भन्नुभयो– 'हे देवता र ऋषिगण ! तपाईँहरूले भगवान् श्रीगणेशको स्तुति गर्नुहोस्। भगवान् श्रीगणेश शुभ र अशुभका कर्ता हुनुहुन्छ, सर्वव्यापक हुनुहुन्छ र सकल सिद्धिका दाता पनि

अवाप्तसर्वकामार्थ: सर्वस्य जगत: पिता ।
ततस्ते तुष्टुवुर्देवं भक्त्या सर्वे विनायकम् ।।१९।।

देवर्षय ऊचु:

नता: स्मो विघ्नकर्तारं दयालुं सर्वपालकम् ।
सर्वस्य जगतो हेतुं सर्वव्यापिनमीश्वरम् ।।२०।।

अनेकशक्तिसंयुक्तं सर्वकामप्रपूरकम् ।
दीनानुकम्पिनं देवं सर्वज्ञं करुणानिधिम् ।।२१।।

स्वेच्छोपात्ताकृतिं नैकावतारनिरतं सदा ।
गुणातीतं गुणक्षोभं चराचरगुरुं विभुम् ।।२२।।

एकदन्तं द्विदन्तञ्च त्रिनेत्रं दशहस्तकम् ।
शुण्डादण्डमुखं विघ्ननाशनं पापहारकम् ।।२३।।

भक्तानां वरदं नित्यं सृष्टिस्थित्यन्तकारकम्
अनादिमध्यनिधनं भूतादिं भूतवर्धनम् ।।२४।।

त्रिलोकेशं सुराधीशं दुष्टदानवमर्दनम् ।
लम्बकर्णं बृहद्भानुं व्यालभूषधरं शुभम् ।।२५।।

एवं स्तुत्वा तु तं देवं गणेशं सर्वसिद्धिदम् ।
शुश्रुवुस्ते नभोवाणीं मा भूद् वो मानसो ज्वर: ।।२६।।

दुरासदं महावीर्यं हनिष्यामि भयङ्करम्
इति श्रुत्वा नभोवाणीं पुन: शङ्करमाययु: ।
ध्याननिष्ठञ्च ते दृष्ट्वा प्रणम्योचुश्च पार्वतीम् ।।२७।।

देवा ऊचु:

न जानीमो नभोवाणीं केनेमामीरितां शुभे ।
हरस्य ध्याननिष्ठत्वात् कथं कुर्मोऽखिलेश्वरि ।।२८।।

देव्युवाच

दैत्यो देवा इदानीं यो निश्चयं स मरिष्यति ।
तस्या: क्रोधेन तप्ताया निश्वसन्त्या: पुन: पुन: ।।२९।।

हुनुहुन्छ ।।१८।। उहाँले आफ्ना सम्पूर्ण कामनाहरूलाई परिपूर्ण तुल्याउनु भएको छ । उहाँलाई आफ्ना निमित्त कुनै कुरा चाहिएको छैन । उहाँ सम्पूर्ण जगत्का पिता हुनुहुन्छ ।' पार्वतीका यी कुरा सुनेर ऋषि र देवताहरू मिलेर भगवान् श्रीगणेशको स्तुति गरे ।।१९।।

**देवता र ऋषिहरूले भने -** 'विघ्नका कर्ता, दयाका सागर, सबैका रक्षक, सम्पूर्ण जगत्का कारण, सर्वव्यापक, ईश्वर, अनेक शक्तिसम्पन्न, सबै कामना पूर्ण तुल्याउनुहुने, दीन-दु:खीहरू माथि दया गर्नुहुने, सर्वज्ञ, करुणामूर्ति, आफ्नो इच्छाबाट अनेक थरि अवतार धारण गर्नुहुने, गुणदेखि पर रहनुभएका, गुणहरूमा क्षोभ पैदा गर्नुहुने, चराचरका स्वामी, विश्वव्यापक, एकदन्तले सुहाउनुभएका, कहिलेकाहीँ दुई दन्तले पनि सुहाउनुहुने, त्रिनयन, दशबाहु, मुखमा सूँढ धारण गर्नुहुने, विघ्नका नाशक, पापका संहारक, भक्तहरूलाई वरदान दिनुहुने, जगत्को सृष्टि, स्थिति र संहार गर्नुहुने; आदि, मध्य र अन्त्यहीन, सम्पूर्ण प्राणीहरूका आदिपुरुष; सम्पूर्ण प्राणीहरूको पालन र पोषण गर्नुहुने; त्रिलोकीका स्वामी; देवताहरूका अधिपति; दुष्ट दानवहरूका संहारक; लामा कानले सुहाउनुभएका; विशाल तेजले सम्पन्न र सर्पका गहना धारण गर्नुहुने मङ्गलमूर्ति भगवान् श्रीगणेशलाई प्रणाम गर्दछौं' ।।२०-२५।। यसरी सर्वसिद्धिका दाता श्रीगणेशको स्तुतिपछि ती देवता र ऋषिले आकाशवाणी सुने- 'हे देवता एवं ऋषिगण ! तपाईँहरूले मनमा कुनै चिन्ता नगर्नुहोस्, मैले डरलाग्दो दैत्य दुरासदलाई मार्नेछु ।' यो सन्देश सुनेर ती सबै देवता र ऋषिहरू भगवान् शङ्करका नजिकमा आए । भगवान् शङ्करलाई ध्यानमा लाग्नुभएको देखेपछि तिनीहरूले भगवती पार्वतीलाई प्रणाम गरेर भने ।।२६-२७।।

**देवताहरूले भने-** हे भगवती! आकाशवाणीबाट हामीलाई सन्देश दिने पुरुषलाई हामी जान्दैनौं । भगवान् शङ्कर ध्यानमा विराजमान हुनुहुन्छ । अब हामीले कसरी कार्य गरौं ? ।।२८।।

**पार्वतीले भन्नुभयो -** 'हे देवताहरू ! त्यो दैत्य निश्चितरूपमा भर्खरै मर्नेछ ।' यति भन्दाभन्दै पार्वती क्रोधले तातुभयो, उहाँको श्वासप्रश्वास तीव्रगतिमा चल्न थाल्यो । मुख,

आस्यान्नासापुटान्नेत्रान्निःसृतं तेज उत्तमम् ।
ज्वालामालाकुलं दग्धुं ब्रह्माण्डमिव चोद्यतम् ।।३०।।

प्रत्याहतदृशः सर्वे ददृशुर्ज्ञानचक्षुषा ।
वैनायकीं महामूर्तिं दशहस्तां तमोनुदाम् ।।३१।।

बिभ्रतीं मुकुटं रत्नकोटिसूर्यसमप्रभाम् ।
विद्युत्प्रभामहारत्नकुण्डले रदनं शुभम् ।।३२।।

दिव्याम्बरे च सिन्दूरमायुधानि दशैव च ।
कस्तूरीतिलकं भाले मालां हृदि फलान्विताम् ।।३३।।

यत्तेजो व्यानशे विश्वं प्रलयानलसन्निभम् ।
व्यालयज्ञोपवीतञ्च ज्ञात्वा नेमुः सुरास्तदा ।।३४।।

प्रार्थयामासुरथ ते आनन्दघनमीश्वरम् ।
दृष्टोऽतियोगगम्यस्त्वमप्रतर्क्योऽव्ययःस्वराट् ।।३५।।

निरामयो निराभासो निर्विकल्पोऽजरोऽमरः ।
सर्वस्वरूपः सर्वेशः स्वप्रकाशो जगन्मयः ।।२६।।

अव्यक्तो जगदाधारो ब्रह्मरूपोऽखिलार्थदृक् ।
पुराणपुरुषो ज्ञानमूर्तिर्वाचामगोचरः ।।३७।।

वयं धन्या वयं धन्या दृष्ट्वा तं ननृतुः सुराः ।

मुनिरुवाच

यथा देवैर्वर्णितोऽसौ तेजोरूपी विनायकः ।।३८।।

एवमेव जगन्माता प्रशशंस गजाननम् ।
निर्गुणं यन्निराकारमव्यक्तं सर्वगं परम् ।।३९।।

नाकका प्वाल र आँखाबाट अत्यन्त उत्तम तेज बाहिर निस्कियो। त्यो तेज ज्वालाका मालाहरूले सम्पन्न थियो र ब्रह्माण्ड नै डढाउने किसिमले प्रकट भएको थियो ।।२९-३०।। तेजका कारण हतप्रभ र अन्धा झैं बनेका देवता र ऋषिहरूले त्यस बेला ज्ञानको आँखाबाट हेरे । त्यहाँ तिनीहरूले भगवान् श्रीगणेशको एउटा दश हात लामो र तेजोमय महामूर्ति पैदा भएको देखे । त्यस मूर्तिको शिरमा मुकुट थियो । त्यो मूर्ति करोडौं सूर्यसमान कान्तिले देदीप्यमान थियो । विद्युत्समान कान्ति भएका, महारत्नद्वारा निर्मित कुण्डलधारण गर्ने, अत्यन्त उज्ज्वल दन्तपङ्क्तिले शोभायमान, दिव्य वस्त्रका साथमा सिन्दूरले सुन्दर निधारमा कस्तूरीको तिलक र छातीमा फलसमेतको माला धारण गर्ने, दश भुजामा दशथरि आयुध धारण गर्ने त्यो तेजोमय मूर्ति प्रलयकालको अग्निसमान बनेर विश्वमा व्याप्त भएको थियो । सर्पलाई यज्ञोपवीत बनाई धारण गर्ने त्यस दिव्य मूर्तिलाई देखेर देवताहरूले झुकेर प्रणाम गरे । त्यसपछि तिनीहरूले आनन्दघन श्रीगणेशलाई प्रार्थनाका वचन सुनाए- 'हे भगवन् श्रीगणेश ! हजुर योगगम्य हुनुहुन्छ । हामीले आज भाग्यले हजुरको दर्शन पाएका छौं । हजुर यस किसिमका हुनुहुन्छ भनेर तर्क गर्न सकिंदैन । हजुरको कहिल्यै नाश हुँदैन र आफ्नै प्रकाशबाट प्रकाशित हुनुहुन्छ । हजुर रोग-व्याधिबाट पर हुनुहुन्छ । हजुर आभासशून्य हुनुहुन्छ र हजुरको कुनै अर्को विकल्प छैन । हजुर अजर एवं अमर हुनुहुन्छ र सबै प्रकारका स्वरूप लिएर संसारमा व्याप्त हुनुहुन्छ । हजुर सबैका स्वामी हुनुहुन्छ । यो जगत् हजुरकै स्वरूप हो । हजुर अव्यक्त र जगत्का आधार हुनुहुन्छ । हजुर सकल पदार्थका द्रष्टा र सकल भावनाका साक्षी, ब्रह्मस्वरूप हुनुहुन्छ । हजुर ज्ञानमूर्ति पुराणपुरुष हुनुहुन्छ। हजुरका गुण, स्वभाव, क्रिया र गौरवलाई हामी वाणीद्वारा व्यक्त गर्न सक्दैनौं ।।३१-३७।। आज हजुरको दर्शन पाएर हामी धन्य भयौं ।' यसरी प्रार्थना गरेर देवता र ऋषिहरू नाच्न थाले ।

गृत्समदले भने - देवता एवं ऋषिहरूले जसरी तेजोमय श्रीगणेशको प्रार्थना गरे, त्यसैगरी भगवती पार्वतीले पनि श्रीगणेशको प्रशंसा गर्दै भन्नुभयो ।।३८-३९।। पार्वतीले

ध्यानगम्यं चिदाभासं सच्चिदानन्दविग्रहम् ।
सर्वव्यापी जगद्धेतुरद्य यावद् विचिन्तितम् ।।४०।।

विनायकस्वरूपेण साकारं दृष्टमद्य यत् ।
अवतीर्णं मम गृहे हन्तुं दैत्याननेकशः ।।४१।।

जगतामुपकाराय पातुं विश्वं चराचरम् ।
पुपूज पार्वती भक्त्या ददौ सिंहं स्ववाहनम् ।।४२।।

वक्रतुण्डेति नामास्य दध्रे सर्वार्थदं नृणाम् ।
दुरासदस्य च वधं प्रार्थयामास तं सदा ।।४३।।

देवानाञ्च पदप्राप्तिं निःसपत्नामयाचत ।।४४।।

भन्नुभयो - 'निर्गुण एवं निराकार, अव्यक्त, सर्वव्यापी, परमतत्त्व, ध्यानगम्य, चैतन्यस्वरूप, सच्चिदानन्दमयमूर्ति, सर्वव्यापक र जगत्का हेतु जुन तत्त्वको हामी निरन्तर चिन्तन गर्दछौं, त्यही तत्त्व दैत्यहरूको संहार गर्न र चराचरको रक्षा गर्न आज मेरो घरमा विनायकको रूपमा अवतीर्ण भएको छ ।।४०-४१।।' यति भनेर पार्वतीले तेजोमय त्यस तत्त्वको पूजा गर्नुभयो र त्यसका लागि आफ्नो वाहन सिंह पनि प्रदान गर्नुभयो ।।४२।। त्यसपछि भगवती पार्वतीले उक्त तेजोमय तत्त्वको नाम मानिसहरूको इच्छा पूरक वक्रतुण्ड राख्नुभयो । नाम राखेपछि पार्वतीले दुरासदको वध र देवताहरूको निष्कण्टक पद प्राप्तिका लागि पनि प्रार्थना गर्नुभयो।।४३-४४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते विनायकावतरणं नाम चत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'पार्वतीको तेजबाट भगवान् विनायकको प्रादुर्भाव' शीर्षकान्वित चालीसौं अध्याय पूर्ण भयो ।।४०।।

ॐ

## एकचत्वारिंशोऽध्यायः { ४१ अध्याय }

क उवाच

एवं प्रशंसितो देव्या देवैश्च स विनायकः ।
उवाच पार्वतीं प्रीत्या प्रणिपत्य मुदा युतः ।।१।।

गणेश उवाच

देवानां सर्वलोकानां कर्तुं पालनमुत्तमम् ।
दुरासदं निहन्तुञ्च हर्तुं भूभारमेव च ।।२।।
मातस्त्वां सेवितुं धर्मं कर्तुं कर्म च वैदिकम् ।
अवतीर्णोऽस्मि सर्वज्ञे! यद् ब्रवीषि करोमि तत् ।।३।।
एवं ब्रुवति विघ्नेशे सुराः सर्वे तमूचिरे ।
पुनः स्तुत्वा च नत्वा च जगत्कारणकारणम् ।।४।।
रजांसि विममेद्भूमेरुडूनि मिहिका अपि ।
जानीयात् स गुणाँस्ते यो विममेत् सागरे जलम् ।।५।।
धन्यं चक्षुर्हि देवानां यद् दृष्टौ चरणौ विभोः ।
इदानीं नो गतं दुःखं प्राप्तञ्च स्वस्वकं पदम् ।।६।।
दुरासदं हरस्वैनं भूभारञ्चाखिलेश्वर !

क उवाच

इति देववचः श्रुत्वा जहास स विनायकः ।।७।।
ऊचे सर्वं करिष्यामि दशायुधधरः प्रभुः ।
एवमुक्त्वा सुरान् देवो हर्षगद्गदया गिरा ।।८।।
सिंहारूढो ययौ शीघ्रं पुरीं वाराणसीं तदा ।
तमन्वयुर्देवगणा गिरिजा गिरिशोऽपि च ।।९।।
ज्ञात्वा दुरासदो दैत्यो विनायकमुपागतम् ।
देवसेनायुतं वीरो निर्ययौ नगराद् बहिः ।।१०।।
दृष्ट्वा सेनां तु दैत्यस्य सामात्यां सायुधां दृढाम् ।
नानाविधायुधवतीं गर्जन्तीं घनवन्मुहुः ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - देवी र देवताहरूद्वारा प्रशंसा गरिएका श्रीगणेशले प्रीतिपूर्वक पार्वतीलाई प्रणाम गरी खुसी हुँदै भन्नुभयो ।।१।।

**श्रीगणेशले भन्नुभयो** - 'आमा पार्वती ! सबै देवताहरू र सबै संसारका प्राणीहरूको उत्तम रीतिले पालन गर्न, दुरासदजस्ता दैत्यहरूको वध गर्न, पृथिवीको भार हरण गर्न, तपाईँको सेवा गर्न र वैदिक धर्म एवं कर्म सम्पन्न गर्न मैले अवतार लिएको छु । हे सर्वज्ञ आमा ! म जुन प्रतिज्ञा गर्दछु, त्यसको पालन पनि गर्दछु।।२-३।।' यसरी श्रीगणेशले भन्नुभएपछि सबै देवताहरूले बारबार स्तुति र प्रणाम गरेर जगत्का परम कारण उहाँलाई भने - हे श्रीगणेश ! जसले पृथिवीका धूलिकण, आकाशका तारा, कुहिरोका जलकण र सागरका जलबिन्दुको गणना गर्न सक्दछ, त्यसले मात्र हजुरका सम्पूर्ण गुणराशिको ज्ञान गर्न सक्दछ । हजुरका चरणकमलको दर्शन पाउने हामी देवताहरूका आँखा धन्य छन् । हजुरले अवतार लिनुभएपछि हाम्रा दुःखहरू गए र अब हामीले आफ्नो पद प्राप्त गर्नेछौँ । हे सकलका स्वामी! हजुरले पृथिवीको भाररूप दुरासद दानवको वध गरी पृथिवीको भार हरण गर्नुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - देवताहरूका यस्ता वचन सुनेर भगवान् श्रीगणेश हाँस्नुभयो ।।४-७।। त्यसपछि आफ्ना दश हातहरूमा दश प्रकारका आयुध धारण गर्नुहुने श्रीगणेशले म तपाईँहरूले भनेअनुसार सबै कामना पूरा गर्नेछु भन्नुभयो र हर्षले गद्गद् वचनद्वारा देवताहरूसँग कुरा गरी तिनलाई प्रसन्न तुल्याएपछि सिंहमा सवार भई तीव्रगतिमा वाराणसीतर्फ लाग्नु भयो । सम्पूर्ण देवगण, पार्वती र सदाशिव पनि श्रीगणेशको पछि लाग्नुभयो ।।८-९।। देवसेनासहित श्रीगणेश काशी आउनुभएको थाहा पाएपछि दुरासद दैत्य पनि नगरदेखि बाहिर आयो ।।१०।। त्यहाँ दुरासद दैत्यको अमात्यसहित रहेको शस्त्रास्त्र सज्जित विशाल सेना र दैत्यहरूले गरेको घनगर्जन यी सबै कुरा देखे-सुनेर भगवान् श्रीगणेशले पनि पृथिवीका गुफाहरूलाई प्रतिध्वनित गराउँदै गर्जन गर्नुभयो ।

गुहा विदारयन् सर्वाः स जगर्ज विनायकः।
उवाच तं महादैत्यं भ्रान्तोऽस्यद्यापि रे ! कथम् ।।१२।।

त्वया बलाद् देवगणा निर्जिताश्च महीभुजः ।
मुनयो धिक्कृताः सर्वे तदाऽहं नाऽभवं खल ।।१३।।

निर्भयेन त्वया दोषा बहवः सञ्चिताः पुरा ।
तेषां फलमिदानीं त्वं गणेशात् प्राप्तुमर्हसि ।।१४।।

उपद्रुतास्त्वया लोकास्त्रैलोक्यवासिनोऽखिलाः ।
तदर्थमवतीर्णोऽहमुद्धर्तुं त्वां भुवो भरम् ।।१५।।

शरणं याहि रे त्यक्त्वा मानं लज्जां सुदुस्त्यजाम् ।
यासि सङ्ग्रामशिरसि चेदिदानीं मरिष्यसि ।।१६।।

शिवप्राप्तवरात् सर्वं त्रैलोक्यं पीडितं त्वया ।
एवमुक्त्वा दुष्टबुद्धिं गणेशो रणसंभ्रमः ।।१७।।

परशुं तोलयामास ज्वालामालासुशोभितम् ।
आच्छाद्य भास्करं क्षोभात् प्रलयानलसन्निभः ।।१८।।

जवेन हृदये तस्य त्यक्त्वा शस्त्रं कृतान्तवत् ।
परशुना हतस्तस्य रोमापि न चचाल ह ।।१९।।

क्रोधसंरक्तनयन उदतिष्ठद् ग्रसन्निव ।
त्रैलोक्यं तमुवाचाथ देवदेवं दुरासदः ।।२०।।

न देवा देवराजो वा दिक्पाला वा न मे पुरः ।
यातास्ते तु कथं यातो बालभावाद् व्रजाधुना ।।२१।।

न बिभेम्यन्तकान्मूढ ! किमर्थं मर्तुमिच्छसि ।
एवमुक्त्वा ततः कोशान्निष्कास्यासिं महोज्ज्वलम्।।२२।।

क्षुरधारं यदाघातादद्रयश्चूर्णतां ययुः ।
दैत्यस्तेनाहनद् देवमङ्कुशेन न्यवारयत् ।।२३।।

त्यसपछि दुरासदलाई सम्बोधन गर्दै भन्नुभयो – 'हे दैत्य! तँ अझै पनि किन भ्रान्तिमा परिरहेको छस् ?' ।।११-१२।। हे दुर्जन ! म अनुपस्थित भएको बेलामा तैँले देवताहरूमाथि विजय प्राप्त गरिस्, पृथिवीका राजाहरूलाई वशमा पारिस् र मुनिहरूलाई धिक्कार गरिस् ।।१३।। हे दैत्य ! तैँले आफूसमान कसैले नदेखेर डर र लाज छाडी धेरै अपराध गरेको छस् । ती अपराधको फल अहिले मबाट पाउनेछस् ।।१४।। तैँले धेरै मानिसहरूलाई दसै दिशातिर भगाइस्, तीन लोकमा निवास गर्ने प्राणीहरूको दुर्गति गराइस्, ती सबैको उद्धार गर्न र पृथिवीको भार हरण गर्न मैले अवतार लिएको छु ।।१५।। हे दुष्ट ! कठिनतापूर्वक छाड्न सकिने लाज र अभिमानलाई हटाएर तँ मेरो शरणमा आउने काम गर् । यदि युद्धको मैदानमा जान चाहन्छस् भने निश्चय नै तेरो मृत्यु हुनेछ । तैँले शिवजीबाट प्राप्त वरदानको दुरुपयोग गरेर तीन लोकलाई नै पीडित गराएको छस् ।' यसरी श्रीगणेशले दुर्बुद्धिग्रस्त दुरासद दैत्यसँग कुरा गरेर युद्धको तयारी गर्नुभयो । अग्निको ज्वालाझैं तेजिलो ज्वाला फैलाइरहेको तीखो धारले युक्त बञ्चरो आफ्नो हातमा धारण गर्नुभयो । प्रलयकालिक अग्निसमान तेजस्वी श्रीगणेशले आफ्नो परशुको तेजबाट सूर्यलाई पनि निस्तेज बनाएर यमराजझैं भयङ्कर भई दुरासदको छातीमा बञ्चरो प्रहार गर्नुभयो । तर त्यस प्रहारबाट दुरासदको रौँ पनि हल्लिएन ।।१६-१९।। क्रोधले आँखा राता गराइरहेको त्यस दुरासदले तीनै लोकलाई निल्न लागेझैं गरी देवाधिदेव श्रीगणेशलाई भन्यो – 'देवताहरू मसँग आउन सकेनन्, इन्द्र पनि डराए। दिक्पालहरू पनि मेरा सामु आउन समर्थ छैनन्। तँ बच्चा कसरी आइस्? तँ जसरी आएको छस्, त्यसरी फर्किएर जा । हे मूर्ख ! म यमराजसँग डराउँदिनँ, तँसँग डराउने कुरै भएन । किन मर्न चाहन्छस् ?' दुरासदले श्रीगणेशलाई यसरी हप्काएर आफ्नो हातमा रहेको म्यानबाट सेतो कान्ति भएको तरबार निकाल्यो । जसको प्रहारबाट कुनै समयमा पर्वतहरू पनि चूर्ण-चूर्ण भएका थिए। त्यस तरबारले त्यसले श्रीगणेशमाथि प्रहार गर्‍यो । तर भगवान् श्रीगणेशले अँकुसेको प्रहार गरी त्यसलाई पन्छाइदिनुभयो।।२०-२३।। श्रीगणेशले त्यो तरबारलाई बञ्चरोले हानेर सय टुक्रा बनाइदिनुभयो। तरबार भाँचिएपछि त्यो दैत्य भगवान् श्रीगणेशसँग

सोऽसिः परशुघातेन शतधा खण्डितोऽपतत् ।
भग्नासिर्मल्लयुद्धाय ययौ दैत्यो महाबलः ।।२४।।

त्यक्त्वायुधानि देवोऽपि ववृधे तादृशो बलात् ।
ततो युद्धं तयोरासीत् तुमुलं रोमहर्षणम् ।।२५।।

बाहुभ्यां कूर्पराभ्याञ्च मुष्टिभ्यां तौ प्रजघ्नतुः ।
पादाभ्यां जानुजङ्घाभ्यां पृष्ठाभ्याञ्च निजघ्नतुः ।।२६।।

उड्डीय पेततुर्देहे पर्यायेण महास्वनौ ।
पार्ष्णिघातान् प्रकुर्वन्तौ घातान् कूर्परयोरपि ।।२७।।

सक्थ्न्योश्च जानुघातांस्तौ स्कन्धाघातान् परस्परम् ।
लुलुण्ठतुर्धरण्यां तौ धूलिधूसरितौ भृशम् ।।२८।।

परस्परं जयन्तौ च लपन्तौ साधु साध्विति ।
एवं बहुदिनं युद्धं दृष्ट्वा देवा विसिस्मिरे ।।२९।।

चेतसा बहु लज्जन्तौ ज्ञात्वा सामर्थ्यमस्य ह ।
ततो विनायको मुष्टिं ललाटे दृढमाहनत् ।।३०।।

स्फुटितं मुखमस्याशु धरण्यां पतितस्य ह ।
द्विमुहूर्तं निपतितो वज्राहत इवाचलः ।।३१।।

स कथञ्चित् प्रबुद्धोऽभूत् त्यक्त्वा मूर्च्छां चिरागताम्।
तदात्मानमशक्तं स मनुते स्म भृशातुरः ।।३२।।

आययौ सैन्यमध्ये स दिनान्ते स विनायकः ।।३३।।

य इदं शृणुयाद् युद्धं युद्धकाल उपस्थिते ।
स जयं प्राप्नुयान्मर्त्यो यथा देवो विनायकः ।।३४।।

मल्लयुद्ध गर्न आयो ।।२४।। भगवान् श्रीगणेशले पनि शस्त्रास्त्र परित्याग गरी आफ्नो शक्तिको प्रयोग गरेर शरीरलाई विशाल रूपमा परिणत गर्दै युद्धका लागि तयारी गर्नुभयो । त्यसपछि दुई वीरहरूको माझमा कोलाहलपूर्ण र रोमाञ्चकारी युद्ध आरम्भ भयो ।।२५।। दुबै वीर मुंजा, कुहिना र मुड्कीको प्रहार गर्दै लडिरहेका थिए । दुबैले परस्पर खुट्टाले खुट्टामा, घुँडाले घुँडामा, तिघ्राले तिघ्रामा र पिठ्यूँले पिठ्यूँमा प्रहार गरिरहेका थिए ।।२६।। मल्लयुद्ध गर्दा ती दुबै वीरहरू हाम्फालेर एडटाले अर्कालाई च्याप्ने गर्दथे । ती वीरहरू ठूलो गर्जन गर्दै अनेक प्रकारका शस्त्रअस्त्रको सट्टा शरीरका अङ्ग-प्रत्यङ्गहरूबाट एकले अर्कोलाई प्रहार गर्दै युद्ध गरिरहेका थिए । मल्लयुद्धमा हाड ठोक्किंदा ठूलो आवाज सुनिन्थ्यो । एकले अर्कालाई काँधले हिर्काउँदा घाइते भएर ती दुबै भुइँमा लडी धूलोले ढाकिएका थिए । परस्परमा जयजयकार र साधु-साधुवादका साथ ती वीरहरूको भयानक युद्ध धेरै दिनसम्म चलेको थियो । त्यो मल्लयुद्ध देखेर देवताहरू पनि चकित भए।।२७-२९।। ती दुबै वीर आफ्ना प्रतिपक्षीलाई जित्न नसकेकोमा लज्जित देखिन्थे। त्यसबेला श्रीगणेशले दुरासदको शक्ति र सामर्थ्य राम्ररी बुझेर त्यसको निधारमा कठोर मुड्की प्रहार गर्नुभयो।।३०।। त्यस प्रहारबाट तत्काले त्यसको मुख फुट्यो र त्यो पृथिवीमा लड्यो। चार घडीसम्म वज्रले हानेको पर्वतजस्तै निश्चल भएर रह्यो । त्यसपछि कुनै उपायले मूर्च्छाबाट ब्यूँझेर त्यसले आफूलाई अत्यन्त दुर्बल महसुस गर्‍यो ।।३१-३२।। युद्धपछि सूर्य पनि अस्ताचलमा गए । जसले युद्धकालमा दुरासद र श्रीगणेशको बीचमा भएको यो युद्धको कथा स्मरण गर्दछ, त्यसले भगवान् श्रीगणेशले दुरासदमाथि विजय प्राप्त गर्नुभएझैं शत्रुमाथि विजय प्राप्त गर्दछ ।।३३-३४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते श्रीगणेशदुरासदयुद्धवर्णनं नामैकचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीढुण्ढिराज गणेश र दुरासदको युद्धवर्णन' शीर्षकान्वित एकचालीसौं अध्याय पूर्ण भयो ।।४१।।

ॐ

# द्विचत्वारिंशोऽध्यायः { ४२ अध्याय }

गृत्समद उवाच

ज्ञात्वा पराक्रमं तस्य वक्रतुण्डस्य दैत्यराट् ।
आययौ धैर्यमालम्ब्य योद्धुमस्त्रैर्गजाननम् ।।१।।
शिवं स्मृत्वा च मन्त्रञ्च वह्निदैवतमादरात् ।
अभिमन्त्र्य शरं तेन तत्याज स विनायके ।।२।।
अग्निज्वालाभयाद् देवा देवपृष्ठमथागमन् ।
ततो विनायकोऽमुञ्चत् पर्जन्यास्त्रं हि सर्ववित् ।।३।।
करिशुण्डामिता धाराः प्रादुरासँस्ततः क्षणात् ।
शान्तोऽभूत् तत्क्षणाद् वह्निस्ततो दैत्यो रुषान्वितः।।४।।
मारुतास्त्रं शीघ्रजवं वृष्टिवारणमासृजत् ।
चकम्पे धरणी वृक्षा गिरयः पतिता भुवि ।।५।।
तदस्त्रेण महामेघाः क्षयं नीताः क्षणार्द्धतः ।
पर्वतास्त्रं ततो देव आविश्चक्रे मनोबलात् ।।६।।
सर्वत्र पर्वता जाताः कुण्ठतामगमच्च तत् ।
विलीने मारुतास्त्रे तु रौद्रमस्त्रं ततोऽसृजत् ।।७।।
तस्मिन् विमुच्यमाने तु वक्रतुण्डोऽप्यवासृजत् ।
ब्रह्मास्त्रं तन्निवृत्त्यर्थमगात् सैन्यं हि भस्मसात् ।।८।।
परस्परमयुद्धेतामस्त्रे ते बहुवासरम् ।
तयोः सङ्घट्टनाद् वह्निर्न्यपतद् धरणीतले ।।९।।
तेन दग्धान् जनान् ज्ञात्वा केशाभ्यां वारिते शुभे ।
अमात्यानब्रवीद् दैत्यो ज्ञात्वोत्कृष्टं विनायकम् ।।१०।।
तेनाभियुध्यतां सर्वैर्भुक्त्वा यामि पुना रणम् ।
ततोऽमात्याः सर्वसैन्यैर्विनायकमयोधयन् ।।११।।
विनायको गतश्चिन्तामेकाकित्वात् ततः क्षणात् ।
षट्पञ्चाशन्मिता मूर्तीश्चकारासौ स्वतेजसा ।।१२।।
नानालङ्कारसंयुक्ता नानामालाविभूषिताः ।
सर्वे दिव्याङ्गदाङ्गास्ते सर्वे शशिविभूषणाः।।१३।।

**गृत्समदले भने** - वक्रतुण्डको पराक्रम थाहा पाएर दैत्यराज दुरासद धैर्यपूर्वक उहाँसँग युद्ध गर्न आयो।।१।। अग्निदैवत आफ्नो मन्त्र र भगवान् शिवजीलाई याद गरेर बाणलाई अभिमन्त्रित गरी त्यसले श्रीगणेशमाथि बाणप्रहार गऱ्यो।।२।। अग्निको ज्वालाले जाज्वल्यमान बाण देखेर देवताहरू डराई श्रीगणेशका पछाडिपट्टि उँभिए। श्रीगणेशले पनि सबै कुरा थाहा पाएर पर्जन्यास्त्र छोड्नुभयो।।३।। पर्जन्यास्त्रको प्रहारपछि आकाशबाट हात्तीको सूँढको आकारका पानीका धारा बर्सन थाले र दैत्यले पैदा गरेको अग्निज्वाला शान्त भयो । त्यो देखेर रिसाएको दैत्यले अत्यन्त तीव्र गतिमा वायव्यास्त्र प्रहार गऱ्यो। त्यसबाट सम्पूर्ण वर्षा रोकियो, पृथिवी काँपिन्, रूख एवं पर्वतहरू भुइँमा लडे, ठूला-ठूला बादलहरू समाप्त भए। यो दृश्य देखेर श्रीगणेशले आफ्नो मानसिक शक्तिबाट पर्वतास्त्र प्रहार गर्नुभयो। पर्वतास्त्रको प्रहारपछि जहाँसुकै पर्वतै पर्वत देखिए।।४-६।। पर्वतास्त्रको प्रहारबाट वायव्यास्त्र समाप्त भएपछि दुरासद दैत्यले रौद्रास्त्र प्रहार गऱ्यो। त्यसको त्यो प्रहार देखेर भगवान् श्रीगणेशले ब्रह्मास्त्र प्रहार गर्नुभयो। त्यस प्रहारबाट दैत्यसेना खरानी भए ।।७-८।। यसरी श्रीगणेश र दुरासदका ती अस्त्रहरूले धेरै दिनसम्म युद्ध गरिरहे। दुबै अस्त्रहरूको घर्षणबाट अग्नि पैदा भएर धर्तीमा खस्यो। त्यसबाट मानिसहरू डढेको थाहा पाएर त्यस अग्निलाई ब्रह्मा र शिवजीले हटाउनुभयो। दुरासद दैत्यले श्रीगणेशको अत्यन्त ठूलो शक्ति जानेर आफ्ना अमात्यहरूलाई भन्यो - 'तिमीहरू श्रीगणेशसँग युद्ध गर, म भोजन गरी फर्केर आएपछि फेरि युद्ध गर्नेछु।' दुरासदको आज्ञा पाएर त्यसका मन्त्रीहरूले श्रीगणेशसँग आफ्ना सेनाको युद्ध सञ्चालन गरे । त्यसबेला श्रीगणेशले चिन्ता गर्नुभयो- 'अब दुरासद दैत्यको विशाल सेनासँग म कसरी युद्ध गरूँ ?' केही बेर विचार गरेपछि उहाँले आफ्ना छपन्न थरिका रूप बनाउनुभयो। गणपतिका ती रूपहरू नानाअलङ्कारले सुहाएका, दिव्यमालाले अलङ्कृत थिए। तीमध्ये कुनै दिव्य, केयूरधारी र शिरमा चन्द्रमा रहेका कारण सुहाएका थिए । सिंहमा सवार, मयूरमा सवार र मूसामा

केचिच्चतुर्भुजाः केचित् षड्भुजा दशहस्तकाः ।
सिंहारूढा बर्हिगताः केचिन्मूषकवाहनाः ।।१४।।

सर्वे च युयुधुस्तत्र दारयन्तोऽरिसैनिकान् ।
केषाञ्चित् त्रोटिताः पादाः केषाञ्चिन्मस्तका अपि ।।१५।।

केषाञ्चिद् बाहवो भिन्ना जानुजङ्घोदराणि च ।
हुङ्कारेणैव गर्जन्तः केचिच्च शरणं ययुः ।।१६।।

केचित् पलायनपरा ययुर्जीवनहेतवे ।
केचित् प्रहारं कुर्वन्तो मम्रुः सम्मुखमेव च ।।१७।।

ते तु स्वर्गङ्गता भेजुर्भोगानप्सरसोऽपि च ।
वाजिनश्च रथा नागा वाम्य उष्ट्रान्यनेकशः ।।१८।।

नानाशस्त्राहताः पेतुः खण्डदेहा गतासवः ।
असृङ्नद्यः प्रादुरासन् केशशैवलशोभिताः ।।१९।।

आच्छुरिकासिमत्स्येभनक्रैः खेटककच्छपैः ।
रुण्डाब्जैश्च वसाफेनैर्मेदकर्दमसञ्चयैः ।।२०।।

चापशस्त्रैरस्थिबकैश्चर्मपेशीसुदर्दुरैः ।
भल्लकाद्यैः शुशुभिरे मनस्विहृदयप्रियाः ।।२१।।

भुक्त्वागत्य ददर्शाथ सर्वं तद्रणमण्डलम् ।
सर्वस्मिन् निहते सैन्ये ततो दैत्योऽतिदुःखितः ।।२२।।

संस्मार मनसा वाक्यं यदुक्तं शूलपाणिना ।
वरदानस्य समये जयस्ते शक्तिसम्भवात् ।।२३।।

अयमेव भवेत् किन्नु बालकः शक्तिसम्भवः ।
यदुत्कटं बलं दृष्टमस्मिन् त्रैलोक्यसारभृत् ।।२४।।

कालोऽपि नैनं विजयेत् तत्र चान्यस्य का कथा ।
एवं मनसि कृत्वा स एकाकित्वात् पपाल च ।।२५।।

वक्रतुण्डो गतश्चिन्तां न हन्तव्यो रिपुः पलन् ।
देवेभ्यो न मृतिश्चास्य यथाऽयं शङ्करोऽब्रवीत् ।।२६।।

तस्माद् योगात् समास्थास्ये वैराटं रूपमुत्तमम् ।
ततो वैराटरूपेण स दधार करेण तम् ।।२७।।

सवार रूपहरू पनि थिए। गणेशका ती रूपहरूले दुरासदको सेनालाई छिन्नभिन्न गर्दै आफ्नो पुरुषार्थ देखाए। त्यसपछि दैत्यवीरहरूमध्ये कसैका खुट्टा काटिए र कसैका टाउका टुक्रिए ।।९-१५।। त्यस युद्धमा कसैका हात काटिए, कसैका घुँडा, तिघ्रा र पेटहरू छेँडिए। हुङ्कारपूर्वक गर्जन गर्ने केही दैत्य श्रीगणेशका शरणमा आए। केही दैत्य भाग्न थाले र केही प्रहार गर्दागर्दै मरे। जसले श्रीगणेशका साथ युद्धमा वीरगति प्राप्त गरे, तिनले तुरुन्तै भगवान् श्रीगणेशको कृपाबाट स्वर्गमा प्राप्त भई अप्सराहरूसँग क्रीडा गरे। त्यस युद्धमा अनेक घोडा, रथ, हात्ती र ऊँटहरू तैनाथ थिए। ती सबै अस्त्रहरूको प्रहारका कारण टुक्राटुक्रा भएर मैदानमा फैलिएका थिए।।१६-१८।। त्यहाँ मानिसका शरीरको रोमरूपी शैवालले भरिएका रगतका नदीहरू बगे। त्यस नदीमा बगिरहेका छुरा र तरवार माछाका रूपमा रहेका थिए। हात्तीहरू गोहीका रूपमा देखिन्थे। भालाहरू कछुवाका रूपमा देखिन्थे। मानिसका टाउकाहरू कमलका रूपमा, बोसो फिँजका रूपमा र चर्बीहरू हिलोका रूपमा रहेका थिए।।१९-२०।। त्यहाँ हाडहरू बकुल्लाजस्ता देखिन्थे भने धनु र शस्त्रहरू दाउराझैं बगिरहेका थिए । यसैगरी छाला र नसाहरू भ्यागुताका रूपमा देखिन्थे । धनुष र शस्त्रहरू हाडका रूपमा देखिन्थे। त्यसैगरी त्यो रगतको नदीमा भाला र बर्छा पनि बगिरहेका थिए । त्यो रगतको नदी वीरहरूका लागि आनन्ददायक थियो। भोजन गर्न गएको दुरासद दैत्य फर्क्यो र त्यसले रणभूमिको रगताम्य अवस्था देख्यो। ऊ आफ्ना सैनिकहरू मरेको देखेर अत्यन्त दुःखित भयो। त्यस बेला त्यसलाई भगवान् शङ्करले 'शक्तिबाट पैदा भएको बालकले तिमीलाई मार्नेछ' भनेको वाणी याद भयो। त्यसले मनमा तर्क गर्‍यो - 'के यो त्यही बालक हो त ? किनकि यस्तो उत्कट बल संसारमा मैले कहीं पनि देखेको थिइनँ। कालले पनि यसमाथि विजय गर्न सक्दैन। अरू कुरा नगरौं।' यस्तो विचार गरेर त्यो एक्लै भाग्यो। त्यसबेला त्यसलाई भागिरहेको देखेर श्रीगणेशले भन्नुभयो- 'भागिरहेको शत्रुलाई मार्नु हुँदैन। अरू देवताहरूबाट यो मर्दैन किनकि भगवान् शङ्करले यसलाई त्यस्तै वरदान दिनुभएको छ।' यस्तो विचार गरेर श्रीगणेशले योगशक्तिबाट विराट् रूप लिन्छु भन्ने विचार गर्नुभयो। विराट् रूप लिनुभएपछि उहाँले आफ्नो हातले

...दन तस्थौ स काशीं तां रक्षितुं बलात् ।
एकं पादं तु दैत्यस्य दधार मस्तके तत: ।।२८।।

उवाच दैत्य ! रे दैत्य ! वराच्छैवान्न ते मृति: ।
अतोऽस्मिन्नगरे तिष्ठ गिरिरिव सुनिश्चल: ।।२९।।

द्वारभूत: पुरस्यास्य यत: पूर्वं दृशिस्तव ।
दुष्टानां पीडको नित्यं नित्यं मे सन्निधिस्तव ।।३०।।

दैत्योऽपि परया भक्त्या तमेव वरमर्थयत् ।

दैत्य उवाच

एवमेव सदा तिष्ठ स्थाप्य पादं मयि स्थिरम् ।।३१।।

मुनिरुवाच

तथेति तमुवाचाथ स्थित: काश्यां विनायक: ।
एवं दुरासदं जित्वा चकार पृथिवीं शिवाम् ।।३२।।

तस्मिन् कृत्वा पुष्पवृष्टिं प्रणम्य सम्प्रपूज्य च ।
स्वस्वस्थानं गता देवा मुनय: स्वाश्रमानपि ।।३३।।

अन्ये ये ये तमर्चन्ति पूर्णकामा भवन्ति ते ।
एवं विनायकस्याथ काश्यां षट्पञ्चमूर्तय: ।।३४।।

तुण्डनाख्ये पुरे चापि एकपादविनायक: ।
संहृत्य च विराट्रूपं सर्वकामप्रद: स्थित: ।।३५।।

य इदं वरमाख्यानं शृणुयाद् भक्तिमान्नर: ।
सर्वान् कामानवाप्नोति गाणेशं पदमेति च ।

सर्वत्र जयमाप्नोति पुष्टिमारोग्यमेव च ।।३६।।

त्यसलाई समाल्नुभयो।।२१-२७।। श्रीगणेश एउटा खुट्टामा उभिएर अर्को खुट्टाले दुरासदका टाउकामा टेक्नुभयो। त्यसपछि श्रीगणेशले भन्नुभयो– 'तँ सर्वप्रथम मेरो दृष्टिमा परेको हुँदा तेरो कल्याण हुन्छ। दुष्टहरूलाई पीडा दिँदै नित्य काशीवास गर, म पनि दुण्ढिराज गणेशका रूपमा तेरो समीपमा रहनेछु।' भगवान् श्रीगणेशको आज्ञा सुनेर त्यस दैत्यले परमभक्तिपूर्वक वरदान माग्दै भन्यो– 'हे प्रभु ! तपाईं पनि सधैं मेरा शिरमा पाउ राखेर यहीं विराजमान हुनुहोस् ।' त्यसपछि श्रीगणेशले भन्नुभयो– 'हे दैत्य! शिवजीको वरदानका कारण तेरो मृत्यु हुँदैन। अब तँ यो काशी नगरीमा पर्वतझैं निश्चल भई बस्ने काम गर । वास्तवमा तँ काशी नगरीको द्वार भएर काशीको रक्षा गर्दै बस्नुपर्दछ।'।।२८-३१।।

**मुनिले भने** – त्यसलाई तथास्तु भनेर भगवान् श्रीगणेश काशीमा रहनुभयो। यसरी श्रीगणेशले युद्धमा दुरासदलाई जितेर पृथिवीलाई मङ्गलमय तुल्याउनुभयो। देवताहरूले पुष्पवर्षा, प्रणाम र पूजा गरे। त्यसपछि ती सबै देवता आ-आफ्नो धामतर्फ गए। मुनिहरू पनि आश्रमतर्फ लागे। जुन मानिसहरूले काशीमा रहेका विनायक भगवान्‌को पूजा गर्दछन् तिनीहरूका कामना पूर्ण हुन्छन्। किनकि भगवान् श्रीगणेशले काशीमा छपन्न थरिका रूप लिएर बस्नुभएको छ। काशीको तुण्डनपुरमा एउटा पाउ धारण गर्नुहुने भगवान् विनायकको मूर्ति रहेको छ, जसले पछि विराट स्वरूप लिई सामान्य रूपमा आफूलाई परिणत गराउनुभएको थियो। त्यसपछि उहाँ कामनाप्रदायक श्रीगणेश बनेर रहनुभयो। जुन भक्तिमान् मानिसले श्रीगणेशको यो कथा सुन्दछ, त्यसले चिताएको मनोरथ साकार तुल्याउँछ। त्यसले सर्वत्र विजय प्राप्त गर्नुका साथै पुष्टि र आरोग्य पनि प्राप्त गर्दछ। अन्तमा त्यो भक्त श्रीगणेशको धाममा प्राप्त हुन्छ।। ३२-३६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते दुरासदजयो नाम द्विचत्वारिंशोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीढुण्ढिराजको दुरासदमाथि विजय' शीर्षकान्वित बयालीसौं अध्याय पूर्ण भयो ।।४२।।

ॐ

## त्रिचत्वारिंशोऽध्यायः { ४३ अध्याय }

**गृत्समद उवाच**

**विजिते तु गणेशेन दैत्ये तस्मिन् दुरासदे ।**
**दिक्पाला मुनयश्चैव शशी सूर्यो गुरुः कविः ।।१।।**

**प्रशशंसुर्देवदेवं दुरासदरिपुं विभुम् ।**
**श्रुतिस्मृतिकृतो मार्गः स्थापितो निहतोऽसुरः ।।२।।**

**स्थापना च कृताऽस्माकमशक्तानां दुरासदे ।**
**त्वमेव सृजसे विश्वं त्वमेव फलदायकः ।।३।।**

**समः सर्वेषु भूतेषु कर्मभिर्न च लिप्यसे ।**
**त्वदाश्रयाश्चतुर्वर्णा जन्तवश्च त्वदाश्रयाः ।४।।**

**गवेषयँश्च नानार्थास्तत्तत्कर्मणि योजयन् ।**
**गवेषणे ढुण्ढिरयं धातुरुक्तो मनीषिभिः ।।५।।**

**स आस्ते ढुण्ढिरित्येव संज्ञा राजोत्तराऽस्तु च ।**
**तव यद् दर्शनं पूजा ध्यानं स्मरणमेव च ।।६।।**

**धर्मार्थकाममोक्षाणां साधनं पुत्रपौत्रदम् ।**
**इत्युत्वा पुपूजुस्तेऽमुं मन्दारैश्च शमीदलैः ।।७।।**

**दूर्वाङ्कुरैर्हरिद्भिश्च श्वेतैश्च कुसुमैरपि ।**
**नानापक्वान्ननैवेद्यैः फलैर्बहुविधैरपि ।।८।।**

**रत्नानां निचयैश्चैव भोजनैस्तमतोषयन् ।**
**एवं ते पूजिताः सर्वे सप्तावरणरूपिणः ।।९।।**

**गृत्समदले भने** - भगवान् श्रीगणेशले दुरासद दैत्यमाथि विजय प्राप्त गर्नु भएपछि दिक्पाल, मुनिगण, चन्द्रमा, सूर्य, बृहस्पति र शुक्राचार्यले देवताका पनि देवता, दुरासदका शत्रु, सर्वव्यापक श्रीगणेश प्रभुको प्रशंसा गर्दै भने - 'हे भगवन् श्रीगणेश! हजुरले श्रुति र स्मृतिको मार्गलाई पुनर्स्थापित गर्नुभएको छ, पापी असुरलाई मारेर धर्मको स्थापना गर्नुभएको छ।।१-२।। हामीहरू दुरासदलाई तह लगाउन असमर्थ थियौं। त्यसलाई तह लगाएर हजुरले हाम्रो रक्षा गर्नुभएको छ। हजुरले नै संसारको सृष्टि गर्नुहुन्छ, सबै प्रकारका भक्तहरूलाई भक्ति र साधनाको फल प्रदान गर्नुहुन्छ, सबै प्राणीमा समान भावले दया गर्नुहुन्छ, कुनै पनि कर्ममा लिप्त हुनुहुन्न। ब्राह्मण, क्षत्रिय, शूद्र एवं वैश्य यी चारै वर्ण हजुरको आश्रयबाट बाँचेका छन्। सम्पूर्ण प्राणीहरू र जनावरहरू पनि हजुरकै आश्रयमा छन्।।३-४।। बुद्धिमान् मानिसहरूले ढुण्ढि शब्दको अर्थ बताउने क्रममा भनेका छन्- 'ढुण्ढि व्याकरणशास्त्रमा प्रतिपादित धातु हो, त्यसबाट अनेक अर्थ निस्कन्छन्। अनेक अर्थको अनुसन्धान गर्नु, अनुसन्धान गरेको विषयलाई ती ती क्षेत्रमा प्रयोग गर्नु र सबैलाई त्यसबाट लाभ प्रदान गर्नु पनि ढुण्ढि धातुको अर्थ हो। अब हजुर यस नामलाई अर्थात् ढुण्ढिराज नामलाई अँगालेर विश्वमा विख्यात हुनुहोस् । जसले ढुण्ढिराज श्रीगणेशको दर्शन, पूजन, ध्यान र स्मरण गर्दछ, त्यसलाई धर्म, अर्थ, काम र मोक्षका फल प्राप्त हुन्छन्। तिनले पुत्र, पौत्र र सम्पत्ति प्राप्त गर्दछन्।' यसो भनेर देवताहरूले भगवान् श्रीगणेशलाई मन्दार अर्थात् धतुराका फूल, शमीका पात र हरिया दूर्वाङ्कुर समर्पण गरे। तिनीहरूले अनेक किसिमका सेता फूल चढाएर श्रद्धापूर्वक पूजा गरे। पूजापछि अनेक थरिका पकवान र फलहरूको नैवेद्य तयार गरी भगवान्लाई अर्पण गरे। अनेक थरि रत्नहरूको उपहारका साथै ब्राह्मणभोजन गराएर सबैलाई खुसी बनाए। यसरी ती सात आवरणमा आधारित छपन्न संख्यामा रहेका श्रीगणेशका मूर्तिहरूको देवताहरूले श्रद्धापूर्वक पूजा गरे ।।५-९।। एउटा

स्थिता वाराणसीं त्रातुं षट्पञ्चाशद् विनायकाः ।
एकः पञ्चमुखस्तत्र विश्वेशद्वारि तिष्ठति ।।१०।।

अन्ये च भिन्ननामानो व्याप्य वाराणसीं स्थिताः ।
स्थिते विश्वेश्वरे तत्र सर्वे तत्रैव संस्थिताः ।।११।।

आचन्द्रं स्वाधिकारेषु ब्रह्माद्या मुनयोऽखिलाः ।
अकुर्वन् सर्वकर्माणि सर्वे लोका यथा पुरा ।।१२।।

इति ते सर्वमाख्यातं कीर्ते ! पृष्टं हि यत् त्वया ।
दुण्ढिराजस्यावतारो धर्मकामसुखप्रदः ।।१३।।

दिवोदासबहिर्भावं कथयिष्येऽधुना तव ।।१४।।

पञ्चमुख श्रीगणेशको मूर्ति काशीमा भगवान् विश्वनाथको ढोकानिर नै रहेको छ। अरू विभिन्न नामका श्रीगणेशका मूर्तिहरू सम्पूर्ण वाराणसीमा छरिएका छन्। जबसम्म भगवान् विश्वनाथ त्यहाँ विराजमान हुनुहुन्छ, तबसम्म ती मूर्तिहरू त्यहीं नै रहनेछन् ।।१०-११।। यसरी दुरासदलाई तह लगाएर वाराणसीमा भगवान् श्रीगणेशको प्रतिष्ठा भएपछि ब्रह्म आदि देवता र सम्पूर्ण मुनिहरूले आ-आफ्नो अधिकार प्राप्त गरी धाममा प्राप्त भए। सबैले आ-आफ्ना कर्महरू सम्पन्न गरे। मानिसहरूले पनि पूर्ववत् शान्ति र सुख अनुभव गरे।।१२।। हे कीर्ति ! मैले तपाईंलाई गणेशको महिमासम्बन्धी सबै कुरा बताएँ। ढुण्ढिराज श्रीगणेश भगवान्को अवतार धर्मरक्षाका लागि भएको थियो। उहाँ कामनापूरक र सुखदायक हुनुहुन्छ। यसपछि म तपाईंलाई राजा दिवोदास कसरी घर छाडेर बाहिर गए भन्ने विषयमा पनि बताउनेछु।।१३-१४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बालचरिते दुण्ढिराजस्तुतिवर्णनं नाम त्रिचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'दिक्पाल एवं मुनिहरूद्वारा श्रीगणेशको स्तुति' शीर्षकान्वित त्रिचालीसौं अध्याय पूर्ण भयो ।।४३।।

ॐ